पं. अमृतानन्द शाक्यको

# धर्मकोश–सङ्ग्रह

## (बौद्ध पदावलीको मूर्तिको परिभाषा)



सम्पादक

प्रा. डा. मुकुन्दराज अर्ज्याल

नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठान

# प्रकाशकीय

हिमालयको सुन्दर, शान्त र शीतल काखमा रहेको नेपाल हिमाली सभ्यता र संस्कृतिको केन्द्र हो र बहुजातीय एवं बहुभाषिक राष्ट्र हो। यसमा निवास गर्ने जातजातिका आ-आफ्नै भाषा, आ-आफ्नै कलाकौशल, आ-आफ्नै गीत-सङ्गीत, आ-आफ्नै नृत्य-नाटच, आ-आफ्नै संस्कृति तथा आ-आफ्नै धार्मिक-दार्शनिक अवधारणा छन् तापनि ती सबै राष्ट्रिय एकताका अटूट सूत्रमा गाँसिएका छन्, आ-आफ्ना परम्परा जोगाउँदै सहिष्णुता र सहअस्तित्वका सिद्धान्तमा बाँचेका छन् र समयसापेक्ष रूपमा आधुनिकीकरणको दिशामा क्रमशः अघि बढ्दै पनि छन्। यसैले नेपाल विश्वसमुदायका बीच शान्तिप्रिय बहुलवादी आधुनिक समाजको अनुपम आदर्श उपस्थित गर्ने देशका रूपमा आफ्नो पहिचान प्रस्तुत गर्न सक्षम रही आएको छ।

अनेकतामा एकताको यसै आदर्शअनुरूप नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठानले नेपाललाई यसको आफ्नो समग्रतामा परिचित गराउने हेतुले नेपालको राष्ट्रभाषा नेपालीका साथै नेपालका राष्ट्रिय भाषा तथा कलाकौशल, सङ्गीत, नृत्य, नाटच, संस्कृति र समाजशास्त्रसम्बन्धी विषयको अध्ययन-अनुसन्धान एवं मौलिक सृजन तथा अनुवादको माध्यमबाट उपयोगी गहन कृति तयार गरी गराई प्रकाशमा ल्याउने अनि विभिन्न क्षेत्र र विधामा कार्यरत चिन्तक, अनुसन्धायक तथा सिर्जनशील प्रतिभाहरूलाई सक्तो प्रेरणा र प्रोत्साहन दिँदै विभिन्न विषय एवं भाषा र साहित्यको विकास र समृद्धिमा सक्तो योगदान दिने उद्देश्य राखेर काम गर्दै आएको छ र यो सबैमा विदितै छ।

यसै बहुमुखी उद्देश्यअन्तर्गत इस्वीको उन्नाइसौं शताब्दीका नेपालका बौद्ध विद्वान् पं. अमृतानन्द शाक्यद्वारा रचित तथा प्रा. डा. मुकुन्दराज अर्यालद्वारा अनूदित **धर्मकोश-सङ्ग्रह**-नामक ग्रन्थ प्रकाशित हुँदै छ। यसको प्रकाशनबाट संस्कृतमा दखल नभएका तर बौद्ध संस्कृति, मूर्तिविज्ञान र बौद्ध मूर्तिहरूको अध्ययनमा जिज्ञासा राख्ने नेपाली पाठकहरू प्रशस्त लाभान्वित हुनेछन् भनी आशा गर्न सकिन्छ। प्रस्तुत ग्रन्थ धेरै वर्षअगावै प्रकाशित भइसक्नुपर्नेमा विविध कारणवश अहिले प्रकाशित हुँदै छ। ढिलै भए पनि यस्तो महत्त्वपूर्ण ग्रन्थ प्रकाशित गर्न पाएकोमा हामीलाई खुशी लागेको छ। यसको लागि हामी अनुवादक प्रा. डा. मुकुन्दराज अर्यालप्रति साभार धन्यवाद अर्पण गर्दछौं।

**– नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठान**

# प्राक्कथन

प्रस्तुत ग्रन्थ **धर्मकोश-सङ्ग्रह**को सम्बन्धमा सर्वप्रथम संवत् २०२३ सालमा विनयतोष भट्टाचार्यको Indian Buddhist Iconography नामको बहुचर्चित प्रसिद्ध पुस्तकबाट मलाई ज्ञान हुन आएको हो। मञ्जुश्रीको मूर्ति भट्टाचार्यज्यूको पुस्तक प्रकाशित नहुन्जेलसम्म अक्षोभ्यको मूर्ति मानिन्थ्यो । *एसियाटिक सोसाइटी अफ बङ्गाल, कोलकोत्ता*मा रहेको **धर्मकोश**को पाण्डुलिपिको आधारमा र नेपाली बौद्ध समाजको परम्परानुसार मञ्जुश्रीको मूर्तिलाई ध्यानी बुद्ध अक्षोभ्य नै हुन् भन्ने केही विद्वान्हरूको राय रहि नै रहेको छ। मलाई त्यसै बखतदेखि सो मूलग्रन्थ पढ्ने इच्छा थियो। प्रसङ्गवश २०३३-०३४ सालमा त्यसबारे कुरा हुँदा मेरा मित्र श्री मेरुहर्ष वज्राचार्यले आफ्ना दाजु श्री पूर्णहर्ष वज्राचार्यको सङ्ग्रहमा रहेको छोटो परिचयसहित नयाँ दिल्लीबाट प्रकाशित ग्रन्थ दिनुभयो। ध्यान दिएर, गहिरिएर सो ग्रन्थ पढ्दै थिएँ, कतैकतै अर्थ खुलेन, सन्दर्भ नमिलेको जस्तो लाग्यो। म अर्को प्रतिको खोजीमा लागेँ। कुनैबखत ०३५-०३६ सालमा मेरा अति स्नेही शिष्य र पुरानो मित्र श्री शुक्रसागर श्रेष्ठसँग कुरा चल्दा उहाँले आफ्नो विदेशी मित्र डेविड गेल्नरले कोलकोत्ताबाट फोटो-प्रतिलिपि निकालेको एकप्रति **धर्मकोश-सङ्ग्रह** उपलब्ध गराइदिनुभयो। मेरो हौसला झन्झन् बढ्दै गयो। राष्ट्रिय अभिलेखालयमा गई हेर्दा एक पुरानो प्रति र अर्को त्यसैबाट माहिला गुरुज्यू पं. हेमराज पाण्डेले आफ्नो लागि प्रतिलिपि गर्न लगाउनुभएको प्रति पनि प्राप्त भयो। यसरी चार प्रति जम्मा भएपछि झन् ठूलो समस्या पर्न गयो। मूलबाट प्रतिलिपि गर्दा कतै *शीत* त कतै *पीत* सारेको पाइयो। यसको निर्क्योल निकाल्न प्राचीन चित्रहरू खोजी परम्परानुसार सच्याउने कार्य गरेँ। सबै प्रतिलिपिहरूमा संस्कृत अशुद्ध, स्वर वर्ण नमिलेको हुनाले मेरा स्नेही शिष्य र मित्र डा. गोविन्द टण्डनले श्री चिन्तामणि योगीजीसँग अनुरोध गरी शुद्ध पाठ निकाल्ने कार्य गर्नुभयो र उहाँले नै कापीमा साफी गरिदिनुभयो। अब कार्य सजिलो भयो। मेरो संस्कृतभाषामा अल्पज्ञान मात्र भएकोले मित्रवर व्याकरणाचार्य त्रि.वि. नेपाली-विभागका प्राध्यापक श्री गोपीकृष्ण शर्माले सबै अनुवाद हेरी जाँची शुद्ध गरिदिनुभयो, साँच्चै भनौं भने पूरा अनुवाद नै बदलिदिनुभयो। नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठानका वरिष्ठ सम्पादक श्री कुमारधर शर्मा 'ज्ञानी'ले अन्तिम समयमा धेरै मेहनतसाथ सम्पादन गर्नुको अतिरिक्त अनुक्रमणिका समेत आफैले लगनसाथ धेरै समय लगाई तैयार पारेर यसमा जोडी यस ग्रन्थको उपयोगिता निकै बढाइदिनुभएको छ र यो ग्रन्थ यस रूपमा यहाँ प्रस्तुत हुन सकेको छ।

यसप्रकार माथि उद्धृत सबै व्यक्ति, मित्रहरूले आ-आफ्नो ढङ्गबाट सहयोग नगर्नुभएको भए यो ग्रन्थ तयार हुने थिएन। ग्रन्थ तयार भएपछि मूलग्रन्थका ग्रन्थकार श्री अमृतानन्द शाक्यकै वंशज पं. हेमराज शाक्यले ग्रन्थकारको विस्तृत परिचय मात्र होइन ग्रन्थकारकै तस्वीर बुद्धपादुकाको पौभाचित्रमुन्तिर रहेको अमृतानन्दको तस्वीर समेत देखाई, चिनाई सोको रङ्गीन तस्वीर लिने मौका समेत मिलाइदिनुभयो। यसैले माथि उद्धृत सबै महानुभावहरूप्रति धन्यवाद र हृदयदेखिको कृतज्ञता प्रकट नगर्नु कृतघ्नता नै हुनेछ। अत: उहाँहरू सबै मेरो मुरीमुरी धन्यवादको पात्र हुनुभएको छ र म उहाँहरूप्रति सदैव आभारी रहनेछु।

यसबाहेक श्री शुक्रसागर श्रेष्ठले जतिपटक भने पनि झिँझो झर्को नमानी विभिन्न ठाउँमा पटकपटक गई तस्वीर खिची भनेको समयमा दिनुभई मलाई अर्को ठूलो गुन लगाउनुभएको छ। उहाँलाई आशीर्वाद र धन्यवादले मात्र पुग्दैन पुस्तक-प्रकाशनको जस नै पनि उहाँलाई दिनैपर्छ।

यस कार्यमा मलाई घचघच्याइरहने मेरा मित्र प्रा. डा. प्रेमरमण उप्रेती, क्याम्पस-प्रमुख श्री रामप्रसाद दाहाल (सदस्य, पशुपति क्षेत्र विकास कोष), प्रा. डा. दिनेशराज पन्त, प्राज्ञ ज्ञानमणि नेपाल र प्रा. ठाकुर शर्माज्यूहरूलाई पनि यहाँ सम्झी धन्यवाद टक्राउनु मेरो कर्तव्य नै हुन आउँछ।

मेरी धर्मपत्नी सविता अर्यालको हौसला र सहयोग नभएको भए शायद यो ग्रन्थ पूर्ण हुने थिएन, तसर्थ उनी पनि धन्यवादकी पात्री हुन्।

अन्तमा विभिन्न कारणले दशौं वर्षसम्म प्रेसमा थन्केर, मिल्केर रहेको ग्रन्थ प्रकाशित गर्न सहयोग पुऱ्याउनुभएकोमा हितचिन्तक मित्र डा. तुलसी भट्टराई (सदस्य सचिव, नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठान) ले लगाउनुभएको गुन पनि बिर्सन सक्तिनँ।

यस ग्रन्थका ग्रन्थकार पं. अमृतानन्द शाक्यले सम्पूर्ण ग्रन्थभरि नै आफुले लेखेको कुराको स्रोत कतै खुलाउनुभएको छैन। *गुरुवाक्यं प्रमाणम्* भन्ने समयमा यो ग्रन्थ तयार भएको, धेरै तथ्यहरू उहाँले कुल-परम्पराबाट प्राप्त गरेको देखिन्छ। आजको लेखनविधिसँग डेढ सय वर्षअघि लेखिएको हस्तलिखित ग्रन्थलाई दाँजेर हुँदैन। त्यस बखतको विद्या-परम्परा बेग्लै थियो। पं. अमृतानन्द शाक्य बहुआयामी व्यक्तित्व हुनुहुन्थ्यो भन्ने कुरा हालसम्म उहाँका पाइएका ग्रन्थहरूबाट बुझ्न सकिन्छ। यस ग्रन्थबाट नेपाली बौद्ध संस्कृति, मूर्तिविज्ञान र बौद्ध मूर्तिहरूको अध्ययनमा जिज्ञासा राख्ने सबैले फाइदा उठाउने नै छन् भन्ने विश्वास लिएको छु। यतिका व्यक्तिहरूको सहयोग पाउँदापाउँदै पनि यस पुस्तकमा केही त्रुटिहरू पनि होलान्, यसको लागि मै मात्र दोषी हुनेछु।

मुकुन्दराज अर्याल

# धर्मकोश-सङ्ग्रह ग्रन्थ र ग्रन्थकार पं. अमृतानन्द शाक्यको संक्षिप्त परिचय

नेपाल-अङ्ग्रेजयुद्ध इ.सं. १८१४-१६ को सुगौलीसन्धिपछि नेपालले आफ्नो भूमिमा ब्रिटिश रेसिडेन्सी राख्न बाध्य हुनुपऱ्यो । रेसिडेन्सी यहाँ रहेपछि ब्रायन हडसन सहायक रेसिडेन्टको रूपमा नेपाल आए । तीक्ष्ण बुद्धिका, अध्ययनशील हडसन पछि पदोन्नत भई नेपालको लागि रेसिडेन्ट नै हुन पुगे । नेपालको सम्पन्न संस्कृति र बौद्ध दर्शनबाट प्रभावित भएका हडसन मौकाको फाइदा उठाई सकेसम्म बौद्ध दर्शन र संस्कृतिको अध्ययनमा लागे । उनलाई बौद्ध दर्शनको अध्ययनमा सहयोग पुऱ्याउने मार्गदर्शकको रूपमा त्यस बखतका बौद्ध दर्शनका ज्ञाता, आधिकारिक विद्वान्, ललितपुर उकुबहालका पं. अभयराजका वंशज पं. अमृतानन्द तयार भए । विद्वान् पं. अमृतानन्दसँग दाँजिन सक्ने बौद्ध संस्कृतिका ज्ञाता त्यस बखतमा अर्का व्यक्ति थिएनन् । *योग्याय योग्यम्* भनेजस्तै जिज्ञासु शिष्य र व्युत्पन्नमति गुरुको सम्पर्क भयो । पं. अमृतानन्द गयामा तीर्थ गर्न जाँदा त्यहाँ विष्णुपादुका भनी पुजिने पादुकालाई अनेक शास्त्रप्रमाणले बुद्धपादुका सिद्ध गर्न सफल भए । यसबाट उनको यश, कीर्ति भारतभरका भारतीय इतिहास, कला र पुरातत्त्वका विद्वान्हरूमा फैल्यो । हराइसकेको बौद्ध ग्रन्थको केही भाग समेत यिनले विद्वत्समाजलाई दिई प्राच्य बौद्ध विद्याको उन्नतिको ठूलो सहायक बन्न सफल भए । यिनको वंशका सबै व्यक्ति तात्कालिक नेपालका विद्वान् थिए । त्रिरत्न-सौन्दर्य-गाथाका लेखक सुन्दरानन्द बाँडा, आफ्नो सङ्ग्रहको वंशावलि दिई डेनियल राइटलाई इतिहासकार बनाउने गुणानन्दहरू नेपालको इतिहासमा सदा चम्किलो ताराकै रूपमा रहेका छन् । पं. अमृतानन्दले हडसनलाई बौद्ध दर्शन, संस्कृतिका अनेक ग्रन्थहरूका प्रतिलिपि पनि दिए । अर्को शब्दमा हडसनलाई धर्ममा नै दीक्षित गरे भने पनि अतिशयोक्ति हुनेछैन । हडसनलाई बौद्ध संस्कृति दर्शन र कला पढाउन बुझाउन यिनले हडसनकै इच्छामुताबिक यो ग्रन्थ **धर्मकोश-सङ्ग्रह** तयार गरे । यस कुराको पुष्टि उनले आफ्नो ग्रन्थमा यसप्रकार गरेका छन्–

*ऋतुदधिनिधौ वर्षे श्रावणे कृष्ण आरुणे: ।*
*श्रीसाहेबाज्ञयालेख्यादमृतशाक्यशासन: ।*

यसप्रकार पं. अमृतानन्द आफैले श्रीसाहेब(हडसन)को आज्ञाले ने.सं. ९४६ श्रावणमा यो ग्रन्थ लेखेको स्वीकारेका छन् ।

यस ग्रन्थमा ग्रन्थकारले नेपालका प्रमुख बौद्ध स्थलहरू स्वयम्भू महाचैत्य, बौद्धनाथ चैत्य, धन्दो चैत्य, (चाबहिल मित्रपार्कको) रुद्रवर्ण-महाविहार, महाबौद्ध-मन्दिर, हिरण्यवर्ण-महाविहारका मूर्तिहरू र चित्रहरूको परिचय दिएका छन्। हुनत आज स्वयम्भू चैत्य, बौद्ध चैत्य त्यसै रूपमा छैनन्। उनले वर्णन गरेका अनेक चित्रहरू भएका विहारहरू नष्ट भए, तिनले नयाँनयाँ रूप पाइसकेका छन्। उनले वर्णन गरेका धेरै चित्रहरू र मूर्तिहरू पाइँदैनन् तापनि त्यस बखतमा यी स्थलहरू कस्ता थिए र कस्ताकस्ता मूर्ति र चित्रहरू थिए भन्ने स्पष्ट ज्ञान पाइन्छ। देवताहरूको ध्यानमूर्तिको वर्णन गर्दा देवताको नाम, स्वरूप हात, शिर, रङ्गको वर्णन आदि विस्तृत रूपमा भएकोले यो ग्रन्थ बौद्ध कलाका विद्यार्थी र जिज्ञासुहरूलाई अमूल्य विद्याको खानी नै हुन पुगेको छ। पं. अमृतानन्दको ज्ञानबाट प्रभावित हडसनले त्यस वंशका एकजनालाई ब्रिटिश रेसिडेन्सीका पण्डितको जागीर दिइराख्ने परम्परा नै बसाले, जुन धेरै पछि आएर मात्र समाप्त भयो। पं. अमृतानन्द बौद्ध दर्शनका मात्र विद्वान् र लेखक नभई नेवारी व्याकरण र कोशका पनि ठूला विद्वान् थिए।

हाल पं. अमृतानन्दका वंशजहरू ललितपुर उकुबहालमै बस्छन्। पं. अमृतानन्दका पूर्वजहरू खास गरी महाबौद्ध-मन्दिरका निर्माता अभयराज, उनका पुत्र, बुद्धज, जीवराज, जयमुनि तथा यसै वंशका अमृतानन्द र उनको वंशवृक्ष एवम् अमृतानन्दबारे वृद्ध उमेरमा पनि यसै वंशका पं. हेमराज शाक्य लागि नै रहनुभएको छ। हालसालै एक भेटमा उहाँले महाबौद्ध-मन्दिरमा तीन काष्ठमूर्ति पाउनुभएको छ र स्थानीय परम्परा र विश्वासअनुसार ती तीन मूर्तिहरू श्री अभयराज, श्री बुद्धज, श्री जीवराजको भएको कुरा बुझिन आएको छ। पं. अमृतानन्दबारे अझै खोज हुनु बाँकी नै छ। यस्ता ख्यातिप्राप्त विद्वान्को अमूल्य ग्रन्थको अनुवाद, सम्पादन गर्न पाएकोमा मलाई ठूलो आत्मसन्तोष मिलेको छ। ऋषितुल्य अमृतानन्दको ग्रन्थ प्रकाश गरेर मैले प्राच्य संस्कृतिअनुसार ऋषिऋण मात्र तिरेको हुँ। यसबाट लाभान्वित हुने सबैले जस उहाँलाई र केही त्रुटि भए मलाई मात्र दोष दिनुहुन अनुरोध गर्दछु।

मुकुन्दराज अर्याल

**धर्मः**

॥१॥

ॐनमः स्वयंभुवे ॥ ॥ आदि(बु)द्ध (:) ॥ मनसैव वु(बु)ध्यते आदौ यः निरंज-(रञ्ज)न निराकारत्वात् ॥ ॥ निरंज(रञ्ज)न (:) ॥ निर्गतं (तम्) अंज (अञ्ज)नलेपनादिकं यस्मिन् सः॥ गगनवत्. शून्यत्वात् ॥ निराकारः ॥ निर्गतः आकारो यस्य. चक्षुराद्यवयवहीनत्वात् ॥ ॥ निराधारः ॥ निर्गतः आधारो यस्यः (य) भुवनादि पात्रहीनत्वात् शून्यभावेन ॥ ॥ निरामयः ॥ निर्गत आमयो रोगादि. कायाद्यवयवशून्यत्वात् ॥ ॥ निर्विकल्पः ॥ निर्गता (तो) विशेषेण कल्पना. भावनारहितत्वात् ॥ निराकाशं (शः) ॥ निर्गत आकाशं (शः). प्रकाशो वा. दृश्यादृश्यरूपत्वात् ॥ नित्यानित्य (:) ॥ नित्यश्चानित्यश्च ॥ स्थिरास्थिरश्च ॥ कायमनोरूपत्वात् ॥ ॥ उपाय (:) उप समीपे अयति प्रज्ञादिकं सर्वमिति. अथ च प्रज्ञायाः समीपे दक्षवाममेवृत् ॥ ॥ महावैरोचन (:) ॥ विशेषेण रोचयति सर्वं महांश्चासौ ॥

रामः
॥१॥

स्वयम्भू-(स्वयंप्रकट ईश्वर)-लाई नमस्कार। आदिबुद्धका मूलभूत विशेषता हुन्– निरञ्जन, निराकार, निराधार, निरामय, निर्विकल्प, निराकाश, नित्य र अनित्य, स्थिर र अस्थिर, उपाय तथा महावैरोचन ।

आदिबुद्ध–

- लेपन (गाजल, चन्दन जस्ता बाह्य शृङ्गार) आदि नहुनाले निरञ्जन छन् ।
- चक्षु (आँखा) आदि अङ्ग नभएकाले निराकार छन् ।
- शून्यरूपको भावनाद्वारा भुवन (संसार) आदि पात्र (आधार) नहुनाले निराधार छन् ।
- रोग आदि शरीरगत विकारले शून्य हुनाले निरामय (निरोगी) छन् ।
- कल्पना, भावना आदि (मानसिक प्रपञ्च) नहुनाले निर्विकल्प छन् । (अथवा आदि–बुद्धबराबर अर्को वैकल्पिक तत्त्व नहुनाले निर्विकल्प छन्) ।

॥१॥.

- दृश्य (साधनाशील चित्तले ठम्याउन सकिने) तथा अदृश्य (बाह्य पिण्डको रूपमा देखन नसकिने, अमूर्त) हुनाले सामान्यत: प्रकाश (दृश्य) र अप्रकाश-(अदृश्य)-को भेद छुट्टयाउने आकाश नभई निराकाश छन् ।
- मन (अमूर्त) र शरीर (मूर्त) दुवै रूप हुनाले नित्य पनि अनित्य पनि हुन् । त्यसैले स्थिर पनि अस्थिर पनि छन् ।
- प्रज्ञा-(अलौकिक ज्ञान वा बुद्धि)-को दायाँबायाँ (चारैतिर) ढाक्ने गरी प्रज्ञाकै नजीक पुऱ्याउने हुनाले उपाय हुन् । (अथवा सांसारिक प्रपञ्चबाट छुटकारा दिलाएर नित्य-निर्विकल्प ज्ञान प्राप्त गराउने एकमात्र उपाय हुन्) ।
- विशेष गरेर सबैलाई सन्तुष्ट पार्ने (नित्यस्थायी आनन्द दिने) तथा महान् पनि हुनाले महावैरोचन हुन् ।

**निरात्मा ।। निर्गत आत्मा निवृत्तियोगे पंचे(पञ्चे)न्द्रियहीनत्वात् ।। निरा(र)वयव (वः) ।। निर्गता अवयवाः चक्षुरादयो यस्मिन् ।। शून्यं भुवनं(नम्) ।। शून्यं वर्त्तुलाकारं भवतीति शून्यभुवनं(नम्) ।।१।। बिंद्वा(विन्द्वा)कारं(रम्) ।। बिंदु(विन्दु)-वदाकारों(रः) ।।२।। गगनरूपं(पम्) ।। गगनवन्नीलवर्णं(र्णम्) अथ च गगनमेव शून्यं यवलीनाः ।। सवे (र्वे) शून्या (:) तथताज्ञानवान् ।।३।। ० ।। अव्यक्ताकारं (रः)।। विशिष्टलेपनकांति(कान्ति)गत्यादि अव्यक्त(क्तम्)अव्यक्तः ।।१।।(अ) दृश्याकारः ।। अदृश्यश्चासौ आकारः अगोचरत्वात्-ज्ञानाकारत्वात् ।।२।। रहितयुगः ।। युगाद्यंत(द्यन्त)युगादित्वात् चातुर्युगवर्तित्वाच्च अनादिनिधनो बुद्ध इति ।।१।। निरात्मा निर्गतश्चासौ आत्मा सातत्यगमनं निवृत्तौ स्थिरत्वं प्रवृत्तौ गमत्वं (त्वम्) ।।१।। शून्यकाम(मः) ।। शून्यं तथताज्ञानस्वरूपं (पम्) ।। तदेव कार्यं प्रवृत्तितो निवृत्तौ लीनत्वात् । अथ च सर्वकामलीनत्वात् ।।२।। आदिप्रज्ञा ।। द्वयाम्नायस्य ।। प्रज्ञा–**

आदिबुद्धका अन्य विशेषता हुन्– निरात्मा, निरवयव, शून्यभुवन, विन्द्वाकार, गगनरूप, अव्यक्ताकार, अदृश्याकार, रहितयुग, निरात्मा, शून्यकाम तथा आदिप्रज्ञा ।

आदिबुद्ध–

- निवृत्तियोगमा (संसारनिरपेक्ष भएर चिरन्तन सुखशान्तिको लागि साधनाशील योगमा) पाँच इन्द्रिय (कर्मेन्द्रिय वाक्, पाणि, पाद, पायु, उपस्थ तथा पाँच ज्ञानेन्द्रिय– कान, छाला, आँखा, जिब्रो र नाक)-ले हीन भएकाले निरात्मा छन् ।
- चक्षु (आँखा) आदि अवयव (अङ्ग) नहुनाले निरवयव छन् ।

- बाटुलो आकारको भुवन-(संसार)-स्वरूप हुनाले शून्यभुवन छन् (अथवा सांसारिक प्रपञ्चले शून्य छन्) ।
- बिन्दु (सूक्ष्मतम चिह्न) जस्तै आकार हुनाले बिन्द्वाकार छन् ।
- आकाशजस्तै नीलवर्ण (अगाध तथा अज्ञेय) हुनाले गगनरूप छन् ।
- तथ्यता-(चिरन्तन सत्य)-बारे ज्ञान राख्ने हुनाले बुद्धका दृष्टिमा सबै (सांसारिक प्रपञ्च) शून्य (नाशवान्) छन् ।
- विशेष लेपन (बाह्य शृङ्गार) कान्ति (प्रकाश) र गति आदि अव्यक्त (अदृश्य) हुनाले अव्यक्ताकार छन् ।
- अगोचर (इन्द्रियद्वारा जान्न नसकिने) तथा ज्ञानस्वरूप हुनाले अदृश्याकार छन् ।
- युगको आदि र अन्तमा समेत रहने तथा चारै युग-(सत्य, त्रेता, द्वापर, कलि)-मा समेत विद्यमान हुनाले बुद्धको आदि (जन्म) पनि छैन तथा निधन (अन्त, मृत्यु) पनि छैन । यसैले रहितयुग हुन्, युगनिरपेक्ष हुन् ।
- आत्माको अर्थ सातत्यगमन गर्ने (निरन्तर गतिशील हुने वा क्रियाशील) हो भने निरात्मा छन् । निवृत्तिमार्गमा (संसारबाट टाढा हुने साधनाशील मार्गमा) स्थिरत्व (स्थायित्व) हुन्छ, अनि प्रवृत्तिमार्गमा (सांसारिक व्यवहारको मार्गमा) गमत्व (परिवर्तनशीलता) हुन्छ। (मूलतः बुद्ध निवृत्तिमार्गमा स्थिर छन्) ।
- प्रवृत्तिमार्गबाट निवृत्तिमार्गतर्फ लीन (संलग्न) हुने हुँदा तथताज्ञान-(तथ्यज्ञान)-स्वरूप छन् । त्यसैले सबै काम-(सांसारिक सुखलिप्सा)-बाट शून्य छन् ।
- दुई आम्नाय-(बुद्ध र धर्मसम्बन्धी दुई गूढ रहस्य)-का आदिप्रज्ञा (आदिज्ञान) हुन् ।

धर्म :
॥२॥

याः । (प्रज्ञायाः) ॥ मनसैवं (व) प्रकृष्टं ज्ञायते जायते वा आदिभवा चासौ प्रज्ञा-आदिप्रज्ञा ॥ निरंज(रञ्ज)ना ॥ निर्गटं(तम्) अंज(अञ्ज)नं. पूर्ववत् ॥ निराकारः(रा) ॥ निरामयाः(या) ॥ निर्विकल्पा ॥ बिराकाशा ॥ नित्यादि (नि)त्या ॥ प्रज्ञा ॥ प्रज्ञापारमिता ॥ प्रज्ञय(या) ज्ञानेन ॥ प्रज्ञाया चा (वा) पारं (रम्) इता इति ॥ नैरात्म्या निर्म(र्ग)त आत्मा यस्या सा सातत्यगमनरहितत्वात् नैरा(र)वयवा । निर्गतानि अवयवानि यस्याः ॥ पंच(पञ्च)ज्ञानेन्द्रियत्वात् ॥ त्वा(त्र्या)यतः(ता) ॥ त्रिकोणाकारः(रा) ॥ शून्यभवनत्रिकोणं(णम्) त्र्यस्त्रं (स्त्रम्) आकारं रूपं शून्यभुवनं प्रवृत्तौ सः (सा) ॥१॥ अव्यक्ताकार (रा) ॥ एतादृश इति रूपरहित आकारो यस्या(स्याः)॥२॥ चातुर्युगीया॥ आद्यनुत्पन्नत्वात् ॥ युगरही(हि)ता च ॥ यतो युगोदयः ॥३॥ सार्वकार्मिकाः ॥ कर्मणा लीनत्वात्, यतः ॥ कर्मणा (णां) संभवाच्च. प्रवृति (त्ति). काये. तस्याः ॥ सकाशात् संभ(सम्भ)वतः ॥४॥ निरात्मा निर्गत आत्मा सातत्यगमनं लीनत्वात् ॥५॥ प्रज्ञोपा –

राम :
॥२॥

प्रज्ञाको (परिचय दिइन्छ) । मनले नै प्रकर्ष (विशेष) रूपले जे जानिन्छ त्यो प्रज्ञा हो र आदि (सर्वप्रथम) उत्पन्न (आभासित) प्रज्ञाचाहिँ आदिप्रज्ञा हो । आदिप्रज्ञा पनि पहिलेजस्तै निरञ्जन, निराकार, निरामय, निर्विकल्प, निराकाश, नित्यानित्य तथा प्रज्ञापारमिता छ । ज्ञानले वा ज्ञानको पार पुग्ने स्थिति प्रज्ञापारमिता हो ।

आदिप्रज्ञा पनि–

– पाँच ज्ञानेन्द्रियले हीन हुनाले निरात्मा छ ।
– तीन तत्त्व-(बुद्ध, धर्म र सङ्घ आदि)-मा फैलेको छ । त्यसैले त्रिकोण आकारको (तीन-तर्फ व्याप्त) छ ।

॥४॥

– त्रिकोण (त्रिविध दृष्टि– बुद्ध, धर्म र सङ्घसम्बन्धी दृष्टि) चाहिँ शून्यभुवन (आधारशून्य अतः स्वतः स्थिर) नै आकार भएकोले आदिप्रज्ञा पनि शून्यभुवन (निराधार) छ प्रवृत्ति-मार्गको दृष्टिले।

– यही भन्ने रूपरहित आकार भएकोले अव्यक्ताकार छ।

– चारै युगमा रहने तथा पहिले पनि उत्पन्न नभएकोले युगरहित छ। जसबाट युगको उदय हुन्छ।

– कर्मद्वारा लीन हुने हुनाले र जसबाट कर्मको उत्पत्ति हुने हुँदा सम्पूर्ण कर्मस्वरूप छ।

– सातत्य-गमन-(निरन्तर गतिशीलता)-मा लीन हुने हुँदा निरात्मा छ।

**यंयोः (प्रज्ञोपाययोः) संमीलनात्त्रयाम्नायानां बुद्धधर्मसङ्घानां नामाविकं (कम्)॥ बुद्धस्य॥ बुद्धः॥ बोधनात्मको बुद्धः स्वयं बुद्ध्वा परान् बोधय(यति) इति प्रज्ञोपायमीलननेति॥ सर्वज्ञः॥ लौकिकं लोकोत्तरं जानातीति बुद्धत्वात्सर्वज्ञानमयः॥ सुगतः॥ स्वयं सुगतौ निर्वाणे स्थित्वा लोकान् प्रापयिता॥ धर्मराजः धर्माणां राजा धर्माद्राजते संसारे राजते धर्मो राजते यस्मात् धर्ममयः चातुर्युगीयाः(यः)॥ तथागतः॥ तथाताक्रमेण प्रवृत्तिमागत्य निवृत्तिं गतः॥ समंत(मन्त)भद्रः॥ समंत (मन्त) तो भद्रं यस्मात्॥ भगवान्॥ भगं नामाष्टकैश्वर्यं तद्विद्यते भकारो भंज (भञ्ज) यन् मारा (रान्) इत्यादि। मारजित्॥ मृत्युं मारादिकं जेतीति॥ लोकजित्॥ लोकं यंती(यन्ती)ति लोकास्तान् जेति वा लोकान् भुवनानि॥ जिनः॥ प्रवृत्तिनिवृत्त्योर्जयशीलो जिनः॥ षड् भिज्ञः॥ षड अभिज्ञा यस्मिन् अभि सर्वतोभावेन ज्ञाय–**

प्रज्ञा (ज्ञान) र उपाय-(ज्ञानसमीप पुग्ने उपाय)-को सम्मिलन-(एकात्मा रूपले लीन भए)-बाट तीन आम्नाय-(गूढ र रहस्यात्मक अथवा वेदतुल्य पवित्र तत्त्व)-को रूपमा बुद्ध, धर्म र सङ्घका नाम भएका हुन्।

अब बुद्धको बारेमा वर्णन हुन्छ। बुद्धका विशेषता हुन्– बोधस्वरूप, सर्वज्ञ, सुगत, धर्मराज, तथागत, समन्तभद्र, भगवान्, मारजित्, लोकजित्, जिन र षडभिज्ञ।

– प्रज्ञा र उपायको एकीकृत रूप हुनाले स्वयं बोध गरेर अर्कालाई पनि बोध (ज्ञान) गराउनु बुद्धत्व (बोधस्वरूप) हो।

बुद्ध–

– स्वयम् निर्वाण-(मुक्ति)-स्वरूप राम्रो गतिमा रहेर संसारलाई पनि उक्त निर्वाणगतिमा पुऱ्याउने हुनाले सुगत हुन्।

– धर्मका राजा वा धर्मले संसारमा शोभित हुने अथवा यिनैबाट धर्म प्रकाशित हुने हुनाले र चारै युग-(सत्य, त्रेता, द्वापर, कलि)-का धर्मस्वरूप हुनाले पनि धर्मराज हुन् ।

– तथता-(चिरन्तन प्रक्रिया)-को क्रमले प्रवृत्तिमार्गमा आएर निवृत्तिमार्गतर्फ जाने (उन्मुख हुने) हुनाले तथागत हुन् ।

– चारैतिर कल्याण गर्ने हुनाले समन्तभद्र हुन् ।

– भग भनेको आठ किसिमको ऐश्वर्य (अणिमा आदि अष्टसिद्धि) हो । त्यो हुनाले भगवान् हुन् । साथै मार (मृत्यु) आदिको भञ्जन (नाश) गर्ने हुनाले पनि भगवान् हुन् ।

– मार आदि मृत्युलाई जित्ने हुनाले मारजित् हुन् ।

– संसारमा प्राप्त हुने जति सबै (प्राणी) लोक हुन् अथवा लोक भनेको संसार हो, ती सबैलाई जित्ने हुनाले लोकजित् हुन् ।

– प्रवृत्ति र निवृत्ति दुवै मार्गलाई जित्न सक्ने हुनाले जिन हुन् ।

– छ किसिमको अभिज्ञा (ज्ञान अथवा बुद्धधर्मअनुसारका छ ज्ञान) भएका हुनाले षडभिज्ञ हुन् । अभिको अर्थ हो सबै किसिमबाट र ज्ञाको अर्थ हो ज्ञान । यसरी अभिज्ञा शब्द बनेको छ ।

ते (ज्ञायन्ते)यया सा षढा ॥ ॥ दशबलः ॥ दशानां बलानां समाहारः दानादिदश-पारमिताभिर्बल्यते शोभते च ॥ ॥ अद्वयवादी ॥ सत्यातथ्यं(सत्यं) वदितुं शीलमस्य न द्वयवादी – अद्वयवादी ॥ ॥ विनायक(:) ॥ विशेषेण नायकः मोक्ष-प्रापयिता ॥ मुनींद्र(नीन्द्र): ॥ मन(:)शिला(शील)-नियमतस्तेषामिन्द्रः श्रेष्ठः ॥ ॥ श्रीधन (:) ॥ श्रीया (श्रियो) धन(:) सांद्र(सान्द्रः) निरंज(रञ्ज)नभुवन-ज्योतिराकारः चातुर्युगाः(गः) ॥ ॥ पंच(पञ्च)भूतात्मा प्रवृत्तिकाम(:) ॥ ॥ धर्मेशः ॥ धर्माणां:(णां) दशकुशलादीनां(नाम्) ईशः धारणात्मकानां सं-(सां)सारिकाणां च ॥ ॥ श्रीशः ॥ श्री(:) लक्ष्मी (:) श्रियो वेषा(शा)वयो (यः) अष्टैश्वर्यादयस्तेषामीशः ॥ ॥ कामेशः कामोभिलाषः कामः कांत (कान्त): कामो मदनस्तेषामीश्वरः ॥ त्रिगुणाभिज्ञः ॥ त्रयो गुणांः (णाः) सत्व(त्त्व)-रजस्तमांसि तानभि सर्वतो जानातीति ॥ लोकनाथः ॥ लोकं यंती(यन्ती)ति लोकाः सं(सां)सारिकनैर्वाणिकास्तेषां तथा ॥ ॥ लोकपूज्यः ॥ लोके भ–



जसबाट छ प्रकारका ज्ञान जानिन्छन् उक्त प्रकारलाई षढा (षड्धा) भन्दछन् । बुद्धका अन्य विशेषता हुन्– दशबल, अद्वयवादी, विनायक, मुनीन्द्र, श्रीधन, सान्द्र, पञ्चभूतात्मा, धर्मेश, श्रीश, कामेश, त्रिगुणाभिज्ञ तथा लोकपूज्य ।

बुद्ध–

– दशबलहरूका पुञ्ज हुनाले अथवा दान आदि दश पारमिताले शोभित हुनाले दशबल हुन् ।
– सत्य र असत्य बोल्नेलाई द्वयवादी भन्दछन् । यिनी द्वयवादी होइनन्, त्यसैले अद्वयवादी हुन् ।
– विशेष गरेर नेतृत्व गर्न सक्ने अर्थात् मोक्ष-(निर्वाण)-मा पुऱ्याउन सक्ने हुनाले विनायक हुन् ।

– मन, शील (आचरण)-को आदि नियन्त्रण गर्नेलाई मुनि भन्दछन् । यस्ता मुनिहरूमा श्रेष्ठ हुनाले मुनीन्द्र हुन् ।

– श्री अर्थात् ऐश्वर्यका पनि धन हुनाले श्रीधन हुन् ।

– चारै युगमा पनि निर्लिप्त रहेर भुवन-(संसार)-का ज्योतिःपुञ्ज हुनाले सान्द्र हुन् ।

– प्रवृत्तिमार्गमा समेत देखा परेकाले पञ्चभूतात्मा (पाञ्चभौतिक शरीर भएका) हुन् ।

– धारणाशील (त्यागी योगीहरू) र सांसारिक-(व्यवहारी मानिसहरू)-का दश प्रकारका कुशल आदि धर्मका मालिक हुनाले धर्मेश हुन् ।

– श्रीको अर्थ लक्ष्मी हो अथवा श्रीहरू भनेको वेशभूषा आदि र आठ ऐश्वर्य (अष्ट सिद्धि) हुन् । तिनका ईश्वर हुनाले श्रीश हुन् ।

– कामका अर्थ हुन्– अभिलाषा, सुन्दर र कामदेव । ती सबैका ईश्वर हुनाले कामेश हुन् ।

– सत्त्व, रज र तम नामका तीन गुणलाई सबै किसिमबाट जान्ने हुनाले त्रिगुणाभिज्ञ हुन् ।

– संसारमा भुल्ने सांसारिक र निर्वाण-(मोक्ष)-तर्फ उन्मुख नैर्वाणिक-(मुक्ति चाहने व्यक्ति)-का पनि नाथ (मालिक) हुनाले लोकनाथ हुन् ।

– लोक अर्थात् संसारमा पूज्य हुनाले लोकपूज्य हुन् ।

**वने (भुवने) लोके पूज्ये(ज्यः) ।। ।। लोकेश्वरः ।। ब्रह्मा(ह्म)विष्णुमहेशादीनां-(नाम्) ईश्वरः ।। ।। लोकोद्धरः ।। कृमिकीटादीन् लोकानुद्धरतीति ।। ।। प्रज्ञोपायजः ।। प्रज्ञोपायाभ्यां जातो मानसः सन्निति प्रज्ञोपायजः ।। ।। बुद्धपुत्रः आदिबुद्धपुत्रः ।। ।। समंत(मन्त)दर्शी समंत(मन्त)तो दर्शितुं शीलमस्य ।। ।। वादिराट् ।। वदितुं शीलं येषां ते वादिनः तेषां राट् वादिपुंगव (पुङ्गवः) इत्यर्थः ।। ।। वज्रधातुभुवनं (नम्) ।। वज्रमभेद्यं धातुधारणं यस्मिन् तदेव भुवन (नम्) ।। ।। शान्ताकारं (रम्) ।। चातुर्युगं (गम्) ।। उदयात्मा ।। प्रवृत्तिकरणे आत्माभिन्नां (न्नः) ।। ।। प्रवृत्तिकामः ।। प्रवृत्तिकारणे कामोभिलाषः ।। अथ पंच (पञ्च) बुद्धानां (नाम्) ।। वैरोचनस्य ।। वैरोचनः ।। विशेषेण सर्वान् सर्वं(र्वं) रोचयति प्रकाशयति यः स(ः) ।। महादीप्ति(ः) ।। महती दीप्तिं(प्तिः) ज्योतिर्यस्य ज्योतिरूपत्वात् ।। ।। ज्ञानज्योति(ः) ।। ज्ञानं ज्योतिर्यस्य स ज्ञानमयत्वात् ।। विरोचन(ः) ।। विशिष्टा रोचिर्य–**

बुद्ध संसारभर पूज्य छन् । बुद्धका अन्य विशेषता हुन्– लोकेश्वर, लोकोद्धर, प्रज्ञोपायज, बुद्धपुत्र, समन्तदर्शी, वादिराट् वज्रधातुभुवन, शान्ताकार, चतुर्युग, उदयात्मा र प्रवृत्तिकाम ।

बुद्ध–

– ब्रह्मा, विष्णु र महेश्वरका पनि ईश्वर हुन् ।
– कीरा आदि लोक-(प्राणी)-को समेत उद्धार गर्ने हुनाले लोकोद्धर हुन् ।
– प्रज्ञा (ज्ञान) र उपाय-(ज्ञानको साधन)-द्वारा मानस रूपमा(सूक्ष्म शरीरको रूपमा)जन्मेका हुनाले प्रज्ञोपायज हुन् । अथवा समन्तभद्र आदि पाँच बोधिसत्त्वका 'उपाय' तथा वज्रधात्वीश्वरी आदि पाँच ताराका 'प्रज्ञा'-को सम्मिलनलाई प्रज्ञोपाय (इन्द्रियसम्भोगसुख वा मैथुन) भन्दछन् । यसैबाट उत्पन्न भएका हुनाले प्रज्ञोपायज हुन् ।
– आदिबुद्धका सन्तान (अंशरूप) हुनाले बुद्धपुत्र हुन् ।
– चारैतिर देख्न सक्ने क्षमता भएका हुँदा समन्तदर्शी हुन् ।
– बोल्न सक्ने क्षमता (वक्तृत्वशक्ति) भएकाहरूमध्यका राजा (श्रेष्ठ) भएकाले वादिराट् हुन्, वादिपुङ्गव (बोलीले प्रभाव पार्नेहरूमा सर्वश्रेष्ठ) हुन् ।
– आफ्नो धारणा-(बुद्धदर्शन)-बारे वज्रजस्तै दृढ आधार (सोचाइ) राख्ने हुनाले वज्रधातुभुवन हुन् ।
– शान्त आकार (मूर्ति) भएका हुनाले शान्ताकार हुन् ।
– चारै युगमा व्याप्त (स्थायी, अविनाशी) हुनाले चातुर्युग हुन् ।
– प्रवृत्तिमार्गको लागि (मूर्तिरूपमा देखा पर्दा पनि) आत्मा-(सूक्ष्मरूप वा सत्य, ज्ञान र आनन्दको स्वरूप)-भन्दा फरक नहुनाले उदयात्मा (आत्मतत्त्वका मूर्त रूप) हुन् ।
– (निवृत्तिमार्गमा उन्मुख हुन) प्रवृत्तिमार्गमा अभिलाषा (इच्छा) राख्ने हुनाले प्रवृत्तिकाम (जीवन्मुक्त व्यवहारी) हुन् ।

अब पञ्च बुद्धबारे वर्णन गरौं, तिनमा पनि वैरोचनको दृष्टिबाट ।
बुद्ध वैरोचन हुन्, विशेष गरेर सबैलाई प्रकाश (ज्ञान) दिने हुनाले ।
वैरोचनका विशेषता (अर्थ) हुन्– महादीप्ति, ज्ञानज्योति र विरोचन ।
वैरोचन (तथागत) वा बुद्ध–

– ज्योतिरूप हुनाले महान् ज्योति (प्रकाश, ज्ञान) भएको भन्ने अर्थमा महादीप्ति हुन् ।
– ज्ञानमय हुनाले ज्ञान नै ज्योति (प्रकाश) भएको भन्ने अर्थमा ज्ञानज्योति हुन् ।
– विशिष्ट रोचि (तेज, प्रकाश) भएको हुनाले विरोचन हुन् ।

धर्म :
।।४।।

स्य सर्वाऽधिकतेजस्वी ।। ।। जगत्प्रदीपः ।। जगत् प्रकर्षेण दीपयतीति जगति प्रदीप इव. तमों (मोन्) धकारनाशकत्वात् ।। ।। ज्ञानोल्क(:) ।। ज्ञानेन उल्का इव जाज्वल्यमानः ।। ।। महातेजा महत्तेजो यस्य चंद्र(चन्द्र)सूर्य्यातिरिक्ततेजत्वा (त्त्वा) त् ।। प्रभास्वरः ।। प्रकर्षेणाधिकतरं(रम्) ।। विद्याराजं(जः) ।। विद्या-(द्यया)भिराजते ।। विद्या नाम लोकोत्तरं लौकिकं ज्ञायते यया ।। ।। अग्रमंचे(मञ्चे)-शः ।। अग्राणि प्रशस्तानि मचाणि(मञ्चानि)षडक्षरादीनि तेषामीशः ।। विश्वदर्शी ।। विश्वं समस्तं र्दाशतुं दर्शयितुं शीलमस्य ।। ।। वियत्पतिः ।। वियदाकाशं पाति रक्षति, सर्वपालको वियत् लीलाधिकारित्वात् ।। ।। महार्थंकृत् ।। महांति(हान्ति) अर्थानि द्रव्याणि च करोतीति ।। ।। अकनिष्ठभुवनं(नम्) ।। न कनिष्ठं सर्वज्येष्ठमित्यर्थः ।। ।। चक्षुषाकारः ।। पृथिव्याकार : ।। प्रथमेन्द्रियं चक्षुः. प्रथमभूतपृथ्वी. प्रथम-बुद्ध (द्धः) वैरोज(च)नः ।। सिंहासनपृथिव्याकारः । अथ–

राम :
।।४।।

वैरोचन (बुद्ध) सबैभन्दा बढी तेज भएका हुन् । बुद्धको वैरोचन धर्म-(प्रकाशित हुने प्रकृति)-लाई मुख्य मानेर वर्णन गर्दा वैरोचन-(बुद्ध)-का विशेषता हुन्– जगत्प्रदीप, ज्ञानोल्क, महातेजा, प्रभास्वर, विद्याराज, अग्रमञ्चेश, विश्वदर्शी, वियत्पति, महार्थंकृत्, अकनिष्ठभुवन, चक्षुषाकार तथा पृथिव्याकार ।

वैरोचन (तथागत वा बुद्ध)–

– संसारमा अन्धकार नाश गर्ने दीप (बत्ती) जस्तै र संसारलाई प्रदीप्त (प्रकाशित ज्ञानी) बनाउने हुनाले पनि जगत्प्रदीप हुन् ।
– ज्ञानले उल्का (ज्यादै चम्किलो, खस्दो तारा) जस्तै हुनाले ज्ञानोल्क हुन् ।
– चन्द्रमा र सूर्यको भन्दा अतिरिक्त (बाहेक, विशेष खालको) महान् तेज भएकाले महातेजा हुन् ।

– अत्यधिक चम्कने हुनाले प्रभास्वर हुन् ।

– लौकिक (सांसारिक) र लोकोत्तर (संसारभन्दा बाहिरको, आत्मिक) ज्ञान जसद्वारा ज्ञात हुन्छ त्यो विद्या हो । यस्तै विद्याद्वारा चारैतिर शोभित हुने हुनाले विद्याराज हुन् ।

– प्रशस्त (प्रशंसनीय, मङ्गलकारक) छ र अक्षर आदिका ईश्वर पनि हुनाले अग्रमञ्जेश हुन् ।

– सम्पूर्ण विश्वलाई देख्न र दर्शाउन समर्थ हुनाले विश्वदर्शी हुन् ।

– वियत्को अर्थ हो आकाश । आकाशको रक्षा गर्ने हुनाले वियत्पति हुन् । अथवा लीला-(सांसारिक प्रपञ्च)-को अधिकारी (आश्रयस्थल) हो वियत् (आकाश) । त्यसको पालन गर्ने हुनाले पनि वियत्पति हुन् ।

– महान् अर्थ (महत्त्वपूर्ण द्रव्य वा धन अर्थात् ज्ञानरूप धन) गराउन (प्रदान गर्न) सक्ने हुनाले महार्थकारी हुन् ।

– संसारमा कनिष्ठ (पछिल्ला) नभएको अर्थात् सबभन्दा जेठा (सर्वप्रथम प्रकाशित) हुनाले अकनिष्ठभुवन हुन् ।

– पहिलो इन्द्रिय हो चक्षु (आँखा) । चक्षु-(आँखा, प्रकाशपुञ्ज)-का आकार हुनाले चक्षुषाकार हुन् ।

– पृथ्वीमा सर्वप्रथम देखा परेका, वैरोचन (स्वयम्प्रकाश) प्रथम बुद्ध हुनाले पृथ्वीकै रूप भई पृथिव्याकार हुन् ।

यसपछि–

धर्मस्य ।। ।। चातुर्युगः ।। धर्म (:) ध्रियते रूपात्मा इति. धारयते पोषयते जगद्येन इति ।। धारणात्मक ! ।। ।। चक्षुरूप. कामसाकार. एकमुख. श्वेतवर्ण. द्विभुजधर्म चक्रमुद्रावज्रासना (नः) ।। ।। प्रज्ञा ।। बुद्धधर्मसंघा (सङ्घा) नां प्रज्ञोपायात्मक– जगदितिवचनात् ।। धर्मशब्द(:) प्रज्ञाबोधकत्वात् स्त्रीलिंग (लिङ्ग): देवीबोधः प्रज्ञायाः पदार्थः प्रागेवोक्तः ।। ।। प्रज्ञापारमिता ।। ।। प्रज्ञाश्रीः प्रकर्षेण सर्वेर्ज्ञाता. श्रेयो यस्या(:) ।। ।। बुद्धिवर्द्धिनी ।। निर्वाणबोधनां बुद्धि वर्द्धयति भुवनानां(नाम्)।। ।। प्रज्ञा भा ।। प्रज्ञा ज्ञानं तत्व(त्त्व)स्वरूपा आभा यस्या(:) ।। ।। प्रज्ञारूपा ।। प्रकृष्टज्ञानमेव रूपं यस्या(:) ।। ।। प्रज्ञादेवी ।। प्रज्ञा या सर्वं दीव्यति या ।। ।। जगत्प्रसू(:) ।। जगतां सांसारिकाणां प्रसू(:) माता. जगत्प्रसूये(य)ते यया ।। ।। जगन्माता जगति मीयते इयमम्वे(म्बे)ति. जगतः संसारस्य इयत्संख्येति प्रमाणयित्री ।। महादेवी ।। महती चासौ देवी. महा (ह) सा तेजसा दीव्यति जगति जगद्वा ।।

अब धर्मबारे चर्चा गरिन्छ । धर्म चारै युग-(सत्य, त्रेता, द्वापर, कलि)-मा व्याप्त छ । धर्म भनेको धारण गरिने (अँगालिने) कार्य हो, त्यसैले यो रूप-(कार्यव्यापार)-को स्थितिमा रहन्छ । जसद्वारा संसारको धारण वा पोषण (संरक्षण-संवर्धन) हुन्छ त्यही नै धर्म हो ।

धर्मलाई रूप-(मूर्त)-को दृष्टिले हेर्न चाहँदा के देखिन्छ भने धर्म चक्षुरूप (सही बाटो देखाउने हुनाले आँखास्वरूप) छ, निष्कलङ्क (दागरहित) तथा सत्त्वगुणी हुनाले श्वेत (सेतो रङ्गको) रूप छ, कार्यमा प्रवृत्त गराउने हुनाले मानवजस्तै द्विभुज (दुई हात भएको) छ, धारणास्वरूप छ, चक्रजस्तै निरन्तर गतिशील तर समानधर्मी छ, मुद्रा वा चिह्नस्वरूप छ, वज्र (स्थिर) आसन (मूलभूत मान्यता) भएको छ ।

अब प्रज्ञाबारे चर्चा गरिन्छ । बुद्ध, धर्म र सङ्घको प्रज्ञा र उपायरूप जगत् (संसारका तत्त्व हुन्) भन्ने वचन-(धारणा)-ले धर्म र प्रज्ञा पर्यायवाची हुन् ।

धर्म शब्द नै प्रज्ञा (ज्ञान) लाई बुझाउने हुनाले स्त्रीलिङ्गी, देवीबोधक शब्द प्रज्ञा भनिएको हो । प्रज्ञाको अर्थ पहिले नै भनिसकियो ।

अब प्रज्ञापारमिताबारे चर्चा हुन्छ । यो प्रज्ञाश्री हो । प्रकर्ष (विशेष) रूपले सबैले जानिने तत्त्व (ज्ञान) चाहिँ प्रज्ञा हो । त्यस्तो प्रज्ञा नै श्रेय (कल्याणकारी तत्त्व) जसको हुन्छ त्यही नै प्रज्ञाश्री भनिएको हो ।

प्रज्ञा वा धर्मका अन्य विशेषता हुन्– बुद्धिवर्धिनी, प्रज्ञाभा, प्रज्ञारूपा, प्रज्ञादेवी, जगत्प्रसू, जगन्माता र महादेवी ।

धर्मरूप प्रज्ञा–

– निर्वाण-(मुक्ति)-को बोध गराउने, बुद्धिको वृद्धि गराउने हुनाले बुद्धिवर्धिनी हो ।
– प्रज्ञा भनेको ज्ञान हो, त्यही स्वरूपको आभा (प्रकाश) हुने हुनाले प्रज्ञाभा हो ।
– प्रकृष्ट (विशिष्ट) खालको ज्ञानस्वरूप हुनाले प्रज्ञारूपा हो ।
– सबैलाई दिव्य (उच्च) बनाउने हुनाले प्रज्ञादेवी हो ।
– जगत् अर्थात् संसारका बासिन्दाहरूकी प्रसू अर्थात् माता हुनाले जगत्प्रसू हो । अथवा जसबाट जगत्को उत्पत्ति हुन्छ त्यसो हुनाले जगत्प्रसू हो ।
– जगत्-(संसार)-को यस्तै हो भन्ने मापन (नापतौल) गर्ने हुनाले र जगत्की अम्बा-(आमा)-स्वरूप हुनाले पनि जगन्माता हो । अथवा संसारको यति नै सङ्ख्या भन्ने प्रमाणित गर्ने हुनाले पनि जगन्माता हो ।
– सबभन्दा महान् देवी हुनाले अथवा महान् तेजले शोभित हुनाले महादेवी हो । अथवा संसारमा शोभित हुने वा संसारलाई शोभित पार्ने हुँदा महादेवी हो ।

धर्म :
॥५॥

॥ ॥ महेश्वरी ॥ महती चासौ ईश्वरी ॥ महोभिस्तेजोभिरीश्वरी स(सा)मर्थ(र्थ्य)वती ॥ ॥ जगदीश्वरी ॥ जगतामीश्वरी ॥ महोत्तमा ऐश्वर्यप्रदानात् ॥ ॥ धात्री धारण-पोषणशीलो (ला) जगतां मातृभूतत्वात्. धात्री यत्सकाशात् पृथिवी च ॥ धारणी त्रित्रिगुणं चतुर्वर्गं त्रिधातुं धारयतीति धारणी धारणीस्वरूपा च ॥ ॥ धृतिर्धैर्यं मनोद्वेगहरणं ददातीति धृतिदा धारणात्मकत्वात् ॥ ॥ कामरूपिणी ॥ कामं स्वे (च्) छारूपं यस्याः कामरूपिणी वैनेयवशात् ॥ ॥ श्रीकरी ॥ वर्गदात्री ॥ चतुर्वर्गादयस्तान् ददाति ॥ ॥ शरण्या अगतिकानां गमनीया ॥ धर्मधातुभुवन-(नम्) ॥ धर्म(र्मं) पुण्यं संसारं च धारयतीति धर्मधातुः तदेव भुवनमुत्पत्तिस्थानं-(म्) ॥ ज़लमयाकारः ॥ प्रज्ञा स्त्रीलिंग(लिङ्ग)त्वात्. द्रवरूपा. ततो जलाकारः ज़लं द्रवत्वं (म्) ॥ ॥ चातुर्युगीया ॥ ॥ पं–

शम :
॥५॥

धर्मरूप प्रज्ञाका अन्य विशेषता हुन्– महेश्वरी, जगदीश्वरी, धात्री, धारणी, धृतिदा, कामरूपिणी, श्रीकरी, वर्गदात्री, शरण्या, धर्मधातुभुवन, जलमयाकार र चातुर्युगीय ।

धर्मरूप प्रज्ञा–

– महान् ईश्वरी (शक्तिशाली देवी) भएकी हुनाले अथवा तेजहरूद्वारा निकै समर्थ भएकी हुनाले महेश्वरी हो ।

– जगत्की ईश्वरी (मालिक्नी) हुनाले तथा ऐश्वर्य (सम्पत्ति) प्रदान गर्ने महान् वा उत्तम हुनाले पनि जगदीश्वरी हो ।

– संसारकी आमास्वरूप भई धारण र पोषण गर्ने हुनाले धात्री हो ।

– तीन गुण (सत्त्व, रज, तम) तथा चार वर्ग (धर्म, अर्थ, काम, मोक्ष) एवं तीन धातु (?) धारणा गर्ने भई धारणीस्वरूप हुनाले धारणी हो ।

– मनको उद्वेग-(चञ्चलता)-को हरण गर्ने धैर्यलाई धृति भन्दछन्। यस्तो धैर्य दिने भई धारणास्वरूप हुनाले पनि धृतिदा हो।

– कामको अर्थ हो आफ्नो इच्छा। त्यस्तो स्वेच्छारूप भएकी हुनाले कामरूपिणी हो।

– ऐश्वर्य दिने हुनाले श्रीकरी हो।

– चार वर्ग (धर्म, अर्थ, काम, मोक्ष नामका चार पुरुषार्थ) आदि दिने हुनाले वर्गदात्री हो।

– गति (पहुँच, सामर्थ्य) नभएकाहरूको जाने (शरण पर्ने) ठाउँ हुनाले शरण्या हो।

– धर्मको अर्थ पुण्य र संसार पनि हो। त्यस्तो धर्म धारण गर्ने चाहिँ धर्मधातु हो। त्यहीं नै भुवन अर्थात् उत्पत्तिस्थान (आश्रय) हुनाले धर्मधातुभुवन हो।

– स्त्रीलिङ्गी रूप हुनाले प्रज्ञा द्रव (तरल, कोमल) रूप मानिन्छ। त्यसैले जलाकार अथवा जलमयाकार हो। जलको अर्थ हुन्छ द्रवत्व अर्थात् तरलता (व्याप्तरूपता)। (त्यसैले प्रज्ञा सर्वव्याप्त छ।)

– चारै युगमा रहने हुनाले चातुर्युगीय हो।

**च (पञ्च) बुद्धसृष्टिकारणकामः ॥ ॥ पंच(पञ्च)बुद्धात्मा पंच(पञ्च)-बुद्धेषु आत्मा चेतो यस्याः पंच(पञ्च)बुद्धः सृजने चेत(तस्)त्वात् ॥ शांता-(शान्ता)त्मा. विजितात्मा. क्रूरात्मा. ज्ञानात्मा. गुणात्मा ॥ ॥ अथ संघस्य ॥ ॥ संघः ॥ संघयति समूहयति. समूहात्मकः ॥ ॥ समुदायात्मकः प्रज्ञोपायज-गदात्मकत्वात् समुदायात्मकः एका प्रज्ञा एक उपाय एक(कम्) जगत् ॥ ॥ बोधिसत्व(त्वः) ॥ बोधौ सत्वं(त्वं) बोधौ बोधने वा ज्ञाने वा सत्वं(त्वं) चेतो. यस्य ॥ ॥ महासत्वं(त्वः) ॥ महत्सत्वं(त्वं) चेतो महस्तेजोमयं सत्वं (त्वं). महान्(हत्) सत्व(त्व)मिति सोहमिति ज्ञानं यस्मात् ॥ महाकारुणिक-(कः)महतो(ती) करुणा यस्मिन्. महत्या करुणया लोकहितकृत् ॥ ॥ अवलोकेश-(शः)॥ अवलोकानां दृष्टिवतां(ताम्) ईशः अवलोकनेनैव ऐश्वर्यं दत्वा ईशः ॥ ॥ जगदीशः ॥ षड्गतिप्रभवानां(नाम्) ईशः ॥ ॥ वागीशः वाचा (चां) वदतां च ईशः ॥ ॥ चित्तेशः ॥ चिंत(चिन्त)यति संज्ञायति रूपशब्दगंध(गन्ध)-रसस्पर्शान्.**

धर्मरूप प्रज्ञा पाँच बुद्धको सृष्टि-(आविर्भाव)-को कारण मानिन्छ। त्यसैले पञ्चबुद्धात्मा (पञ्चबुद्धस्वरूप) पनि हो। जुन प्रज्ञाको पाँच बुद्धको सृजन-(सृष्टि)-मा चित्त लागेको हुन्छ त्यही नै पञ्चबुद्धात्मा हो। पाँच बुद्ध हुन्– शान्तात्मा (शान्त आत्मा भएका), विजितात्मा (मन आदि इन्द्रिय जित्न सक्ने), क्रूरात्मा (चाहिएको समयमा क्रोधी रूप देखाउन सक्ने), ज्ञानात्मा (ज्ञानस्वरूप) र गुणात्मा (गुणस्वरूप भएका)।

अब सङ्घबारे चर्चा गरिन्छ। समूह वा जमात जसले बनाउँछ त्यो सङ्घ हो। सङ्घ समूहात्मक हुन्छ।

सङ्घका विशेषता हुन्– समुदायात्मक, बोधिसत्त्व, महासत्त्व, महाकारुणिक, अवलोकेश, जगदीश, वागीश र चित्तेश।

सङ्घ–

– प्रज्ञा, उपाय र जगत्स्वरूप हुनाले समुदायात्मक हो। एक प्रज्ञा, एक उपाय र एक जगत् गरी तीनको समुद्राय (समूह) हो।

– बोधिमा सत्त्व हुनाले बोधिसत्त्व हो। बोधिको अर्थ हो बोधन (जागरण) वा ज्ञान। सत्त्वको अर्थ हो चित्त (मन)। यसरी ज्ञानमा चित्त लगाउने हुनाले बोधिसत्त्व भनिएको हो।

– महान् सत्त्व वा चित्त भएकाले महासत्त्व हो। अथवा महस्को अर्थ हुन्छ तेज। यसरी तेजोमम (तेजयुक्त) चित्त भएकाले महासत्त्व हो। अथवा तेजोमय सत्त्व भएको मै हुँ भन्ने ज्ञान हुनाले महासत्त्व हो।

– महान् करुणा (दया) भएका हुँदा महाकारुणिक हो। महान् करुणा जसमा हुन्छ, त्यही हुनाले पनि महाकारुणिक हो।

– दृष्टि (आँखा, ज्ञान) भएकालाई अवलोक भन्दछन्। त्यस्ता अवलोक-(दृष्टिवान्)-हरूको ईश्वर हुनाले अवलोकेश हुन्। अथवा अवलोकन-(दर्शन)-ले मात्रै ऐश्वर्य दिने हुनाले अवलोकेश हो।

– छ प्रकारको गति पैदा गर्ने-(जगत्)-का ईश्वर हुनाले जगदीश हो।

– वाक् (वाणी वा बोली) र बोल्नेहरूका पनि ईश्वर हुनाले वाणीश हो।

– रूप, शब्द, गन्ध, रस र स्पर्शरूप पाँच तत्त्व-(पृथ्वी आदि पञ्च महाभूतका पाँच तन्मात्रा)-को संज्ञान (थाहा) दिनु नै चित्त हो। त्यस्तो चित्तको पनि ईश्वर हुनाले चित्तेश हो।

धर्म :

॥६॥

चित्तं तस्येशः ॥
दीपंक(पङ्क)रः ॥ ज्वालावती ज्वाला विद्यंते(द्यन्ते)यस्याः दीपंक(पङ्क)रप्रज्ञा ॥
रत्नगर्भः ॥ लक्षणवती-लक्षणानि विद्यंते(द्यन्ते)यस्या रत्नगर्भस्य
विपश्वी ॥ विपश्यंती(श्यन्ती) विशिष्टानि कर्माणि पश्यतीती विपश्यित(श्यिन्).
शिखो ॥ शिखामालिनो शिखा रोमोद्गतकिरणानां माला (वि)द्यंते(द्यन्ते)
शिखित(खिन्). विश्वभुव(:)॥ विश्वंध(श्वन्ध)रा. विश्वं संपू(सम्पू)र्णं शुभं(भुवं)
धरतीति विश्वभुव(वः) कुकुत्संदः(सन्दः) ॥ कुकुद्विद्यते यस्यां कुकुत्संद(सन्द)स्येव
-कनकमुनिः ॥ कांच(काञ्च)नमालिनी. कांच(काञ्च)नस्य माला इव लक्षणालंका-
(लङ्का)रमालिनी कनकमुनिप्रज्ञा

राम :

॥६॥

चित्त-(इन्द्रियसंवेद्य वस्तुको पहिचान गर्ने चैतन्य तत्त्व)-का ईश्वर हुनाले सङ्घ चित्तेश हो।

अब दीपङ्कर आदि-(नौ बुद्ध वा बुद्धका शिष्य)-को चर्चा गरौं।

दीपङ्कर– ज्वाला वा तेज भएका अथवा तेजस्वी प्रज्ञा भएका बुद्ध दीपङ्कर हुन्।

रत्नगर्भ– रत्नगर्भ-(भित्र रत्न भएको)-का लक्षणहरू भएका बुद्ध रत्नगर्भ हुन्।

विपश्यी– विशिष्ट कर्म (सांसारिक प्रपञ्च) देख्ने बुद्ध विपश्यी हुन्।

शिखी– शिखाको अर्थ हुन्छ रौं-केश)-बाट उत्पन्न किरणको माला(लहर)। त्यस्तो किरणसमूह भएका बुद्ध शिखी हुन्।

विश्वभू– यिनलाई विश्वधर पनि भन्दछन्। विश्वको अर्थ हो सबै भुवन (पृथ्वी)। त्यस्तो पृथ्वी धारण गर्ने बुद्ध विश्वभुव हुन्।

कु(क)कुत्सन्द– ककुत्को अर्थ हुन्छ राजचिह्न वा गोरु आदिको जुरो। ककुत्सन्द

भनेको राजा अथवा साँढे हो। यहाँ ककुत्सन्दको जस्तै विशेष चिह्न (ज्ञान ?) भएका बुद्ध ककुत्सन्द हुन्।

कनकमुनि– सुनको माला जस्तै लक्षण र अलङ्कारले युक्त हुनु कनकमुनिप्रज्ञा हो। यस खालको विशेषता भएका बुद्ध कनकमुनि हुन्।

**काश्यपः ।। महोधरा(रः) ।। महांति(हान्ति) किरण्य(णा)नि रोमोद्गतानि धरतीति काश्यपप्रज्ञा.**

**शाक्यसिंहः ।। यधोधरा(रः) ।। यशांसि धर्मसत्यार्जितानि धरतीति शाक्यसिंहस्य.**

---

**दीपं(पङ्करः) ।। प्रदीपेश्वरः ।। नवकानां नवमुख्यशिष्यसंघा(सङ्घानां) प्रदीप(पव)-ज्ज्वलन्नीश्वर इति दीपंक(पङ्क)रस्य मुख्यशिष्यदशकोटीनां मध्ये.**

**रत्नग(गर्भः) ।। रत्नराज (जः) ।। रत्नेन बोधिरत्नेन राजते रत्नगर्भस्य मुख्य-शिष्यबहूनां मध्ये.**

**विप(पश्वी) ।। महामति(तिः) ।। महति(ती) बुद्धिर्यस्य विपश्विबुद्धस्य कोटिभिक्षूणां मध्ये.**

**शिखि (खी) ।। रत्नधर (रः) ।। रत्नं. धर्मरत्नं धरतीति शिखिबुद्धस्य व(ब)हूनां मध्ये.**

**विश्वंभुव (वः). आकाशगंज(गञ्जः) ।। विश्वंभुवबुद्धस्य बहूनां मध्ये. ।।**

काश्यप– काश्यपलाई महोधर(महस्‌को अर्थ हो तेज, त्यो धारण गर्ने)पनि भन्दछन्। रोम-(केश)-बाट उत्पन्न महान् किरण धारण गर्नु काश्यपप्रज्ञा हो। यस खालको विशेषता भएका बुद्ध काश्यप हुन्।

शाक्यसिंह– शाक्यसिंहलाई यशोधर (कीर्तिशाली) पनि भन्दछन्। धर्म र सत्यद्वारा आर्जित (कमाइएको) यश (कीर्ति) धारण गर्ने बुद्ध चाहिं शाक्यसिंह हुन्।

---

फेरि उक्त नौ बुद्ध-(दीपङ्कर, रत्नगर्भ, विपश्वी, शिखी, विश्वभू, ककुत्सन्द, कनकमुनि, काश्यप र शाक्यसिंह)-बारे चर्चा गरौं।

दीपङ्कर– यिनलाई प्रदीपेश्वर पनि भन्दछन्। नौ मुख्य शिष्य-(शिष्यसङ्घ)-मध्ये प्रदीप (बत्ती) जस्तै बल्ने (प्रकाशित हुने) ईश्वरतुल्य बुद्ध दीपङ्कर हुन्। अथवा मुख्य दश कोटि (करोड) शिष्यमध्ये पनि यिनी दीपङ्कर बुद्ध श्रेष्ठ हुन्।

रत्नगर्भ– यिनलाई रत्नराज पनि भन्दछन् । रत्नको अर्थ हो ज्ञानरूप रत्न । त्यस्तो ज्ञानरत्नले शोभित हुने तथा मुख्य धेरै शिष्यमध्ये प्रसिद्ध भएका हुनाले पनि बुद्ध रत्नगर्भ हुन् ।

विपश्वी– यिनलाई महामति (महान् बुद्धि भएका) पनि भन्दछन् । कोटि भिक्षुहरूमध्ये जसको महान् बुद्धि हुन्छ त्यस्ता बुद्ध विपश्वी हुन् ।

शिखी– यिनलाई रत्नधर पनि भन्दछन् । रत्नको अर्थ हो धर्म (धर्मरूप रत्न) ।

धेरै-(शिष्यहरू)-मध्ये त्यस्तो धर्मरत्न धारण गर्ने बुद्ध शिखी हुन् ।

विश्वंभुव– यिनलाई आकाशग-(गञ्ज) पनि भन्दछन् । आकाशजस्तै सर्वव्यापी हुनु आकाशगञ्ज हो । विश्वंभुव आदि धेरै-(शिष्यहरू)-मध्ये व्यापक धर्म हुने बुद्ध विश्वंभुव हुन् ।

घर्म :

॥७॥

ककुछन्द (ककुत्सन्दः) ॥ सकलमंग(मङ्ग)लः ॥ सकलानां मंगल (मङ्गलं) यस्मात्
ककुछन्दस्य (ककुत्सन्दस्य)
कनकमुनि (:) ॥ कनकराज (:) ॥ कनकवद्राजते कनकद्युतित्वात् कनकमुनि(:).
काश्यप (:) ॥ धमो(र्मो)दर (:) ॥ धर्मा(र्मं) एव उदरे यस्य काश्यपबुद्धस्य.
शाक्यसिंह (:) ॥ आनंद(नन्दः) ॥ ज्ञानादिना सदा आनंदो (नन्दो) यस्य शाक्य-
सिंहस्य अर्द्ध त्रयोदशशतमध्ये.

ककुत्सन्द– यिनलाई सकलमङ्गल पनि भन्दछन् । जसबाट सबैको मङ्गल हुन्छ, त्यस्ता बुद्ध ककुत्सन्द हुन् ।

कनकमुनि– यिनलाई कनकराज पनि भन्दछन् । कनक-(सुन)-को जस्तो द्युति (चमक) हुनाले र सुनजस्तै शोभित हुनाले यस्ता बुद्ध कनकमुनि हुन् ।

काश्यप– यिनलाई धर्मोदर पनि भन्दछन् । जसको उदर (पेट, भित्री तत्त्व) नै धर्म छ त्यस्ता काश्यपबुद्ध चाहिं काश्यप हुन् ।

शाक्यसिंह– यिनलाई आनन्द पनि भन्दछन् । जो शाक्यसिंह नामक बुद्धको साढे तेह्र सय-(शिष्यहरू)-मध्ये आनन्दस्वरूप छ त्यो बुद्ध शाक्यसिंह हुन् ।

आर्यावलोकितेश्वर.(:) अमिताभपुत्र(:) मैत्रेय.(:) ॥ वैलो(रो)चनपुत्र(:) ॥
गगनगंज (गञ्जः) ॥ अक्षोभ्यपुत्र(:) ॥ समेत(मन्त)भद्र(:) ॥ वैलो(रो)-
चनपुत्र(:) ॥ वज्रपाणि(:) ॥ वज्रस(त्त्व)पुत्र(:) मंजु(मञ्जु)घोष.(:)
– अक्षोभ्यवैलो(रो)चनोपि पुत्र (:) ॥ सर्वणीवर्णभिष्कंभि. (:) ॥ अमोघसिद्धिपुत्र
(:) क्षितिगर्भ(:) ॥ रत्नसंभवपुत्र(:) ॥ खगर्भ (रत्नगर्भः) ॥ अमिताभपुत्र
(:) ॥ [अक्षयमति (:) ॥ अक्षोभ्य (:) ॥ सागरमति (:) वैरोचन (:) ॥
वज्रगर्भ (:) ॥ अक्षोभ्य (:) ॥ चंड(चण्ड)प्रभ (:) ॥ वैरोचन (:) ॥]

बुद्धका शिष्य-परम्पराका केही नामहरू दिइन्छन् –

आर्यावलोकितेश्वर– वैरोचनपुत्र हुन् ।
मैत्रेय– वैरोचनपुत्र हुन् ।
गगनगञ्ज– अक्षोभ्यपुत्र हुन् ।
समन्तभद्र– वैरोचनपुत्र हुन् ।
वज्रपाणि– वज्रसत्त्वपुत्र हुन् ।
मञ्जुघोष– अक्षोभ्य, वैरोचन पनि हुन् ।
सर्वणीवरण– अमोघसिद्धि पनि हुन् ।
क्षितिगर्भ– रत्नसम्भव पनि हुन् ।
रत्नगर्भ– अमिताभपुत्र हुन् ।
अक्षयमति– अक्षोभ्य पनि हुन् ।
सागरमति– वैरोचन पनि हुन् ।
वज्रगर्भ– अक्षोभ्य पनि हुन् ।
चण्डप्रभ– वैरोचन पनि हुन् ।

यहाँ के स्पष्ट गर्नु उचित हुन्छ भने पौराणिक चर्चाअनुसार यो स्वयम्भू उपत्यका-(काठमाडौं उपत्यका)-मा ठूलो ताल (दह) थियो । त्यहाँ कुनै समयमा विपश्वी बुद्धले स्वयम् आएर एउटा पद्मबीज (कमलको बीउ) रोपे । त्यसबाट हजार पात भएको कमल फुल्यो । यसै फूलबाट ज्योतिःपुञ्जको रूपमा स्वयम्भू ज्योति प्रकट भएको हो । उक्त स्वयम्भू ज्योतिरूपबाट पाँचतर्फ पाँच रश्मि (किरण) देखा परे । यिनै रश्मिबाट पाँच तथागतको उत्पत्ति भयो । यिनलाई पञ्चबुद्ध पनि भन्दछन् । ती हुन्– वैरोचन, अक्षोभ्य, रत्नसम्भव, अमिताभ र अमोघसिद्धि ।

धर्म :
॥८॥

नमः श्री स्वयंभु(यम्भु)वे ॥ भुवि (भुवि) शुद्धधर्मधातुज्ञानयोगेन धर्मराट् श्रीविरोचननामानमसृजत्तेजसा विभुं(भुम्) ॥१॥ आदर्शनज्ञानयोगानक्षोभ्यमसृजद्विभुः आदर्श बिंबविमलमादर्शविव दर्श निर्मलः (लम्) ॥२॥ प्रत्यवेक्षणा(ण)ज्ञानवता सृष्टो बुद्धेन रत्नराट्. रत्नसंभ(सम्भ)वनामासौ रत्नालंका(लङ्का)र प्रोज्व(ज्ज्व)-लः (लम्) ॥३॥ समतानाम ज्ञानेनामिताभमसृजद्विभुः ध्यानमुद्रामितरुचि रत्नवर्णं महो ज्व(ज्ज्व)लं (लम्) ॥४॥ कृत्यानुष्ठानज्ञानेनादिबुद्धो मोघसिद्धकं (कम्) ॥ अभयमुद्रं व्यसृजज्जगदमोघकारकं(कम्) ॥५॥ वज्रधात्वे(त्वी)श्वरी(रीं) प्रज्ञा (ज्ञां) वज्रवै(वैरो)चनीं परो(रः) ॥ वज्रमंड(मण्ड)लमध्यस्था(स्थां) वैरोचन-परायणां(णम्) ॥६॥ लोचना(न्या)ख्यां महाप्रज्ञां लोकयंतीं(यन्तीं) जगत्त्रयी (यीम्) ॥ अक्षोभिकाभिरतिकां श्रोत्रशब्दात्मिकां परां(राम्) ॥७॥ मामकाख्या (ख्यां) भगवतीं सर्वेषां मामकीति या ॥ घ्राणगंधा(गन्धा)त्मिकां प्रज्ञा(ज्ञां) रत्नोज्व(ज्ज्व)ला(लां) महोज्व(ज्ज्व)ला(लाम्) ॥८॥ चतुर्थतारां पांडु(पाण्डु)रां तां जिह्वारसात्मिकां वरां(राम्) ॥ सुखा-

राम :
॥८॥

स्वयम्भू-(स्वयम्प्रकट ईश्वर, आदिबुद्ध अथवा नेपालका स्वयम्भू बुद्ध)-लाई नमस्कार।

अब स्वयम्भू ज्योतिरूपका पाँच ज्योतिबाट पाँच तथागत-(बुद्ध)-हरूको उत्पत्तिबारे चर्चा गरिन्छ। ती पाँच तथागत हुन्– विरोचन, अक्षोभ्य, रत्नसम्भव, अमिताभ र अमोघसिद्धि, यिनलाई पञ्चबुद्ध पनि भन्दछन्।

संसारमा शुद्ध धर्म धारण गर्ने ज्ञानको योगले (सम्पर्कले) धर्मराट्-(धर्मका अधिपति स्वयम्भू बुद्ध)-ले तेजका स्वामी (तेजस्वी) श्री विरोचन नाम गरेका तथागत-(बुद्ध)-को सृष्टि गरे ॥१॥ दर्शनपर्यन्त (देखनासाथ प्राप्त हुने) ज्ञानको योगले उनै विभु (स्वयम्भू) बुद्धले अक्षोभ्य तथागत-(बुद्ध)-को सृष्टि गरे। मलरहित आदर्श-(ऐना)-को बिम्बजस्तै स्वच्छ हुनाले

यिनी आदर्शबिम्ब जस्तै छन् ॥२॥ ज्ञानयुक्त बुद्धले प्रत्यवेक्षण-(निरीक्षण)-द्वारा रत्नसम्भव नामका तथागत-(बुद्ध)-को सृष्टि गरे, जुन रत्नसम्भव रत्नका राजा हुन् र रत्न तथा अलङ्कारले उज्ज्वल छन् ॥३॥ विभु-(बुद्ध)-ले समता-(सबैलाई समान देख्ने दृष्टि)-नामक ज्ञानद्वारा रत्नजस्तो वर्ण भएका र अत्यन्त उज्ज्वल एवं ध्यानको मुद्रा-(अवस्था)-मा महान् रुचि भएका अमिताभ नामका तथागत वा बुद्धको सृष्टि गरे ॥४॥ आदिबुद्धले कर्तव्य अनुष्ठान-(धार्मिक कार्य)-को ज्ञानद्वारा संसारलाई नै अमोघ (अव्यर्थ, सार्थक) गराउने तथा अभय (नडराऊ भन्ने आशीर्वादको,हस्तमुद्रा) लिएका अमोघसिद्धि बुद्ध वा तथागतको सृष्टि गरे ॥५॥

[यसपछि पञ्चबुद्ध (वैरोचन, अक्षोभ्य, रत्नसम्भव, अमिताभ र अमोघसिद्धि)-का क्रमैले पाँच शक्तिको उत्पत्तिबारे वर्णन गरिन्छ । ती पञ्चशक्ति हुन्– वज्रधात्वीश्वरी, लोचनी, मामकी, पाण्डुरा र आर्यतारा]

स्वयम्भू-(बुद्ध)-ले वैरोचन नामक तथागतसँग सम्बद्ध, वज्रमण्डलले बीचमा रहेकी वज्रजस्तै शक्तिशाली र प्रकाशमान वज्रधात्वीश्वरी नामक प्रज्ञा-(शक्ति)-को सृष्टि गरे ॥६॥ यस्तै श्रोत्रशब्द-(कानले सुनिने शब्द)-स्वरूप भएकी, अक्षोभ्यनामक तथागतसँग सम्बद्ध, तीनै लोक-(स्वर्ग, मर्त्य, पाताल)-लाई प्रकाशित गर्ने लोचनी नामक प्रज्ञा-(शक्ति)-को सृष्टि गरे ॥७॥ [उनै स्वयम्भूले] घ्राणगन्ध-(नाकले सुँघिने गन्ध)-स्वरूप भएकी, रत्नजस्तै र ज्यादै उज्ज्वल र सबैकी प्यारी मामकी नाम गरेकी प्रज्ञा-(शक्ति)-को सृष्टि गरे ॥८॥ यसपछि जिह्वारस-(जिब्रोले स्वाद लिइने रस)-स्वरूप भएकी, श्रेष्ठ चौथो तारा-(प्रज्ञा)-को रूपमा रहेकी सुखावतीनामक–

वत्यभिधे मेरौ संस्थितामामिताभकीं (कीम्) ॥६॥ तारां प्रज्ञां महादेवीं भवसागर-तारिणीं ॥ अमोघत्व(त्वे)त्यभिधे मेरौ स्थितां जगति सत्फलां(लाम्) ॥१०॥

॥ वैरोचनो महाबुद्धः श्रुविशुद्ध(विशुद्ध)धर्मधातुतः ॥ ससर्ज सर्वभद्रार्थं समंत-(मन्त)भद्रमात्मजं(जम्) ॥११॥ आदर्शनाख्यज्ञानेनाक्षोभ्यबुद्धः ससर्ज तं(तम्) ॥ वज्रपाणिं बोधिसत्वं(त्वं) वज्रघंटां(घण्टां) च धारिणं(णम्) ॥१२॥ प्रत्यवेक्षणाज्ञानेन ससर्ज रत्नसंभ(सम्भ)वः ॥ बोधिसत्वं(त्वं) रत्नपाणिं बोधिरत्नं महो-(ज्ज्व)ज्वल(म्) ॥१३॥ समताज्ञानयोगेनामिताभो बुद्धनायकः ॥ श्रीपद्मपाणिम-सृजलो(जल्लो)कसृष्टिसमाधिना ॥१४॥ कृत्यानुष्ठानज्ञानेनामोघसिद्धिः(द्धः) ससर्ज तं (तम्)॥ विश्वा(श्व)पाणिं वोधिस(त्वं) विश्वोद्धरणतत्परां(राम्)॥१५॥ सिताभिधानां तां तारां समंत(मन्त)भद्रप्रज्ञिकं(काम्) ॥ वैरोचनकिरीटस्थां समंत-(मन्त)भद्रकारिणीं(णीम्) ॥१६॥ अक्षोभ्यमुकुटामग्रतारां तारां भवार्णवात् ॥ श्रीवज्रपाणिप्रज्ञाख्यं वज्रकरोट(कठोर)धारिणीं(णीम्) ॥१७॥ रत्नसंभ(सम्भ)-वमुकुटां रत्नतारां महोज्व(ज्ज्व)लां(लाम्) ॥ श्रीरत्नपा–

पर्वतमा रहेकी तथा अमिताभ बुद्धसँग सम्बद्ध पाण्डुरा नामकी प्रज्ञा-(शक्ति)-को सृष्टि गरे ॥९॥ यसै गरी संसाररूपी समुद्रबाट पार तार्ने भएकी, अमोघत्व-(व्यर्थ नहुने)-नामक पर्वतमा रहेकी जगत्मा सफल मानिएकी अमोघसिद्धि बुद्धसँग सम्बद्ध, महादेवी तारा (आर्यतारा) नाम गरेकी प्रज्ञा-(शक्ति)-को सृष्टि गरे ॥१०॥

[यसपछि पञ्चबुद्धका 'उपाय' र पञ्चशक्ति वा पाँच ताराका 'प्रज्ञा' को संयोगबाट भएको पाँच बोधिसत्त्व-(बुद्ध)-को उत्पत्तिबारे चर्चा गरिन्छ। ती पञ्चबोधिसत्त्व हुन्– समन्तभद्र, वज्रपाणि, रत्नपाणि, पद्मपाणि र विश्वपाणि।]

वैरोचननामक बुद्धले शुद्ध धर्म धारण गर्ने दृष्टिले सबैको कल्याणको लागि समन्तभद्र-नामक पुत्रको सृष्टि गरे ॥११॥ आदर्शन-(दर्शन हुनासाथ प्राप्त हुने)-नामक ज्ञानद्वारा अक्षोभ्य बुद्धले वज्र र घण्टा धारण गरेका वज्रपाणिनामक बोधिसत्त्वको सृष्टि गरे ॥१२॥ रत्नसम्भव बुद्धले प्रत्यवेक्षण-(निरीक्षण)-नामक ज्ञानद्वारा बोधिरत्न-(ज्ञानरूपी रत्न)-ले ज्यादै उज्ज्वल भएका रत्नपाणिनामक बोधिसत्त्वको सृष्टि गरे ॥१३॥ समता-(समान दृष्टि)-नामक ज्ञानद्वारा अमिताभनामक बुद्धले लोक-(संसारको)-को सृष्टि गर्ने ध्येय लिई पद्मपाणिनामक बोधिसत्त्वको सृष्टि गरे ॥१४॥ गर्नुपर्ने अनुष्ठान-(धार्मिक कार्य)-को ज्ञानद्वारा अमोघसिद्धिनामक बुद्धले विश्वको उद्धार गर्न तत्पर विश्वपाणिनामक बोधिसत्त्वको सृष्टि गरे ॥१५॥

[यसपछि वैरोचन आदि पाँच बुद्ध र समन्तभद्र आदि पाँच बोधिसत्त्वसँग सम्बद्ध पाँच ताराहरूबारे वर्णन गरिन्छ।] वैरोचन बुद्धसँग सम्बद्ध र वैरोचनकै किरीटमा रहेकी, चारैतिर कल्याण गर्ने हुनाले समन्तभद्रप्रज्ञाको नामबाट पनि चिनिने 'सित'-नामक ताराको उत्पत्ति भयो ॥१६॥ अक्षोभ्य बुद्धसँग सम्बद्ध र अक्षोभ्यकै मुकुटमा रहेकी, संसाररूप समुद्रबाट पार तार्ने, कठोर वज्र धारण गरेकी साथै वज्रपाणि प्रज्ञाको रूपमा पनि चिनिने 'उग्रतारा'-नामक ताराको उत्पत्ति भयो। यसै गरी रत्नसम्भव बुद्धसँग सम्बद्ध र रत्नसम्भवकै मुकुटमा रहेकी अत्यन्त उज्ज्वल हुनाका साथै रत्नपाणिप्रज्ञाको रूपमा पनि चिनिएकी

धर्म :
॥६॥

णि(पाणि)प्रज्ञा(ज्ञां) तां रत्नवरदमुद्रिकां(काम्) ॥१८॥ अमिताभबुद्धमुकुटां तारांभृकुटीसंज्ञिकां(काम्) ॥ पद्मपाणिमहाप्रज्ञां वरदपद्ममुद्रिकां(काम्) ॥१९॥ विश्वताराभिधां प्रज्ञां किरीटामोघसिद्धकं(काम्) ॥ महाप्रज्ञां विश्वपाणेर्विश्वसागर-तारिणी(णीम्) ॥२०॥ आदर्शज्ञानयोगेनाक्ष्यो(क्षो)भ्यो सावसृजद्गुरुं(रुम्) ॥ अक्ष्यो(क्षो)भ्यमुकुटे(टं) बद्धं वज्रसत्वा(त्त्वा)भिधं परं(रम्) ॥१॥ मन्त्राधिष्ठितवायुवह्निभुवनक्ष्मामेरुकूटालये विश्वांभोश्वाम्भोरुहचंद्र(चन्द्र)विंब(बिम्ब) कुलिशासीनः शिरोक्षोभ्यधृक् ॥ एकास्यो द्विभुजः शशाङ्करुचिरो वज्रं च घंटां(घण्टां) दधत् ॥ षण्मुद्राभरणोज्व(ज्ज्व)लो विजयते श्रीवज्रसत्वो(त्त्वो) गुरुः ॥२॥ वज्रसत्वा(त्त्वा)त्मिकां तारां वज्रसत्व(त्त्व)प्रियांवरां (राम्) ॥ मेरुमंड-(मण्ड)लमासीनां ललितासनलालितां(ताम्) ॥३॥ घंटा(घण्टा)पाणिं बोधिसत्वं-(त्त्वं)घंटा(घण्टा)वरदधारिणं(णम्) ॥ अक्षोभ्यमौलिमादर्शाख्यज्ञानसंभ(सम्भ)वं वरं(रम्) ॥४॥ अक्षोभ्यमुकुटो(टां) वज्रनादींनी(दिनीं) । वज्रतारिणीं(णीम्) ॥ घंटा(घण्टा)पाणिप्रियतमो(मां) मेरुमंड(मण्ड)लमध्यगां(गाम्) ॥४॥ प्रज्ञार्थं स्वयमुत्पन्ना गगनात्स्वस्वबी–

राम :
॥६॥

रत्न धारण गरेकी, वरद (वर दिने) मुद्रा (हातको मुद्रा) भएकी 'रत्नतारा'-नामक ताराको सृष्टि भयो ॥१८॥ अमिताभ बुद्धसँग सम्बद्ध र अमिताभकै मुकुटमा रहेकी, पद्म (कमल) लिएकी र वरदमुद्रा धारण गरेकी पद्मपाणिप्रज्ञाको नाउँबाट पनि चिनिने भृकुटी-तारा नामक ताराको उत्पत्ति भयो ॥१९॥ अमोघसिद्धिसँग सम्बद्ध र अमोघसिद्धिकै किरीटमा रहेकी, संसाररूप समुद्र पार गराउने तथा विश्वपाणिप्रज्ञाको रूपमा पनि चिनिएकी विश्वतारानामक ताराको उत्पत्ति भयो ॥२०॥

आदर्श ज्ञानको योग-(सम्पर्क)-द्वारा अक्षोभ्य-(बुद्ध)-ले अक्षोभ्य-(बुद्ध)-कै मुकुटसदृश, गुरु (महान्), वज्रसत्त्व नाम गरेका बुद्धको सृष्टि गरे ।।१।। जो मन्त्रले युक्त वायु, अग्नि, भुवन, पृथ्वी, पर्वतशिखर नै आलय (घर, आश्रयस्थल) जसको भएका छन्; जो संसारको कमलस्वरूप चन्द्रबिम्ब र कुलिश-(वज्र)-मा आसीन (अवस्थित) छन्, शिरमा अक्षोभ्यरूप बुद्धलाई धारण गर्ने, एक मुख भएका, दुई हात भएका, चन्द्रमाजस्तै सुन्दर, वज्र र घण्टा धारण गरेका तथा छ मुद्रा (हस्तमुद्रा) नै आचरण (गहना) जसका भएका पनि छन्, ती वज्रसत्त्व गुरु नाम गरेका उज्ज्वल बुद्ध विजयी (शोभित) भएर रहून् ।।२।।

[अब विभिन्न रूप भएका प्रज्ञा र बुद्धबारे चर्चा गरिन्छ जुन प्रज्ञा (स्त्रीबुद्ध) र बुद्ध (पुरुषबुद्ध) आदिबुद्धकै सृष्टि हुन् ।] ललित (सुन्दर) आसनमा शोभित भएकी, वज्रसत्त्व-(बुद्ध)-स्वरूप भएकी, श्रेष्ठ र वज्रसत्त्व-(बुद्ध)-कै प्रिय मानिएकी, मेरुमण्डल-(पर्वतसमूह)-मा रहेकी तारानामक प्रज्ञालाई [स्मरण गर्दछु] ।।३।। अक्षोभ्य-(बुद्ध)-को शिरोरूप, आदर्शनामक ज्ञानबाट पैदा भएका, घण्टा र वरद (वर दिने हस्तमुद्रा) धारण गरेका, श्रेष्ठ, घण्टापाणि-नामक बोधिसत्त्व-(बुद्ध)-लाई [स्मरण गर्दछु] ।।४।। अक्षोभ्य-(बुद्ध)-को मुकुट-(शिरको गहना)-तुल्य भएकी, वज्र-(कष्ट)-बाट तार्ने क्षमता भएकी र वज्र (दैवी हतियार, मुङ्ग्रो) घुमाएर नाद (आवाज) गर्ने भएकी; पर्वतमण्डलको बीचमा रहेकी, घण्टापाणि-(बुद्ध)-की प्रियतमारूपिणी प्रज्ञालाई [स्मरण गर्दछु] ।।४।। आकाश-(शून्य)-बाट प्रज्ञा-(ज्ञान)-को लागि आ-आफ्नो बीज (आदिप्रकृति) लिएर स्वयम् उत्पन्न भएका

जतः ।। उपायसदृशा वर्णरूपमुद्रादिवर्णकैः ।।१।। स्वस्वबीजसमुत्पन्ना एते प्रज्ञागणां गणाः ।। गगनगर्भाछू(च्छू)न्यरूपान्निवृत्तिप्रवृत्तिभावुकाः ।।२।।

नमो बुद्धायः(य) ।। स्वायंभु(यम्भुव)पुराणे शोकं प्रत्युपगुप्तः ।। ।। नौम्यादिबुद्धं जगदेकबुद्धं(द्धम्) उपायसंज्ञं प्रतिबोधनात्म्यं(त्म्यम्) ।। अकारबीजोद्भवमादिशून्ये-(न्यं) तथागतं तं तथताविभाव्यं(व्यम्) ।।१।।

।। नमो धर्मायः(य) ।। अष्टस(सा)हस्त्रिकायां पंच(पञ्च)विंशतिकायां शाक्यसिंहो भिक्षून्।। ।।योकाराक्षरसंभ(सम्भ)वा गगनतः शून्ये समस्ते विभौ ।। प्रज्ञाख्या जननी सबुद्धगुणिनां धर्मातम(त्मि)की पारगा ।। नाथत्या (या तथ्या) तथताविचारनिपुणा तथागतिं प्रापिता ।। सा मां पातु सनातनी सुगतजा नाद्यंत(द्यन्त)कानिर्णया ।।२।। नम उपायप्रज्ञाभ्यां(भ्याम्) ।। अवदानसंतके शोकं प्रत्युपगुप्तः ।। ।। श्वासानिलास्ताक्षरसन्नियोगादोंकारतश्चैकशरीरभाजौ ।। उपायव–

वर्ण, रूप र मुद्रा (हस्तमुद्रा) आदिले उपाय-(नजीक पुर्‍याउने साधन)-तुल्य छन् [यी प्रज्ञा वा बुद्धहरू] ।।१।। आ-आफ्नो बीजबाट उत्पन्न भएका यी प्रज्ञागणहरू शून्यरूप आकाश-

गर्भबाट [उत्पन्न भएका हुन्] र निवृत्ति-(मुक्ति)-मार्ग र प्रवृत्ति (संसार) मार्गका भावुक (निर्माता) हुन् ॥२॥

बुद्धलाई नमस्कार ॥ स्वायम्भुवपुराणमा शोक-(सांसारिक पीडा)-प्रति उपगुप्त-(भिक्षु)-को धारणाबारे चर्चा गरिन्छ ।

[शोकनाशक उपाय बताइन्छ ।] आदिबुद्धलाई नमस्कार गर्दछु जो संसारका एकमात्र बुद्ध हुन्, उपायस्वरूप छन्, ज्ञानबोध गराउन सक्ने जसको आत्मा छ, तथ्य-(सत्य)-बाट जसलाई चिन्न सकिन्छ, जो अकारस्वरूप बीज-('ओम्' को पहिलो अ अक्षर)-बाट उत्पन्न भएका हुन्, जसको आदि (उत्पत्तिपूर्व) शून्य छ र जो तथागत पनि छन् ॥१॥

धर्मलाई नमस्कार ॥ अठार हजार पच्चीस सङ्ख्या (श्लोकसङ्ख्या) भएको संहिता-(बुद्धग्रन्थ)-मा शाक्यसिंह नामका बुद्धले भिक्षुहरूलाई [बताएको केही कुराको वर्णन यहाँ गरिन्छ] ॥ सम्पूर्ण विभु (ईश्वरीय शक्ति) शून्य भएको वेलामा आकाश-(शून्य)-बाट तथा उकार अक्षर-('ओम्' दोस्रो अक्षर 'उ')-बाट जो पैदा भएकी हुन् । जो प्रज्ञा नाम गरेकी र आमास्वरूप छिन् । ज्ञान र गुणले युक्त भएका-(साधक)-हरूको लागि जो पार पुऱ्याउने धर्मस्वरूप छिन्, जो सत्य र असत्य छुट्ट्याउन सिपालु छिन् र स्वयं तथागत-(बुद्ध)-को गतिमा प्राप्त भएकी छन् ॥ उनै सनातन (सधैं रहने वा परम्परागत), आदि र अन्त नभएकी निर्णय-(न्याय)-स्वरूप तथा सुगत-(बुद्ध)-बाट उत्पन्न-(प्रज्ञा)-ले मलाई रक्षा गरून् ॥२॥

उपाय र प्रज्ञालाई नमस्कार ॥ अवदानसंतक-(ग्रन्थविशेष ?)-मा शोकप्रति उपगुह्राको धारणाबारे चर्चा गरिन्छ । श्वास (सास) र अनिल-(वायु)-को अक्षरको सम्पर्कले र ओंकार-('ओम्' अक्षरका 'अ+उ=ओ' अक्षर)-बाट उत्पन्न भई एकशरीर (एकाकार) भएका उपायरूप तथा धर्म–

धर्म :
॥१०॥

मौं (धर्मौं) पुरुषास्त्रियौ तौ नमामिमोमीलतश्च संघ(सङ्घः) ॥३॥ एत(तत्)त्रयं रत्नत्रयं त्रिरत्नं बुद्धं च धर्मं च तथा च सर्वं (सङ्घम्) ॥ उपायप्रज्ञात्मकमाहुरन्ये प्रज्ञाद्युपायात्मकमेतदन्ये ॥४॥ या सर्वज्ञतया इति ॥५॥ नमः प्रज्ञोपायाभ्यां(भ्याम्) ॥ वागर्थाविवसंपृक्तौ ज्योत्स्नाचंद्र(चन्द्र)मसाविव ॥ जगतां पितरावाद्यौ प्रज्ञोपाय(या)-वुपास्महे ॥६॥ नमो निरंज(रञ्ज)नाय ॥ शून्य(न्यं)समस्तं(स्त)विभवेद्भ-(वोद्भु)तमाविरासीदोबीजमादिजमहोवरवर्णमाली ॥ तस्मिन्स्वयं सकलविश्वमयो बभूव श्रीमान्निरंज(रञ्ज)नमहं प्रणतोस्मि नित्यं(त्यम्) ॥७॥ नमः श्रीप्रज्ञापार-मितायै ॥ निर्विकल्प(ल्प) नमस्तुभ्यमिति ॥८॥ तव चार्ये गुणाढ्या या बुद्धस्य च जगद्गुरोः ॥ न पश्यंत्यंत(श्यन्त्यन्त)रं संत(सन्त)श्चन्द्रचन्द्रिकयोरिव ॥९॥ नम आदिबुद्धाय ॥ नामसंगीति(ङ्गीति)टीकायां(याम्) ॥ ॥ आदर्शविवे (विम्बे) सकलांग(लाङ्ग)युक्तं रूपं यथा स्वछ(च्छ)तरं विभाति ॥ अशीत्यनुव्यंज(व्यञ्ज)-नलक्षणाढ्यो देहस्तथा बुद्धवरस्य देवः ॥१॥ इंद्रा(इन्द्रा)युधं वियति दृष्टमनेकंवर्ण-(र्णं) लोकस्य दर्शयति कर्म शुभा–

रामः
॥१०॥

स्वरूप एवं पुरुष (पुंलिङ्गी उपायशब्द) र स्त्री (स्त्रीलिङ्गी प्रज्ञा शब्द) ती दुईलाई नमस्कार गर्दछु । यसै गरी ['ओम्' को तेस्रो अक्षर] 'म्' मिलेर बनेको सङ्घ हो [त्यसको पनि स्मरण गर्दछु] ॥३॥ यी तीन रत्नहरु– बुद्ध, धर्म र सङ्घ चाहिं त्रिरत्न नामले प्रसिद्ध छन् ।

केही-(विद्वान्)-ले यी त्रिरत्नलाई उपायप्रज्ञास्वरूप र केहीले प्रज्ञोपायस्वरूप मानेका छन् ॥४॥ सर्वज्ञता-(सबै जान्ने निपुणता)-ले जुन (प्रज्ञा) [प्रसिद्ध भएकी हुन्] ॥५॥ प्रज्ञा र उपायलाई नमस्कार ॥ वाणी (शब्द) र अर्थजस्तै मिलेका अथवा जून (चन्द्रकिरण) र चन्द्रमाजस्तै साथै रहने भएका, अनि जगत्‌का आमाबाबुस्वरूप तथा आदिमा देखिएका प्रज्ञा र उपायको उपासना (भक्ति वा सेवा) गर्दछौं ॥६॥ निरञ्जन-(बुद्ध)-लाई नमस्कार ॥ सम्पूर्ण

विभव (ऐश्वर्य, संसार) शून्य (अप्रकट) भएको वेलामा आदिमा (पहिले) उत्पन्न तेजिलो वर्ण-(रङ्ग)-स्वरूप निरञ्जन बुद्धलाई म नित्य प्रणाम गर्दछु। जुन बुद्धमा सम्पूर्ण विश्व पैदा भएको थियो। [यहाँ निरञ्जन बुद्धलाई वेदान्त-दर्शनअनुसार मिल्ने गरी अञ्जन-(दाग)-रहित, निराकार ब्रह्मस्वरूप भनी कल्पना गरेर आदिसृष्टि स्थल पनि मानिएको देखिन्छ] ॥७॥ श्रीप्रज्ञापारमितालाई नमस्कार ॥ निर्विकल्प (राम्रो-नराम्रो, जन्म-मृत्यु, आदि विकल्प वा द्वैततत्त्वले रहित) तिमीलाई नमस्कार ॥८॥ हे आर्ये प्रज्ञापारमिता ! सज्जनहरूले जून र चन्द्रमामा अन्तर (फरक) नदेखेजस्तै गरी गुणले युक्त तिम्रो र जगत्का गुरु बुद्धको बीचमा कुनै अन्तर देख्दैनन् ॥९॥ आदिबुद्धलाई नमस्कार ॥ नामसङ्गीति-(बुद्धग्रन्थ)-को टीकामा ॥ ऐनाको बिम्बमा सबै अङ्गले युक्त भएको रूप जसरी अति स्वच्छ (स्पष्ट) रूपमा देखिन्छ, त्यसरी नै भगवान् बुद्धको असी प्रकारका अनुव्यञ्जनको लक्षणले युक्त भएको श्रेष्ठ शरीर शोभित हुन्छ ॥१॥ इन्द्रको आयुध (हतियार अर्थात् वज्र) धारण गर्ने भएका, आकाश-(शून्य)-मा देखिने, अनेक वर्ण भएका अनि संसारलाई शुभ आदि कर्मको फल दिने [बुद्ध हुन्] ॥

-दि यद्वत् ॥ एवं च बुद्धवरव्याप्यसितादिवर्णं संपा(सम्पा)दयत्यविकलं खलु कर्म तद्वत् ॥२॥ पद्मपाणिप्रभृतीनां नव तारा

प. (पद्मपाणिः) ॥ भृकुटीतारा ॥ भृकुट्या भ्रूभंगे(भङ्गे)न क्रूराद् भयात्तार्यते इति. पद्मपाणेः प्रज्ञा ॥

मैत्रे (मैत्रेयः) ॥ मैत्रायणी ॥ मित्राणि बहूनि यस्याः सा मैत्रायणी मैत्रेयस्य प्रज्ञा ॥

गग. (गगनगञ्जः) ॥ पुष्पतारा ॥ पुष्पाणि दत्वापि संता(सन्ता)र्यते. इति गगनगंज(गञ्ज)स्य प्रज्ञा ॥ सम. (समन्तभद्रः) ॥ सिततारा ॥ सर्वांग(र्वाङ्ग) सितवर्णत्वात्. सिततारा. समंत(मन्त)भद्रप्रज्ञा. सितं कल्याणं(णम्) ॥

वज्र. (वज्रपाणिः) ॥ एकजटा ॥ एका श्रेष्ठजटा यस्या. वज्रपाणिप्रज्ञा. जटाधारिणी ॥

मंजुघो. (मञ्जुघोषः) ॥ वागीश्वरी ॥ वाचामीश्वरी मंजु(मञ्जु)घोषो वागीश्वरो यथैव ॥

यसरी बुद्धवर-(आदिबुद्ध)-द्वारा व्याप्त सेतो (कल्याणकारी) वर्ण (प्रकृति) भएको विकल (विघ्न वा नाश) नहुने त्यस्तै (शुभ र अशुभ) कर्मलाई [आदिबुद्धले] सम्पादन (पूरा) गर्दछन् ॥२॥

पद्मपाणि (बुद्ध) आदिका नौ तारा छन् ॥ पद्मपाणि– यिनकी भृकुटीतारा हुन्। भृकुटी-(आँखीभौँ)-को रौँ टेढो गराएर रिसले वा डरद्वारा तार्न (संसारबाट पार गराउन) जसले सक्छ उनी भृकुटीतारा हुन्, पद्मपाणि-(बुद्ध)-की प्रज्ञारूपिणी।

मैत्रेय– यिनकी मैत्रायणी हुन् । धेरै मित्र जसका हुन्छन् उनी मैत्रायणी हुन्, मैत्रेय-(बुद्ध)-की प्रज्ञारूपिणी हुन् ।

गगनगञ्ज– यिनकी पुष्पतारा हुन् । फूलहरू दिएर पनि (श्रद्धाले फूलपातजस्तो सामान्य वस्तुद्वारा पनि) जसले [संसारबाट] तार्न सक्छ उनी पुष्पतारा हुन्, गगनगञ्ज-(बुद्ध)-की प्रज्ञारूपिणी हुन् ।

समन्तभद्र– यिनकी सिततारा हुन् । सबै अङ्ग सेतो वर्णको भएकोले सिततारा भनिएको हो । अथवा सितको अर्थ हुन्छ कल्याण । त्यसैले कल्याणकारी तारा हुनाले सिततारा भनिन्छ । सिततारा समन्तभद्र-(बुद्ध)-की प्रज्ञारूपिणी हुन् ।

वज्रपाणि– यिनकी एकजटा हुन् । एउटा श्रेष्ठ जटा (केशराशि) जसको छ उनी एकजटा हुन् । यिनी जटाधारण गर्छिन् र वज्रपाणि-(बुद्ध)-की प्रज्ञारूपिणी हुन् ।

मञ्जुघोष– यिनकी वागीश्वरी हुन् । वाणीकी ईश्वरीलाई वागीश्वरी भन्दछन् । मञ्जुघोष (बुद्ध, मीठो आवाज गर्ने) वाणी-(बोली)-का ईश्वर नै हुन् ।

धर्म :
॥११॥

सर्वणी. (सर्वणीवरणविष्कम्भी) ॥ धूपतारा. धूपं दत्वा तारयामीति. सर्वणीवरण-विष्कंभि(ष्कम्भि)नः प्रज्ञा ॥

क्षिति. (क्षितिगर्भः) ॥ दीपतारा ॥ दीपमुज्वा(ज्ज्वा)ल्य तारयामीति क्षितिगर्भप्रज्ञा.

खग. (रत्नगर्भः) ॥ गंध(गन्ध)तारा ॥ गंधा(गन्धा)न्येवोपढौकयित्वा तारयामीति ख(रत्न)गर्भ. प्रज्ञा ॥

राम :
॥११॥

सर्वणीवरण विष्कम्भी– यिनकी धूपतारा हुन् । धूप दिएर (पूजाको लागि सल्काएर मात्र पनि) संसारबाट पार गराउने हुनाले धूपतारा भनिएको हो । यी धूपतारा सर्वणीवरण विष्कम्भीकी प्रज्ञारूपिणी हुन् ।

क्षितिगर्भ– यिनकी दीपतारा हुन् । [श्रद्धाले] बत्ती बालेर पनि तार्ने (पार गराउने) चाहिं दीपतारा हुन् र यिनी क्षितिगर्भ-(बुद्ध)-की प्रज्ञारूपिणी हुन् ।

रत्नगर्भ– यिनकी गन्धतारा हुन् । गन्ध-(सुगन्ध)-हरू मात्र एकत्रित गरेर(श्रद्धापूर्वक चढाएमा) पनि संसारबाट पार तार्नेचाहिं गन्धतारा हुन् र यिनी रत्नगर्भ-(बुद्ध)-की प्रज्ञारूपिणी हुन् ।

चक्र. (चक्रपाणिः) ॥ वैं (वज्रधातुभुवन). समंत(मन्त)भद्रप्रज्ञा. सिततारा. वज्रधातुभुवन ॥

वज्र. (वज्रपाणिः) ॥ अ. (अभिरतिभुवन). वज्रपाणिप्र. (प्रज्ञा) उग्रतारा. अभिरतिभुवन ॥

रत्न. (रत्नपाणिः) ।। र. (रत्नावतीभुवन). रत्नपाणिप्र. (प्रज्ञा) रत्नतारा रत्नावतीभुवन.

पद्म. (पद्मपाणिः) ।। अ. (सुखावतीभुवन) पद्मपाणिप्र. (प्रज्ञा) भृकुटीतारा सुखावतीभुवन ।।

विश्ववज्र (विश्वपाणिः) ।। अ. (अमोघवतीभुवन ।। विश्वपाणिप्र. (प्रज्ञा) विश्व-तारा. अमोघवतीभुवन ।।

द्वौ भागौ पूरयेदन्नैस्तोयेनैकं प्रपूरयेत् ।। मारुतस्य प्रचारार्थं चतुर्थमवशेषयेत् ।।
इति आहारनियमः ।।१।।

[अब भुवन वा आश्रयस्थलको दृष्टिले कतिपय ताराको वर्णन गरिन्छ ।]

चक्रपाणि– यी बुद्ध समन्तभद्र-(बुद्ध)-का प्रज्ञास्वरूप हुन् । सिततारा यिनकी तारा हुन् । यी वज्रधातुभुवन-(वज्र धारण गर्ने आश्रयस्वरूप अर्थात् शक्तिशाली)-मा बस्छन् ।

वज्रपाणि– यी बुद्ध वज्रपाणि-(बुद्ध)-कै प्रज्ञास्वरूप हुन् । उग्रतारा यिनकी तारा हुन् । यी अभिरतिभुवन-(चारैतिर प्रेम गर्ने आश्रयस्थल अर्थात् प्रेमस्वरूप)-मा बस्छन् ।

पद्मपाणि– यी बुद्ध पद्मपाणि-(बुद्ध)-कै प्रज्ञास्वरुप हुन् । भृकुटीतारा यिनकी तारा हुन् । यी सुखावतीभुवन-(सुख दिने आश्रयस्थल अर्थात् सुखरूप)-मा बस्छन् ।

विश्वपाणि– यी बुद्ध विश्वपाणि-(बुद्ध)-कै प्रज्ञास्वरूप हुन् । विश्वतारा यिनकी तारा हुन् । यी अमोघवतीभुवन-(कुनै पनि कार्य व्यर्थ नहुने आश्रयस्थल अर्थात् सफलतास्वरूप)-मा बस्छन् ।

[शरीरको खाद्य वस्तु रहने ठाउँ वा खाली पेटको] दुई भागलाई अन्नले पूरा गरोस्, एक भागलाई पानीले पूरा गरोस् । हावा खेल्नको लागि चौथो भाग बाँकी राखोस् ।

यो आहार-(खाने काम)-को नियम हो ।।१।।

धर्म :
॥१२॥

नमो रत्नत्रयाय ॥ ॥ स्वयंभू(यम्भू)क्षेत्रे ॥ स्वयंभू(यम्भू)क्षेत्रनिर्मितानां कूटागाराबिचैत्यमूर्त्तीनां नामादिध्यानं लिख्यते ॥ ॥ स्वयंप्रदेशे कस्मिश्चित् केनचित् निर्मितो महाकोष्ठागारो परिलयनाकारचैत्यो वर्वर्त्ति. वेदिकोपरिस्तंभ(स्तम्भ)तोरणादिशोभितको(के) गारमध्ये सुखावतीभुवनाकारे षडक्षरीनामा लोकेश्वरोऽमिताभसंभ(सम्भ)वो विजयते ॥ एकाननं द्विनयनं मुकुटाऽमिताभं चक्रादिकुंड(कुण्ड)लविभूषणशोभित(शोभि)गात्रं ॥ मालासरोरुहकृतांज(ताञ्ज)लिवेदहस्तं वज्रासनं प्रणमतं(नं) सुरसिद्ध वंद्य(सिद्धवन्द्यम्) ॥१॥ एकस्मिताननो द्विनम(य)नोऽमिताभगुरुमुकुटो वज्रासनश्चतुर्भुजो. दक्षमालाधरो. वामे कमलं हृत्प्रदेशे सांज(साञ्ज)लिमुद्रः श्वेतवर्णो विभावनीय. (:) षडक्षरी नामा लोकेश्वरः ॥ मतांत(तान्त)रतः कृतांज(ताञ्ज)लिनामेति ॥ पार्श्वयोर्भक्तजनं सांज(साञ्ज)लिपुटं ॥१॥ द्वयोः पार्श्वस्तंभ(स्तम्भ)योः सिंहशार्दूला विलसंति(सन्ति) ॥ तदुपरि घंटा(घण्टा)द्वयधारितवज्रसत्व(त्त्व)तथागतशो–

राम :
॥१२॥

तीन रत्न-(बुद्ध, धर्म र सङ्घ)-लाई नमस्कार । स्वयम्भूक्षेत्र-(काठमाडौंस्थित प्रसिद्ध बौद्धविहार)-मा बनेका कूटागार (बौद्ध मन्दिर वा विहारको माथिल्लो भागमा रहेको कोठा वा खाली ठाउँ) आदि चैत्य (बुद्धमन्दिर वा विहारमा स्थित) मूर्तिहरूका नाम आदि र ध्यान पनि लेखिन्छन् ॥ कुनैमा स्वयं (आफैं देखिएको अर्थात् प्राकृतिक) प्रदेश-(ठाउँ)-मा कसैले बनाएको ठूला-ठूला कोठाले युक्त मन्दिर (विहार) भएको परिलयन आकारको चैत्य (बौद्ध स्तूप) रहेको छ ।

[अब उक्त चैत्यको विशेषता र त्यहाँ रहेका बुद्धको वर्णन गरिन्छ ।] वेदी-(केही उठाइएको भूमि)-को माथि चारैतिर स्तम्भ (खम्बा) र तोरण (पाली वा चँदुवा) आदिले शोभित भएको बौद्ध मन्दिरको बीचमा सुखावतीभुवनको आकारमा अमिताभ-(बुद्ध)-बाट

उत्पन्न षडक्षरी नाम गरेका लोकेश्वर बुद्ध शोभित छन् । एक मुख र दुई आँखा भएका, शिरको मुकुटले घेरै आभा (चमक) भएका, चक्र आदि र कर्णकुण्डल आदि गहनाले शरीर शोभित भएका, माला, कमल, अञ्जलिमुद्रा र वेद लिएका, देवता तथा सिद्धहरूले पनि नमस्कार गरिएका, अनि वज्रको आसनमा विद्यमान उक्त बुद्धलाई प्रणाम छ ॥१॥ उक्त षडक्षरीनामक लोकेश्वर-(बुद्ध)-लाई अरू स्पष्टसँग भन्ने हो भने स्मित (मुस्कुराएको) एक मुख भएका, दुई आँखा भएका अमिताभनामक बुद्धहरूमध्ये मुकुट (श्रेष्ठ) भएका, वज्रको आसनमा बसेका, चार हात भएका, दाहिने-(हात)-मा माला, बाँया-(हात)-मा कमल, हृदयमा अञ्जलिमुद्रा भएको खाली हात भएका र सेतो वर्ण भएका [शान्त प्रकृति] बुद्धको विभावना (ध्यान) गर्नु योग्य हुन्छ । यिनै षडक्षरी बुद्धलाई अर्को मतले कृताञ्जलि पनि भन्ने गरिन्छ । यिनका दुवै पार्श्व-(बगल)-मा दुई अञ्जलि बाँधेका (हात जोडेका) भक्तजन छन् । पार्श्व-(अगलबगल)-का दुई स्तम्भ-(खम्बा)-हरूमा सिंह र बाघहरू शोभित देखिन्छन् । यसको ठीक माथि दुई घण्टामा कुँदिएका वज्रसत्त्व र तथागत नामका बुद्धले शोभित–

भित(शोभित)सिंहद्वयलांछि(लाञ्छि)तं तोरणं तदुपर्यपि वैरोचनादिपंच(पञ्च)-बुद्धव्यात्ताननमकरद्वयलांछि(लाञ्छि)तं चूडामण्याकारचैत्यशोभितं तोरणं विरराज ।। तदुपरि लयनाकारं त्रयोदशभुवनाकारचूडामणिविराजितं लयनचैत्यं तदुपरि त्रितल-(लं) स्वर्णछत्र संशोभितं शुशुभे ।। ।। कस्मिंश्चित्प्रदेशे तत्रैव कूटागाराकारचैत्यो निर्मितोस्ति. केनचिद् धनाढ्यो(ढ्य`)न अधो(धः) अष्टास्त्र` वेदिकाप्राकारमध्य-भागे श्रीवत्सपुंड(पुण्ड)रीकध्वजकलशचामरमत्स्ययुग्मछत्रदक्षिणावर्ताष्टमंग(मङ्ग)-लामितो मंग(मङ्ग)लकारिचिह्न` मंग(मङ्ग)लसंख्या सिंहपरिवृते(तं) तदुपरि महृती (महती) वेदिका नदीप्रवाहपद्मावलीलांछि(लाञ्छि)ता तदुपरि कूटागार-कोष्ठागाराश्चत्वारः मैत्रेयादिचतुष्टयबोधिसत्व(त्वा)धिष्ठितास्तदुपरि आ छा(च्छा)दनपटलानि तदुपरि कोष्ठागारचतुष्टयं खड्गकमलधरखड्गपाण्यादि बोधिसत्व(त्व)चतुर्भिरभिलक्षितं शोभति ।। तदुपरि कमलावली. तदुपरि गर्भचैत्यस्तत्र पूर्वादिचतुर्दिक्षु अक्षोभ्याद–

तथा दुई सिंह चिह्नित भएको तोरण(पाली, ढोकामाथिको बाहिरी भाग) रहेको छ । त्यसमाथि वैरोचन आदि पाँच बुद्ध र मुख बाएका दुई मकर (गोही) चिह्न अङ्कित भएको चूडामणि आकारको चैत्यले शोभित तोरण विराजमान (शोभित) देखिन्थ्यो । त्यसमाथि लयन आकारको तेह्र भुवन (तेह्र तला– प्रमुदिता, विमला, प्रभाकरी, अर्चिष्मती, सुदुर्जया, अभिमुखी, दूरङ्गमा, अचला, साधुमती, धर्ममेधा, समन्तप्रभा, निरुपमा र ज्ञानवती (वा वज्रभूमि) नाउँका तेह्र तला जसलाई त्रयोदश चक्रावली भन्दछन्) आकार भएको चूडामणिले शोभित

लयन नामको चैत्य [थियो] र त्यसमाथि तीन तला सुनको छाता आकारले शोभित भएको हुँदा ज्यादै शोभायमान देखिन्थ्यो। त्यहीं नै कुनै भागमा कूटागारनामक चैत्य कुनै धनी-(व्यक्ति)-द्वारा बनाइएको छ। तलतल आठ कुनामा वेदीमाथि उठाइएको पर्खाल-(भित्ता)-को मध्य भागमा आठ सिंहले युक्त [आठ] मङ्गल दिने चिह्नहरू [कुँदिएका] छन्। ती चिह्न हुन्– श्रीवत्स, पुण्डरीक (कमल), ध्वजा, कलश (घडा), चामर, मत्स्ययुग्म (दुई माछा), छाता र दक्षिणावर्त (दक्षिणतर्फबाट क्रमैले राखिएका) शङ्ख आठ मङ्गल। त्यसमाथि ठूलो वेदी छ, जसमा नदीको प्रवाह (बगेको स्थिति) र कमलहरू [चित्रित] छन्। त्यसमाथि चार कूटागार (गोप्य माथिल्ला कोठा) वा कोष्ठागार (कोठा) रहेका छन्, जहाँ मैत्रेय आदि चार बोधिसत्त्व (बुद्ध) अधिष्ठित (रहेका) छन्। त्यसमाथि आच्छादन (ढाक्ने) कपडाहरू छन्। त्यसमाथि चार कोष्ठागार-(कोठा)-हरू खड्ग र कमल धारण गर्ने खड्गपाणि आदि चार बोधिसत्त्व-(बुद्ध)-ले चिह्नित (चित्रित) भएर शोभित भएको छ। त्यसमाथि कमलावली (कमलहरू चित्रित छन्)। त्यसमाथि गर्भचैत्य (भित्री स्तूप वा बौद्ध मन्दिर) छ। त्यहाँ पूर्व आदि चार दिशामा–

धर्म :

।।१३।।

यश्चत्वारो ध्यानिबुद्धा विहरंति(रन्ति). चतुःकोणेषु चतुस्तारा भावनीयास्तदुपरि चतुरस्राकाराणि लोचनलोचितानि चत्वारि तदुपरि तोरणादिकं शुशुभे. तदुपरि त्रयोदशभुवनाकारचूडामणयः तदुपरि पंच(पञ्च)भुवनाकारं मंड(मण्ड)लचक्रं विभाति कूटागाराकारचैत्यं भजेहं यस्मिन्नष्टौ मंग(मङ्ग)लाख्याश्च सिंहा यस्मिन्मैत्रेयादिबौद्धा लसंति(सन्ति) ।। खड्गा बौद्धा बुद्धलोका वसंति(सन्ति) ।।१।। ।। कुत्रचित्प्रदेशे प्रतापमल्लभूपनिर्मितः प्रतापपुरामिध : कूटागारो विलसति ।। यस्य वेदिकाद्युपशोभितस्य चतुरस्राकारे सकलशस्तंभ(स्तम्भ)गरुडशोभिततोरणकपाता(पताका)-दिभिर्गुप्तीभूते ज्वालावलीवज्रावलीपद्मावलीभिरुपचिते कोष्ठागाराभ्यंत(भ्यन्त)रे. आगमदेवताधिष्ठिता स्वगणपरिवृता तिष्ठति. तदुपरि वेदिकाकार पटत्रय लक्षते तदुपरि नवकोष्ठप्रमाणदशरेखाभिपूरितकूटः लंबा(लम्बा)यमानः तदुपरि क्षू(क्षु)-द्रघंटा(घण्टा)वली तदुपरि वर्तुलाकारा तदुपरिपद्मा–

राम :

।।१३।।

अक्षोभ्य आदि चार ध्यानी बुद्धहरू विहार गर्दछन् । चार कोण-(कुना)-मा चार ताराको भावना (सम्झना वा स्थापना) गर्नुपर्दछ । त्यसमाथि चार कुनामा लोचन-(ज्ञान)-ले शोभित चार उकारहरू [छन्] । त्यसमाथि तोरण आदि शोभायमान थिए । त्यसमाथि तेह्र भुवनका आकार भएका चूडामणिहरू [छन्] । त्यसमाथि पाँच भुवनको आकार भएको मण्डलचक्र शोभित हुन्छ । म कूटागारको आकार भएको चैत्य-(स्तूप)-को भजन (सेवा) गर्दछु, जहाँ आठ मङ्गल नाम गरेका सिंहहरू छन् र जहाँ मैत्रेय आदि बौद्धहरू शोभित छन् तथा खड्ग-(नामक) बौद्धहरू र बुद्धलोकहरू रहेका छन् ।।१।। कुनै भागमा प्रताप मल्ल राजाले बनाएको प्रतापपुर नाम गरेको कूटागार (गुप्त वा माथिल्लो कोठा) शोभित छ । वेदी आदिले शोभित जसको चार कोणको आकार भएको, कलश स्तम्भ (खम्बा) र गरुडले शोभित तोरण, पताका आदिले गुप्त भएको, ज्वालाबली, पद्मावली, वज्रावली आदिले युक्त, कोठाको

बीचमा पूज्य तथा आफ्ना गणले घेरिएका आगमदेवता (बुद्ध) रहेका छन् । त्यसमाथि वेदीकै आकारका तीन कपडा (चँदुवा) देखिन्छन् । त्यसमाथि नौ कोष्ठबराबर नापो भएको दश रेखाहरूले कूट (शिरोभाग) पुरिएको (ध्वजा) झुन्डिएर रहेको छ । त्यसमाथि स-साना घण्टहरू छन् । त्यसमाथि बाटुलो आकार (छ) । त्यसमाथि पद्मावली छ ।

**वली तदुपरि वर्तुलाकारा. तदुपरि पद्मावली. तदुपरि कलशाकारचूडामणिः तदुपरि मध्यभागे अमिताभबुद्धो विहरति.पार्श्वयोः कोणभागे सिंहः एवं चतुर्दिक्षु बुद्धाः कोणेषु सिंहाः ।। ।। प्रतापेन भूपेन संस्कारिते कूटकोष्ठे स्थिता मागनीयां ससम्भ (भागनीयांशसम्भवा) ।। ।। नमामीश्वरीं देवमर्त्यासुरैर्वं दि(वन्दि)तां श्रीस्वयंभू-(यम्भू) पदावानुभक्तां(पदानुरक्ताम्) ।। ।। प्रतापपुर(रः) कूटागारभाषायां देवल इति कथितो नेपालभाषायां(याम्) ।।**

**यो योगांव(गाम्ब)र ईश्वरो विजयते त्रैधातुके धातुके भूत्याकाशमये इवोज्व(ज्ज्व)-लति या प्रज्ञा जगत्स्वामिनी ।। प्रज्ञोपायमिदं वदंति(दन्ति) च जगद्बुद्धश्च धर्मः सुतः ।।१।। योगांव(गाम्ब)रादि तंत्रो(तन्त्रो)द्धृतानि कतिचित् षट्कर्मप्रयोगानि लिख्यतें(न्ते) ।। ।। एवं मया श्रुतमेकस्मिन् समये भगवान् स-**

त्यसमाथि बाटुलो आकार छ र त्यसमाथि पद्मावली छन् । त्यसमाथि कलशको आकार भएको चूडामणि छ । त्यसमाथि बीचको भागमा अमिताभ नामका बुद्ध विहार गर्दछन् । दुई पार्श्व-(अगल-बगल)-मा कोण-(कुना)-तर्फ सिंहहरू (चित्रित) छन् । यसरी चारै दिशामा बुद्धहरू र कोणहरूमा सिंहहरू (चित्रित) छन्। प्रताप (मल्ल) राजाले संस्कार गरिएको कूट-(शिरोभाग)-को कोठामा बुद्धिविशेषको अंशबाट उत्पन्न [ईश्वरी प्रज्ञा स्थापित छिन्] । देवता, मानिस र दैत्यहरूले पनि नमस्कार गरिएकी, श्रीस्वयम्भूका पाउमा अनुरक्त (भक्त) भएकी ईश्वरी-(प्रज्ञा)-लाई नमस्कार गर्दछु । कूटागार-(बौद्ध विहार)-को भाषामा प्रतापपुर र नेपालभाषा-(नेवारीभाषा)-मा देवल नामले भनिएको (चिनिएको) छ ।

[स्वयम्भू महाचैत्यलाई त्रिधातुको प्रतीकको रूपमा लिइन्छ । त्रिधातु हुन्– कामधातु, रूपधातु र अरूपधातु । यी तीन धातु क्रमशः कामलोक, रूपलोक र अरूपलोक गरी तीन भुवन वा लोक हुन् । त्रिधातु वा त्रैधातुकको प्रसङ्ग यससँग जोडिएको छ ।]

जुन योगाम्बर-(नामक) ईश्वर ऐश्वर्य र आकाशरूप त्रैधातुकमा शोभित हुन्छन् । जुन जगत्‌की स्वामिनी प्रज्ञा पनि त्यहाँ उज्ज्वल रूपले रहन्छिन् । [विद्वान्‌हरूले] यिनलाई प्रज्ञोपाय, जगद्बुद्ध, धर्म, सुत आदि विभिन्न नामले [सम्झन्छन्] ।।१।। यहाँ उद्धृत गरिएका योगाम्बर आदि केही छ कर्मका प्रयोगहरू लेखिन्छन् । मैले यस्तो सुनें– एक समयमा उनै भगवान् (बुद्ध)–

धर्म :
॥१४॥

वंतथागतकायवाक्चित्त(त्तः) योषिद्भगे विहारे विहरति स्म ॥ ॥ तत्र भगवान् ज्ञानडाकिनीमाह ॥ शृणु ज्ञानेश्वरी रहस्यं कथयामि. न वक्तव्यं न वक्तव्यं गोपनीयं स्वपद्मवत् ॥ प्रकाशात् सिद्धिहानिः स्यादप्रकाशात्सुसिद्धयः ॥ ॥ अथाह भगवं(व)ती ॥ किं त्वं भगवन् सरागोसि विरागोसि वा ॥ ॥ भगवानाह ॥ सर्वोहं सर्वव्यापी च सर्गं कृत्वा च मोक्षकः ॥ सर्वरूपधरो बुद्धः कर्त्ता हर्त्ता प्रभुः सुखीः (खी) ॥ येन येनैव रूपेण स्वां स्वां याति त्रिनेयतां तेन तेनैव रूपेण स्थितोहं लोकहेतवे ॥ क्वचिद् बुद्धः क्वचित् सिद्धः क्वचिद्धर्मोथ संघ(सङ्घ)कः ॥ क्वचित् प्रेतः क्वचित्तिर्यक् क्वचित्तारकरूपकः ॥ क्वचिद्देवासुरश्चैव क्वचिन्मारकरूपकः ॥ क्वचित्स्थावररूपोहं विश्वरूपी न संशयः ॥ अहं स्त्री पुरुषश्चैव नपुंसकस्वरूपकः ॥ क्वचिद्रागी क्वचिद्द्वेषी क्वचिन्मोही शुचिः क्वचित् ॥ क्वचिच्चाऽऽशुचिरूपोहं चित्तरूपेण संस्थितः ॥ मदीयं दृश्यते चित्तं (त्त)मन्यत् किं–

राम :
॥१४॥

ले तथागत बुद्धको जस्तै शरीर वचन र चित्त लिएर योषिद्भग-(स्त्रीको योनि)-नामक विहार-(क्रीडास्थल)-मा विहार (क्रीडा) गरेका थिए ।

त्यहाँ, भगवान्-(बुद्ध)-ले ज्ञानडाकिनीसँग भने– हे ज्ञानेश्वरी ! सुन, म रहस्य-(गोप्य कुरा) भन्दछु । [यो रहस्य] नभन्नू र आफ्नो पद्म (योनि) जस्तै गुप्त राख्नू । प्रकाश गर्नाले (भन्नाले) सिद्धिमा हानि हुन्छ भने प्रकाश नगर्नाले (नभन्नाले) श्रेष्ठ सिद्धिहरू (अणिमा आदि) प्राप्त हुन्छन् ।

यसपछि भगवती-(प्रज्ञा ?)-ले भनिन्– हे भगवान् के तिमी सराग (सांसारिक प्रपञ्च भएका अथवा मायामा भुल्ने) छौ अथवा विराग (संसारमा लिप्त नहुने अथवा मायामा नभुल्ने) छौ ?

भगवान्ले भने– म सबै हुँ। सबैतिर व्याप्त छु। सृष्टि गर्ने भएर पनि मोक्ष-स्वरूप (जीवन्मुक्त) छु। म सबै रूप धारण गर्ने बुद्ध हुँ। गराउने (सृष्टि गर्ने) र हरण गर्ने (संहार गर्ने) मै हुँ। म प्रभु (सबैको स्वामी) र सुखी पनि हुँ। [प्राणीहरू] जुनजुन रूपले आ-आफ्नो जुनीमा जन्म लिन्छन्, म पनि लोक-(संसार)-को कारणको लागि (संसारको व्यवहारको निम्ति) त्यहीत्यही रूपले रहेको हुन्छु। म कहीं बुद्ध, कहीं धर्म र कहीं सङ्घको रूपमा रहेको हुन्छु। यसै गरी कहीं प्रेत, कहीं तिर्यक् (तेर्सो गरी हिंड्ने पशु आदि) र कहीं तारक (संसारबाट पार तार्ने) रूपमा रहन्छु। कहीं देवता वा दैत्यको रूपमा र कही मारक (संहार गर्ने, मार्ने) रूपमा हुन्छु। कहीं विश्वरूप हुनाले स्थावर (पृथ्वी, ढुङ्गा माटो) रूपमा रहन्छु, यसमा शङ्का छैन। म स्त्रीको रूपमा, पुरुषको रूपमा र नपुंसक रूपमा पनि रहन्छु। कहीं रागी-(विषयी)-को रूपमा कहीं द्वेषी-(शत्रु)-को रूपमा, कहीं मोही-(अज्ञानी)-को रूपमा र कहीं शुचि-(पवित्र, ज्ञानी)-को रूपमा रहन्छु। कहिले भने म चित्त-(सूक्ष्म शरीर)-को रूपमा रहेर अशुचि-(अपवित्र, अज्ञानी)-को रूपमा पनि देखिन्छु। सबैतिर मेरो चित्त (ज्ञानस्वरूप उपस्थिति) मात्र देखिन्छ।

**चि(किञ्चि)न्न विद्यते ॥ वस्त्ववस्तुप्रभेदोहं जनकोपि– (च) विग्रहं(हम्) ॥ विघ्नोहमप्यहं सिद्धि(द्धिः) सर्वरूपेण संस्थितः ॥ अहं जातिरहं मृत्युरहं व्याधिर्जराप्यहं (हम्।) पुण्यमहं (अहं पुण्यं) च पापं च तत्त्वात्मा फलमप्यहं(हम्)॥ जगद्धर्ममयं सर्वशरण्यं विविधं मतं ॥ एवमेवासि त्वमपि यथा सर्वं च भाषितं(तम्)॥ त्वया व्याप्त-मिदं सर्वं जगत् स्थावरजंगमं(जङ्गमम्) ॥ ॥ अथ भगवती आह ॥ मंत्रा(मन्त्रा)णां साधनं ब्रूहि शांति(शान्ति)कं पौष्टिकं तथा वश्याकृष्टप्रयोगं च मारणोच्चाटनादिकं (कम्)॥ विषनाशं व्याधिनाशं वह्निखड्गादिस्तंभ(स्तम्भ)नं(नम्)॥ संग्रा(सङ्ग्रा)-मे विजयं चापि पांडि(पाण्डि)त्यमथवोत्तम(मम्)॥ यक्षिणीसाधनं चैव दूतभूतादिसा-धनं(नम्।) सामर्थ्यमेकविज्ञानं निश्चितं मे वद प्रभो ॥ भगवानाह ॥ ततः करवीरे उक्तं(क्तम्)॥ शृण्विति १ किं त्वं भगवत्(न्) २ सर्वोहं सर्वव्यापी ३ मंत्रा(मन्त्रा)-साधनं ४ योगाम्बरसमाधि(धिः) ५ कृष्णप्रतिपदमारभ्य ६ रक्षर बालक मिति पर्यंतं ॥ करवीरे ॥**

अरू (बाह्य संसार) केही पनि छैन अर्थात् नाशवान् छ। वस्तु (सत् ?) र अवस्तु (असत् ?) को भेद पनि मै हुँ। विग्रह (शरीर) धारण गर्ने र जनक (सृष्टिकर्ता) पनि म हुँ। म विघ्न हुँ, म सबै रूपले रहेको सिद्धि हुँ। म जाति (जन्म) हुँ, मृत्यु हुँ, म व्याधि (रोग) हुँ, म जरा (बुढचाइँ) हुँ। म पुण्य हुँ, पाप हुँ, तत्त्वस्वरूप फल पनि मै हुँ। म संसारको धर्मस्वरूप हुँ, म सबैको शरण्य (शरण दिने, रक्षक) हुँ, म विविध हुँ। [हे देवी !]

तिमी पनि यस्तै र यही नै हौ जस्तो कि सबै भनियो । यो सम्पूर्ण स्थावर (अचल) र जङ्गम (चल) संसार तिमीद्वारा नै व्याप्त छ ।

यसपछि भगवतीले भनिन्– त्यस्ता मन्त्रहरूको साधना (उपासना) भन्नुहोस्, जुन मन्त्रहरू शान्ति दिने, पुष्टि (आरोग्य) दिने, वश गर्न र आकर्षण गर्न प्रयोगमा ल्याउने गरिन्छ । चाहेअनुसारका मन्त्रका विशेषता हुन्– मारण र उच्चाटन गर्ने, विषनाश गर्ने, आगो निभाउने र खड्ग आदि स्तम्भित (निश्चल-निष्क्रिय) पार्ने ।। हे ईश्वर ! यसै गरी युद्धमा विजय गराउने, उत्तम पाण्डित्य (विवेक) दिने, यक्षिणी (पिशाच) आदिको साधना गर्ने, दूत-भूत आदिको साधना गर्ने र सामर्थ्य दिने शक्ति जुन मन्त्रमा छ, त्यो विज्ञानरूप मन्त्र निश्चित गरेर मलाई भन्नुहोस् ।

भगवान् भन्दछन्– त्यसपछि करवीर-(ग्रन्थ ?)-मा भनिएको छ, सुन– १ के तपाईं भगवान् हुनुहुन्छ २ म सबै हुँ सबैतिर व्याप्त ३ मन्त्रहरूमा साधन (मूल कारण) हुँ ४ योगाम्बर समाधि (निश्चल ध्यानमुद्रा) हुँ ५ कृष्णप्रतिपदा (मन्त्रको शुरू भाग अथवा कृष्ण पक्षको प्रतिपदा) देखि लिएर ६ रक्षरबालक (मन्त्रको अन्तिम भाग ?) सम्म । [यो सबै] करवीर-(ग्रन्थ ?)-मा लेखिएको छ ।

धर्म :

।।१५।।

श्रीगणेशाय नमः ।। ।। चैरिकाश्चीरवसना मुण्डाखिस्किरिपाणयः पंचा(पञ्चा)-भिषेकतो(तः) शुद्धा(द्धाः) पादुकागामिनः पराः ।।१।। रागद्वेषमोहमुक्ता धारणीजप-तत्पराः ।। समभूत्स्वर्णनिचया(ः) सप्तगेहार्थिनः स्मृताः ।।२।। अर्हंत(हन्त)ः पूजनीयास्ते देवासुरनरैः परा ।। निर्विषा निर्विकल्पाः स्युरभिषेकान्विता शिखा ।।३।। धारणीं जपतः पंचा(पञ्चा)भिज्ञाप्ता लोकबांध(बान्ध)वः(वा) पात्रहस्ताः सुवसना आशीर्वादपरायणाः ।।४।। ।। पंचा(पञ्चा)भिषेकमापन्ना मुण्डिता नियमाश्रया(याः) ।। स्विकीवरीपात्रविश्राणानिवासचीवरावृताः ।।१।। भिक्षाशिनो निर्विकल्पा निर्विषाः संग(सङ्ग)वर्जिताः ।। धारणीमंत्र(मन्त्र)निपुणा भिक्षवो निर्वृतिं गताः ।।२।। ।। श्रूयंते(यन्ते) श्रावयंते(यन्ते) वा धार्म्याः कथाविरागिकाः ।। काषायवासिनी मुण्डी यौ(या)ष्टिका विगतज्वराः ।।१।। विहारवासिनोनेकाशिष्यास्तुष्टानि सुमंड-(मण्ड)लाः ।। श्रावणः श्रमणेराश्च निर्वाणपथगामिनः ।।२।। ।।०।। सहजसुंद(सुन्द)रः स्वभावो–

श्रीगणेशलाई नमस्कार ।

[अब अर्हत्हरूको वैशिष्टयबारे चर्चा गरिन्छ ।] चीर (भिक्षुहरूद्वारा लगाइने गेरुवा रङ्गको खुला कपडा) लगाएका हातमा मुण्डा (मुडिएका, कपाल खौरेका) खिक्खिरी (चैत्य अङ्कित दण्ड) लिएका, पञ्चाभिषेक (पाँच किसिमको मन्त्रयुक्त अभिषेक)-ले शुद्ध भएका, पादुका (खराउ) लगाएर हिंड्ने ।।१।। राग (विषयभोग), द्वेष (रिस, शत्रुता) र मोह-(अज्ञान)-देखि मुक्त भएका, धारणी-(मन्त्रविशेष)-को जप गर्ने, सुवर्णसमूहप्रति पनि तटस्थ, सात घरमा मात्र प्रार्थना गर्ने (भिक्षा माग्ने), यस्ता खालका अर्हत्-(भिक्षु)-हरू देवता, मानिस र दैत्यद्वारा पनि पूजित छन् । यी अर्हत्हरू विष-(पाप)-रहित र निर्विकल्प (सांसारिक प्रपञ्चरहित) छन् र शिखा पनि अभिषेकले युक्त छन् । धारणी (मन्त्रविशेष) जप्ने र पाँच ज्ञान-(पञ्च समाधि)-ले युक्त भएका, हातमा पात्र (भिक्षापात्र) लिएका, स्वच्छ कपडा पहिरेका र आशीर्वाद दिने पनि हुन् ।।४।। पाँच प्रकारको अभिषेक (मन्त्रपूर्वक सेचन) लिएका, शिरोमुण्डन गरेका र नियममा पनि रहेका छन् । यी अर्हत्हरूले खिक्खिरी (चैत्य अङ्कित दण्ड), पात्र

लिएका, घुमन्ते प्रकृतिका र चीवर (काषाय वा गेरुवा वस्त्र) लगाएका छन् । उक्त भिक्षुहरू भिक्षाबाट प्राप्त अन्न मात्र भोजन गर्ने, निर्विष, निर्विकल्प सङ्ग-(विषयभोग)-ले रहित पनि छन् र निवृत्ति-(निर्वाण, मोक्ष)-मा प्राप्त भएका पनि देखिन्छन् ।।२।। यिनीहरू वैराग्ययुक्त धार्मिक कथा स्वयं सुन्छन् र अरूलाई पनि सुनाउँछन् । काषाय (गेरुवा) वस्त्र धारण गर्ने । शिर मुडेका (रौं खौरेका), डण्डा (खिक्खिरी) धारण गर्ने र ज्वर-(सन्ताप)-ले हीन पनि छन् ।।१।। विहारमा बस्ने, अनेक शिष्य भएका, सन्तुष्ट र सुमण्डल (राम्रो समूह भएका पनि छन् । निर्वाण-(मोक्ष)-मार्गतर्फ उन्मुख भएका हुँदा यिनीहरू श्रावण र श्रामणेर नामले पनि प्रसिद्ध छन् ।।२।। सहज, सुन्दर स्वभाव भएका–

**नित्यप्रकाशः स्फुरत्सकलत्रिभुवनप्रकारः परमेश्वरः श्रूयते ।। अक्षोभ्यपुत्रो वज्रसत्वो (त्वो) मानसाकारस्तन्मनसः पुत्रोय(त्प)न्नः ।। स च निःश्रेयसविघ्नार्थं मोक्षप्रतिबंधार्थं प्रयत्नः ।।०।। इन्द्रियंज(यजं) कर्म पूर्वजन्मकृतं च कर्म कायिकवाचिकमानसिकानि दशकर्माणि शुभान्युशुभा (न्यशुभानि) ।।०।।**

**श्रीगुरुभ्यो नमः ।। आगछ(च्छ)त्यन्यतो नाग्निरिंध(रिन्ध)नेग्निर्न विद्यते इंध-(इन्ध)नव्यतिरिक्तस्तावत् कुतश्चिदन्यतोग्नेरागमनं नास्ति ।। तस्यादृष्टत्वात् ।। निरिंध(रिन्ध)नस्य चाहेतुकस्याग्नेरागमनाभावात् ।। सेंध(सेन्ध)नस्य चागमनप्रयोजनाभावात्. तत्रापि चेंध(चेन्ध)नतुल्यपर्यनुयोगात्. अनवस्थाप्रसंगा(सङ्गा)च्च आगछ(च्छ)त्यन्यतो नाग्निस्तथेंध(थेन्ध)नेप्यग्निर्न संभ(सम्भ)वति तत्रानुपलभ्यमानत्वात् अथ स्याद् विद्यमानस्यापि मूलोदकादिवदभिव्यंज(व्यञ्ज)कप्रत्ययवैकल्यात् पूर्वमनुपलभ्यमानत्वं(त्वम्) ।। अरणिनिघर्षणाद–**

नित्यप्रकाशले युक्त, सबै तीन भुवनबारे ज्ञान भएका परमेश्वर (बुद्ध) हुन् भन्ने सुनिन्छ । अक्षोभ्यनामक तथागत-(बुद्ध)-का पुत्र वज्रसत्त्व हुन् जुन मानस आकार छन्, उनकै मनबाट उत्पन्न भएका । यिनी पनि निःश्रेयसको विघ्न र मोक्षको प्रतिबन्धको लागि प्रयत्नशील रहे । कर्म दुई प्रकारका छन्– यस लोकमा इन्द्रिय-(कर्मेन्द्रिय)-द्वारा गरिने ऐहिक वा यस संसारकै कर्म र पूर्वजन्मको संस्काररूप कर्म । शरीर, वचन र मनका शुभ र अशुभ कर्म दश छन् ।।०।।

श्री गुरुहरूलाई नमस्कार ।

[अब अग्नि र इन्धन-(दाउरा)-को एकरूप वा भिन्न रूप के हो ? भन्ने बारेमा तर्कगत प्रसङ्ग उठाइन्छ ।]

[हामीले दाउरा-(अरणि)-को घर्षण-(रगड)-बाट अग्नि पैदा भएको देखेका छौं ।] यहाँ प्रश्न उठ्छ– अग्नि अन्तबाट आएको देखिंदैन । इन्धन-(दाउरा)-मा अग्नि छैन । अग्नि

इन्धनभन्दा भिन्न कुरा हो। कहीं अन्तबाट अग्नि आएको (ल्याइएको) पनि होइन, त्यो (ल्याइएको) नदेखिनाले। हेतु वा आश्रयस्वरूप इन्धन-(दाउरा)-विना अग्नि आउन पनि सक्दैन। इन्धन-(दाउरा)-सहित अग्नि हो भने त्यस्तो अग्नि आउनुको (ल्याउनुको प्रयोजन (मतलब) पनि छैन। किमभने त्यहाँ पनि इन्धनसँग एकाकार भएर नै अग्नि आएको हुन्छ। अनवस्था-(न्यायदर्शनको आपत्तिस्वरूप प्रमाण)-को प्रसङ्ग पनि हुन्छ। त्यसो हुनाले अग्नि अन्तबाट आउँदैन र इन्धन-(दाउरा)-मा पनि अग्नि सम्भव हुँदैन। किनकि सामान्य स्थितिमा दाउरामा आगो पाइँदैन।

अथवा हुन सक्छ मूल (मुहान) भएको ठाउँमा वर्षामा पानी निस्केजस्तै अग्नि जगाउने कार्य (दाउराको घर्षण गर्ने काम) नभएसम्म उक्त अग्नि अनभिव्यक्त (अव्यक्त) रूपमा रहेको हुन्छ, पहिले नपाइएको मात्र हो भन्ने तर्क पनि उठ्न सक्छ। अरणि-(रगडेर आगो निकालिने दाउराको टुक्रा)-को

धर्म :

॥१६॥

भिव्यंज(व्यञ्ज)कप्रत्ययसद्भावात्. पश्चादुपलब्धिरिति इदमेव तावत्संप्र(सम्प्र)धार्ये-(र्यं) किं पुनर्मूलोदकादीनामभिव्यंज(व्यञ्ज)कैः प्रत्ययैः क्रियत इति तत्र स्वरूपं तावन्न क्रियते विद्यमानत्वात्. अभिव्यक्ति (:) क्रियत इति चेत् ॥ केय(यम्) अभिव्यक्तिर्नाम. प्रकाशयतीति चेदेवं तर्हि सैव क्रियते पूर्वमविद्यमानत्वादस्याः सत्कार्(त्का)र्यवादत्यागश्चैवं जायतेऽभिव्यक्तेः पूर्वमविद्यमानत्वात्. पश्चाच्च भावात्. स्वरूपस्योत्पत्तिप्रत्ययनिरपेक्षत्वात्. खपुष्पवदभिव्यक्तिप्रत्ययसापेक्षतापि च न स्यात् अपि चेयमभिव्यक्तिरभिव्यक्तवा(व्यक्त्वा) भावस्य परिकल्पेनानभिव्यक्तस्य वा ॥ तत्र तावदभिव्यक्तं तन्नाभिव्यज्यते. तस्याभिव्यक्तिवैयर्थ्यात्. अनिष्टा(ष्ट)दोष-प्रसंगा(सङ्गा)च्च. अनभिव्यक्तमपि नाभिव्यज्यते. खपुष्पवदनभिव्यक्तत्वात् इत्येवमभिव्यक्तिर्न संभ(सम्भ)वति. अथापि स्याद् विद्यमानस्यैवं प्रत्ययै(त्ययाय) स्थौल्यं क्रियत इति एवमपि ददेव स्थौल्यं

राम :

॥१६॥

निघर्षण (रगड्ने काम) गरेपछि अभिव्यञ्जक (बाहिर प्रकट गराउने) काम गरेपछि मात्र आगो उपलब्ध भएको हो। पहिले निश्चय गर्नुपर्छ— अभिव्यञ्जक (बाहिर प्रकट गराउने) प्रत्यय-(साधन)-द्वारा मूलको पानी आदिलाई प्रकट गराउँछ। [वर्षाले पृथ्वी भिजेर मूलको पानी फुट्छ।] यहाँ त्यो स्वरूप पहिलेदेखि भएर अभिव्यक्त (प्रकट) भएको हो भने त्यो अभिव्यक्त के हो ? यसको अर्थ प्रकाशन (प्रकट) हो भने त्यो अभिव्यक्ति पहिले थिएन अहिले त्यही अभिव्यक्त गराइएको हो। अभिव्यक्ति पहिले नभएको र पछि भएको हुनाले यसबाट कार्यवाद-(कार्यकारणभाव)-को त्याग पनि हुन सक्छ। किनभने कुनै पनि स्वरूपको उत्पत्ति र प्रत्यय-(साधन)-को वास्ता रहँदैन। अर्कोतर्फ खपुष्प (आकाशमा फूल छ भन्नु अर्थात् असम्भव

कुरा गर्नु) जस्तै अभिव्यक्तिको खोजी गर्ने वास्ता पनि नहुन सक्छ। अथवा यो अभिव्यक्ति अभिव्यक्त नभएको कल्पना गरेर अभिव्यक्त हुनै नसक्ने वस्तुको बारेमा लागू हुन सक्दैन। वस्तुतः जो स्वतः अभिव्यक्त (प्रकट) छ त्यसबारे केही गर्नुपर्दैन, अभिव्यक्ति नै व्यर्थ हुने हुनाले सार्थै अनिष्ट दोष लाग्ने हुनाले पनि। अभिव्यक्त हुन नसक्नेलाई अभिव्यक्त गर्न सकिँदैन, खपुष्प (आकाशपुष्प) जस्तै अभिव्यक्त नहुने हुनाले। अथवा भएकालाई (सूक्ष्म रूपले रहेकालाई) नै ठूलो बनाएर अभिव्यक्त गराइन्छ भन्ने हो भने त्यही नै ठूलो पारिन्छ।

**पूर्वं नास्तीति तदेव क्रियत इति. कुत(तः) स्थौल्यापादनमभिव्यक्तिः सौक्ष्मस्ये(स्यै)-व निर्हेतुकस्यासंभ(सम्भ)वात्. कस्य स्थूलतापादनादभिव्यक्तिः स्यादिति तदेवं सर्वथा इंध(इन्ध)नेऽग्नेर्न संभ(सम्भ)व इति इंध(इन्ध)नेऽग्निर्न संविद्यते ॥ न चापि विद्यमाने नाग्निर्नेध(नेन्ध)नस्य दहनमुपजायत इति. असत्यमेवैतदुपलभ-(भ्य)ते भवान्. अपि च यथा पूर्वं गतागतगम्यमानस्तां दूषणमुक्तं अत्रेंध(त्रेन्ध)ने शेषमुक्तं. गम्यमानगतागते(तेब) अग्निनैंध(नैन्ध)नदह्यमानमुपलभ्यते. इत्यनेनेंध-(नेन्ध)नप्रस्तावशेषं दूषणं गम्यमानगतागतदूषणेन समं वेदितव्यमुक्तपाठविपर्ययेन. दग्धं न दह्यते तावददग्धेनैव दह्यते. दग्धादग्धविनिर्मुक्तं दह्यमानं न दह्यते. इत्यादिना यत एवमतो नास्त्यग्निर्नेध(नेन्ध)ने(नेना)स्य दहनमिति वेदितव्यं(व्यम्) ॥ इदानीं यथोपपादितमर्थं निगमयन्नाह ॥ इंध(इन्ध)नं पुनरग्निर्न नाग्निरन्यत्र बंध(बन्ध)नात् ॥ नाग्निरिंध(रिन्ध)नवान्नाग्नाविंध(विन्ध)नानि न तेषु सः ॥ तत्र यदि(दीन)–**

जो पहिले थिएन त्यही नै प्रकट गराइन्छ भने कसरी ठूलो पार्नु अभिव्यक्ति हो भन्न सकिन्छ? हेतु-(कारण)-स्वरूप सूक्ष्म (सानो) वस्तु नै नभएकोले। कसको ठूलो पार्ने अभिव्यक्ति हो? यसरी इन्धन-(दाउरा)-मा अग्नि सम्भव छैन र इन्धनमा अग्नि छैन। रहेकै अग्निले इन्धन जलाउने काम हुँदैन। यो असत्यजस्तै हुन्छ। जस्तै कि गतागत गम्यमान (गएको, आएको र पछि जाने अर्थात् पहिले थिएन, बीचमा देखियो, अनि पछि रहनेछैन भन्ने नियम) पनि यहाँ दोषपूर्ण हुन्छ। इन्धनबारे बाँकी कुरा भनिसकियो। पछि नरहने, पहिले पनि नरहेको र एक छिनको लागि आएको अग्निद्वारा इन्धन (दाउरा) डढेको देखिन्छ। यसबाट यस चर्चाको पाठको उल्टो रूप-(गम्यमानगतागत भन्ने रूप)-द्वारा पनि उक्त दोष कायमै भएको बुझिन्छ।

एउटा उक्ति छ– डढेकोलाई डढाउन सकिदैन, नडढेको मात्र डढ्छ। डढिसकेपछि नडढेको स्थिति नहुने र पुनः डढाउन पनि नपर्ने हुनाले यस्तो वस्तुलाई डढाईंदैन आदि। यसबाट अग्निद्वारा इन्धन डढाउने काम हुँदैन भन्ने बुझिन्छ। अहिले सिद्ध भएको अर्थ स्पष्ट गर्दै भनिन्छ– इन्धन (दाउरा) अग्नि होइन, अग्नि अन्यत्र पनि रहँदैन। अग्नि इन्धनमा हुँदैन र अग्निमा पनि इन्धनहरू हुँदैनन्। त्यहाँ यदि

घर्म :

॥१७॥

धनं स चेदग्निरेकत्वं कर्तृकर्मणो(णोः) भवेदित्यनेनाग्निंध(ग्नीन्ध)नयोरेकत्वप्रतिषे-धादिंध(दिन्ध)नं पुनरग्निर्नं ॥ अन्यश्चेदिंध(दिन्ध)नादग्निरिंध(रिन्ध)ना(नाद्) दृश्यते भवेदित्यादिनान्यत्वस्य प्रतिषेधान्नाग्निरन्यत्र चेंध(चेन्ध)नात्. तत्त्वान्यतो-भयपक्षप्रतिषेधादेव तद्वत्पक्षाधाराधेयपक्षाणामप्यर्थतः प्रतिषिद्धत्वात् तान्यपि निगमयन्नाह नाग्निरिंध(रिन्ध)नवान्नाग्नाविंध(विन्ध)नानि न तेषु स इति. तत्राग्निरिंध(रिन्ध)नवान्न भवति इंध(इन्ध)नमस्यास्मिन् वा विद्यत इति व्यतिरेकेन(ण) वा व्युत्पाद्येनाव्यतिरेकेण वा तत्र व्यतिरेकेण तद्यथा गोमान् देवदत्त-···ण (अव्यतिरेकेण) बुद्धिमान् देवदत्तः ॥ रूपवानित्यादि. अग्नींध(ग्नीन्ध)नयोश्च पक्षद्वयस्यापि प्रतिषिद्धत्वादिंध(दिन्ध)नवानग्निरिति प्रतिषेधो ·· (विद्यते) अग्ने-रस्तीति नाग्नाविंध(विन्ध)नानीति युज्यते नापींध(पीन्ध)नेस्त्यग्निरन्यत्वप्रतिषेधा-देवेति ॥ एवमाधाराधेयप्रतिषेधेपि···यथा चाग्निः पंच(पञ्च)धा विचार्यमाणा न संभ(सम्भ)वति एवमात्मापीत्यतिदिश्यमाह ॥

राम :

॥१७॥

इन्धन नै अग्नि हो भने कर्ता र कर्म (कार्यकारण) एक भन्ने हुन्छ (जुन सम्भव छैन)। यसकारण अग्नि र इन्धन एउटै होइनन् पुनश्च इन्धन अग्नि होइन। अथवा इन्धनभन्दा भिन्न अग्नि हो भने इन्धनमा किन देखिन्छ ? यस्तै तर्कले इन्धनभन्दा भिन्न अग्नि भन्ने कुराको पनि निषेध हुन्छ। इन्धन अग्नियुक्त भन्ने पुष्टि हुन्छ)। इन्धनबाहिर अग्नि पाइँदैन पनि। तत्त्व-(वास्तव)-रूपमा दुवै पक्ष-(इन्धनमा अग्नि छ र इन्धनमा अग्नि छैन भन्ने दुई तर्क)-को निषेध पनि गरिएको छ। यहाँ आधार (आश्रय, रहिने ठाउँ) र आधेय-(आश्रित, रहने वस्तु)-को स्थिति पनि अप्ठेरो हुनाले नै माथि भनियो— अग्निमा इन्धन छैन र इन्धनमा अग्नि छैन भनेर।

यहाँ अग्नि इन्धनयुक्त हुन सक्दैन किनक व्युत्पत्ति (शब्द-शब्द छुट्टचाएर अर्थबोध गर्ने काम) गर्दा यस्तो हुन्छ अग्निको वा अग्निमा इन्धन छ भन्ने अर्थमा 'अग्निः इन्धनवान्' (इन्धन भएको) भन्न मिल्दैन। किनकि व्यतिरेकधर्म-(त्यो नभएमा त्यो पनि हुँदैन भन्ने नैयायिक नियम)-ले यस्तो अर्थमा बाधा हुन्छ। जस्तो कि 'गोमान् देवदत्त' (गाईवाला देवदत्त) भन्दा अन्वयव्यतिरेकनियमले अर्थ खुल्छ र गाई तथा देवदत्तलाई अलग्ग्याएर हेर्न पनि सकिन्छ। (रूपवाला) आदि शब्दमा पनि यो नियम लगाउन सकिन्छ। अग्नि र इन्धनबारे भने दुवै पक्षको निषेध गरिएकोले 'इन्धनवान् (इन्धन भएको) अग्नि' भन्न पनि सकिएन। अग्नि देखिदैमा अग्निमा इन्धन छ भन्न मिल्दैन पनि। इन्धनमा अग्नि छ भन्न पनि मिल्दैन किनकि अग्नि र इन्धनलाई छुट्टचाउन सकिंदैन। फलानोमा फलानो छ भनेर आधाराधेयभाव-सम्बन्ध गर्दा दुई वस्तु अलग्ग छुट्टिन्छन्। यहाँ त्यस्तो देखिदैन जसरी अग्नि पाँच प्रकारले विचार गरेर पनि यसै हो भन्न सकिएन यही कुरा आत्मामा पनि लागू हुन्छ भन्ने सम्झेर भनिन्छ।

नमः श्रीशाक्यमुनये ॥ ॥ निर्वाणः ॥ श्रीमानयंशाक्यसिंहो बुद्धो भगवान् निर्वृत्ति प्राप्तस्तथागतोभवत् ॥ यथा येन प्रकारेण यतः सकाशादागतः तथा तेन प्रकारेण तथताक्रमेण च तत्रैव गत इति तथागतः ॥ ॥ तथागतो भूत्वा निर्वृत्ति प्राप्य महावैरोचन(ने) लीनः सन् सारूप्यनिर्वाणेन महावैरोचनोभूत् ॥ ॥ तद्यथा महावैरोचनेन गगनाकारेण आदर्शज्ञानवशात् स्वांशतः प्रवृत्तिनिवृत्त्यर्थं सृष्टः ॥ बोधिसत्त्वनामा ॥ अथ स चादौ प्रवृत्तिनिवृत्त्यात्मकः आदौ प्रवृत्तिनिरतः षद्(ड्)-गतिसंसारे संच(सञ्च)रन् नानारूपनानाभिधानचर्यासु संच(सञ्च)रन्नेकक्रीडाभिडाभि-(क्रीडाभि)रतो नटभट इवानेकजन्मान्तरितोनेकदुःखसुखाभिभोक्तानेकयशोनाभिमा-नाद्भुतनवरसाभिरसिकोभिचरन् प्रवृत्तिमाचरन्निवृत्तिसमभिलषितस्त्रियानमारूढो दशपारमितापूरणे बोधिचर्यामाचरन्. त्रिरत्नभक्तो वैनेयजनानुद्धरन् क्रमतो द–

श्री शाक्यमुनिलाई नमस्कार। निर्वाणबारे चर्चा गरिन्छ। श्रीमान् यी शाक्यसिंहनामक बुद्ध भगवान् निर्वृति-(निर्वाण, मोक्ष)-मा पुगेका हुनाले तथागत नामले परिचित भए। जसरी जुन किसिमले जसको समीपबाट आए, त्यसरी सोही किसिमले उस्तै क्रमले त्यहीं नै गए (विलीन भए) भन्ने अर्थमा 'तथागत' शब्द बनेको हो। तथागत भएर निर्वृत्तिमार्गमा पुगी महावैरोचननामक बुद्धमा लीन (एकाकार) हुँदै सारूप्य निर्वाण-(भगवान्कै रूपसँग एकाकार हुने निर्वाण)-द्वारा [शाक्यसिंह पनि] महावैरोचन भए। जस्तै कि गगन-(आकाश)-को आकार

भएका अर्थात् शून्यस्वरूप महावैरोचन बुद्धले आदर्श ज्ञानद्वारा आफ्नै अंशबाट प्रवृत्ति (संसार) र निवृत्ति-(निर्वाण)-को लागि बोधिसत्त्वनामक बुद्ध-(शाक्यसिंह)-को सृष्टि गरेका थिए। यसपछि उनी (शाक्यसिंह वा शाक्यमुनि) सर्वप्रथम प्रवृत्ति र निवृत्तिस्वरूप थिए। पहिले प्रवृत्तिमार्ग-(सांसारिक व्यवहार, विषयभोग)-मा लागेर छ गति भएको संसारमा घुम्दै शाक्यमुनिले विभिन्न रूप, विभिन्न नाम र काम गर्दै रहे। कुनै क्रीडा-(खेल वा नाटक)-मा लागेका नट वा भट (सिपाही) जस्तै भए। साथै अनेक जन्म लिएर दुःख र सुख भोग गर्दै अनेक यश कमाउँदै, अभिमानरहित भएर नौ रस-(शृङ्गार आदि साहित्यिक नौ रस?)-मा समेत डुबेर शाक्यमुनिले प्रवृत्तिमार्गको पालन गरेका थिए। यसपछि निवृत्तिमार्गमा इच्छा राखेर त्रियानमा चढेर दश पारमिता पूरा गर्न बोधिचर्या (ज्ञान) आर्जन गर्दै त्रिरत्न (बुद्ध, धर्म र सङ्घ)-को भक्त बनी वैनेय-(भिक्षु)-हरूको उद्धार गर्दै क्रमैले–

धर्म :
॥१८॥

शभूमीश्वरो दशभूमिप्रतिष्ठितो दशाकारो दशार्थार्थो दशज्ञानविशुद्धिर्दशबल धर्ममेघा(धा)धितो भूत्वा श्वेतकेतुनामा बोधिसत्वा(त्त्वा)धिपस्ततो बोधिं प्राप्तुं तुषितभुवनमाश्रित्य तदनन्तरं बोध्यवाप्तिसमयमासाद्य तत्र तुषितालये मैत्रेयं बोधिसत्वं(त्त्वं) स्वासनेभिषिच्य ततश्च्युतिधर्मतो गजरूपो मर्त्यमंड(मण्ड)ले सागरतीरे कपिलवस्तुनि नगरे. शुद्धोदनाख्यभूपपत्न्या मायादेव्या कुक्षीमाविवेश श्रमणरंध्र(रन्ध्र)मार्गतः ॥ गर्भस्थोसौ वह्निमूर्द्धि प्रदर्शयन् दशमासे लुंबिनीवने प्लक्षवृक्षो(क्षा)ध(:) मायादेव्या दक्षपार्श्वतः समजनि ॥ ततो जातः सन् जातकर्मादि-गृहस्थाचारं विवाहांतं(हान्तं) कुलकर्म परिसमाप्य सर्वार्थसिद्धनामा युवराजस्त-पोवनमभीप्सुः परिग्रहान् विहाय देशान्निर्गछ(च्छ)न् स्वयमेव चूडा (डाः) छित्वा प्रव्रज्याव्रतं चरन् भिक्षुर्भूत्वाऽनेकलोकानुद्धृत्य तपोवने तपस्विनां तपोविशेषं प्रशंसन्नभिनन्दन् कांश्चित् कतिचित्त्रियाने (नं) स्थापयामास ॥ ॥ त–

राम :
॥१८॥

तेह्र भूमिका मालिक, दश भूमिमा प्रतिष्ठित, दश आकार भएका, दश अर्थले युक्त, दश प्रकारको ज्ञानले शुद्ध भएका, दश बल भएका, धर्म र बुद्धिका मालिक भएर बोधिसत्त्वका मालिक (बोधिसत्त्वमा श्रेष्ठ) श्वेतकेतु नाम गरेका बोधिसत्त्व-(बुद्ध)-ले तुषितहरू-(१२ वा ३६ सङ्ख्या भएका उपदेवताहरू)-को भुवन-(वासस्थान)-मा रहने (बस्ने) काम गरे। त्यसपछि बोधि (ज्ञान) प्राप्त गर्ने समयमा पुगेर उनले तुषितनामक उपदेवताहरूको वासस्थानमा मैत्रेयनामक बोधिसत्त्वलाई आफ्नो आसन-(बुद्धको स्थान)-मा अभिषेक (स्थापित) गरे। यसपछि च्युति (ओर्लने, संसारचक्रको नियमअनुसार पृथ्वीमा जन्म लिने) धर्म वा नियमअनुसार गज-(हात्ती, स्थूल शरीर)-को रूपले मर्त्यमण्डल-(मनुष्यलोक, पृथ्वी)-मा सागर-(तलाउ ?)-को तीरमा रहेको कपिलवस्तु नाउँ गरेको शहरमा शुद्धोदननामक राजाकी पत्नी मायादेवीको कोखमा [सूक्ष्म शरीरद्वारा] कानको प्वालको बाटो भई प्रवेश गरे।

[उनै शाक्यसिंह बुद्धले] गर्भमा रहँदा निकै समृद्धि देखाएका थिए। दश महीनामा लुम्बिनीको वनमा प्लक्ष-(पाखरी)-को रूखमुनि मायादेवीको दाहिने कोखबाट [शाक्यसिंह बुद्धको] जन्म (नयाँ रूपमा अवतरण) भयो। त्यसपछि जन्मनासाथ जातकर्म (जन्मनासाथ गरिने संस्कार) आदि विवाहसम्मका गृहस्थीको आचरण (विधि) कुलको परम्पराअनुसार पूरा गरेर यिनै बुद्ध सर्वार्थसिद्ध-(सिद्धार्थ)-नामका युवराजले तपोवन (तपस्या गर्ने एकान्त प्राकृतिक थलो) जान इच्छा गरे। त्यसो हुनाले परिग्रह-(पत्नी, परिवार)-लाई छाडेर देश-(कपिलवस्तु)-बाट निस्कँदै स्वयं नै चूडा (चुल्ठो, केश) मुडेर संन्यासीको व्रत गर्दै भिक्षु भएर अनेक लोक-(प्राणी, देश)-को उद्धार गर्दै तपोवनमा पनि तपस्वीका तपस्याको प्रशंसा गर्दै तथा कतिपय केही-(तपस्वीहरू)-को प्रशंसा गर्दै त्रियानको स्थापना गरे।

**तो बोधिमंड(मण्ड)पमनुप्राप्य बोधिवृक्षे वज्रासन आस्फानकध्यानतः षड्वर्षाणि दुष्करं चकार सर्वार्थसिद्धो भिक्षुः ॥ ततो मारजिद् भूत्वा बोधिमासाद्य बुद्धो बभूव शाक्यसिंहनामा महाबुद्धः षडभिज्ञः द्वात्रिंशल्लक्षण(णा)शीत्यनुव्यंज(व्यञ्ज)न-विराजितगात्रो भगवान् ततः काश्यां मृगदावे चतुर्थासनस्थो बहुभिर्भिक्षुभिः परिवृतो धर्मचक्रं बोधिसत्वं(त्त्वं) ब्रह्माणं च पुरस्कृत्य धर्मचक्रव्याख्यानमकरोत् ॥ अथ च ततः संप्रस्थितः सन् मार्गे लोकानुद्धृत्य प्रव्राजयित्वा बहून् सद्धर्मोपदेशतः द्वादशाब्दे स्वां नगरीमनुप्राप्तः ॥ शतसंख्या(सङ्ख्या)मृद्धिं प्रदर्शयन् कपिलवस्तुनि प्रविश्य तातादिपौरजनसंमानमधिगतः शाक्यसिंहः श्रीधनो ब्रह्मविष्णुमहेश्वरशक्रादि लोकपालाभिसेवितो (तः) सभिक्षुसंघो(सङ्घो) लुंविनीयात्रामचरत् ॥ ॥ ततोन्यग्रोधारामविहारमाश्रित्य प्रत्यहं सद्धर्मोपदेशतो लोकानुद्धृत्य कोटिशः प्रव्राजयित्वा त्रिषु यानेषु नियुज्य जगद्ध–**

त्यसपछि बोधिमण्डप-(ज्ञानको चर्चा हुने पवित्र ठाउँ, वरपीपलको चौतारो)-मा पुगेर बोधिवृक्ष-(वर-पीपल)-को रूखको फेदमा वज्रासनमा रही आस्फाणिकको ध्यान गर्दै सर्वार्थसिद्ध भिक्षुले ६ वर्षसम्म ज्यादै कठिन (तपस्या, समाधि) गरे। त्यसपछि मारजित् (कामदेवलाई जित्ने, इन्द्रियविजयी) भएर बोधि (पूर्ण ज्ञानको प्रकाश) प्राप्त गरी शाक्यसिंह-नामक महाबुद्ध षडभिज्ञ छ (अभिज्ञानप्राप्त) भएका तथा बत्तीस लक्षण र असी अनुव्यंज-(व्यञ्ज)-न-(गौण लक्षण)-ले शरीर शोभित हुँदै भगवान्‌को रूपमा देखा परे। त्यसपछि काशीमा मृगदाव-(मृगहरू खेल्ने र वन डढेलो पनि लाग्ने ठाउँ, घना जङ्गल, कुनै ठाउँ)-मा चौथो आसन-(संन्यास आश्रम)-मा रहेर धेरै भिक्षुहरूले घेरिँदै धर्मचक्रलाई, बोधिसत्त्व-(बौद्ध भिक्षु)-लाई र ब्रह्मालाई पनि अगाडि राखेर धर्मचक्र-(धर्मबारे यथार्थतत्त्व)-को व्याख्यान गरे। यसपछि पनि शाक्यसिंह बुद्ध त्यहाँबाट प्रस्थान (यात्रा) गर्दै बाटोमा लोक-(प्राणी)-

हरूको उद्धार गरेर र धेरै व्यक्तिलाई असल धर्मको उपदेशले सन्यासी (प्रव्रजित) बनाएर पनि बाह्र वर्षमा आफ्नो नगर-(कपिलवस्तु)-मा आइपुगे। सय प्रकारको ऋद्धि (ऐश्वर्य) दर्शाउँदै कपिलवस्तुमा प्रवेश गरेर पिता (शुद्धोदन) आदि शहरिया जनहरूको सम्मान प्राप्त गर्दै श्री (ऐश्वर्य, ज्ञान) नै धन भएका, ब्रह्मा, विष्णु, महेश्वर (शिव) र इन्द्र आदि लोकपाल-द्वारा सेवा गरिएका, भिक्षुसङ्घहरूले सहित भएका शाक्यसिंहले लुम्बिनीको यात्रा गरे। त्यसपछि न्यग्रोधारामनामक विहारमा पुगेर प्रतिदिन सत् (असल) धर्मको उपदेशले लोकको उद्धार गर्दै करोडौं-(धेरै)-लाई सन्न्यास आश्रममा लगाएर तीन यान-(त्रियान)-मा नियुक्त गर्दै संसारलाई–

र्ममयं कृत्वा कियद्वर्षांत(र्षान्त)रे पुत्रराहुलाद्यान् पञ्चसाहस्त्रिकशाक्यकुमारान् प्रव्राजयित्वा गौत्त(त)मीमुपमातरं गोपाद्याश्चतुराशीतिसाहस्त्रिकाः श्वांतः-(स्वान्तः)पुरीयाः प्रव्रज्यायां नियुज्य स्वीये शासने समग्रहोत् ॥ ततोन्ते सकलानन्दनामानं पौत्रं(त्र)महोरात्रव्रते नृपासने प्रतिष्ठाप्य राज्याभिषेकेन राजानं संविधाय चैत्यप्रदक्षिणयात्रां कारयित्वा पितरि शुद्धोदने तपोवनं गतवति चैलके भूतेसौ शाक्यसिंहो महाबुद्धः कपिलवस्तुपुरतो निर्जगाम नेपालमंड(मण्ड)ले श्रीमत्स्वयंभू(यम्भू)धर्मधातुचैत्यदर्शनार्थं तदा यावंति(वन्ति) शुभनिमित्तानि जगति तावंति(वन्ति) सर्वाण्यभूवन् ॥ ॥ ततः संप्र(सम्प्र)स्थितः सन् सर्वत्र समुद्धरन् प्राणिनः स्वयंभु(यम्भु)वं धर्मधातुं संद(सन्द)र्श्य जगत् सद्धर्ममयं विधाय पुनश्च मातृमायादर्शनार्थं तुषितादिभुवनेषु संच(सञ्च)रन् निर्वाणसमयं विज्ञाय पश्चिमायां दिशि कुशिनामनगरमनुययौ ॥ तत्रापि पूर्ववत् सर्वान् बोधौ नियुज्य जगदुद्धृत्य सम-



धर्ममय बनाए । केही वर्षभित्र छोरा राहुल आदि पाँच हजार शाक्यकुमार-(शाक्यकुलका कुमार)-लाई प्रव्रज्या (सन्यास) दिलाएर तथा धाईआमा, गौतमीलाई र गोपा आदि गरेका चौरासी हजार आफ्नै अन्तःपुर-(खोपी)-मा रहनेहरूलाई पनि आफ्नो शासन-(अनुशासन)-मा प्रव्रज्या-(सन्यास धर्म)-मा नियुक्त गरेर [आफ्नो प्रभुत्वको प्रदर्शन] गरे ।

यसपछि अन्तमा सकलानन्द नाम गरेका नातिलाई रातदिन चनाखो हुनुपर्ने राजकीय सिंहासनमा राखेर राज्याभिषेकद्वारा राजा तुल्याएर चैत्य-(बौद्ध स्तूप)-को प्रदक्षिणयात्रा गराए । अनि पिता शुद्धोदन चीवर (गेरुवा वस्त्र) धारण गर्ने भई तपोवन गएपछि शाक्यसिंह-नामक महाबुद्ध नेपाल-मण्डल-(प्रदेश)-मा स्थित श्रीमान् स्वयम्भू धर्मधातु-(बुद्ध)-को चैत्य-(स्तूप)-को दर्शनको लागि कपिलवस्तु शहरबाट निस्के । त्यसवेला संसारमा चारैतिर शुभ लक्षणहरू देखा परे ।

त्यसपछि यात्रा गर्दै चारैतिर प्राणीहरूको उद्धार गर्द स्वयम्भू धर्मधातु-(बुद्ध)-को दर्शन गरी संसारलाई नै धर्ममय, बनाएर शाक्यसिंह बुद्ध फेरि आमा मायादेवीको दर्शन गर्नको लागि तुषित आदि उपदेवताको भुवन (वासस्थान) घुम्दै रहे र निर्वाणको समय (अन्तसमय) नजीक आएको बुझेर पश्चिम दिशामा स्थित कुशी नाम गरेको नगर-(कुशीनगर)-मा गए। त्यहाँ पनि पहिले जस्तै सबैलाई बोधि-(ज्ञान)-मा प्रवृत्त गराएर संसारको उद्धार गर्दै—

ये पश्चिमविहारमाश्रित्य सर्वानानंदा(नन्दा)द्यान् भिक्षूननुबोध्य. दर्शनार्थ(र्थं) समागतान् ब्रह्माद्यान्(न)भिबोध्य निर्वाणसमयोय(यं) ममेत्याज्ञाप्य विहाराभ्यंत-(भ्यन्त)रे पश्चान्मुखश्चीवरावृत्तसर्वाङ्गो ध्यानलीनो व्यतिष्ठत ।। ततो वज्राभेद्य-मग्निदेहं समुत्सृज्य वायुयोगतो लोकानुबोधने महावैरोचने लीनो निर्वाणं गतो निर्वृत्तोभूत् तथागतः सं(स)मभवत् ।। ।। यः पश्चान्मुखश्चीवरावृत्तसर्वांग-(वाङ्ग): स शाक्यसिंहो बुद्धः ।। उपरि यो बुद्धः स महावैरोचननामा बुद्ध ।। ध्यानं (नम्) एकास्यं स्वर्णवर्णं कुवलयनयनं धर्मचक्राख्यमुद्रं (द्रम्) ।। एकवक्त्रं स्वर्णवर्णं सोल्लीखं कुवलयदलध्यानतपनद्वयं स्मितमुखं दर्पणकपोलं स्वर्णपट्टललाटं लम्बकर्णं विम्बोष्ठं कंबु(कम्बु)ग्रीवं कपाटवक्षसं उत्तरासंग(सङ्ग)विचित्रचीवराऽवृत्तं वज्रासनं रोमविलोद्गतरोचिश्चयप्रकाशं तदिगंत(गन्त)रालं पीठकमलोपरिवज्रास-नस्थं महावैरोचनं नमे ।।१।। तत्र पार्श्ववर्तिनां च—

समयमा पश्चिम विहारमा पुगेर आनन्द आदि सबै भिक्षुलाई बोध (ज्ञान) दिए। उनै शाक्यसिंह बुद्धले दर्शनको लागि आएका ब्रह्मा आदि देवतालाई पनि बोध (ज्ञान) दिएर यो मेरो निर्वाण-(मुक्ति, देहत्याग)-को समय हो भन्ने सम्झी विहार-(बौद्धमन्दिर)-को बीचमा नै पछाडि मुख फर्काएर चीवर-(गेरुवा वस्त्र)-ले सबै अङ्ग ढाकिएर ध्यानमा लीन (संलग्न, एकाकार) हुँदै रहन थाले। त्यसपछि वज्रले पनि भेदन गर्न (तोड्न) नसक्ने अग्निमय शरीरलाई छाडेर वायुको योग-(सम्पर्क)-ले लोकको ज्ञानद्वारा उद्धार गराउने महावैरोचन-(बुद्ध)-मा लीन (एकाकार) भई शाक्यसिंह बुद्ध निर्वाण-(मुक्ति)-मा प्राप्त भए, निर्वृत्त (परम सुखी) भए, अनि तथागत (बुद्ध) पनि भए।

[अब स्वयम्भू बौद्ध स्तूपमा रहेका विभिन्न बोधिसत्त्व, बौद्ध भिक्षु आदिबारे एक-एक गरी वर्णन गरिन्छ।]

जो पश्चिमतिर मुख फर्काएर चीवर-(गेरुवा वस्त्र)-ले सर्वाङ्ग छोपिएका छन् ती शाक्यसिंह बुद्ध हुन्। माथि जो बुद्ध छन् ती महावैरोचन हुन्। म उनै महावैरोचन-(बुद्ध)-लाई नमस्कार गर्छु। ती महावैरोचन कस्ता छन् भने ध्यानमुद्रामा रहेका, एक मुख भएका, सुनको

जस्तै वर्ण (रङ्ग) भएका, कमलजस्तै आँखा भएका, धर्मचक्रनामक मुद्रा (स्थिति, हस्तमुद्रा) भएका छन् । वैरोचन बुद्धका विशेषताबारे अरू स्पष्ट भन्ने हो भने यी एकवक्त्र (एकमुख) छन्, सुनको वर्ण भएका छन्, कमलको जस्तै आँखा भएका छन्, उल्लेख (सम्झना गर्न) योग्य छन्, कमलदल-(कमलपत्र)-को ध्यान र तपस्यामा रत भएका छन्, मन्द हाँसो मुखमा भएका छन्, ऐना जस्ता गाला भएका छन्, निधार सुनको पातो जस्तै (चम्किलो) छ, कान लामा छन्, विम्ब (गोलकाँक्रीका जस्तै पुष्ट) ओठ भएका छन्; शङ्खजस्तै घाँटी भएका छन्, कपाल (विशाल) छाती भएका छन्, उत्तरतर्फ फेरो मारेको विचित्र चीवर (गेरुवा वस्त्र) पहिरेका र वज्र आसन भएका छन्, रौंका विल-(प्वाल)-बाट निस्केका किरणसमूहले प्रकाशित छन् । पीठ-(आसन)-मा स्थित कमलको माथि वज्रको आसनमा रहेका छन् । यस्तो विशेषता भएका महावैरोचनलाई नमस्कार गर्दछु । त्यहाँ पार्श्व–

धर्म :
॥२०॥

तुर्दश नामानि ध्यानानि च. द्वौ भिक्षू आनन्दशालीपुत्रनामानौ शोकाकुलौ कृतांज-(ताञ्ज)लिपुटौ रक्तचीवरावृतौ. जानुभ्यां भुवि संस्थितौ उपरि पार्श्वयोश्चतुष्टयानां मध्ये एको ब्रह्मा चतुरास्य(स्यः) कांच(काञ्च)नवर्णः मुकुटधारी चतुर्भुज(जः) द्वाभ्यां कृताञ्जलिमुद्रां द्वाभ्यां मालापुस्तके दधानः जानुभ्यां भुवि संस्थितः ॥१॥ तत्पृष्ठे विश्नु(ष्णुः) ॥ एकवक्त्रो दु(दू)र्वावर्ण(र्णः) मुकुट(टी) चतुर्भुज(जः) द्वाभ्यां कृताञ्जलिमुद्रा द्वाभ्यां पद्मचक्रं जानुभ्यां भुवि. शोकाकुलः ॥२॥ वामपार्श्वे महेश्वरः पञ्चवक्त्रो हिमवर्ण(र्णः) त्रिनयनः चतुर्भुज(जः) द्वाभ्यां कृतांज(ताञ्ज)-लिं द्वाभ्यां डमरुत्रिशूलं जानुभ्यां भुवि शोकाकुलः ॥३॥ तत्पृष्ठे इन्द्रः एकमुख(खः) कुंक(कुङ्कु)मवर्ण(र्णः) मुकुटी द्विभुज(जः) कृतांज(ताञ्ज)लिमुद्रा(द्रः) जानुभ्यां भुवि संस्थितः शोकाकुलः ॥४॥ तदधो यमः एकमुख(खः) कृस्न(ष्ण)वर्ण(र्णः) मुकुटी द्विभुज(जः) दक्षेणाभयमुद्रां वामेन कमंड(मण्ड)लुं जानुभ्यां भुवि. ॥५॥ तदधो वरुणः एकास्यः फणि(णी) मुकुटी सितवर्णो द्विभुजः

राम :
॥२०॥

(अगलबगल)-मा रहेका चौध नाम र ध्यानहरूको वर्णन गरिन्छ ।

आनन्द र सारिपुत्र नाम गरेका, शोक-(संसारपीडा)-ले आकुल भएका, अञ्जलि जोडेका, रातो चीबर (वस्त्र) लगाएका, दुई घुंडाले पृथ्वी टेकेका (निहुरेका) दुई भिक्षु छन् । माथितिर पार्श्व-(अगलबगल)-का चार-(मूर्ति)-मध्ये एउटा ब्रह्मा हुन् । यिनी चार मुख भएका, सुनको जस्तै वर्ण भएका, मुकुट धारण गर्ने, चार हात भएका, दुई-(हात)-ले अञ्जलिमुद्रा भएका (हात जोडेका) र दुई-(हात)-ले माला र पुस्तक धारण गरेका, अनि दुई घुंडाले भुइँ छोएका छन् ॥१॥

यिनको पछाडितिर विष्णु छन् । यिनी एक मुख भएका, दुबोको जस्तो वर्ण भएका, मुकुट धारण गर्ने, दुई हात जोडेका (अञ्जलिमुद्रा भएका) र दुई हातमा कमल र चक्र धारण

गरेका दुई घुँडाले भुइँ टेकेका तथा शोक-(संसारपीडा)-ले आकुल भएका छन् ॥२॥

बायाँ बगलमा शिव छन् । यिनी पाँच मुख भएका, हिउँजस्तो (सेतो) वर्ण भएका, तीन आँखा भएका, चार हात भएका, दुई हात जोडेका र दुई हातमा डमरु र त्रिशूल लिएका, दुई घुँडाले भुइँ टेकेका तथा शोकाकुल (संसारपीडाले दुःखित) छन् ॥३॥

यिनको पछाडितिर इन्द्र छन् । यिनी एक मुख भएका, कुङ्कुमको जस्तो वर्ण भएका, मुकुट धारण गर्ने, दुई हात भएका, हात जोडेका, दुई घुँडाले भुइँ टेकेका र शोक-(संसार-पीडा)-ले आकुल छन् ॥४॥

यसमुनि यमराज छन् । यिनी एकमुख भएका कालो रङ्गका, मुकुट धारण गर्ने, दुई हात भएका, दाहिने हातले अभयमुद्रा (नडराऊ भन्ने हस्तमुद्रा) र बायाँ हातले कमण्डलु लिएका, दुई घुँडाले भुइँ टेकेका र शोकाकुल छन् ॥५॥

त्यसभन्दा मुनि वरुण छन् । यिनी एक मुख भएका, फणा भएका, मुकुट धारण गर्ने, सेतो रङ्ग भएका, दुई हात भएका—

कृतांज(ताञ्ज)लिमुद्रा(द्रः) जानुभ्यां भु. ॥६॥ अधो दक्षपार्श्वे अग्ने(ग्नेः) कुबेर-(रः) पीतवर्णः एकमुखः कृतांज(ताञ्ज)लि(लिः) उत्कुटुकासनः ॥७॥ मध्यवामपार्श्वे. अग्नि(ग्निः) एकमुखः रक्तवर्णः द्विभुजः मुकुटी कृतांज(ताञ्ज)लि-मुद्रा(द्रः) जानुभ्यां भु. (भुवि शोकाकुलः) ॥८॥ मध्यबक्षदाष्ठे(पार्श्वे) नैऋत्य (नैऋत्यः) एकमुख(खः) भयंक(यङ्क)रमुद्रा(द्रः) कर्वु(र्पू)रवर्ण(र्णः) मुकुटी द्विभुज(जः) जानुभ्यां. ॥९॥ तदग्रे वायु(युः) एकमुख(खः) गगनवर्ण(र्णः) मुकुटी द्विभुज(जः) उत्कुटुकासनः जानु. ॥१०॥ ... धः (दक्षाधः) पृष्ठे किन्नर एकतुरगमुखः श्वेतवर्णः द्विभुज(जः) कृतांज(ताञ्ज)लि(लिः) तुरगकेश(शः) स. जानुभ्यां. ॥११॥ अधोवामपृष्ठे गंध(गन्ध)र्वः सर्वार्थसिद्धनामा एकवक्त्र(क्त्रः) कुंकु(कुङ्कु)-मवर्ण(र्णः) द्विभुज(जः) लास्यमुद्रा(द्रः) जानुभ्यां भु. ॥१२॥ एते सगणा निर्वृति दृष्ट्वा शोकाकुलाः सांज(साञ्ज)लयः ॥१३॥ ॥ श्रीगुरुभ्यो नमः ॥ ॥ क्रियासमुच्चलिखितानि ॥ अष्टश्मशाना(नाः) ॥ चंडो(चण्डो)ग्रं भयं भीकरं सुरपतिदिग्देशपृष्ठस्थितो. वज्रं तर्जनिकी ददर्श सततं पीतस्ततो वासुकि(किः) ॥ शु—

दुई हात जोडेका र दुई घुँडाले भुइँ टेकेका तथा शोकाकुल छन् ॥६॥

मुनि अग्निको दाहिने बगलमा कुबेर छन् । यिनी पहेंलो वर्ण भएका, एकमुख र हात जोडेका, अनि उत्कुटुक (माथि हेर्ने किसिमले बस्ने गरी मिलाइएको) आसनमा छन् ॥७॥

बीचको बायाँ भागमा अग्नि छन् । यिनी एक मुख र रातो वर्ण भएका, दुई हात भएका र मुकुट धारण गर्ने, हात जोडेका, दुई घुँडाले भुइँ टेकेका र शोकाकुल छन् ।।८।।

बीचको दायाँ भागमा नैऋर्त्य छन् । यिनी एक मुख र भयङ्कर मुद्रा (आकृति, हस्तमुद्रा) धारण गरेका कपूरजस्तो सेतो वर्णका, मुकुट धारण गर्ने, दुई हात भएका, दुई घुँडाले भुइँ टेकेका र शोकाकुल छन् ।।९।।

यिनको अगाडि वायु छन् । यिनी एक मुख भएका, आकाशजस्तो नीलो वर्ण भएका मुकुट धारण गर्ने, दुई हात भएका र उत्कुटुक आसनमा बसेका तथा दुई घुँडाले भुइँ टेकेका र शोकाकुल छन् ।।१०।।

दाहिनेतर्फ मुनि पछिल्लो भागमा किन्नर छन् । यिनी घोडाको जस्तो एउटा मुख भएका, सेतो वर्णका, दुई हात भएका, हात जोडेका, अनि घोडाको यालजस्तै रौं भएका तथा दुई घुँडाले भुइँ टेकेका र शोकाकुल छन् ।।११।।

तल बायाँपट्टि बगलमा गन्धर्व छन् । यिनी सर्वार्थसिद्ध नाम गरेका, एक मुख भएका, कुङ्कुमको जस्तो (केही पहेंलो खालको) रङ्ग भएका, दुई हात भएका, लास्य-(नृत्य)-को मुद्रा गरेका, घुँडा टेकेका र शोकाकुल छन् ।।१२।।

यी गणले सहित भएका सबै (भिक्षु वा साधक) निर्वृति-(निर्वाण, मुक्ति)-लाई देखेर (सम्झेर) अञ्जलि बाँधेका (हात जोडेका) देखिन्छन् ।।१३।।

गुरुहरूलाई नमस्कार । सबै क्रिया-(काम)-बारे लेखियो अब आठ मसानबारे चर्चा गरिन्छ । [ती आठ मसान हुन्– चण्डोग्र, भीम, कर्कोटक, करङ्क, महापद्मक, नैऋर्त, महाकर्बुर, चण्ड] ।

चण्डोग्र-(चण्डोग्रनाथ)-नामका मसान भयस्वरूप छन् । इन्द्रका आठ दिशामा रहेका छन् । वज्रधारण गरेका र पहेंला वासुकि-(नाग)-तुल्य छन् ।

धर्म :
॥२१॥

ध्रः सप्तफणो जलधरश्चण्डोग्रनाथा(थो) महान् ॥ शुक्रो रौद्रग्रहर्द्धिको गजमुखः प्राच्यां शिरीखा(षा)श्रितः ॥१॥ यक्षेशो निधिसंस्थितोप्यभयदः पीतांग(ताङ्ग)-दासंयुतो रक्तस्तक्षक उत्तरे घुड् ङि (धृतवर्तीं ?) चक्रे तथा घूर्णितः ॥ श्रीबोधिद्रु मदंभ(दम्भ)को नरमुखः शीतस्त्वसौ गह्वरे ॥ नित्यं बद्धयितासुगह्वरमहो भीमं श्मशानं महत् ॥२॥ शुक्रो जिह्मगवाहना(नो) भयकरः सर्पोरुपाशान्वितो वर्द्धिष्णुर्वरुणस्तथा फणिपति(तिः) श्यामो हि कर्कोटकः ॥ घोरो गर्जति वारिदः समुदितो ज्वालाकुलं पश्चिमे साशोके मकराननोपि सुतरां रक्ताकृतिर्मा(भा)सुरः ॥३॥ याभ्यां(म्यां) कृस्न(ष्ण)यमो विधृत्य कठिनं दंडं(दण्डं) च पाशं सदा आरूढो महिषस्ततोतिधवलपद्मो द्विजिह्वाधिपः ॥ कर्ता संक्र(सङ्क्र)मवर्त्त कः प्रतिदिनं चूडे करंको(रङ्को) महान् ॥ कालः क्रूरलुलादवांत(वान्त)रदनो रक्ष(क्षः) करङ्कं तथा ॥४॥ आग्नेय्यां दहनः कमंड(मण्ड)लुधरो मंत्र(मन्त्रा)क्षमालान्वितो रक्तछा(च्छा)गरमो मृणालधवलो नामो(मा) महापद्मकः ॥ घोरो वारिधरस्ततोज (स्ततोप्यज) मुखो हासाट्टहासो महान् ॥ रक्तो–

राम :
॥२१॥

उनै चण्डोग्रनाथ सेता, सात फणा भएका र जलमा रहने (वासुकि नागजस्तै प्रकृतिका) देखिन्छन्। यिनैको पूर्वपट्टि रौद्र (भयानक) ग्रहका रूपमा, शिरीष नाउँको रूखमा रहेका, हात्तीको मुख भएका शुक्र रहेका छन् ॥१॥

भीम नाम गरेका मसानको उत्तरमा राता तक्षक (नाग) छन्। अभयदान गर्ने, निधि-(सम्पत्ति)-ले युक्त, पीत वर्णका र गदाधारी यक्षका मालिक (कुबेर) पनि यहीं रहेका छन्। बोधि-(वर)-को रूखसँग सम्बद्ध, मानिसको जस्तो मुख भएका, ज्यादै शीतल (ठन्डा) र गुफामा रहेका उक्त तक्षक (नाग) चक्रजस्तै गुडुल्किएर रहेका छन् ॥२॥

श्याम-(कालो)-वर्णको कर्कोटक नाम गरेको मसान पनि त्यत्तिकै भयावह छ । नजीकै सेता, सर्पको वाहन भएका, अभयदान गर्ने, सर्पकै ठूलो पासो (जाल) लिएका वरुण रहेका छन् । सर्पका मालिक श्याम वर्णका कर्कोटक-(मसान)-ले बादल जस्तै भयङ्कर गर्जना गरेका हुन्छन् । साथै कर्कोटक रातो आकार भएका र चम्किला तथा गोहीको जस्तो मुख भएका पनि छन् ।।३।।

दक्षिण दिशामा कालो वर्णका यम (यमराज) छन्, जो कडा दण्ड र पाश (पासो, डोरी) लिएका छन् र राँगोमा चढेका छन् । यस्तै साथमा ज्यादै सेता र सर्पका मालिक पद्म (अष्टनागमध्ये एक) पनि छन् । त्यस्तै करङ्कनामक मसान कर्ताको रूपमा रहेका, प्रतिदिन सङ्क्रमण (परिवर्तन) गराउने, क्रूर, छिद्रा र हल्लिएका दाँत भएका छन् ।।४।।

आग्नेय दिशामा दहन (अग्नि) छन् । जुन अग्नि कमण्डलु धारण गरेका र मन्त्र जप्ने रुद्राक्षमाला धारण गरेका छन् । रातो भेंडा मन पराउने, कमलतन्तु जस्तै सेता महापद्म नाम गरेका मसान पनि रहेका छन्, जुन भयङ्कर पनि छन् । डरलाग्दा बादल जुन बोकाको जस्तो मुख भएका र अट्टहास गर्ने खालका छन् । राता र

**भाति करंज(रञ्ज)शाखिनिवसन्नट्टाट्टहासः पृथुः ।।५।। कृष्णो मस्तकतर्जनीधर इति स्थास्नुः स वै नैर्ऋतः सांद्रं(सान्द्रं) सिंच(सिञ्च)ति पूरणो विषधरोनंतो(नन्तो)पि नीलाकृतिः पर्व्व···(पर्वांश)मथ सेवको हुलुहुलु(लू) भल्लूकवक्त्रो महान्. संवद्धे निऋ(ऋ)तौ भृशं किलिकिलि ध्वानं श्मशानं सदा ।।६।। वातो वाति सुवातकर्पटधरः शुभ्रः कुरंगा(रङ्गा)सनो वायव्यां कुलिको महोरगपतिः क्रूरो महाकर्बुरः ।। क्रूरो नित्यमवर्तकोथ हरितो घोरोरगस्थो महान्. भीते भीतिकरो महार्जुनद्रुमगतो घोरांध-(रान्ध)कारं च सत् ।।७।। ईजे धूसर ईश्वरो वृषगतः शूलं कपालं वहन् गौर्यागाढ-धनुर्महामणिधरः श्रीशंख(शङ्ख)पालस्ततः ।। शम्भुर्व्यक्तमहर्द्धिको वृषमुखः शुभ्रोऽ-वटोवस्थितः चंडश्चंड(चण्डश्चण्ड)घनस्तनोति सलिलैर्लक्ष्मीव न(नं)यन्मतं(तः) ।।८।। एतेष्वष्टसु···(विद्यमान)वपुषो रौद्रश्मशानेष्वमी नागाः सप्तफणांकि-(णाङ्कि)ता नरमुखा सर्वेपि विग्ना(विङ्ना)यकाः ।। वृक्षाः पुष्पफलान्विता बलधरा नानाभिवर्णो ज्व(ज्ज्व)लास्तद्वृक्षेषु महर्द्धि--**

करञ्जनामक रूखमा बसेका उक्त मसान महान् छन् ।।५।।

नैर्ऋत नाम गरेका मसान कालो वर्णका, मुण्ड (मानवशिर) र औंला (हात) धारण गरेका, साथमा विषधारी तथा नीलवर्ण अनन्त (आठ नागमध्ये एक) रहेका, पाकेको वस्तु सेवन गर्ने, हुलुहुलु आवाज गर्ने, भालुको जस्तो मुख भएका छन् । साथै किलकिल गरेको श्मशानध्वनि (मसानको आवाज) पनि निस्कन्छ ।।६।।

सुवात-(राम्रो हावा)-रूप कपडा लगाएका हावा बहेको छ। वायव्यतर्फ सेतो वर्ण भएका, मृगचर्म-(मृगको छाला)-मा बसेका ठूला सर्पका मालिक कुलिक (अष्ट नागमध्ये एक) रहेका छन्। नजीकै क्रूर महाकर्बुर (करवीर ?) नामक मसान रहेका छन् जुन हरिया, डरलाग्दा र ठूलो सर्पमाथि बसेका छन्। यिनै मसान डराउनेलाई भय (डर) दिने, अर्जुन-नामक रूखमा रहेका र घोर अन्धकार भएका पनि छन्॥७॥

फुस्रो वर्ण भएका, साँढेमा चढेका, त्रिशूल र खप्पर धारण गर्ने शिवजीको प्रार्थना गर्दछु। जुन शिव पार्वतीले अँगालो हालिएका, महान् मणि लिएका र शङ्खको (अथवा अष्ट नाममध्ये एक शङ्ख नागको) माला लगाएका अथवा रक्षा गर्ने रूपमा छन्। ऐश्वर्य स्पष्ट भएका, सेता वरको रूखमा रहेका कडा आवाज गर्ने पानी बर्साएर लक्ष्मी (ऐश्वर्य) फैलाउने चण्डनामक मसान (?) पनि छन्॥८॥

यी आठ डरलाग्दा मसानमा आफ्नो शरीर राखेका, सातसात फणा भएका नागहरू (अष्ट नागहरू) मानिसको जस्तो मुख भएका र आठ दिशाका मालिक पनि हुन्। नजीकै फूल र फलले युक्त भएका बलिया, नाना वर्णका रूखहरू छन्। ती रूखमा–

धर्म :
॥२२॥

का(काः) किलिकिलिं चक्रुस्तथा कौशिकाः ॥६॥ ॥ श्मशानमंड(मण्ड)लमाह ॥
दग्धादग्धविखंडि(खण्डि)तादिमृतका शूले भृतो(ता) वल्लिताः खाद्यंते(द्यन्ते)
बलगृद्धघर्घररवैर्मं त्रै(मन्त्रै): स्फुरद्भैरवैः ॥ अंत्राछो(अन्त्राच्छो)टनमर्दनो
त्यजति तैर्गृद्धैः सकाकैः क्वचित् पच्यंते(च्यन्ते) वरयोगिनीभिरनिशं छित्वा चितासु
स्वयं ॥१॥ प्रेतैर्लूनशिरः स्रवद्रुधिरगैर्मुण्डं ग्रहद्राक्षसैरन्योन्यं क्वचिदष्ट (क्वचि-
दष्टकेषु) लगुडप्रायायुधैर्युध्यते कुर्वद्भिः करजालकाध्वनि महोल्काशैमु(र्मु)खै
रुद्धयतेर्वेताडः कटपूतनैः परिवृतो नृत्यन् क्वचिद् दृश्यत(ते) ॥२॥ छित्वैतन्निजमस्तकं
पिवति च स्कन्धोछ(च्छ)लछो(च्छो)णितं क्वापि क्रीडति क्वाप्यहासरभसं निर्भाति
कायं ···· (क्वचित्) क्वाप्याकृष्यति चाटुकानि कुरुते हुंका(हुङ्का)र फूत्कारिणी, क्वापि
क्रामति योगिनी (व)रशिरोमालास्थिखट्वांगि(ट्वाङ्गि)नी ॥३॥ श्मशानवासिनां
सिद्धयोगिनीश्वराणा(णां) समयाभिनयकतिपयमाह ॥ ॥ ल (व) यीपादोतिलूनी-
शवर इह सदा कांड(काण्ड)कोदण्डहस्तः सुत्वा भुक्तै(क्त्वै)व कामान् परम–

राम :
॥२२॥

शक्तिशाली कौशिक-(नागहरू)-ले किलिकिलि आवाज गरिरहेका हुन्छन् ॥६॥

अब मसानको मण्डल-(समूह)-बारे चर्चा गरिन्छ ।

मसानमा कस्तो दृश्य देखिन्छ भने मृतक-(मुर्दा, शव)-हरू कोही डढेका, कोही नडढेका र कोही विखण्डित (टुक्रा-टुक्रा) भएका छन् । कतिपय मुर्दा शूल-(सुइरो)-मा गाडिएका र लहराजस्तै झुन्डिएका पनि छन् । साथै भैरव (आसुरी माया ?) जगाउने मन्त्रजस्तै घर्घर आवाज गर्ने काग र गिद्धले मुर्दाको मासु लुछेका छन् । कहीं आन्द्रा काग-गिद्धले छ्यालब्याल पारेर छाडेका छन् । कहीं योगिनीहरूले चिताको आगोमा मुर्दाको मासु पकाएका छन् ॥१॥ कहीं प्रेत, राक्षसहरू काटिएका हुनाले रगत चुहिएका टाउकाहरू र लट्ठी आदि हतियारद्वारा युद्ध गरिरहेका छन् । नङग्राबाट निस्केका ध्वनि-(आवाज)-ले पनि

डरलाग्दा भएका उक्त राक्षसहरूले विघ्नबाधा तेर्स्याएका छन् । कतैकहीं भने कट, पूतन आदिले घेरिएको वेताड (वेताल प्रेत) नाचिरहेको दृश्य देखिन्छ ॥२॥

वेतालले कहिलेकाहीं आफ्नै मस्तक (शिर) काटेर (छिनेर) काँधबाट सिर्का परी झरेको रगत स्वयं खाइरहेको छ। कहीं उक्त वेताल प्रेत गम्भीर भएर क्रीडा (खेल) गरेको भान हुन्छ। कतै चाटुक (हाँस-ठट्टा) गरेर आफूतिर तानेको छ। यसै गरी योगिनीले पनि मुण्डमाला (टाउकाको माला) गलामा लगाएकी र हातमा खप्पर लिएकी छन्, जो हुङ्कार र फुँफुँ आवाज गरिरहेकी हुन्छिन्।

मसानमा रहने सिद्धा योगिनी र ईश्वर-(भैरव)-हरूको समयअनुसार गरिने अभिनय (कार्य) बताइन्छ। तीन पाउ भएका अति दुब्ला शवर (भिल्ल वा शिव) जस्तै काण्ड (धनुर्वाण) र दण्ड लिएका, सुतिरहने, कामभोग गर्ने,

**सुखरसैः सा(शा)स्ति देवोपि सिद्धः ॥ वीणापादस्तु वीणां ध्वनति सकरुणं शब्दप्रायोदते च व्रीहीन् व्याहंति(हन्ति) टंको (टङ्कः) सहजशुचिमनःकर्णया वासनायाः ॥१॥ आस्ते कुद्दालसारीत्रिभवविषमती(ता)तुल्यतां संद(सन्द)धानः ॥ पि(पी)त्वा मद्यं विरूपस्तपनमपि ददौ बंध(बन्ध)तां गुडि(ण्डि)नीषु व्याघ्रारूढस्तु द्रोभी (दोर्भिः) स्वकुलवनितया सार्द्ध माश्लेषयुक्तः चिंत्याचिंत्य(चिन्त्याचिन्त्य)-प्रहीना (नो) वपुषि वितनुते कंब(कम्ब)लं कंब(कम्ब)ली चं (च) ॥२॥ मुत्का-(क्ता)मुक्तस्तु कामान(न्) युवतिसरभि(भ)सो मोदते दारिको यो गंडू(गण्डू)रीं चापि कद्यो(स्यो)द्गिलति समसितां वायुमुद्धारिकोयं राज्यं ध्यातींद्र(तीन्द्र)भूति परमसुखमयं व्योमसिंहासनस्थः खं गत्वा खड्गसिद्धया मम कृतियतिने(नं)तान्तु दामप्रभा कृत् ॥३॥ स्वसार्द्ध कुक्कुरीभिः शिशुरिव रमते कुक्कुरीपाद एषः मुद्राबंधे-(बन्धे)न कृश्मी(ष्णी)डमरुकलरवैर्मोदते चांत(चान्त)रिक्षं कः केनार्थाति यस्य भ्रमति करुणया सर्वतोथो धने(नै)र्यः ॥ सोष्टैश्वर्यादिदानैर्जगदुपकृतवानार्यनागार्जु-नीयं.(यम्) ॥४॥ स प्राज्ञा (ज्ञः) शवविष्टरेषु घटितप्रेमोपविष्टः**

यस्ता सिद्धले अत्यन्त सुखसाथ शासन गरेका छन्। यसै गरी वीणापाद (वीणाजस्तै पाउ भएका) सिद्धले वीणा बजाइरहेका छन्। टङ्क (बन्चरो वा यस्तै फलामे हतियार लिएका) सिद्धले करुण आवाज गर्दै धान (अन्न) कुटिरहेका छन् (सांसारिक कार्य गरेका हुन्)। यी सिद्धहरू वासना-(प्रपञ्च)-ले युक्त भए पनि मन र कान पवित्र छन् (राम्रै विचार गरौं र राम्रै सुनौं भन्ने भावना राख्छन्) ॥१॥ कोदालो लिएका, तीनै लोकमा स्थित विषमता-(फरक)-लाई सम्याउने भएका, मदिरा पिएका, विरूप (भद्दा आकार) भएका, पीर-बाधा दिन सक्ने, गुण्डिनी-(योगिनी ?)-हरूमा बन्धन (अधीनता) गराउने सिद्ध रहेका छन्।

बाघमाथि चढेका, आफ्नो कुलकी स्त्रीका साथ बाहुले (हातले) अँगालो मारेका, कम्बल ओढेका सिद्ध पनि रहेका छन् ।।२।। जुन सिद्ध मुक्त पनि अमुक्त पनि छन्, युवतीहरूका साथ विहार गर्ने र सपत्नीक पनि छन् । जसले समान रूपले सेताम्य भएको गण्डुरी (?) श्रोकलिरहेका छन् । जो इन्द्रको ऐश्वर्यजस्तो परम सुख दिने राज्यको ध्यान-(कल्पना)-मा छन् र आकाशको सिंहासनमा बसेका छन् । खड्गसिद्धि (हतियारमा निपुण हुने सिद्धि) प्राप्त गरेका र प्रभा वा प्रकाश फैलाउने सिद्धले मेरो कृति वा रचनाको (बौद्ध विहारको पनि) रक्षा गरून् ।।३।। कुक्कुरीपाद (कुकुरको जस्तो पाउ भएका) यी सिद्ध बालकजस्तै कुकुर्नीहरूका साथ विहार गरेका हुन्छन् । कालो वर्ण भएका मुद्राबन्ध (विभिन्न मुद्रा वा रूपको धारण) गर्ने, डमरुको आवाज निकाल्ने र अन्तरिक्षमा विहार गर्ने यी सिद्ध ऐश्वर्यशाली र करुणायुक्त भएर भ्रमण गर्छन् । यिनी आर्य (श्रेष्ठ) र नागार्जुनीय (नागार्जुनमा रहने अथवा नाग र अर्जुनजस्तै शक्तिशाली) छन् ।।४।। यी सिद्ध प्राज्ञ (ज्ञानी) छन् । मुर्दाको आसनमा प्रेम-(श्रद्धा)-ले बसेका छन् ।

धर्म :

॥२३॥

क्वचित् जग्ध्वा शालिमिदं पिबंति(वन्ति) मदनं कुर्वंति सत्कुंडु(कुण्डु)रुं ॥ नाद्यं-(दं) वज्रपदैः शनैः सुललितं गायंति(यन्ति) तत्त्वान्वितं (तम्) एते चक्रसमावृता (ताः) सरससंनंदंति (?) योगेश्वराः ॥५॥ कक्कोलिप्रियबोलमेलकसुखानंदः (नन्दाः) स्फुरत्कुंडुरः (फुण्डुराः) सद्यः साधितशालिलासितकरा (राः) कालिंज-(लिन्ज)राश्चक्रिणः ॥ भास्वद्दिव्यसरोजपत्रवदना व्यालिप्तदंत(दन्त)छ(च्छ)दाः प्रेतावासनिवासबद्धरसिका(काः) केचित् क्वचित् द्यो(क्वचिद्यो)गिनः ॥६॥ आधायांभो(याम्भो)जपात्रे मदनमथ महाशालिजव्यंज(व्यञ्ज)नानि श्रीमत्कालिंज-(लिञ्ज)राणां मलयजमपरित्यक्तसङ्डुडि(ड्डिण्डि)भानां कैश्चित्कार्पोटवाद्यागतिरस-बलितैं(तैः)श्रीयवक्ष्य(क्षः)स्थलस्थैः स्वछ(च्छ)न्दं कुंडु(कुण्डु)रुश्रीपरिचयतृषितैर्गीयते पीयते च ॥७॥ अग्राह्यं प्रतिभातिदर्पणगतं विश्वं सदा यादृशं तादृग्मंड(दृङ्मण्ड)ल-चक्रमद्वयतया त्यक्तत्रिकोटि(टिः) स्वयं(यम्) ॥ तत्स्वम्बित्रिवधूत्थसंग(सङ्ग) मुदितः श्रीमान् सदा सेंद्रि(न्द्रि)यः शास्ताकाशसमो-(वि)यस्तसततं तस्मै नमः सर्वदा ॥८॥ तदनु मंड(मण्ड)लमध्ये नि-

राम :-

॥२३॥

चक्रले युक्त यी योगीश्वर-(सिद्ध)-हरू कहिले शालि (धान) खान्छन्, कामदेवलाई वशमा पारेका छन् र राम्रो आचरण (कुण्डुरु ?) गर्ने प्रकृतिका छन्। यिनीहरू वज्रपद-(वाद्ययन्त्र ?)-द्वारा राम्रो नाद (आवाज, सङ्गीत) गर्दछन्, सरस भएर विहार गर्छन् ॥५॥ कक्कोलिनामक सुगन्धी फल मन पराउने, सुखी र आनन्दी, कुण्डूर-(गहना ?)-ले शोभित, भर्खरै तैयार शालिधानको भोजन गर्ने, कालञ्जर-(धार्मिक भिक्षु वा साधुको सभा)-मा रहने, चक्र धारण गरेका, चम्किलो कमलपत्रजस्तो मुख भएका, तुष्ट दन्तच्छद (ओठ) भएका, प्रेतको स्थलमा बस्न रुचाउने केही योगी-(योगीश्वर, सिद्ध)-हरू रहेका छन् ॥६॥ कमलको भाँडोमा मदन-(कामदेव / रतिसौन्दर्य)-लाई र शालिधानबाट तयार व्यञ्जन (खाद्य वस्तु)

खाबेर [अर्थात् कमलमा बस्ने, कामदेवजस्तै सुन्दर र शालिधान्य भोजन गर्ने], कालञ्जर-(धर्मसभा अथवा कालञ्जरनामक पहाड)-मा रहने, मलयनामक पर्वतबाट आएको स्वच्छ हावा सेवन गर्ने, कार्पिट-(वाद्ययन्त्र ?)-को सङ्गीतमा रसिक भएका, ऐश्वर्यमय स्थलमा रहने, कुण्डुरु(?)को ऐश्वर्य पहिचान गर्न चाहने केही (योगीश्वर वा सिद्धहरू) गाउँछन् र पिउँछन् पनि [ऐशआराम गर्छन्] ॥७॥ आकाशतुल्य त्यस खालका शासक-(ईश्वर, बुद्ध)-लाई सधैं नमस्कार छ, जुन शासक-(ईश्वर)-ले वर्तमान संसारलाई बनाएको प्रतिमा (ग्लोब वा मूर्ति) अथवा ऐनामा देखिएको रूपजस्तै झूटो सम्झेर अग्राह्य (ग्रहण गर्न नहुने, फँस्न नहुने) सम्झेका छन्, यो मण्डलचक्र (जीवनचक्र) पनि यस्तै अनित्य सम्झेका छन्, साथै जुन शासक अद्वय (अद्वैत, जन्म-मृत्यु आदि द्वैतले शून्य) छन्, साथै सांसारिक व्यवहार चलाउन विभिन्न रूपमा अवतार लिएर ऐश्वर्यशाली, इन्द्रियको वश पर्ने र वधू-(नारी)-को सङ्गतले आनन्दित हुने पनि देखिन्छन् । यस्ता शास्ता-(ईश्वर)-लाई नमस्कार ॥८॥ त्यसपछि मण्डलको बीचमा

**षद्य सुकुमारोच्चासनं हुंका(हुङ्का)रोद्गारपूर्वकं दशासनानि बंध(बन्ध)येत् ॥ ॥ स्वायंभु(स्वायम्भुव)पुराणलिखितानि श्मशानदिक्पालसिद्धप्रेतपशुपक्षिवृक्षचैत्यलिंगा-(लिङ्गा)दीनां (नाम्) अष्टसंख्या(सङ्ख्य)कानि नामानि ॥ ॥ चंडो(चण्डो)ग्रं गह्वरं चैव ज्वालां कुरं कलं ककं ॥ अट्टहासं लक्ष्मीवंतं(वन्तं) घोरांधं(रान्धं) कृकलासकं ॥ एतान्यष्टश्मशानानि पूरितानि करोटकैः ॥ यत्राष्टौ सिद्धयः प्राप्ता-(प्ताः) सिद्धैर्योगविचक्षणैः ॥ इंद्रा(इन्द्रा)दयः ककुप्यालाः पूजनीया विधानतः ॥ स्वस्वदिक्षु समासीना वाहनायुधसंयुताः ॥ इंद्र(इन्द्र) ऐरावतासीना(नः) कुंकु-(कुङ्कु)मास्योतिसुंद(सुन्द)रः ॥ वज्रहस्तो महाधीरः सर्वालंका(लङ्का)रभूषणः ॥ वैवस्वतो लुलापस्थो दंड(दण्ड)हस्तो भयानकः ॥ पापिनां धर्मिणां शास्ता सजलं जलदानतः ॥ प्रचेता मकरासीनः कुमुदवर्णसुंद(सुन्द)रः ॥ अमोघपाशभृत्सर्पफणा-माणिविभूषितः ॥ मनुष्यधर्मा: (र्मो) मनुजासीनो नकुलदंड(दण्ड)कौ ॥ विभ्राणः करपद्माभ्यां शातकुंभ(कुम्भ)समद्युतिः ॥ वैश्वानलो महादीप्त(प्तः) सप्ताश्वरथवा-**

सुकोमल (नरम) उच्च आसनमा हूँकार-(आफ्नो उच्चमानप्रतिष्ठा)-सहित बसेर दश आसन-(उक्त मसान आसन)-हरूलाई [मन्त्रद्वारा] बन्धन (वशीभूत) गराओस् ॥

स्वायम्भूव पुराणमा लेखिएका मसान, दिक्पाल, सिद्ध, प्रेत, पशु, पक्षी, वृक्ष, चैत्य, लिङ्ग आदि आठ ठाउँ छन् ।

आठ मसानका नाउँ हुन्– चण्डोग्रगह्वर, ज्वाला, कुर (क्रूर), कल, कक, अट्टहास, लक्ष्मीवान्, घोरान्ध र कृकलासक । यी आठ मसानहरू खोपडीले पुरिएका छन् । जहाँ योगमा

दक्ष भएका सिद्धहरूले (अणिमा आदि आठ सिद्धिहरू) प्राप्त गरेका हुन्। ककुप्पाल (दिक्पाल, पूर्व आदि दिशाको पालना गर्ने) इन्द्र आदि देवताको विधानले पूजा गर्नुपर्दछ, जुन इन्द्र आदि दश दिक्पालहरू वाहन र हतियार लिएका आ-आफ्ना दिशामा (पूर्व दिशामा इन्द्र, दक्षिण दिशामा यम आदि) बसेका छन्। इन्द्र ऐरावत हात्तीमा चढेका, कुङ्कुमको जस्तो मुख भएका, ज्यादै सुन्दर, हातमा वज्र लिएका, धैर्यशाली र सबै गहनाले सिंगारिएका छन्। [अर्को दिक्पाल] यमराज राँगोमाथि बसेका, हातमा लट्ठी लिएका, डरलाग्दा, पापी र धर्मात्मा सबैमाथि शासन गर्ने खालका छन्। जसको सन्तुष्टिको लागि जल-(पानीयुक्त पात्र)-को दान गरिन्छ। [अर्को दिक्पाल] वरुण (प्रचेता) गोहीमा बसेका छन् र चन्द्रकमलजस्तै सुन्दर छन्, व्यर्थ नहुने पाशो (डोरी) लिएका छन्, सर्पको फणामा रहेको मणिले सिंगारिएका छन्। यी वरुण मानिसको प्रकृति (स्वभाव) भएका छन्, मानिसमै आश्रित तथा हातले नकुल (न्याउरी मूसो) र दण्ड (लट्ठी) धारण गरेका तथा सुनको जस्तो चमक भएका छन्। अर्को दिक्पाल अग्नि (वैश्वानर) ज्यादै तेजिला, सातघोडे बग्गीमा बसेका,

हनः ॥ बिभ्राणो वह्निज्वालां तां सप्तजिह्वस्त्रिलोचनः ॥ नैरृतदेवता भीममुखो गदाधरो बली ॥ प्रेतासनसमासीनो दंष्ट्रोत्कटोर्ध्वकंरुहः ॥ कुरंग(रङ्ग)रथमारूढो वज्रहस्तोतिवेगवान् ॥ धूमवर्णो लोकजीवः पूज्योसौ वायुदेवता ॥ वृषरथसमासीनः शूलहस्तो दिगंव(गम्ब)र(रः) त्रिनेत्रो भूतिलिप्तांग(प्ताङ्ग) ईश ईशानदिक्पतिः ॥ वृक्षाः संभा(सम्भा)वनीयाश्च श्म(श्मशा)नाष्टकसंभ(सम्भ)वाः ॥ नागकेशरवृक्षश्च पुन्नागश्च करंज(रञ्ज)कः ॥ पर्कटीवृक्ष आम्रश्च अश्वत्थोडुंव(डुम्ब)रो वटः ॥ पूजनीयास्तथा चाष्टौ नागाधिपतयस्तथा ॥ महापद्मः पीतवर्णो हेमाभः शङ्खपालकः ॥ पद्मश्च सौधधवलो नीलांगो(लाङ्गो)नंत(नन्त)नागराट् ॥ कुलिको नीलवदनः कर्कोट(टकः) विरूपकः ॥ गौरवर्णो वासुकिश्च तक्षको लोहिताननः ॥ सर्वे सांज-(साञ्ज)लयः शंख(शङ्ख)धरा(राः) सप्तक(फ)णोज्व(ज्ज्व)लाः पूज्या दध्यादिकैरेव न तु पंचा(पञ्चा)मिषैः क्वचित् ॥ अष्टौ सिद्धास्ततः पूज्यास्तेषां नामानि संशृणु ॥ कक्षपपादसंज्ञश्च शवरपादनामक(कः) विरूपाक्षपा–

सात जिभ्रो भएका, अग्निज्वाला धारण गरेका र तीन आँखा भएका छन्। नैरृत देवता (निरृतिनामक दिक्पाल) डरलाग्दो मुख भएका, गदाधारण गर्ने बलिया, प्रेतको आसनमा बसेका, विकट दाह्रा र ठाडा केश (रौं) भएका छन्। हरिण-(मृग)-को रथमा चढेका, हातमा वज्र लिएका, ठूलो वेग भएका, ध्वाँसो रङ्गका तथा संसारलाई जीवन (प्राण) दिने यी वायु देवता (दिक्पाल) पूज्य छन्। साँढेको रथमा चढेका, हातमा त्रिशूल लिने, दिगम्बर (पूर्व आदि दिशा नै अम्बर अर्थात् वस्त्र भएका भन्नाले नाङ्गै रहने), तीन आँखा भएका, अङ्गहरूमा भस्म (खरानी) घसेका, ईशान दिशाका मालिक ईशनामक देवता (दिक्पाल) रहेका छन्।

आठ मसानमा रहेका आठ वृक्ष-(रूख)-हरू पनि उल्लेखनीय छन् । ती हुन्– नागकेशर, पुन्नाग, करञ्जक, पाखरी, आँप, पिप्पल, डुम्री र बर । आठ नागाधिपति (नागका मालिक)-हरू पनि पूजनीय छन् । ती हुन्– पहेँलो वर्णका महापद्म, सुनौलो रङ्गका शङ्ख, सेतो वर्णका पद्म, नीलो वर्णका अनन्त, नीलो मुख भएका कुलिक-(कुलीर), भद्दा रूप भएका कर्कोटक, सेतो वर्णका वासुकि र रातो मुख भएका तक्षक । यी सबै नाग-(नागराज)-हरू हात जोडेका, शङ्ख धारण गर्ने, सात फणाले उज्ज्वल भएका तथा दही आदिले पूजा गर्न योग्य नागहरू हुन् । यिनलाई पाँच प्रकारका आमिष-(मासु, अपवित्र वस्तु)-ले पूजा गर्नु हुँदैन ।

यसै गरी आठ सिद्ध पनि पूज्य छन् । ती आठ सिद्ध हुन्– कक्षपपाद, शबरपाद, विरूपाक्षपाद,

**दनामा नागरीपार(द)संज्ञकः ।। कुक्कुरीपादनामा च जालंध(लन्ध)रपादसंज्ञकः ।। चर्पतिपादनामा च गोरक्षपादसंज्ञकः ।। तरक्षुस्थाः कदाचित्ते भषकस्था अहिस्थिताः ।। चुंबतः सर्ववरतं(वदनं)सर्वालंका(लङ्का)रभीषणाः ।। कबंधा(बन्धा)श्च पिशाचाश्च पूज्यास्तत्परिचारकाः ।। गृध्रचिल्लोलककाकाः शृगाला भषकास्तथा ।। मासान् वारान् प्रवक्ष्यामि येषु तासां समर्चनं(नम्) ।। नभस्ये मासि च इषे सर्वासामर्चनं शनौ ।। आश्विनो मार्गशीर्षश्च तैषस्तपाश्च फाल्गुणः(नः) ।। मधुश्च माधवश्चैव शुल्क(क्लः) कृष्णः सुशोभनः ।। सर्वासां पूजनं श्रेष्ठं दर्शः कृष्णचतुर्दशी ।। विशेषतो रात्रिकृष्णपूजिता तूर्णसिद्धिदा ।। प्रतिपदा द्वितीया च तृतीया च चतुर्थिका ।। पञ्चमी चापि षष्ठी च सप्तमी चाष्टमी तिथिः ।। आदित्यश्च शशांक(शाङ्क)श्च कुजः सोमसुतो गुरुः ।। कविः शनैश्चर इति सर्ववारः प्रकीर्तितः ।। ।। अष्टचैत्यं पूजनीयं पंचो(पञ्चो)पचारकैः शुभैः ।। कायवज्राभिधं चैत्यं धर्मधातुमयं परं(रम्) ।। वाक्(ग्)–**

नागरीपाद, कुक्कुरीपाद, जालन्धरपाद, चर्पटीपाद र गोरक्षपाद । यी सिद्धहरू कहिले तरक्ष-(ब्वाँसो)-मा बसेका, कहिले कुक्कुर बाहन भएका र कहिले सर्पमाथि बसेका छन् । सबै गहनाले सिँगारिएका र सर्पको मुख चुम्बन गर्ने (यी सिद्धहरू पूज्य छन्) । यिनका सेवकहरू पनि पूजायोग्य छन् । ती सेवक हुन्– कबन्ध (शिरोविहीन धड मात्र भएको प्राणी अथवा राक्षसविशेष), पिशाच, गिद्ध, चील, लाटोकोसेरो, काग, स्याल र कुक्कुर ।

जुन समयमा तिनको पूजा गरिन्छ ती महीना र वार भन्दछु। भदौ तथा असोज महीनामा शनिवार पारेर यिनको पूजा गर्नुपर्दछ। यसै गरी आश्विन, मङ्सीर, पुस, माघ, फागुन, चैत र वैशाख महीनाका शुक्ल र कृष्ण पक्ष पनि [पूजा गर्न योग्य समय हुन्]। औंसी र कृष्णपक्षको चतुर्दशी तिथिमा सबैको पूजा गर्नु राम्रो हुन्छ। विशेष गरी कृष्णपक्षमा राति पूजा गर्दा छिटो सिद्धि दिने मानिन्छ।

पाँच उपचार-(सामग्री)-ले आठ चैत्यको पूजाको लागि लिइएका तिथि हुन्— प्रतिपदा, द्वितीया, तृतीया, चतुर्थी, पञ्चमी, षष्ठी, सप्तमी र अष्टमी। वार जम्मा सात छन्— आइत, सोम, मङ्गल, बुध, बिही, शुक्र र शनि। धर्मधातुस्वरूप कायवज्रनामक चैत्य, अनि

।।२५।।

वज्राभिधं तथा ।। चित्तवज्राभिधं रत्नवज्रत्यै(चै)त्यं शांत(शान्त)वज्रकं संस्कारवज्रचैत्यं च विश्ववज्राख्यमेव च ।। रागवज्राभिधं चैत्यं धर्मधातुमयं परं(रम्) । अष्टलिंगं(लिङ्गं) तथा पूज्यं वीतरागस्वरूपकं पूजनीयाश्चाष्टमेधा अष्टदिक्षु व्यवस्थिताः ।। गर्जिताख्यो घूर्णिताख्यो वर्त्तिताख्यश्च वर्त्तकः। प्रचंड(चण्ड)-नामा(ना)द्यु(घु)नितो घनाघनश्च वर्षणः ।। नम उग्रतारायै ।। ।। चतुरं(र)-स्राकारे मध्ये उग्रतारा पार्श्वयोः, सिंहिनीव्याघ्रिणी उपरि आकाशे वैरोचनादयः पंच(पञ्च)बुद्धाः तेषा(षां) ध्यानं प्रसिद्धं तत्कोष्ठाद् बहिर्देशे पूर्वादिकोष्ठदिक्षु अष्टमूम(श्म)शानं तत्र पूर्वस्यां(पूर्वे) चंडा(चण्डो)ग्रश्मशानं. इन्द्रो दिक्पाल एक-मुख(मुखः) पीतवर्ण(र्णः) सर्वालंकार(लङ्कारः) चतुर्भुज(जः) द्वाभ्यां वज्रछत्रे, द्वाभ्यां(भ्याम्) अभयकलशे दधानः ऐरावतपद्मो(द्म)वज्रासनः मछरी(मत्स्य)पादः सिद्धः दण्डं वरदमुद्रां च दधानः मत्स्यासनः द्विभुजः दिगंव(गम्ब)रः गलमाली जटाजूटी, विभूतिलेपी कायवज्राख्यं चैत्यं शिवलिंगं(लिङ्गं) च छिन्नं कबंध(बन्ध)-शिरः पादखंडं(खण्डं) हस्तखं–

वाग्वज्र, चित्तवज्र, रत्नवज्र, शान्तवज्र, संस्कारवज्र, विश्ववज्र, रागवज्र नाम गरेका धर्मधातुस्वरूप चैत्य पनि पूजनीय छन्। वीतराग-(विषयवासनाहीन)-स्वरूप भएका आठ लिङ्ग र आठै दिशामा रहेका आठ मेधा-(बुद्धिदेवता)-को पनि पूजा गर्नुपर्दछ । ती आठ मेधा हुन्– गर्जित, घूर्णित, वर्तित, वर्तक, प्रचण्ड, नानाघुनित, घनाघन र वर्षण ।

उग्रतारालाई नमस्कार । चतुष्कोणको बीचमा उग्रतारा छन् । दुवै बगलमा सिंहिनी र व्याघ्रिणी, माथि आकाशमा वैरोचन आदि पञ्चबुद्ध छन् । पञ्चबुद्धको ध्यान प्रसिद्ध (पहिले नै चर्चित) छ । त्यस कोठाको बाहिर पूर्व आदि कोठाका दिशाहरूमा आठ मशान छन् ।

पूर्व दिशामा चण्डोग्रनामक मसान छन्। इन्द्र दिक्पालका रूपमा छन्। ती इन्द्र कस्ता छन् भने पहेंलो वर्णका, सबै गहनाले सिंगारिएका, चार हात भएका, दुई हातमा वज्र र छत्र (छाता), अनि दुई हातमा अभय मुद्रा र कलश लिएका, ऐरावत हात्तीमा चढेका तथा पद्म र वज्रको आसन गरेका (छन्)। साथै माछाको जस्तै पाउ भएका, दण्ड र वरदमुद्रा लिएका, माछाको आसनमा बसेका दुई हात भएका, नाङ्गै रहेका (दिगम्बर), गलामा माला भएका, जटाधारण गर्ने, खरानी घस्ने सिद्ध पनि छन्। कायवज्र चैत्य र शिवलिङ्ग पनि छन्। यसका अतिरिक्त कबन्धशिर (धड नै शिर) भएका, पादखण्ड (एक पाउ) र हस्तखण्ड (एक हात) भएका

डं(खण्डं) च विकीर्णं भृंग(भृङ्ग)पाद(दः) त्रिशूलहस्त(स्तः). पिशाच(चः) श्मशानाग्नि ज्वलयति व्याघ्रपशुः ।।१।। दक्षिणस्या(दक्षिणे) ग…(गह्वरं). यमः एकमुखः कृष्णव(वर्णः) चतुर्भुजः द्वाभ्यां खड्गपाशौ द्वाभ्यामभयकलशौ सर्वालंका-(लङ्का)रः महिषपद्मवज्रासन(नः) नागार्जुनपाद(दः) द्विभुज(जः) धर्मचक्रमुद्रा-(द्रो) नागासन(नः) नागफणालं(लङ्)कृत(तो) वाक्(ग्) वज्रं चैत्यं लिंगं(लिङ्गं) च छिन्नं. कबंध(बन्ध)शिरः पादखंड(खण्ड): जानुउरूखंडं(जानूरुखण्डं) च भृ(मृ)-तकवाहकपिशाचवराहपशुः ।।२।। पश्चिमायां(पश्चिमे) वरुणः एकमुख(खो). धवलवर्णच(र्णश्च)तुर्भुजो. द्वाभ्यां मालाधूपं द्वाभ्यां पुष्पकलशौ मकराननः ज्वालां-(लाङ)कुरश्मशानः चित्तवज्रचैत्यं लिंगंच(लिङ्गं च) छिन्नं कबंध(बन्ध)शिरः पादः जानुः उरूः कूर्मपादसिद्धः कूर्मासन(नः) पात्रं विंदु(विन्दु)मुद्रां. द्विशूलत्रि-शूलमृतपुरुषं दधानः पिशाचः सिंहपशुः ।।३।। उत्तर(उत्तरे) कलंक(लङ्क)भैरव-श्मशानः कुबेरो यक्षाधिपः एकमुखः स्वर्णवर्ण(र्णः) चतुर्भुज(जो). द्वाभ्यां चक्रगदे द्वाभ्यां नकुलनिधानौ सर्वालंकार(लङ्कारः) श्मश्रुल(लः) रत्नतौपि(षि)कः अश्वपद्मवज्रासनः श–

छिन्नभिन्न, भवँराको जस्तो पाउ भएका, हातमा त्रिशूल लिएका व्याघ्र पशु (बाघस्वरूप) पिशाचले मसानको अग्नि जलाउँछन् ॥१॥

दक्षिण दिशामा गह्वर-(गुफा, भयङ्कर)-स्वरूप यमराज दिक्पालका रूपमा छन्। यी यमराज एक मुख भएका, कालो वर्णका, चार हात भएका, दुई हातले खड्ग (तरबार) र पासो (डोरी), अनि दुई हातले अभयमुद्रा र कलश लिएका, सबै गहनाले सजिएका, राँगोमाथि बसेका र पद्म र वज्र आसन गरेका छन्। नागार्जुन (वृक्षविशेष) जस्तै पाउ भएका, दुई हात भएका चक्रमुद्रा लिएका, नागको आसन गरेका, नागको फणाले शोभित (सिद्ध वा

नागराज पनि छ)। वाग्वज्रनामक चैत्य र लिङ्ग (शिवलिङ्ग) पनि छन्। छिन्नभिन्न, कबन्धशिर भएका पादखण्ड, घुँडा र जाँघको एक भाग भएका, मृतक (मुर्दा) बोक्ने, वराह (बनेल) पशुतुल्य पिशाच छन् ।।२।।

पश्चिम दिशामा वरुण दिक्पाल छन्। यी वरुण एक मुख र सेतो वर्ण भएका, चार हात भएका, दुई हातले माला र धूप, अनि दुई हातले फूल र कलश लिएका गोहीको जस्तो मुख भएका छन्। त्यहाँ ज्वालाङ्कुरनामक मसान छन्। चित्तवज्र चैत्य र शिवलिङ्ग छन्। छिन्नभिन्न भएका, कबन्धशिर (धड नै शिर भएका) पाउ, घुँडा र जाँघ भएका, कछुवाको आसन गरेका कूर्मपाद नाउँ गरेका सिद्ध छन्। पात्र (भिक्षापात्र), बिन्दुमुद्रा, द्विशूल र त्रिशूल तथा मृत (मरेका) पुरुषलाई बोक्ने सिंहपशुजस्ता पिशाच पनि रहेका छन् ।।३।।

उत्तर दिशामा कलङ्क भैरबनामक मसान छन्। यक्षका मालिक कुबेर दिक्पाल छन्। यी कुबेर एक मुख र सुनको वर्ण भएका, चार हात भएका, दुई हातले चक्र र गदा, अनि दुई हातले नकुल र सम्पत्ति लिएका, सबै गहनाले सजिएका, दाह्री-जुँघा भएका, रत्न-(सम्पत्ति)-ले सन्तुष्ट हुने घोडामा चढेका र पद्म तथा वज्र आसन गरेका छन्।

धर्म :
॥२६॥

र(शर)पादसिद्धः द्विभुजः शरः धनुः पाणिः द्विशूलं च चर्मपर्यंका(यंङ्का)शयन(सन):
॥ रत्नवज्रचैत्यं लिंगं(लिङ्गं) च. स्कंधासक्त. मृतक(स्कन्धासक्तमृतकः) पिशाच·
(चः) कबंध(बन्ध)शिरः पादजानु(नू)रूः बकपक्षी ॥४॥ आग्नेय्यां(ये) अट्टाट्टहास-
श्मशान(नः). अग्निदिक्पाल. एकमुख(खो). महादीप्ताग्निवर्ण. च(र्णश्च)तुर्भुज-
(जो) द्वाभ्यां मालाधूपक्(घ)टछ(?)द्वाभ्यां श्रुवाकलशो सप्ताश्ववाहनः
सर्वालंकार(लङ्कारः). व्याघ्रपादसि(सिद्धः). श्मश्रुबल (श्मश्रुलः). द्विशूल(लः).
तर्जनीमुद्रा(द्रो). व्याघ्ररूढः ॥ शांत(शान्त)वज्रचैत्यं लिंगं(लिङ्गं) च. पात्र-
द्विशूलधृक् पिशाचबंध(बन्ध)शिर आदि उलूकपक्षी ॥५॥ नैऋर्त्यै(त्ये) नै (नि)
ऋति(तिः) राक्षसाधिपः रक्तभीममुख.च(खश्च)तुर्भुज(जो). द्वाभ्यां गदापाशं
द्वाभ्यां करतिकरोटके नग्ननरासन(नः)· सर्वालंकार(लङ्कारः). पर्वतपादसिद्ध(द्धः).
वज्रघंटां(घण्टां) दधान(नो). नृत्यन्स(त्स)रलपादः ॥ रश्मिवर्ण(र्णः). श्मशान-
संस्कारवज्रचैत्यलिंगं(लिङ्गं) च पादशूलभृत् पिशाच(चः) कबंध(बन्ध)शिर(रः)
दि (आदि) शुकपक्षी ॥६॥ वायव्ये घोरांध(रान्ध)कार(रः) श्मश(शा)न(नः)
वायुदिक्पाल(लो). धूम्रवर्ण एकमुख(खो) नानालंकार(लङ्कारः) चतुर्भुजा(जः)
चक्रगदे अभयकलशं(शो). मृगासन(नः) अंत्र(अन्त्र)पादः अंत्र(अन्त्र)पो···(र)
मा

राम :
॥२६॥

शरपादनामक सिद्ध चाहिं दुई हात भएका हातमा वाणसहित धनु तथा द्विशूल लिएका, अनि छालाको पलङ आसन भएका छन् । रत्नवज्र चैत्य र शिवलिङ्ग पनि छन् । कबन्धशिर भएका, काँधमा मुर्दा लिएका, पाउ, घुँडा र जाँघ भएका बकुल्ला चराको स्वरूपधारी पिशाच पनि (उत्तरमा नै छन्) ॥४॥

आग्नेय दिशामा अट्टाट्टहासनामक मसान छन् । अग्नि दिक्पालका रूपमा छन् । यी अग्नि एक मुख र ज्यादै तेजिलो आगोको वर्ण भएका, चार हात भएका, दुई हातले माला र धूप, अनि दुई हातले होम गर्ने साधन (सुरो) र कलश लिएका, सात घोडामा चढेका, सबै गहनाले सजिएका छन् । व्याघ्रपादनामक सिद्धचाहिं दाह्रीजुँघा भएका चोरऔंला ठड्याएको मुद्रा (स्थिति) भएका र बाघमा चढेका छन्। शान्तवज्रचैत्य र शिवलिङ्ग पनि छन् । भिक्षापात्र र त्रिशूल लिएका कबन्धशिर आदि उक्त विशेषता भएका, लाटोकोसेरो स्वरूप पिशाच छन् ।।५।।

नैर्ऋत्य दिशामा राक्षसका मालिक निर्ऋतिनामक दिक्पाल छन् । यी निर्ऋति रातो र डरलाग्दो मुख भएका, चार हात भएका, दुई हातले गदा र पाश, अनि दुई हातले करति (जलपात्र) र करोटक (खप्पर वा कटौरा, पात्र) लिएका, नाङ्गो मानिसमाथि उभिएका (आसन गरेका) र सबै गहनाले सजिएका छन् । सोझो पाउ भएका, वज्र र घण्टा लिएका नृत्य गर्ने, पर्वतपादनामक सिद्ध पनि छन्। रश्मिवर्णनामक मसान पनि छन् । सार्थ संस्कारवज्र नाउँको चैत्य र शिवलिङ्ग पनि त्यहीं छन् । यसको अतिरिक्त कबन्धशिर आदि उक्त विशेषता भएका, पाउ भएका तथा शूल (सुइरो, त्रिशूल) धारण गर्ने शुक (सुगा) पक्षिरूप मसान पनि छन् ।।६।।

वायव्य दिशामा ज्यादै अन्धकार (अँधेरो, डरलाग्दो) स्वरूप भएका मसान छन् । वायुदेवता दिक्पालका रूपमा छन् । यी वायु दिक्पाल ध्वाँसो वर्णका, एक मुख भएका धेरै खालका गहनाले सजिएका, चार हात भएका [दुई हातले] चक्र र गदा, अनि [दुई हातले] अभयमुद्रा र कलश लिएका, मृगको आसनमा बसेका छन् । आन्द्रा नै पाउ भएका

तः (नसिद्धः) वेतालासन(नो). विश्ववज्रचैत्यलिंग(लिङ्गः) च शूलपादपिशाच-(चः) कबंध(बन्ध)शिर(रः) नकुलपशु(शुः) ।।७।। ऐशाने कृकल(ला)सकं(क)-श्मशान ऐ(इ)शानदिक्(दिक्पालः) विभूतिवर्ण. एकमुख(खः) सर्वालंकार(लङ्कारः). चतुर्भुजं(जः) त्रिशूलखट्वां(ट्वाङ)गे अभयपात्रे. सर्वालंका(लङ्का)रवि(विभूषितः) वृषासनः कुक्कुरं खेलायमान(नः). कुक्कुरपादसिद्धः हस्ती(स्ति)पशुः पादशूल(लः). पिशाच(चः) रागवज्रचैत्यलिंगं(लिङ्गं) कबंध(बन्ध)शिरा(आ)दि ।।८।। प्रत्याली-ढपदार्पितां(ताङ)घ्रिशवहृत् घोराट्टहासापरा । खड्गेंदी(गेन्दी)वरकर्तृ खर्वरभुजां(जा) हूंकारबीजोद्भवा ।। खर्वा (र्वा) नीलविशालपिंग(पिङ्ग)लजटाजूटोग्रनागैर्धृ(वृ)ता जाड्यं नास्यकपालकं(लिका) त्रिजगता(तां) हंतू(हन्तू)ग्रतारा स्वयं(यम्) ।।१।। नमो बुद्धाय ।। ।। श्रीस्वयंभू(यम्भू)क्षेत्रस्थितदेवतानां मूर्त्तयो यत्रत्रवचन स्थितानां केनापि निर्मितानां लिख्यते(न्ते) ।। ।। आर्य्यतारा ।। एकास्या. श्वेता. द्विभुजा. दक्षं वरदं वामं हृदि अभयदं हस्तद्वयेनोत्पलं दधानो (ना) पद्मोपरि ललितासना. उत्तुंग(त्तुङ्ग)कुचा ।।१।। शाक्यसिंह(हः) ।। एकास्य(स्यः) स्वर्ण-वर्ण(र्णः). द्विभुज(जो). दक्षे भूमिस्पर्श. वामे पिंड(पिण्ड)पात्र ची–

वेताल-(मुर्दा खाने प्रेत वा पिशाच)-को आसनमा बसेका अन्त्रणीनमार नाउँका सिद्ध छन्। विश्ववज्रनामक चैत्य र शिवलिङ्ग पनि छन्। यसै गरी शूल (त्रिशूल) पाउ भएका नकुल (न्याउरी) पशुस्वरूप तथा कबन्धशिर आदि विशेषता भएका पिशाच पनि छन् ॥७॥

ईशानदिशामा क्रकलास (छेपारोस्वरूप)-नामक मसान छन्। ऐशान-(ईशान)-नामक दिक्पाल छन्। यी ईशान दिक्पाल खरानीवर्णका, एक मुख भएका, चार हात भएका, [दुई हातले] त्रिशूल र खट्वाङ्ग (खोपडी भएको दण्ड) र [दुई हातले] अभयमुद्रा र पात्र (भिक्षापात्र) लिएका, सबै अलङ्कारले सिँगारिएका, अनि साँढेको आसनमा बसेका छन्। कुक्कुरलाई खेलाउने कुक्कुरपाद नाउँका सिद्ध छन्। पाउमा शूल (त्रिशूल) भएका हात्ती-पशु-स्वरूप भएका पिशाच छन्। रागवज्रनामक चैत्य र शिवलिङ्ग पनि छन्। उक्त पिशाचको कबन्धशिर आदि पहिलेजस्तै विशेषता छ ॥८॥

अब उग्रताराको स्तुति गरिन्छ। ती उग्रतारा कस्ती छन् भने प्रत्यालीढ (एक पाउ अगाडि बढाएकी) पाउ भएकी, पाउले मुर्दा समातेकी, घोर (चर्को) अट्टहास (खित्का छाडेको हाँसो) गरेकी, चार हातमा क्रमैले खड्ग, नीलकमल, कर्तृ (कर्तन गर्ने वा काट्ने हतियार, हँसिया आदि) र खप्पर (खोपडी) लिएकी, हूँकार बीज-(हूँ भन्ने तान्त्रिक मन्त्र)-बाट पैदा भएकी, खर्व-(अपाङ्ग)-स्वरूप, नीलो र फैलो फिंजिएको जटाजूट (ठूलो चुल्ठो) भएकी र डरलाग्दा नागहरूले चारैतिरबाट घेरिएकी छन्। साथै नास्य-(पशुको नाक बाँध्ने डोरी)-ले उनिएको कपाल (खप्पर) लगाएकी र उग्र छन्। यिनै उग्रताराले तीनै जगत्‌को जडता (अज्ञान, अन्धकार) नाश गरून् ॥१॥

बुद्धलाई नमस्कार। श्री स्वयम्भू क्षेत्रमा स्थित देवताहरूका यत्रतत्र (जहाँतहीं, आसपासमा) रहेका र जो-कोहीले बनाएका मूर्तिहरूबारे लेखिन्छ।

आर्यतारा कस्ती छन् भने एक मुख भएकी, सेतो वर्णकी, दुई हात भएकी, दाहिने हातले वरद मुद्रा र बायाँ हात चाहिं हृदयमा राखेर अभयमुद्रा लिएकी तथा यिनै दुई हातमा कमल पनि लिएकी, कमलपत्रके आसनमाथि बसेकी, उन्नत (ठडिएको) स्तन भएकी छन् ॥१॥

[त्यहीं स्थापित] शाक्यसिंह कस्ता छन् भने एक मुख भएका, सुनौलो वर्णका, दुई हात भएका, दाहिने हातले भूमिस्पर्श (हात तल झुन्डाएका) गरेका र बायाँ हातले पिण्डपात्र (भिक्षापात्र) लिएका,

वरनिवासी वज्रासनं(नः) ।।२।। सुखावतीलोकेश्वर(रः). त्रिमुख(खः). श्वेतवर्ण-(र्णः). षट्(ड्)भुज(जः). दक्षेमु(षु) शरक्षेपजपमालावरदानि वामेषु धनु(नुः)कमल क्रोडस्था(स्थ)ना(ता) रोरुसमर्पणानि. ललितासना. कमलोपरि वज्रतारा. रत्नतारा. पद्मतारा. विश्वताराभिः परिवृता उपरिचैत्य(त्यः) ।।७।।१०।। आर्यतारा पूर्ववद् ध्यानं पार्श्वद्वये भक्तभक्ताद्वयं(यम्) ।।३।।१३।। आर्यतारा पूर्ववत् ।।१४।। वज्रतारा एकमुखी सितवर्ण(र्णः) द्विभुजा दक्षे सवज्रं कमलं वामे सपाशं कमलं पद्मसरलासना ।।१५।। रत्नवीरो महाकाल एकास्य(स्यः). त्रिनेत्र(त्रः) श्मश्रुल(लः) लोलजिह्वः ऊर्द्ध्वपिंग(पिङ्ग)लकेश. द्विभुज(जः). पक्षे अमृतपूर्णकपालं वामे रत्नं जपमाला हृदये केष्टांचि(षाञ्चि)न्मते पात्रधरो वीरः ।।१६।। खड्गवीरो महाकालः एकास्य-(स्यः). द्विभुज(जः). कृष्णत्रिनेत्रः दंष्ट्राकरालः लोलजिह्वः ऊर्द्ध्वपिंग(पिङ्ग)लकेशः द्विभुज(जः). वामे पाशं दक्षे खड्गं व्याघ्रचर्मां व(चर्माम्ब)रप्रत्यालीढ. खड्गधरो वीरः ।।१७।। रत्नवीरमहाकाल(लः) ।। एकास्यः सर्वत(तो)देवः द्विभुजं(जः) दक्षे रत्नपुटं वामे अ–

चीवर (गेरुवा वस्त्र) धारण गर्ने र वज्रको आसनमा बसेका छन् ।।२।। सुखावतीलोकेश्वर चाहिं तीन मुख भएका, सेतो वर्णका, छ हात भएका, दाहिने हातहरूमा वाण प्रहार गरेको मुद्रा, जपमाला र वर दिएको मुद्रा धारण गरेका, बायाँ हातहरूमा धनु, कमल र छातीमा स्थित तारा लिएका, राम्रो कमलको आसनमा बसेका छन् । साथै यी सुखावतीलोकेश्वर विभिन्न ताराहरु-(जस्तै– वज्रतारा, रत्नतारा, पद्मतारा र विश्वतारा)-ले घेरिएका पनि छन् । माथितिर चैत्य रहेको छ ।।७।। आर्यताराको ध्यान पहिलेजस्तै र दुवै बगलमा भक्तहरू रहेका छन् ।।३।।१३।। आर्यतारा पहिलेजस्तै ।।१४।।

वज्रतारा चाहिं एक मुख भएकी, सेतो वर्णकी, दुई हात भएकी, दाहिने हातमा वज्रसहितको कमल र बायाँ हातमा पासो-(डोरी)-सहितको कमल लिएकी तथा कमलपत्रको

आसन गरेकी छिन् ॥१५॥ रत्नवीर (वज्रवीर ?) नाउँ गरेका महाकाल एक मुख भएका, तीन आँखा भएका, दाह्रीजुँघा भएका, चञ्चल जिभ्रो भएका, ठडिएका कैला केश (कपालका रौं) भएका, दुई हात भएका, दाहिने हातमा अमृतले भरिएको कलश र बायाँ हातमा रत्न लिएका हृदयमा जपमाला धारण गरेका मूर्तिका रूपमा छन् । कसैको मतमा यिनी पात्रधर वीर पनि भनिन्छन् ॥१६॥ खड्गवीर नाउँ गरेका महाकाल चाहिं एक मुख र दुई हात भएका, काला (नीला) तीन आँखा भएका, डरलाग्दा दाँत (दाह्रा) भएका, चञ्चल जिभ्रो भएका, ठडिएका कैला केश भएका, दुई हातमध्ये बायाँमा पासो र दाहिनेमा खड्ग लिएका, बाघको छालामा बसेका छन् र यिनी खड्गधर वीर पनि भनिन्छन् ॥१७॥ यसै गरी रत्नवीर महाकाल चाहिं एक मुख भएका, सबैका देवतास्वरूप, दुई हात भएका दाहिनेमा रत्न (रत्नमाला) र बायाँमा

**मृतपात्रं. हृदि जपमाला रत्नधरो वीरो वा ॥१७॥ अं(अङ)कुशवीरो महाकालः ॥ वीरो वा दक्षे पाशं वामे अं(अङ)कुशं पूर्ववत् ॥१८॥ पद्मपाणि(णिः) एकास्य-(स्यः). द्विभुज(जः). वरदकमलधरः ॥१९॥ चूडाभिक्षुणी एकास्या द्विभुजा मुंडि(ण्डि)ता कुंचि(कुञ्चि)तकेशा काष्टायनिवसना दक्षे वरदमुद्रा वामे चीवर-कर्णिका ॥२०॥ पद्मपाणिलोकेश्वरः पूर्ववत् ॥२१॥ प्रज्ञापारमिता एकास्या. चतुर्भुजा, श्वेता. धर्मचक्रमुद्रा दक्षे जपमाला वामे पुस्तकं(कम्) ॥२२॥ चैत्य(त्यम्) ॥२३॥ तारा पूर्ववद् ध्यानं ॥२४॥ आर्यतारा पूर्ववत् ॥२५।/ मंजुश्री(मञ्जुश्रीः) ॥ एकास्यः स्मितमुखः कुं(ङ)कुभ(म)वर्णः द्विभुजः दक्षे पद्मोपरि पुस्तं सनाल-पद्मोपरि खड्गं ॥२६॥ गोपुछा(च्छा)दिहारीतिकूटागारगोपानसीषु स्थितं(त) दिक्पताकादिदेवतानां(नाम्) ॥ ॥ वीणाराजः ॥ एकास्यः जटामुकुटी मकर-चर्मांब(र्माम्ब)रधरः द्विभुजः द्वाभ्यां वीणां धारयन् वादयमानः सोपानतकः ॥१॥ चैत्यराजः ॥ एकास्यादिपूर्ववत् ॥ दक्षे सर्पं वामे चैत्यं ॥२॥**

अमृतपात्र लिएका, हृदयमा जपमाला धारण गरेका छन् । यिनी रत्नधर वीर पनि भनिन्छन् ॥१७॥ अङ्कुशवीरनामक महाकाल अथवा वीरले दाहिने हातमा पाश (डोरी) र बायाँमा अङ्कुश (अङ्कुसे) धारण गरेका, अनि अरू पहिलेजस्तै ॥१८॥ पद्मपाणि चाहिं एक मुख र दुई हात भएका, वरदमुद्रा र कमल लिएका [छन्] ॥१९॥ चूडाभिक्षुणी चाहिं एक मुख भएकी, दुई हात भएकी, मुण्डन गरेकी [अथवा[ घुम्रेको केश भएकी, गेरुवा वस्त्र धारण गर्ने, दाहिने हातमा वरदमुद्रा र बायाँ हातमा चीवरकर्णिका (गाँठो) धारण गरेकी छन् ॥२०॥ पद्मपाणि-

लोकेश्वर पहिलेजस्तै ।।२१।। प्रज्ञापारमिता चाहिं एक मुख र चार हात भएकी, सेतो वर्णकी धर्मचक्रमुद्रामा रहेकी, दायाँ हातमा जपमाला र बायाँमा पुस्तक लिएकी छन् ।।२२।। चैत्य ।।२३।। ताराको ध्यान पहिलेजस्तै ।।२४।। आर्यताराको पनि पहिलेजस्तै ।।२५।। मञ्जुश्री-(नामक बुद्ध) एक मुख भएका, हँसिला, कुङकुमजस्तै पहेंलो वर्णका, दुई हात भएका दाहिने हातमा कमलमाथिको पुस्तक र [बायाँ हातमा] डाँठ सहित कमलमाथिको खड्ग लिएका छन् ।।२६।। गोपुच्छ आदि हारीतिनामक कूटागार र गोपानसीहरूमा रहेका दिक्पताका आदि देवताका मूर्तिहरू छन् ।। वीणाराजको मूर्ति चाहिं एक मुख भएका, जटा र मुकुट धारण गर्ने गोहीको छालाको कपडा लगाएका, दुई हात भएका, दुवै हातले वीणा धारण गरेर बजाउने भएका, साथै खराउ(जुत्ता) लगाएका छन् ।।१।। चैत्यराजको एक मुख आदि पहिलेजस्तै ।। दाहिनेमा सर्प र बायाँमा चैत्य लिएका छन् ।।२।।

धर्म :

॥२८॥

ध्वजराजः ॥ दक्षे वरदं वामे ध्वजं ॥३॥ खड्गराजः भुजद्वयेन खड्गं ॥४॥ कुबेरः ॥ एकास्य. द्विकरः भ्रूभंग(भङ्ग)करालनेत्रः ॥ द्विभुजः दक्षे रत्नपुंजं(पुञ्जं) वामे नकुलं रत्नमालालं(लङ्)कृतः ॥५॥ वासुदेव एकास्यः ऊर्ध्वपिंग(पिङ्ग)लकेशः भ्रूभंग(भङ्ग): वर्त्तुलनेत्र(त्रः). द्विभुज. दक्षे समाचा(चाम)रध्वजं वामे अं(अङ)-कुशमुद्रां ॥६॥ विष्णु(ष्णुः) एकास्य. चतुर्भुज(जः) चक्रशंख(शङ्ख)गदापद्मानि ॥७॥ उष्णीखवर्त्ती (उष्णीषवर्ती) एकास्य(स्यः) द्विभुजः दक्षे वरद वामे सनाल-कार्णिकायां वैरोचनबुद्ध(द्धः) ॥८॥ वरुणः ॥ एकास्यः श्वेतः पंच(पञ्च)फणालं-(लङ्)कृतः चतुर्भुजः दक्षाभ्यां चक्रं फणिनं वामाभ्यां शंखं(शङ्खं) पद्मं ॥९॥ नैऋत्यः ॥ एकास्य(स्यः). ऊर्ध्वपिंग(पिङ्ग)लकेशा. वर्त्तुलनेत्रः अंत्र(अन्त्र)मालो लंबो(लम्बो)दरः अंत्र(अन्त्र)मालाधारणहस्तद्वय(यः) ॥१०॥ इंद्र(इन्द्र) एकास्यः मुकुटी चतुर्भुजः दक्षाभ्यां वज्रं रत्नं वामाभ्यां छत्रं कमलं ॥११॥ वेमचित्रौसुरः ॥ एकास्यः सुन्दरवन. कवचित्तः द्विभुजः द्वाभ्यां खड्गनिष्कासन ॥१२॥ महादेवः ॥ एकास्य(स्यः). त्रिनेत्रः सर्पयज्ञोपवीती. सर्पालं(लङ्)कृतभस्मलेपी. द–

ध्वजराजचाहिं दाहिने-(हात)-मा वरदमुद्रा र बायाँमा ध्वजा लिएका छन् ॥३॥ खड्गराजले दुवै हातले खड्ग लिएका छन् ॥४॥ कुबेर चाहिं एक मुख र दुई हात भएका, आँखीभौंले डरलाग्दो आँखा भएका छन् । दुई हातमध्ये दाहिनेमा रत्नपुञ्ज र बायाँमा नकुल (न्याउरी) लिएका तथा रत्नमालाले सिंगारिएका छन् ॥५॥ वासुदेव चाहिं एक मुख भएका ठडिएको कैलो केश भएका, आँखीभौं राम्रो र बाटुलो आँखा भएका, दुई हातमध्ये दाहिनेमा चामरसहितको ध्वजा र बायाँ हातमा अङ्कुशमुद्रा धारण गरेका छन् ॥६॥ विष्णु देवता पनि एक मुख र चार हात भएका, शङ्ख, चक्र, गदा र पद्म लिएका छन् ॥७॥ उष्णीषवर्ती नाम गरेका शिव चाहिं एक मुख र दुई हात भएका, दाहिनेमा वरदमुद्रा र बायाँ हातमा डाँठसहितको कमलपत्रमा वैरोचन बुद्धलाई धारण गरेका छन् ॥८॥ वरुण देवता एक मुख भएका, सेता, पाँच फणाले

सजिएका, चार हात भएका, दाहिने हातले चक्र र सर्प, अनि बायाँ हातले शङ्ख र पद्म धारण गरेका छन् ॥९॥ नैर्ऋत्य देवता एक मुख भएका, ठडिएको कैलो केश भएका, बाटुलो आँखा भएका, आन्द्राको माला लगाउने ठूलो पेट भएका, अनि दुवै हातले आन्द्राको माला लिएका छन् ॥१०॥ इन्द्रदेवता एक मुख भएका, मुकुट धारण गर्ने, चार हात भएका, दाहिनेले वज्र र रत्न, अनि बायाँ-(हात)-ले छाता र कमल धारण गरेका छन् ॥११॥ वेमचित्रदेवता एक मुख भएका, राम्रो अनुहारका, दुई हात भएका र दुवैले खड्ग र निष्कासन (हतियारविशेष) धारण गरेका छन् ॥१२॥ महादेवदेवता चाहिं एक मुख र तीन आँखा भएका, सर्पको जनै लगाउने, सर्पकै अलङ्कार गराउने र खरानी घस्ने

**क्षे डमरुं वामे त्रिशूलं ॥१३॥ गणेशः ॥ एकास्यः गजास्य एकदंत(दन्त): त्रिनेत्रः चतुर्भुजः दक्षाभ्यां जपमालामूलं वामाभ्यां परशुमोदकौ ॥१४॥ चंद्र(चन्द्र)माः एकास्यः द्विभुजः कुमुदद्वयं हस्तयोः ॥१५॥ ब्रह्मा ॥ चतुर्मुखः चतुर्भुजः दक्षाभ्यां जपमाला अभयं च वामाभ्यां पुस्तकं कमंडलुं(कमण्डलुम्) ॥१६॥ अग्निः ॥ एकास्यः वर्त्तुलनेत्रः द्विभुजः दक्षे श्रुक्श्रुवा(वौ) वामे अभयं(यम्) ॥१७॥ सूर्य्य एकास्य(स्यः). द्विभुजः कमलद्वयं दधानः ॥१८॥ यमः ॥ एकास्य(स्यः). वर्त्तुल-नेत्र(त्रः). द्विभुज(जः). दक्षे यमदंडं(दण्डं) वामे यमपाशं(शम्) ॥१९॥ सर्पराजः ॥ मंड(मण्ड)लाकारः ऊर्ध्वफणाः(णः) कमलोपरिपुछा(च्छा)सनः ॥२०॥ गरुडः सर्पद्वयं पादाभ्यामाक्रम्य पुछ(च्छ)द्वयं ऊर्ध्वहस्ताभ्यां दधानः ॥ पर्वतस्थितकवचितः ॥ पक्षद्वयधरः ॥२१॥ तोरणस्थदेवताः ॥ वज्रसत्व(त्वः) एकास्य द्विभुजः दक्षे वज्रं वामे घंटां(घण्टाम्) ॥१॥ पंच(पञ्च)रक्षादेवी ॥ प्रतिसरा ॥ चतुर्मुखी मूलं सितं दक्षे पीतं(तम्) ऊर्ध्वं रक्तं वामे श्यामं(मम्) अष्टभुजा प्रथमदक्षे खड्गं. द्वितीये शरं. तृतीये वज्रं चतुर्थे हृदि चक्रं**

दाहिने हातमा डमरु र बायाँ हातमा त्रिशूल धारण गरेका छन् ॥१३॥ गणेशदेवता चाहिं एक मुख र त्यो पनि हात्तीको जस्तो मुख भएका, चार हात भएका, दाहिने दुई हातले जपमाला र मूल (मूला) धारण गरेका, बायाँ दुई हातले बन्चरो र लड्डु लिएका छन् ॥१४॥ चन्द्रमा चाहिं एक मुख र दुई हात भएका, अनि ती हातमा दुई चन्द्रकमल (सेतो कमल) लिएका ॥१५॥ ब्रह्मा चार मुख र चार हात भएका, दाहिने दुई हातले जपमाला र अभयमुद्रा, अनि बायाँ दुई हातले पुस्तक र कमण्डलु लिएका छन् ॥१६॥ अग्निदेवता एक मुख, बाटुलो आँखा र दुई हात भएका छन्। दाहिने हातमा हवनको सुरो र बायाँ हातमा अभयमुद्रा लिएका छन् ॥१७॥ सूर्यदेवता एक मुख र दुई हात भएका तथा दुई कमल लिएका छन् ॥१८॥ यमराज

चाहिं एक मुख भएका, बाटुला आँखा र दुई हात भएका दाहिने हातमा यमदण्ड र बायाँ हातमा यमपाश लिएका छन् ।।१६।। सर्पराज (नाग) चाहिं गुँडुल्केका, माथि फणा उठाएका र कमलमाथि आफ्नै पुच्छरको आसन बनाएका छन् ।।२०।। गरुडनामक पक्षीले दुई सर्पलाई पाउले झम्टेर, दुई पुच्छरलाई माथिल्ला हातले पक्रेका, पर्वतमाथि बसेका र दुई पखेटा भएका छन् ।।२१।।

अब तोरणका देवताबारे चर्चा गरौं । वज्रसत्त्व एक मुख र दुई हात भएका दायाँ हातमा वज्र र बायाँ हातमा घण्टा लिएका छन् ।।१।। पञ्चरक्षादेवी अथवा प्रतिसरा नामकी देवी चार मुख भएकी मूल (शरीरको तल्लो भाग) सेतो वर्णकी, दाहिने तर्फ पहेंलो, माथि (शिरतर्फ) रातो र बायाँतर्फ कालो (नीलो) वर्णकी छिन् । साथै आठ हात भएकी र दाहिनेतर्फ पहिलोमा खड्ग, दोस्रोमा शर (बाण), तेस्रोमा वज्र, चौथो हातमा हृदयमा चक्र धारण गरेकी छिन् :

॥२६॥

वामप्रथमे अं(अङ्)कुशं द्वितीये धनु(नुः) तृतीये त्रिशूलं चतुर्थे पाशं(शम्) ॥२॥ महासाहस्रप्रमर्द्दनी ॥ चतुर्मुखी. मूलं कृष्णं दक्षे सितं. ऊर्ध्वं रक्तं वामे श्यामं. कृष्णवर्णा अष्टभुजा दक्षप्रथमे वज्रं द्वितीये खड्गं तृतीये शरः चतुर्थे परशु(शुः) ॥ वामप्रथमे पाशः द्वितीये पद्मं तृतीये धनुः चतुर्थे विश्ववज्रं(ज्रम्) ॥३॥ महामायूरी ॥ त्रिमुखी ॥ मूलं पीतं सव्यं श्यामं वामे रक्त(क्तम्) अष्टभुजा दक्षप्रथमे खड्गं द्वितीये चक्रं तृतीये पद्मं चतुर्थे वरदं वामप्रथमे रत्न(त्नं) द्वितीये ध्वजं तृतीये सिन्दूरार्पणं चतुर्थे रत्नपात्रं(त्रम्) ॥४॥ महाशीतवती ॥ एकास्या रक्तवर्णा षड्भुजा प्रथमसव्ये खड्गं द्वितीये शरं तृतीये वरदं वामप्रथमे अं(अङ्)कुशं द्वितीये धनुः तृतीये पद्मं(द्मम्) ॥५॥ मंत्रा(मन्त्रा)नुसारिणी ॥ त्रिमुखी श्यामवर्णा मूलं श्यामं सव्यं सितं वामं कृष्णं द्वादशभुजा. सव्यवामप्रथमाभ्यां धर्मचक्र(क्रं) द्वितीताभ्यां रत्नपात्रं तृतीयाभ्यां खड्गपद्मे चतुर्थाभ्यां शरधनुषी पंच(पञ्च)माभ्यां विश्वव–

यसै गरी यिनले बायाँतर्फ पहिलो हातमा अङ्कुश, दोस्रोमा धनु, तेस्रोमा त्रिशूल र चौथोमा पाश (डोरी) धारण गरेकी छन् ॥२॥ महासाहस्रप्रमर्दिनी नामकी देवी चार मुख भएकी, मूल कालो वर्णकी, दाहिनेतर्फ सेतो, माथितिर रातो र बायाँतर्फ श्याम (नीलो) वर्णकी तथा समष्टिमा कालो वर्ण जस्ती, आठ हात भएकी दायाँतर्फ पहिलो हातमा वज्र, दोस्रोमा खड्ग, तेस्रोमा बाण र चौथोमा बन्चरो लिएकी, अनि बायाँतर्फ पहिलो हातमा पाश (डोरी), दोस्रोमा कमल, तेस्रोमा धनु र चौथो हातमा विश्ववज्र लिएकी छन् ॥३॥ महामायूरीदेवी चाहिं तीन मुख भएकी, मूल पहेंलो वर्णकी, दाहिनेतर्फ श्याम (नीलो) वर्ण र बायाँतर्फ रातो वर्ण भएकी, आठ हात भएकी, दायाँतर्फ पहिलो हातमा खड्ग, दोस्रोमा चक्र, तेस्रोमा कमल र चौथो हातमा वरदमुद्रा लिएकी, साथै बायाँतर्फ पहिलो हातमा रत्न, दोस्रोमा ध्वजा, तेस्रोमा सिन्दूर र चौथो हातमा रत्नपात्र लिएकी छन् ॥४॥ महाशीतवतीदेवी चाहिं एक मुख

भएकी, रातो वर्णकी, छ हात भएकी, दायाँतर्फ पहिलो हातमा खड्ग दोस्रोमा बाण, तेस्रोमा वरदमुद्रा तथा बायाँतर्फ पहिलो हातमा अङ्कुश, दोस्रोमा धनु, अनि तेस्रोमा कमल धारण गरेकी छन् ॥५॥ मन्त्रानुसारिणीदेवी चाहिं तीन मुख भएकी, श्याम वर्णकी, मूलमा श्याम (नीलो) वर्ण, दाहिनेतर्फ सेतो र बायाँतर्फ कालो वर्णकी, बाह्र हात भएकी दायाँ-बायाँ दुवैतर्फ पहिला-पहिला दुई हातले धर्म र चक्र, दोस्रो दुईले रत्न र पात्र, तेस्रा दुईले खड्ग र पात्र, चौथा दुई हातले विश्ववज्र

ज्रघंठे(घण्टे) षष्ठाभ्यां(भ्याम्) अभयपाशौ. सर्वा अपि वज्रासना. कुत्रचित् सिंहाद्यासना कुत्रचित् साहस्रप्रमर्दन्यां ललितासना ।।६।। तोरणोपरि गरुड एकास्यः पक्षद्वयधारी मस्तकोपरि अर्ध्वपक्षाणि हस्तद्वयाभ्यां सर्पद्वयं (बन्धयित्वा पुच्छद्वयं) चर्वयन् पादद्वयाभ्यां नागनागिनी चक्रधरं चक्रधरां समाक्रभ्य गगनस्थः ।।७।। दक्षपार्श्वे वज्रसत्व(त्वः) हृदि वज्रघंटा(घण्टा)धरः जपमाली. वज्रासन(नः). वामपार्श्वे अमिताभ एकास्य. द्विभुज(जः). ध्यानमुद्रोपरिपात्रधृक् वज्रासनः ।।८।। अधः पार्श्वद्वये मकरद्वयं हस्तिशुंडा(शुण्डा)धरं मुखं व्यादाय सिंहपदधा(धारी) पुछ(च्छ)भृत्. तदधः दक्षपार्श्वे नलकूबरः एकास्यः द्विभुजः मकरचर्मा व(र्माम्ब)रः दक्षे सरत्नदंड(दण्ड)धरः वामे रत्नपात्रं सोपानत्कः ।। वामपार्श्वे कुबेर एकास्य-(स्यः). द्विभुज(जः). दक्षे गदा. वामे पात्रं नर(रः) अश्ववाहनः ।।११।। ।। ओशावर्यसिंह(हः) ।। एकमुख(खः). द्विभुज(जः). भूमिस्पर्शमुद्रा(द्रः) पिंड(पिण्ड)-पात्रधारण(णः). कांच(काञ्च)नवर्ण(र्णः). द्वात्रिंशल(ल्ल)क्षणधर(रः) ।।१।। कारण्डव्यूहलोकेश्वरः ।। एकमु-

र घण्टा, अनि छैटौं दुई हातले अभयमुद्रा र पाश धारण गरेकी छन् । सबै [देवताहरू] वज्रको आसनमा बसेका, कहीं सिंह आदि वाहनका आसनमा, कहीं सहस्रप्रमर्दिनी देवीमा जस्तै ललितासन भएका देखिन्छन् ।।६।। तोरणभन्दा माथि रहेका गरुड एक मुख भएका, दुई पखेटा धारण गरेका, शिरमाथि पनि प्वाँखहरू भएका, दुई हातले दुई सर्पलाई अँठ्याएर दुई पुच्छर चपाउँदै गरेका, दुई पाउले नागनागिनी, चक्रधर र चक्रधरालाई आक्रमण गरेका र आकाशमा रहेका छन् ।।७।। दाहिनेतर्फ बगलमा वज्रसत्व(त्त्व) बुद्ध (देवता) छन् । यिनले हृदयमा वज्रघण्टा धारण गरेका र जपमाला लिएका, छन्, यिनी वज्रासनमा बसेका छन् । बायाँ बगलमा अमिताभ बुद्ध चाहिं एक मुख भएका, दुई हात भएका, ध्यानमुद्राको माथि रहेका र पात्र (भिक्षापात्र) धारण गरेका छन् ।।८।। तलतिर दुवै बगलमा दुई गोही छन्, जसको ओठ

हात्तीको सूंडजस्तो छ र जसले मुख बाएका छन् । पुच्छर भएका सिंह पनि छन् । त्यसमुनि दाहिने बगलमा नलकूबर छन् । यिनी एक मुख र दुई हात भएका, गोहीको छालाको कपडा लगाएका, दाहिने हातमा रत्नसहित दण्ड र बायाँ हातमा रत्नपात्र धारण गरेका, अनि जुत्ता लगाएका छन् । बायाँ बगलमा रहेका कुबेर एक मुख र दुई हात भएका, दाहिने हातमा गदा, बायाँमा पात्र (भिक्षापात्र) लिएका, अनि मानिस र घोडाको वाहन गरेका छन् ।।११।।

श्रीशाक्यसिंह बुद्ध चाहिं एक मुख र दुई हात भएका, भूमिस्पर्शमुद्रामा रहेका, पिण्ड-पात्र (भिक्षापात्र) धारण गर्ने सुनौला वर्णका र बत्तीस लक्षणले युक्त छन् ।।१।। कारण्डव्यूह-लोकेश्वर चाहिं–

ख(खः) चतुर्भुजः श्वेतवर्ण(र्णः). राजेन्द्रमुद्रा(द्रः) दक्षे जपमाला वामे पद्मं पद्मोपरि वज्रासनं मकुटालंका(लङ्का)रः ॥२॥ वामपार्श्वे वरदतारा. एकमुख(खः). द्विभुज(जः). अभयवरदमुद्रा ॥३॥ आर्यतारा एकमुख(खः). द्विभुज(जः). दक्षे वरदं वामे पद्मं ललितासनं(नम्) ॥४॥ पंच(पञ्च)बुद्धा(द्धाः) चैत्य(त्यः) ॥५॥ अमिताभध्यानमुद्रा पिंड(पिण्ड)पात्रं च. तालवनस्थशाक्यसिंहो वा ॥६॥ षड्भुज-लोकेश्वरः षट्भुज(जः) दक्षे खड्गशरवरद. वामे पद्म-पुस्तकधनु(नुः) अमिताभ-मुकुटः ॥७॥ अश्वकांता(कान्ता)तारा एकमुख(खी), चतुर्भुजा. पीतवर्णा जपमाला अशोकमंज(मञ्ज)री. कृतांज(ताञ्ज)लिमुद्रा ॥८॥ वरदतारा एकमुखी द्विभुजा पद्म-इंदी(इन्दी)वर. ललितासन(ना) ॥९॥ महाकाल एकमुख(खः). द्विभुज(जः). करतिकपाल(लः) खट्वांग(ट्वाङ्गः) ॥१०॥ अमिताभ एकमुख(खः) द्विभुज(जः). ध्यानमुद्रा(द्रः) ॥११॥ अक्षोभ्य एकमुख(खः). द्विभुज(जः). भूमिस्पर्शमुद्रा(द्रः) ॥१२॥ अमिताभः ॥१३॥ अमिभ (अमिताभः) ॥१४॥ दक्षिणतारा ॥१५॥ वामतारा उत्पलद्वयं(यम्) ॥१६॥ तारा तारा तारा प्रज्ञा-पद्म-उ–

एक मुख र चार हात भएका, सेतो वर्णका, राजेन्द्र-(अभयमुद्रा)-को जस्तो मुद्रा गरेका, दाहिने हातमा जपमाला, बायाँ हातमा पद्म (कमल), अनि पद्मकै माथि वज्रासनमा बसेका र मुकुट-(श्रीपेच)-को अलङ्कारले सिंगारिएका छन् ॥२॥ बायाँ बगलमा वरदतारा छिन्– एक मुख, दुई हात र अभयमुद्रा तथा वरदमुद्रा धारण गरेकी ॥३॥ आर्यतारा चाहिं एक मुख र दुई हात भएकी दाहिने हातमा वरदमुद्रा र बायाँमा पद्म लिएकी तथा ललितासनमा बसेकी छन् ॥४॥ पञ्च बुद्ध र चैत्यबारे चर्चा गरिन्छ ॥५॥ अमिताभ बुद्ध चाहिं ध्यानमुद्रा-(स्थिति)-मा छन् र पिण्डपात्र पनि लिएका छन्। ताल-(ताड)-वनमा रहेका शाक्यसिंह पनि छन् ॥६॥

षड्भुजलोकेश्वर बुद्ध चाहिं छ हात भएका दाहिने हातहरूमा खड्ग, वाण र वरदमुद्रा धारण गरेका, अनि बायाँ हातहरूमा पद्म, पुस्तक र धनु धारण गरेका, अनि अमिताभबुद्धका मुकुट (मान्य) पनि हुन् ।।७।। अश्वकान्ता तारा चाहिं एक मुख र चार हात भएकी, जपमाला लिएकी, अशोकमञ्जरी स्वरूप भएकी र हात जोडेकी छन् ।।८।। वरदतारा चाहिं एक मुख र दुई हात भएकी पद्म र नीलकमल लिएकी तथा ललितासनमा बसेकी छन् ।।९।। महाकाल चाहिं एक मुख र दुई हात भएका कटारी र खप्पर लिएका, खट्वाङ्ग धारण गरेका छन् ।।१०।। अमिताभ चाहिं एक मुख र दुई हात भएका, अनि ध्यानमुद्रामा रहेका छन् ।।११।। अक्षोभ्य बुद्ध पनि एक मुख र दुई हात भएका भूमिस्पर्शमुद्रामा रहेका छन् ।।१२।। अमिताभ बुद्ध ।।१३।। अमिताभ ।।१४।। दक्षिणतारा ।।१५।। वामतारा र दुई कमल ।।१६।। ताराको तीनपल्ट उच्चारण गरौं– तारा, तारा, तारा । यिनीहरू प्रज्ञा, पद्म र

**त्पल प्रज्ञा पुस्तक उत्पल ।।१७।। अभयलोकेश्वर. एकमुख द्विभुजः अभये(य)पद्मं-(द्मम्) ।।१८।। वरदलोकेश्वर(रः) द्विभुज(जः). वरदं(द)पद्महस्तं(स्तः) ।।१९।। धर्मचक्रतारा एकमुख(खः) द्विभुज(जः) धर्मचक्रमुद्रा पद्मद्वयं(यम्) ।।२०।। उष्णीषविजय एकमुख वरद-अभ(वरदाभ)यमुद्रा(द्रः) ।।२१।। दीपंकर(पङ्करः) एकमुख. द्विभुज दक्षे वरदं वामे चीवरकर्णिका ।।२२।। शाक्यसिंह(हः) ।।२३।। सरस्वती एकमुखी चतुर्भुजा वीणापुस्तकजपमाला. ललितासन(ना) ।।२४।। इति स्वयंभू(यम्भू)क्षेत्र-(क्षेत्रस्थित)देवता(ताः)।। ।। पुनः गोपुछ(च्छ)पर्वतस्थदेवताः ।। ।। अमिताभ-स्वस्वमूर्तये ।।१।। षडक्षरीजपकृत् महादेवक्रोडे पार्वतीभष्मे(स्मे)श्वरतथागतार्थं-(र्थम्)– उमेश्वरतथागतार्थं चैत्यचूडामणिं कृत्वा पद्मपाणिमंत्रं(मन्त्रं) जजाप उपषधव्रतं कृत्वा ।।२।। वज्रपाणि(णिः). पद्मपाणि(णिः). विश्वपाणि(णिः). मैत्रेयः ।।३।। पुनः वज्रपा–**

उत्पल-(कमल)-स्वरूप छन् ।।१७।। अभयलोकेश्वर बुद्ध चाहिं एक मुख र दुई हात भएका, अनि अभयमुद्रामा र पद्म लिएका छन् ।।१८।। वरदलोकेश्वर बुद्ध चाहिं दुई हात भएका र हातमा वरदमुद्रा तथा पद्म लिएका छन् ।।१९।। धर्मचक्रतारा एक मुख र दुई हात भएकी छन्, धर्मचक्रमुद्रामा र दुइटा कमल लिएकी छन् ।।२०।। उष्णीषविजयनामक बुद्ध एक मुख भएका र वरदमुद्रा तथा अभयमुद्रामा छन् ।।२१।। दीपङ्कर बुद्ध चाहिं एक मुख र दुई हात भएका, दाहिने हातमा वरदमुद्रा र बायाँमा चीवरकर्णिका (चीवरको गाँठो) धारण गरेका छन् ।।२२।।

शाक्यसिंह पनि त्यहीं छन् ।।२३।। सरस्वती एक मुख र चार हात भएकी, वीणा पुस्तक र जपमाला धारण गरेकी तथा ललितासनमा बसेकी छन् ।।२४।। यी उपर्युक्त देवताहरू स्वयम्भूक्षेत्रमा रहेका छन् ।।

फेरि गोपुच्छनामक पर्वतमा रहेका देवताबारे चर्चा गरिन्छ। अमिताभ बुद्धका आ-आफ्ना मूर्तिलाई (नमस्कार छ) ।।१।। षडक्षरी-(देवी)-को जप गर्ने महादेवले काखमा पार्वती लिएका र भस्मेश्वरनामक तथागत-(बुद्ध)-को लागि र हेमेश्वरनामक तथागत-(बुद्ध)-को लागि चैत्यको चूडामाणि (चैत्यको शीर्षस्थ भाग) बनाएर व्रत र उपवास बस्दै पद्मपाणि-(बुद्ध)-को मन्त्र जपे ।।२।। वज्रपाणि, पद्मपाणि, विश्वपाणि र मैत्रेय पनि छन् ।।३।। फेरि–

थमे :
॥३१॥

णि(णिः) पद्मपाणि(णिः). विश्वपाणि(णिः). मैत्रेय(यः) ॥४॥ षट्(ड्)भुज(जः) वज्रसत्व(त्वः). वज्रसत्वा(त्वा)त्मिका ॥५॥ खड्गमंजुश्री(मञ्जुश्रीः) ॥६॥ महामंजुश्री(मञ्जुश्रीः) ॥७॥ मंजुश्री(मञ्जुश्रीः) ॥८॥ हलाहललोकेश्वरः हलाहली तारा ॥९॥ रत्नसंभव(सम्भवः). प्रज्ञापारमिता कारंड(रण्ड)व्यूह-लोकेश्वर(रः) ॥१०॥ अमिताभ(भः). पद्मतारा उत्पलतारा ॥११॥ ऊर्ध्वज्ञानं रुमुचिलागाकांदो जीयभाषया कथ्यते ॥ एकमुख(खः). द्विभुज(जः). वज्र. पात्र. खट्वांग(ट्वाङ्ग)धरं कैश्चित् वादेसिलामा इत्युच्यते पद्मपाण्यवतार(रः). वज्र-पाण्याकृति(तिः) ॥ ऊर्ध्वज्ञानरुमुचिलाया इति संज्ञायां कैश्चित् वज्रसत्व(त्व)-तथागतस्यावतार इत्युच्यते यस्मात् शंक(शङ्क)राचार्यो भग्न इति लोकवार्ता श्रुता शास्त्रांत(स्त्रान्त)र(रे) दृष्टा न. शामार्या कर्मार्या(र्या) सिद्धरुमुचिलामा पंच-(पञ्च)बुद्धावतारा(राः) ॥ ॥ ज्वालिनीप्रभ(भः). अग्निज्वाला(लः). व्याघ्र-पादसिद्ध(द्धः) वज्रकपालीसिद्ध(द्धः) पद्मपाण्यवतारः ॥ ॥ कुत्रचित् त्रिकोष्ठा-गारशोभितपंच(पञ्च)तलयुतकूटागारोपरि सुखावतीभुवनाकारकोष्ठागारगर्भघंटा-(घण्टा)कार चैत्यः त्रयो–

अन्य देवता हुन्– वज्रपाणि, पद्मपाणि, विश्वपाणि र मैत्रेय ॥४॥ छ हात भएका वज्रसत्त्व र वज्रसत्त्वात्मिका (देवी) ॥५॥ खड्गमञ्जुश्री ॥६॥ महामञ्जुश्री ॥७॥ मञ्जुश्री ॥८॥ हलाहललोकेश्वर, हलाहली तारा ॥९॥ रत्नसम्भव, प्रज्ञापारमिता, कारण्डव्यूहलोकेश्वर ॥१०॥ अमिताभ, पद्मतारा, उत्पलतारा ॥११॥ भाषामा कांदोजीय भनिने(?)ऊर्ध्वज्ञान रुमुचिलामा एक मुख, दुई हात वज्र, पात्र र खट्वाङ्ग धारण गर्ने यी पद्मपाणिका आकृति र अवतार भएकालाई कसैले वादेसिलामा पनि भन्दछन् । ऊर्ध्वज्ञानरुमुचिलामा भन्ने नाउँमा कोही वज्रसत्त्वनामक तथागतको अवतार भन्छन्, जसबाट शङ्कराचार्य पनि भग्न (परास्त) भए भन्ने जनचर्चा सुनिन्छ शास्त्रमा भने यो कुरा देखिएन । शामार्या, कर्मार्या, सिद्धरुमुचिलामा आदि पञ्च बुद्धका

अवतार हुन् । ज्वालिनीप्रभ, अग्निज्वाला, व्याघ्रपादसिद्ध तथा वज्रकपालीसिद्ध चाहिं पद्मपाणिका अवतार हुन् ।

कहीं तीन कोठाले सजिएको र पाँच तलाले युक्त कूटागार-(माथिल्लो तला)-को माथि सुखावती भुवनको आकार भएको गर्भ वा भित्र कोठा भएको, घण्टाको आकार भएको चैत्य–

**दश चूडामडिसहिता(तः) कनिष्ठमंड(मण्ड)लयुक्तः तदुपरि छत्रं द्वात्रिंशद्दलशोभितं कलशचूडामणिं तत्र मध्यकोष्ठागारमध्ये ध्वजराजनामा बोधिसत्वो(त्त्वो) विराजति. एकास्यो द्विभुजो वक्षे ध्वजं वामे रत्नमालां मुकुटादि भूषणभूषितो मांसलो ललितासन(नः). पार्श्वयोर्दक्षे सुवर्णकलशं वसुंध(सुन्ध)राप्रमाणतः वामे विश्ववज्रं (ज्रम्) उपरि कोष्ठागारे अमोघसिद्धबुद्ध(द्धः) ध्वजराजकूटागारनामा ॥१॥ तत्रैव लयनाकारचैत्यां(त्यो) विराजति. अधः कोष्ठागारोपरि सप्तभुवनप्रमाणतः सप्त-वेदिका तदुपरि कोष्ठागारं तदुपरि चैत्यः कोष्ठागारमध्ये वज्रासनप्रज्ञापारमिता हेमवर्णे(र्णा) कानना षण्मुद्राभरणा चतुर्भुजा. धर्मचक्रमुद्रा जपमाला. प्रज्ञापुस्तक-धारिणी पद्मोपरि कुलिशासना गज्जननी (जगज्जननी) भावनीया ॥ ॥ उपरि कोष्ठागारेऽमिताभबुद्धो ध्यायति ध्यानं पूर्वादृशं(शम्) ॥१॥२॥ त्रितलवेदिकोपरि घंटा(घण्टा)कार चैत्यो विरेजे सर्वलक्षणयुक्तः गर्भकोष्ठे अक्षोभ्यबुद्धो विहरति ॥३॥ त्रितलवेदिकोपरिलयनाकार–**

तेह्र चूडामणि-(तेह्र भूमिका प्रतीक चक्का)-ले सहित, अकनिष्ठ मण्डल (गोलाकार) भएको छ । त्यसमाथि छत्र (छाता), बत्तीस दल-(पात)-ले शोभित कलशचूडामणि (शीर्षस्थ कलश) छ । त्यहाँ बीच कोठामा ध्वजराजनामक बोधिसत्त्व रहेका छन् । यिनी एक मुख, दुई हात, दाहिनेमा ध्वजा, बायाँमा रत्नमाला, मुकुट आदि गहनाले शोभित, मोटा, ललितासनमा बसेका छन् । दुवै बगलमा दाहिनेतर्फ सुवर्णकलश वसुन्धरा (भूमि) प्रमाणको र बायाँतर्फ विश्ववज्र छन् । माथि कोठामा अमोघसिद्धि बुद्ध ध्वजराजकूटागारनामले रहेका छन् ॥१॥ त्यहीं नै लयन आकारको चैत्य छ । तल कोठामाथि सात भुवन प्रमाणले सात वेदी (मण्डप) छन् । त्यसमाथि कोठा त्यसमाथि चैत्य र कोठाको बीचमा वज्रासन प्रज्ञापारमिता छन् । यी देवी सुनको वर्णकी, एकमुखी, छ मुद्राले सजिएकी, चार हात भएकी, धर्मचक्रमुद्रा, जपमाला, प्रज्ञा र पुस्तक लिएकी पद्ममाथि वज्रासनमा बसेकी जगन्माता पूज्य छन् ।

माथि कोठामा अमिताभबुद्ध पहिलेजस्तै ध्यान गर्छन् ॥१॥२॥ तीन तलाका वेदी-(मण्डप)-को माथि घण्टाको आकारको चैत्य शोभित छ जहाँ सबै लक्षणले युक्त बीचको कोठामा अक्षोभ्य बुद्ध विहार गर्दछन् ॥३॥ तीन तलाको वेदीको माथि लयन आकारको–

चैत्यो विला(ल)सति ।। द्वितलवेदिकाकोष्ठे खड्गमंजु(मञ्जु)श्रीर्विराजति. एकास्य(स्यो). द्विभुज(जः). कुं(कुङ्)कुमवर्ण(र्णः). खड्गाभयमुद्राधरः षण्मुद्रालं-(लङ्)कृतः वज्रदृढासनः ।।१।। मध्यलयनकोष्ठागारेऽमिताभ(भो). ध्यानमुद्रां सपिण्डपात्रां(त्रं) दधानो रक्तवर्णा(र्णो) वज्रासनः ।।२।। उपरि गर्भकोष्ठेप्यमिताभ एव ।।३।।४।। पंच(पञ्च)वेदिकोपरि घंठा(घण्टा)कारचैत्योपशोभित(तो). गर्भकोष्ठागारे अक्षोभ्योधितिष्ठति. सपिडं(पिण्ड)मा(पा)त्रां भूमिस्पर्शमुद्रां बिभ्राणः ।।५।। वेदिकोपरि लयनाकारचैत्यं नमामि ।। अधः कोष्ठागारमध्ये अक्षोभ्यस्तथागतो विहरति. उपरि लयनकोष्ठागारेपि अक्षोभ्यबुद्ध एव स्वस्वभावतो निर्मितः ।।६।। प्रज्ञापारमिता सुरेन्द्रनमिता काजेशसंमा(सम्मा)निता ।। तथता विवेकनिपुना(णा) तातथ्यसंवादिनी ।। मायात्मा जगतां प्रसूर्भगवती संबो(सम्बो)धिमुक्तिप्रदा ।। षण्मुद्राभरणो(ज्ज्व)ज्वला करधरा मालां च पुस्तं शुभं(भम्) ।।१।। मंजु(मञ्जु)-श्रीयं(श्रियं) शशधरोज्व(ज्ज्व)लवर्णकांति(कान्ति)मेकाननं मणिविभूषणभूषितांगं-(ताङ्गम्) विद्याप्रदं सकलसिद्धिकरं वरेण्यं तं नौमि बुद्धमुकुटं वरखड्गह–

चैत्य छ । दुई तलाको वेदी-(मण्डप)-को कोठामा खड्गमञ्जुश्री शोभित छन् । यिनी एक मुख, दुई हात, कुङ्कुमजस्तो पीत वर्ण भएका, खड्ग र अभयमुद्रा लिने, छ मुद्राले अलङ्कृत तथा दृढ वज्रासनमा आसीन भएका छन् ।।१।। बीचको लयनाकार कोठामा अमिताभबुद्ध ध्यानमुद्रा-(अवस्था)-मा पिण्डपात्र (भिक्षापात्र) लिएका, राता र वज्रासन गरेका छन् ।।२।। माथि गर्भ (भित्री) कोठामा पनि अमिताभ नै छन् ।।३।।४।। पाँच वेदी-(मण्डप)-को माथि घण्टा आकारको चैत्यले सजिएको भित्री कोठामा पिण्डपात्रसहित भूमिस्पर्शमुद्रामा अक्षोभ्य बुद्ध छन् ।।५।। वेदीमाथि लयन आकारको चैत्यलाई नमस्कार गर्छु ।। तल कोठाको बीचमा अक्षोभ्य-नामक तथागत (बुद्ध) विहार गर्छन् । माथि लयन आकारको कोठामा पनि आफ्नै स्वभावको अक्षोभ्य बुद्ध नै छन् ।।६।।

प्रज्ञापारमिता देवी कस्ती छिन् भने– इन्द्र आदि देवता र ब्रह्मा, विष्णु, महेश्वरले स्तुति गरिएकी, तथ्य-(बोधि)-ज्ञानयुक्त तथा ज्ञानकै कुरा गर्ने, मायास्वरूप, संसारकी जननी,

ज्ञान र मुक्ति दिने, छ मुद्राले अलङ्कृत, उज्ज्वल, माला र पुस्तक लिने आदि विशेषता भएकी छिन् ।।१।। चन्द्रजस्तो उज्ज्वल तेज भएका एक मुख र मणिले सजिएको अङ्ग भएका विद्या दिने, सबै सिद्धि दिने बुद्धहरूमा श्रेष्ठ, वरदमुद्रा र खड्ग हातमा लिएका मन्जुश्री बुद्धलाई नमस्कार गर्छु

**स्तं(स्तम्) ।।१।। श्रीमंत(मन्त)मक्षोभ्यजिनं नमामि भूस्पर्शमुद्रं जलदाभवर्णं(र्णम्) ।। वज्रासनाभेद्यवरप्रदं तं स्थितं स्वरूपावभिरत्यसंज्ञे(ज्ञम्) ।।१।। अमिताभमभिताभं सुखावतीस्थं प्रभुं ध्यानमुद्राधरं(रम्) ।। ध्यानमुद्राधरं शांतं(शान्तं) पद्मपाणिगुरुं जिन(नम्) ।।१।। ।। नमो बुद्धाय ।। ।। पाटलीपुत्रदेशाधिपाशोकराजेन संस्कारितं धान्याराशा(श्या)कृतिं पंच(पञ्च)बुद्धादिसकलदेवदेवीयुतं चिरदेव इत्येवभाषोहृतं ... पाटलीपुत्राधिपतिनाशोकाख्यभूपेनोपगुप्तो भिक्षुरनुज्ञया ।। कोटीशतचैत्य ... क(चैत्यसंस्कारित अशोक)भूते(पे)न सह परिजनेन नेपालमंड(मण्ड)लमागत्य श्रीमंतं(मन्तं) स्वयंभु(यम्भु)वं सन्मा (सम्मानितं दर्शन)-सन्निधाने दक्षिणदिग्भागे पर्वतशिखरे तच्चैत्यं निर्मितमभूत् ।। ।। तस्य पश्चा(श्चात्) ... वर्द्धितः ।। तदार्वी चिरंदेव इति भाषायां ख्यातं(तम्) ।। तत्रत्यानां चैत्यादिमूर्त्तीनां नामानि तत्र पर्वतशिखरोपरिमध्ये बहुरत्नगर्भधान्यराश्याकृतिचैत्यः ।। त्रयोदशभुवनाकारचूडा ... कार स्फटिकमंड(मण्ड)ललोचनद्वय संयु–**

।।१।। भूमिस्पर्श गरेको मुद्रा-(अवस्था)-मा स्थित, मेघको जस्तो श्याम वर्ण भएका, वज्रासनमा रहेका, अभेद्य वर दिने स्वरूपावभिरत्यनामक श्रीमान् अक्षोभ्य बुद्धलाई नमस्कार गर्छु ।।१।। सुखावती-(भुवन)-मा स्थित, ध्यानमुद्रा धारण गर्ने शान्त तथा पद्मपाणिका गुरु अमिताभ बुद्धलाई नमस्कार गर्छु ।।१।। बुद्धलाई नमस्कार । पाटलीपुत्र (पटना) देशका राजा अशोकले संस्कार गरिएका (पूजिएका) धानको राशजस्तै चुलिएका पञ्चबुद्ध आदि सबै देव-देवीले युक्त, भाषामा चिरन्देव भनेर प्रख्यात [बुद्धलाई नमस्कार] । पाटलीपुत्रका मालिक अशोक राजाले आज्ञा गरी उपगुप्तनामक भिक्षु (आए) । एक करोड चैत्यको संस्कार (स्थापना) गर्ने अशोक राजा आफ्ना परिजन-(सेवक)-सहित नेपालमा आएर श्रीमान् स्वयम्भूको सम्मान र दर्शन गरे । नजीकै दक्षिण दिशामा पर्वतको टाकुरामा चैत्य, बन्यो । त्यसको पछाडि [वृक्ष आदि] बढाइए । त्यतिखेर चिरन्देव भनी भाषामा प्रख्यात भयो । त्यहाँ रहेका चैत्य आदि मूर्तिका नाम (हुन्:) ... त्यहाँ पर्वतको टाकुराको बीचमा धेरै रत्न भित्र रहेको, धानको राश-(थुप्रो)-को आकार भएको चैत्य छ । तेह्र भुवनको आकार भएको (चैत्यचूडामणि छ) । फटिकजस्तै गोलो दुई आँखाले

त ध्वजपताकाद्यलं(लङ)कृत स्वयंभू(यम्भू)चैत्यसदृशः कोष्ठागारे वैरोचनभावतः प्रस्तरमयो नैरञ्जनाकारो विराजति तस्य च भावनाध्यानं च तस्यैव तत्कोष्ठो-(ष्ठा)गारस्योपरि नागचुंबि(चुम्बि)तगरुडो मंग(मङ्ग)लशोभार्थं – अधः पार्श्वद्वये व्यात्ता (नन) द्वयं स्तंभ(स्तम्भ)योः समंत(मन्त)भद्रबोधिसत्व(त्व)द्वयं अधो मध्ये वज्रं पार्श्वयोः सिंहद्वयं उपरि आछा(च्छा)दनपटलद्वयं(यम्) ॥ उपरि कलश-चतुष्टयं(यम्) उपरि पर्वतशृंगा(शृङ्गा)कारं(रम्) उपरि कलशचूडामणिः ॥१॥ तद्वामे मध्यभागे अभिरति भुवन भावन कोष्ठागारं स्तंभ(स्तम्भ)तोरणछा(च्छा)दन-चूडामणिललितं कोष्ठमध्ये अक्षोभ्यो विराजति पार्श्वयोर्लोचनादेवीद्वयं स्तंभ(स्तम्भ).योर्वज्रपाणिद्वयं ध्यान पूर्ववत्॥ ॥अभ्यंत(भ्यन्त)रतोरणे गरुडः पार्श्वयोर्मकरद्वयं बाह्योपरितोरणे वैरोचनादयः पंच(पञ्च)बुद्धः अधः पार्श्वयोः पताकाहस्तगरुडद्वयं-(यम्) उपरि आछा(च्छा)दनतलद्वयं तदुपरि शिखराकारे चैत्यचूडामणिः ॥२॥ तद्वामपार्श्वे सुखावतीभुवनाकारकोष्ठागारमध्ये पद्मपाणिबोधिसत्वो(त्वो). ध्यानं पूर्ववत् ॥ पार्श्व–

युक्त, ध्वजा-पताका आदिले सजिएको स्वयम्भू चैत्यजस्तै [अर्को चैत्य पनि छ]। कोठामा वैरोचन बुद्धको भावनाले शिलास्वरूप (ढुङ्गाको) नैरञ्जन (बुद्ध) आकारको (मूर्ति) छ। यिनको भावना (पूजा) र ध्यान (पहिलेजस्तै)। त्यसै कोठाको माथि नागलाई मुखमा राखेका गरुड मङ्गल र शोभाको लागि छन्। तल दुवै बगलमा मुख बाएका [सर्पहरू] छन्। दुई खम्बामा समन्तभद्र र बोधिसत्त्वनामक दुई बुद्ध छन्। तल बीचमा वज्र, दुई बगलमा दुई सिंह र माथि दुई चँदुवा छन्। माथि चार कलश, त्यसमाथि चुच्चिएको पर्वतको आकार र माथि चूडामणि कलश छ ॥१॥ बायाँतर्फ बीचमा अभिरतिभुवन-(बुद्ध)-को पूजा गरिने कोठा, खम्वा, चँदुवा, तोरण आदिले सुन्दर छ। कोठाको बीचमा अक्षोभ्य बुद्ध छन्। दुवै बगलमा दुई लोचनादेवी छन्। दुवै खम्बामा दुई वज्रपाणि (बुद्ध) छन्। ध्यान पहिलेजस्तै भित्री तोरण-(चँदुवा)-मा गरुड, दुवै बगलमा दुई गोही, बाहिर माथि तोरण-(दलिन)-मा वैरोचन

आदि पाँच बुद्ध, तल दुवै बगलमा हातमा पताका लिएका दुई गरुड, माथि दुई तला, त्यसमाथि शिखर (चुच्चो) आकारमा चूणामणि चैत्य छन् ॥२॥ बायाँ बगलमा सुखावती भुवनको आकार भएको कोठाको बीचमा पद्मपाणिनामक बोधिसत्त्व छन् । ध्यान पहिलेजस्तै ।

**यो(योः) स्तंभ(स्तम्भ)योश्चामरकमलधारिणौ भक्तजनौ ।। तोरणे बुद्धधर्मसंघाः (सङ्घाः) ।। पार्श्वयोर्मकरद्वयं(यम्) ।। आसनाधो(धः) पंच(पञ्च)चक्रं(क्रम्) ।। पार्श्वयोर्गजौ ।। पार्श्वयोः सिंहौ ।।३।। आग्नेयकोणे शंखा(शङ्खा)र्घकारी नानालंका-(लङ्का)रशोभी पक्षपुछ(च्छ)धारी वैनतेयः ।।४।। तद्दक्षे कोष्ठागारं स्तंभ(स्तम्भ)-तोरणद्विपटलाछा(च्छा)दनचैत्यचूडामणिसंयुक्तं(क्तम्) अधोभागे वज्रपद्मं च मध्ये तारादेवी विराजति. सपद्मवरदाभयमुद्राधर-द्विभुजा ।।५।। ईशाण(न)कोणभागे शंखा(शङ्खा)र्घकारी नानालंका(लङ्का)रशोभीपक्षपुछ(च्छ)धारी वैनतेयः ।।६।। तद्वामे कोष्ठागार(रं) स्तंभ(स्तम्भ)तोरणद्विपटलाछा(च्छा)दनचैत्यचूडामणि-संयुक्तं(क्तम्) ।। अधोभागे वज्रपद्मं च मध्ये तारादेवी विराजित सपद्मवरदाभय-मुद्राधरद्विभुजा ।।७।। तस्मिन्नेव पूर्वदिग्भागे अधोवेदिकायां सोपानपरंप(रम्प)रायाः पार्श्वयोः दक्षे खड्गमहाकालो विहरति. एकास्यो बुद्बुदाकार(रः) त्रिनेत्रः पिंग-(पिङ्ग)लोर्ध्वकेशो लल(लोल)जिह्वो दंष्ट्राकराली नानालंका(लङ्का)रोज्व(ज्ज्व)-ल(लः) कालवर्णो व्याघ्रचर्मांव(र्म्मम्ब)रः खड्गां(ड्गाङ्)कुशघंटा(घण्टा)पाशधृक् चतुःकर (रः) व–**

बगलका दुई स्तम्भमा चामर र कमल लिएका दुई भक्त छन् । तोरणमा बुद्ध, धर्म र सङ्घ छन् । दुवै बगलमा दुई गोही छन् । आसनमनि पद्मचक्र छ । दुवै बगलमा दुई हात्ती छन् । दुवै बगलमा दुई सिंह छन् ।।३।। आग्नेय कुनामा शङ्ख र अर्घ (पूजा) गर्ने, धेरै अलङ्कारले शोभित, पखेटा र पुच्छर भएका गरुड छन् ।।४।। त्यसको दाहिनेतर्फ खम्बा, तोरण, दुई चँदुवा र चैत्य भएको कोठा छ । तल वज्र र पद्म छ । बीचमा पद्मसहित वरदमुद्रा र अभयमुद्रा लिएकी, दुई हात भएकी तारादेवी छिन् ।।५।। ईशान कुनामा शङ्ख र अर्घ (पूजा) गर्ने धेरै अलङ्कारले शोभित, पखेटा र पुच्छर भएका गरुड छन् ।।६।। त्यसको बायाँतर्फ खम्बा, तोरण, दुई चँदुवाले युक्त चैत्य भएको कोठा छ । तल वज्र र पद्म छन् । बीचमा पद्मसहित वरद र अभयमुद्रा लिएकी, दुई हात भएकी तारादेवी छिन् । त्यहीं नै पूर्व दिशामा तलको वेदीमा सोपान-(सिंढी)-को बगलमा दाहिनेतर्फ एक मुख, बुद्बुद (सानो) आकार तीन आँखा, कैलो ठडिएको केश, चञ्चल जिभ्रो, डरलाग्दो दाह्रा, धेरै अलङ्कारले उज्ज्वल काल-(यम)-को जस्तो वर्ण भएका बाघको छाला लगाउने, खड्ग, अङ्कुश, घण्टा र पासो लिएका, चार हात भएका खड्गमहाकाल विहार गर्छन् ।

ज्रांकि(ज्राङ्कि)तपद्मासनः ॥८॥ वामे वज्रमहाकालः ॥ वज्रेषुचापघंठा(घण्टा)-भृत् सर्वमन्यत् पूर्ववत्॥९॥तदग्रभागे वज्रांकि(ज्राङ्कि)तकोष्ठाका(गा)रद्वयं तत्पार्श्वयो(योः) हस्तिद्वयमाधोरणारूढं(ढम्) ॥१०॥११॥ तद्दक्षभागे भक्ती(क्त) भक्तिनीद्वयपरिवृतः ॥१२॥ तद्दक्षे कोष्ठागारत्रयं(यम्)॥मध्यकोष्ठे अक्षोभ्य(भ्यो) भूमिस्पर्शमुद्री उपर्यक्षोभ्यः ॥१३॥१४॥ वामे प्रज्ञापारमिता धर्मचक्रमुद्रा मालापुस्तकधारिणी ॥१५॥ दक्षे पद्मपाणिसंघ(सङ्घ): वरदमुद्रापद्मधारी॥१६॥वामभागे प्रस्तरस्तंभ(स्तम्भ)ग्रथिता कंसनिर्मिता महती घण्ठ(ण्टा) अाछा(च्छा)दनोपरि चैत्य. पार्श्वयो(योः) कलशौ तत्रैव शिला संवत्सरपत्रिका ॥ तत्पार्श्वयोर्भक्तजनत्रयं कृताञ्जलिपुटं तिष्ठति॥१७॥१८॥१९॥महाकालयोर्मध्यभागे धर्म्मधातुमंड-(मण्ड)लं प्रस्तरीयं(यम्) अष्टमंग(मङ्ग)लावृतं(तम्) ॥२०॥ तदग्रेलंबा-(लम्बा)यमानयूपोपरि सिंहो निर्मी (निर्मितः) सिंहध्वज इति ॥२१॥ यूपस्याधोभागे भक्तजनत्रयं सांज(साञ्ज)लि व्यतिष्ठतः (ति) ॥२२॥२३॥२४॥ तत्रापि महती घंठै(घण्टै)का ॥ ॥ तत्रैव सोपानपरंप(रम्प)रायाः पार्श्वयोः सिंहद्वयं तिष्ठताः (ति) ॥२५॥२६॥ वा–

यी खड्गमहाकाल वज्रसहित पद्मको आसनमा छन् ॥८॥ बायाँतर्फ वज्रमहाकाल छन् जसले वज्र, बाण, चाप र घण्टा धारण गरेका छन्, अरू पहिलेजस्तै ॥९॥ त्यसको अगाडि वज्रले अङ्कित दुई कोठा छन् । त्यसका दुई बगलमा माहुते चढेका दुई हात्ती छन् ॥१०-११॥ त्यसको दाहिनेतर्फ भक्त र भक्तिनीहरू छन् ॥१२॥ त्यसको दाहिनेतर्फ तीन कोठा छन् । बीच कोठामा र माथि पनि भूमिस्पर्शमुद्रा भएका अक्षोभ्य बुद्ध छन् ॥१३-१४॥ बायाँतर्फ माला र पुस्तक लिने धर्मचक्रमुद्रा धारण गर्ने प्रज्ञापारमिता छिन् ॥१५॥ दाहिनेतर्फ वरदमुद्रा र पद्म लिएका पद्मपाणिनामक सङ्घ छन् ॥१६॥ बायाँतर्फ ढुङ्गाको खम्बामा अल्झाइएको, कांसले बनाइएको ठूलो घण्ट छ । चँदुवामाथि चैत्य छन् । दुवै बगलमा दुई कलश छन् । त्यहीं नै शिला (पत्थर) र संवत्सर-पत्रिका (पात्रो) छ । त्यसका दुई बगलमा हात जोडेका तीन भक्त छन् ॥१७-१९॥ दुई महाकाल-(खड्गमहाकाल र वज्रमहाकाल)-बीच अष्टमङ्गलले वेष्टित प्रस्तर-

(ढुङ्गा)-को धर्मधातु-मण्डल (मूर्ति) छ ।।२०।। त्यसमाथि लामो मौलो-(खाँबो)-मा सिंहध्वजनामक सिंह छ ।।२१।। मौलाको तल हात जोडेका तीन भक्त छन् ।।२२-२४।। त्यहाँ पनि ठूलो एउटा घण्ट छ । त्यहीं नै सोपान-(सिंढी)-का दुई बगलमा दुई सिंह छन् ।।२५-२६।।

**मपार्श्वकोणभागे घंठै(घण्टै)का महती प्रस्तरस्तंभ(स्तम्भ)सहिता. मध्ये उपरि चैत्यं(त्यः) चूडामण्याकारो(रः) पार्श्वयोः कलशद्वयं तत्रैव प्रस्तरवेदिकोपरि प्रस्तारं-(प्रास्तरं) मंड(मण्ड)लद्वयं एकं वसुंध(सुन्ध)रामंड(मण्ड)लं कलशचिह्न(ह्नम्) एकं वज्रधातुमंड(मण्ड)लं वज्रचिह्नमात्रं(त्रम्) ।। २७ ।। २८ ।। घण्टाधोभागे भक्तजनः सांज(साञ्ज)नः कृतांज(ताञ्ज)लिपुटः पुत्रपुत्रीसहितः ।।२९।।३०।।३१।। इत्येतत् पूर्वपट्टिकायां(याम्) ।। ।। दक्षिणपट्टिकायां दक्षिणस्यां(दक्षिणे) मध्यभागे कोष्ठागारे अभ्यंत(भ्यन्त)रे नागद्वयचुंब(चुम्ब)नक(ग)रुडमकरद्वयसुंद(सुन्द)र-तोरणस्तंभ(स्तम्भ)संयुते रत्नावतीभुवनस्वरूपै (पे) रत्नसंभ(सम्भ)वध्यानी बुद्धो विहरति वरदमुद्राधृक् लक्षण व्यंज(व्यञ्ज)नपरिपूर्णो रत्नो ज्व(ज्ज्व)लगात्रयस्ति-(ष्टि)र्वज्रासनः पार्श्वद्वये वरदाभयमुद्राधरद्विभुजैकवक्त्रा नानालंका(लङ्का)रो ज्व(ज्ज्व)ला वज्रासना ताराद्वयं विलसति. तद्बहिरुपरितोरणे रत्नसंभ(सम्भ)-वादयः पंच(पञ्च)बुद्धाः शुशुभिरे तत्स्तंभ(स्तम्भ)योर्गरुडांकि(ङ्कि)तयो रत्नपाणि(णिः) रत्नपाणिबोधिसत्व(त्त्व)द्वयं विरराज तदुपरि आछा(च्छा)दनपट-लाञ्छनद्वयं मध्ये रत्नसंभ(सम्भ)वमूर्त्ति(र्तिः). तदुपरि वेदिकामध्ये अमिताभबुद्धो विहरति--**

बायाँ बगलको कुनामा ढुङ्गाको खम्बामा ठूलो घण्ट छ । बीचमा माथि चूडामणि आकारको चैत्य छ । दुवै बगलमा दुई कलश छन् । त्यहीं नै ढुङ्गाको वेदी-(मण्डप)-को माथि ढुङ्गाका दुई मण्डल कलशचिह्न भएको वसुन्धरामण्डल र वज्रचिह्न भएको वज्रधातुमण्डल छन् ।।२७-२८।। घण्टको तल्लो भागमा गाजल लगाएका, हात जोडेका, छोराछोरीसहितका भक्तहरू छन् ।।२९-३१।। यी सबै पूर्वपट्टि-(पूर्वी भाग)-का वर्णन हुन् ।

दक्षिणपट्टि-(दक्षिणी भाग)-को पनि दक्षिण दिशामा बीच भागमा दुई नाग मुखमा हालेका गरुड, दुई गोही र सुन्दर तोरणले युक्त तथा रत्नावती-भुवनस्वरूप भएको भित्री कोठामा वरदमुद्रा लिएका, सबै लक्षणले पूर्ण, रत्नजस्तै उज्ज्वल शरीर भएका, वज्रासनमा रहेका रत्नसम्भवध्यानी नामका बुद्ध विहार गर्छन् । दुई बगलमा वरद र अभयमुद्रा लिएका, दुई हात र एक मुख भएका धेरै अलङ्कारले सजिएका वज्रासनमा रहेका दुई तारा छन् । त्यसबाहिर माथि तोरण-(पाली)-मा रत्नसम्भव आदि पाँच बुद्ध शोभित छन् । त्यहीं गरुड अङ्कित भएको दुई खम्बामा रत्नपाणि र बोधिसत्त्व नामका दुईजना छन् । बीचमा रत्नसम्भवमूर्ति र त्यसमाथि वेदीको बीचमा अमिताभ बुद्ध विहार गर्दछन् ।

पार्श्वयोः कलशद्वयं लक्षतः उपरि घंटा(घण्टा)कार(रः). उपरि चैत्यचूडामणिः ॥१॥ तदधो वेदिकायां निःश्रेणी. पार्श्वयोः घंटावलंबि(घण्टावलम्बि)तगलसिंहद्वयं-(यम्) ॥२॥ मध्ये पिंड(पिण्ड)पात्राकारं मंड(मण्ड)लं पार्श्वयोः आर्यताराद्वयं राजते. एकवक्त्रं श्वेतवर्णं कमलनयनयुगलं नानालंका(लङ्का)रशोभितं. समुत्तुंग-(त्तुङ्ग)कुचद्वयं सकमलाभयमुद्रावामकर(रं) हृदयं ससरसिजजानुप्रदेशे वरदमुद्राधर-दक्षभुजं पद्मोपरि वज्रासनं(नम्) ॥ ॥ पश्चिमायां पट्टिकायां पश्चिमायां दिशि मध्यभागे कोष्ठागारे अभ्यंत(भ्यन्त)रे नागद्वयगिलितगरुडमकरयुगललांछि(लाञ्छि)-तस्तंभ(स्तम्भ)युगशोभिते सुखावतीभुवनस्वरूपे अमिताभो विजहार. ध्यानी बुद्धः एकास्यो द्वय(द्व्य)क्षोमिताभिरामाभिज्व(ज्ज्व)लितदिगन्तरालः सकललक्षण व्यंज-(व्यञ्ज)नालं(लङ्)कृतगात्रायवीध्यानमुद्राधरपाणितल पद्मोपरि वज्रासन(नः) तद्बहिस्तोरणे मुकुटाकारे अमिताभ(भा)दयः पंच(पञ्च) बुद्धा विहरंति(रन्ति) स्वस्वरूपधारिणः तदधः पार्श्वयोः फणालं(लङ्)कृतं कमलोपढो(ढौ)कितं नागिनीद्वयं तत्स्तंभ(स्तम्भ)- योर्वरदकमलहस्तमनेका–

दुई बगलमा दुई कलश छन् । माथि घण्टाकार र माथि चूडामणि चैत्य छन् ॥१॥ त्यसमुनि वेदीमा निःश्रेणी (?) छन् । दुई बगलमा गलामा घण्टी लम्बिएका (बाँधिएका) दुई सिंह छन् ॥२॥ बीचमा पिण्डपात्रको आकारको मण्डल छ । दुई बगलमा एक मुख, सेतो वर्ण र कमल-जस्ता आँखाका जोडी भएका धेरै गहनाले सजिएका उन्नत दुई स्तन भएका, कमलसहित अभयमुद्रा लिएका बायाँ हात हृदयमा राखेका, कमलसहित घुँडाको माथि वरदमुद्रा लिएका दाहिने हात राखेका, कमलमाथि वज्रासनमा रहेका दुई आर्यतारा छन् ॥

पश्चिमपट्टि-(पश्चित भाग)-को पश्चिम दिशामा बीचमा दुई नाग निल्दै गरेका गरुड र दुई गोही अङ्कित (चित्रित) भएको दुई खम्बाले शोभित र सुखावतीभुवनस्वरूप भएको कोठामा अमिताभ बुद्ध विहार गर्दथे । यी ध्यानी बुद्ध एक मुख भएका, दुई आँखा भएका, धेरै किरणहरूले चारैतिर उज्ज्वल गराएका, सबै लक्षण र व्यञ्जनले सजिएको शरीर भएका,

हात ध्यानमुद्रामा राखेका, कमलमाथि वज्रासनमा रहेका छन् । यसबाहिर मुकुट आकार भएको तोरणमा अमिताभ आदि पाँच बुद्ध आ-आफ्नो स्वरूपमा विहार गर्छन् । यसमुनि दुवै बगलमा फणा भएका र कमलले शोभित दुई नागिनी छन् । त्यसका दुई खम्बामा हातमा वरदमुद्रा र कमल लिएका

लंका(लङ्का)रोज्व(ज्ज्व)लं पद्मपाणिबोधिसत्व(त्त्व)द्वयं तदधस्तलपार्श्वयोर्नृत्यन्मयूरवाहनद्वयं तन्मध्ये विश्वपद्मासनं(नम्) ।।१।। तत्पार्श्वयोः अर्धशंख(शङ्ख)धारिनानालंका(लङ्का)रशोभितांगं(ताङ्गं) पक्षपुछ(च्छ)शोभितं वैनतेययुगलं शोभतितरां(राम्) ।।२।।३।। तत्पार्श्वयोः घंटा(घण्टा)कारचूडामणि. कलशलांछि-(लाञ्छि)तपटलद्वयाछा(च्छा)दित सर्पराजचे(वे)ष्टितवेदिकात्रयं(य)शोभिकोष्ठागारद्वयं(यम्) ।। तन्मध्ये ताराद्वयं विहरति. हृदयसकमलाभयमुद्रा. वामकरजानुप्रदेशे. सकमलवरदमुद्रादक्षभुजं रत्नोज्व(ज्ज्व)लमुकुटाद्यनेकालंका(लङ्का)रोज्व(ज्ज्व)लं सम(मु)त्तुंग(त्तुङ्ग)कुचाद्रि ललितासनललितं(तम्) ।।४।।५।। अधो वेदिकायां निःश्रेणीपरंप(रम्प)रायाः पार्श्वयोः सिंहद्वयं घंटा(घण्टा)नादितगलं ऊर्ध्वपिंग-(पिङ्ग)लकेशं चतुःपदं भीमं. दंष्ट्रोत्कटव्यात्तमुखं वेदिकाचतुरस्रोपरि चतुःपदसमाक्रांतं(क्रान्तम्) ।।६।।७।। उत्तरायां पट्टिकायां (याम्) उत्तरस्यां दिशि मध्यभागे कोष्ठागाराभ्यंत(भ्यन्त)रे नाद्व(ग)द्वयोद्गिलितगरुडार्धशंख(शङ्ख)धारिफणिमानि-(मणि) लांछि(लाञ्छि)तव्यात्ताननमकरद्वयांकि(याङ्कि)तस्तंभो(स्तम्भो)पशोभिते अमोघवतीभुवनाकारे अ–

धेरै अलङ्कारले चम्केका पद्मपाणि र बोधिसत्त्वमुनि दुवै बगलमा नाच्दै गरेका वाहनस्वरूप दुई मयूर छन् र बीचमा विश्वपद्मको आसन छ ।।१।। त्यसका दुवै बगलमा अर्घ र शङ्ख धारण गर्ने, धेरै गहनाले अङ्ग सजिएका, पखेटा र पुच्छर भएका दुई गरुड शोभित छन् ।।२-३।। त्यसका दुवै बगलमा घण्ट आकारको चूडामणि भएको, कलश चित्रित भएको चँदुवाले बेरिएको तीन वेदीले शोभित दुई कोठा छन् । त्यसको बीचमा दुई तारा विहार गर्छन् । यी दुई ताराहरू हृदयमा कमलसहित अभयमुद्रा धारण गरेका छन् । बायाँ हात घुँडामा अडचाएका र दाहिने हातले कमलसहित वरदमुद्रा लिएका, रत्नले उज्ज्वल मुकुट आदि अनेक अलङ्कारले सजिएका उँचा स्तनपर्वत (स्तन) भएका र राम्रो आसनमा बसेका छन् ।।४-५।। तल वेदीमा खण्डहीन सिँढीका दुवै बगलमा गलामा घण्टी बाँधेका, ठडिएको कैलो केश भएका, चार पाउ भएका, डरलाग्दा, उत्कट दाह्रा र बाएको मुख भएका, अनि वेदीको चारै कुनामा चारै पाउ फैलाएका दुई सिंह छन् ।।६-७।। उत्तरतर्फ उत्तर दिशामा बीचका, दुई नाग निल्न खोज्ने गरुड र अर्घ, शङ्ख लिएका, सर्पको मणिले शोभित तथा मुख बाएका दुई गोही चिह्नित खम्बाले शोभित एवं अमोघवतीभुवनको आकार भएको कोठामा

मोघ(अमोघ)सिद्धनामा ध्यानी बुद्धो विरराज सप्तफणिफणामणिरंजि(रञ्जि)तदिगंत(गन्त)राल: एकानन: सजलजलदवर्णो द्वात्रिंशल्लक्षणाशीतिव्यंज(व्यञ्ज)नालं-(लङ)कृतगात्रावयव: कमलध्यानन‌यनयुगलउत्तरासंगी(सङ्गी) काषायचीवरनिवसति हृत्प्रदेशेभयमुद्रादक्षकर: वज्रासनोपरि चरणकमले ध्यानमुद्राधरोत्तानवामकर: कमलोपरि वज्रासन: ॥ ॥ तद्बहिरुपरि अमोघसिद्धादिपंच(पञ्च)बुद्धसंशोभितार्घशंख(शङ्ख)करद्वयफणिमणिसमलं(लङ)कृतनागद्वयसंयुततोरणं विलसति. तदध: स्तंभ(स्तम्भ)योर्विश्वपाणिबोधिसत्व(त्त्व)द्वयं विश्ववज्रकमलधारिपाणिद्वयं विहरति ॥१॥ तदधो वेदिकायां पक्षोत्सारितमुड्डीयमानं गरुडद्वयं विराजति ॥ तन्मध्ये आसनाध: आश्लेषमानं परस्परसंमु(सम्मु)खायमानं सर्पद्वयं शोभति ॥ तदुपरि आछा(च्छा)दनपालद्वयं. तदुपरि पार्श्वयो: कलशद्वयं मध्ये वज्रसत्वो(त्त्वो) ध्यानी बुद्ध: तदुपरि घंटा(घण्टा)कारस्योपरि धान्यराश्याकृतिचैत्यचूडामणि: तत्कोष्ठागाराग्रत: चतुरस्राकारिसर्वद्वयपरिवेष्टितद्वादशदलपद्माकारमंडलं(मण्डलम्) ॥६॥ तद्वामे वेदिकातोरणाकारा:

अमोघसिद्धिनामक ध्यानी बुद्ध विराजमान (शोभित) छन् । यी ध्यानी बुद्ध सात सर्पका फणाको मणिले चारै दिशा उज्यालो पारेका, एक मुख भएका, पानीसहितको बादलको जस्तै श्याम वर्ण भएका, बत्तीस लक्षण र असी व्यञ्जनले सजिएको शरीर भएका, कमलको ध्यानमा दुई आँखा लगाएका, उत्तरमुख गरेका, गेरुवा वस्त्र लगाएका, अभयमुद्रा लिएको दाहिने हात हृदयमा राखेका, वज्रासनमाथि चरणकमल (पाउ) राखेका, ध्यानमुद्रा लिएका, बायाँ हात उत्तानो पारेका तथा कमलमाथि वज्रासनमा बनेका छन् । त्यसबाहिर माथिको तोरण पनि

अमोघसिद्धि आदि पाँच बुद्ध अङ्कित भएको र अर्घ-शङ्ख दुई हातमा लिएका सर्पको मणिले उज्ज्वल दुई नागले शोभित भएको छ । त्यसमुनि दुई खम्बामा विश्ववज्र र कमल दुई हातमा लिएका विश्वपाणि र बोधिसत्त्व नामका दुई बुद्ध विहार गर्छन् ॥१॥ त्यसमुनि वेदीमा पखेटा फटफटाएर उड्न लागेका दुई गरुड शोभित छन् । त्यसको बीचमा आसनमुनि बेरिएर परस्पर मुख हेराहेर गरेका दुई सर्प शोभित छन् । त्यसमाथि दुई चँदुवा छन् । त्यसमाथि दुवै बगलमा दुई कलश छन् । बीचमा वज्रसत्त्वनामक ध्यानी बुद्ध छन् । त्यसमाथि घण्टाकारमाथि धानको रास-(थुप्रो)-जस्तै चुलिएको चैत्य(चूडामणि) छ । त्यस कोठाको अगाडि चारकुने आकारका दुई सर्पले बेरिएको बाह्रपाते पद्मको आकार भएको मण्डल (मण्डप) छ ॥६॥ त्यसको बायाँतर्फ तोरण (चँदुवा, चारपाटे) आकारका वेदी छन् ॥७॥

॥७॥ तद्वेदिकानिःश्रेणीपार्श्वयोः वेदिकायां सिंहद्वयं गलनादितघंटं(घण्टं) तिष्ठति ॥४॥५॥ ततः पूर्वदिग्भागवेदिकायां(याम्) आग्नेयकोणभागे एको महान् चैत्यो (लयनाकारः चैत्यो) विराजति ॥ तस्य चैत्यस्य पूर्वस्यां दिशि तोरणांकि(णाङ्कि)-तपटलाछा(च्छा)दितचैत्याकारचूडामणिशोभितकोष्ठागारमध्ये अक्षोभ्यस्तिष्ठति भूमिस्पर्शमुद्राधरः ॥१॥ दक्षिणस्यामपि तादृशे कोष्ठागारे रत्नसंभ(सम्भ)वनामा बुद्धो वरदमुद्राधरः ॥२॥ पश्चिमायां दिशी(शि) कोष्ठागारे तादृश्येव अमिताभबुद्धो ध्यानमुद्राधरो विहरति ॥३॥ उत्तरस्यां कोष्ठागारे अमोघसिद्धो(द्धः) अभयमुद्राधरः फणिमणिसमलं(लङ)कृतो राजति ॥४॥ तस्यामेव वेदिकायां(याम्) ईशानकोणभागे तादृगेव लयनाकारचैत्यो विजहार(रः) ॥ पूर्वदक्षिणपश्चिमोत्तरेषु कोष्ठागारेषु चत्वारो(रः) अक्षोभ्यादयो रत्नसंभ(सम्भ)वामिताभामोघसिद्धा विलसंति(सन्ति) ॥१॥२॥३॥४॥ दक्षिणस्यां वेदिकायां नैर्ऋत्यकोणभागे तादृश्येव लयनाकारचैत्य-कोष्ठागारे अमिताभबुद्धो विराजति अमिताभामोघसिद्ध(द्धि)रत्नसंभ(सम्भ)वाक्षो--भ्यास्तथागताश्चतुर्दिक्षु विलसंति(सन्ति) ॥१॥

त्यस वेदीको तहका दुई बगलमा वेदीमा नै गलामा घण्टी बाँधिएका दुई सिंह रहन्छन् ॥४-५॥ त्यसपछि पूर्व दिशाको वेदीमा आग्नेय कोण-(कुना)-तर्फ एउटा ठूलो चैत्य शोभित छ । त्यस चैत्यको पूर्व दिशामा तोरण अङ्कित भएको चँदुवाले ढाकिएको चैत्य आकारको चूडामणिले शोभित कोठाको बीचमा भूमिस्पर्शमुद्रा लिएका अक्षोभ्य बुद्ध रहन्छन् ॥१॥ दक्षिणतर्फ पनि

यस्तै कोठामा वरदमुद्रा लिएका रत्नसम्भव बुद्ध छन् ।।२।। पश्चिम दिशाको त्यस्तै कोठामा ध्यानमुद्रा लिएका अमिताभ बुद्ध विहार गर्छन् ।।३।। उत्तरतर्फको कोठामा अभयमुद्रा लिएका, सर्पको मणिले शोभित अमोघसिद्धि बुद्ध रहन्छन् ।।४।। त्यसै वेदीमा ईशानकोणतर्फ त्यस्तै लयन आकारको चैत्य विहार गर्छन् । पूर्व, दक्षिण, पश्चिम र उत्तरका कोठाहरूमा अक्षोभ्य, रत्नसम्भव, अमिताभ र अमोघसिद्धि नामका चार बुद्ध रहन्छन् ।।१-४।। दक्षिण वेदीमा नैऋत्य कोणतर्फ त्यस्तै लयन आकारको चैत्य भएको कोठामा अमिताभ बुद्ध छन् । अमिताभ, अमोघसिद्धि, रत्नसम्भव र अक्षोभ्य नामका चार तथागत (बुद्ध) चारै दिशामा शोभित छन् ।।१-४।।

धर्म :

॥३६॥

॥२॥३॥४॥ पश्चिमायां वेदिकायां वायव्यकोणभागे तादृश्येव लयनाकारचैत्यमध्य-कोष्ठागारचतुःकोष्ठागारेषु अमिताभामोघसिद्धरत्नसंभ(सम्भ)वाक्षोभ्या विलसंति-(सन्ति) ॥१॥२॥३॥४॥ तेषां चतुर्णामपि ध्यानादिकं पूर्ववत् ॥ ॥ काष्ठमण्डपा-दाग्नेयकोणभागे देवपात(पत्त)न इति नामा देशो वर्वत्ति(वरीवर्ति) ॥ यत्र वाग्म-(ङम)तीति(ती)रे पशुपतिस्थले मृगस्थलीति विश्रुता. यत्र च पशुपक्ष्यादय. शिवलिग-(लिङ्गाः) बहवो विलसंति(सन्ति) ॥ तत्र देशाभ्यंत(भ्यन्त)रे निर्मिताश्चैत्य-भट्टारका बहवो विरेजुः ॥ कस्मिंश्चित्प्रदेशे लयनचैत्यो निर्मितोस्ति ॥ तल्लक्षणं(णम्) ॥ त्रितलवेदिकोपरि द्वितललयनं तदुपरि घंटा(घण्टा)कारश्चैत्यो राजति ॥ तन्मध्ये वेदिकामध्यकोष्ठे अक्षोभ्यस्तथागतो विहरति. पूर्वदिशि तदुपरि लयनकोष्ठे अक्षोभ्ये(भ्यो) बुद्धः ॥ गर्भकोष्ठेपि अक्षोभ्य एव विहरति ॥ ॥ तथैवान्यत्र लयनाकारश्चैत्यः ॥ अधः कोष्ठाभ्यंत(भ्यन्त)रे गरुडांकि(डाङ्कि)तस्तं-भा(स्तम्भा)दिशोभिते ॥ वसुंध(सुन्ध)रादेवी विजयते ॥ ध्यानं(नम्) ॥ एकवक्त्रं(क्त्रा) ॥ पीतवर्ण(र्णा). वज्रधरसागरति(नि)र्घोबे(षे)श्वरराजनाम-तथागतमुकुटा रत्नालंका(लङ्का)रोपशोभिता. षट्करः (रा) दक्ष–

पश्चिम वेदीमा वायव्य कोणतर्फ त्यस्तै लयन आकारको चैत्य रहेको कोठाको चारै कुनामा अमिताभ, अमोघसिद्धि, रत्नसम्भव र अक्षोभ्य बुद्ध शोभित छन् ॥१-४॥ ती चारै बुद्धको ध्यान आदि पहिलेजस्तै ।

काष्ठमण्डपदेखि आग्नेय कोण-(दिशा)-मा देवपाटन (देवेपत्तन) नामक ठाउँ छ । जहाँ बाग्मती नदीको तीरमा, पशुपतिनाथको स्थलमा (क्षेत्रमा) मृगस्थली नाउँले प्रसिद्ध ठाउँ छ । जहाँ पशुपक्षी आदि र धेरै शिवलिङ्गहरू पनि छन् । त्यहाँ बीच-बीचमा बनेका धेरै चैत्य पनि छन् । कुनै ठाउँमा लयन चैत्य बनेको छ । त्यसको लक्षण हो– तीनतले वेदी-(मण्डप)-को

दुईतले लयन (विश्रामस्थल) छ, त्यसमाथि घण्ट आकारको चैत्य छ । त्यसको बीचमा वेदीको मध्यभागमा अक्षोभ्य बुद्ध विहार गर्छन् । पूर्व दिशामा त्यसमाथि लयन कोठामा अक्षोभ्य बुद्ध छन् । गर्भ (भित्री) कोठामा पनि अक्षोभ्य नै विहार गर्छन् । त्यस्तै अरू ठाउँमा पनि लयन आकारको चैत्य छ । तल गरुड आदि अङ्कित खम्बा आदिले सजिएको कोठामा वसुन्धरादेवी छन् । यिनको ध्यान हो– एक मुख भएकी, पहेँलो वर्णकी, वज्रधारण गर्ने तथा समुद्रको जस्तै गम्भीर आवाज भएका ईश्वरराज नामका बुद्ध शिरमा राखेकी (पूजा गर्ने), रत्न र अलङ्कारले शोभित, छ हात भएकी

**त्रयेण वरदरत्ननमस्कारमुद्रां दधाना ।। वामत्रयेण······सहस्रभुजलोकेश्वर(रः) ।। शशधरहिमरजत निकाशमूर्त्तौ लिखितानि मुखानि ।। एकादशप्रमाणं तु पंच(पञ्च)-शतानि. कुत्रचित् सहस्रं मुखानां वर्णपंच(पञ्च) वर्णमेव. श्वेतं. नीलं. पीतं. रक्तं. श्यामं. क्रमतो मिलित्वा भुजानां सहस्रं लिखितानि तु. अष्टोत्तरशतं तत्रापि अष्टौ मुख्यानि मूलसव्यवामाभ्यां कृतांज(ताञ्ज)लिमुद्रा द्वितीये जपमालापुस्तके तृतीये वरदकमले चतुर्थे चक्रधनुषी षण्मुद्रालं(लङ)कृतनानारत्नमालापीतपट्टा कमलाजिनो-परि न्यस्तपादः अथ च यावेति आयुधवस्तूनि तानि तद्धस्तेषु विलसंति(सन्ति). रोमविवरोद्गततेजपुंज(पुञ्जः) प्रकाशितदिगन्तरालज्वालमालाप्राकारोवृतः अयं सहस्रभुजः पद्मपाणिरेव स तु द्विभुज. एकमुख. एकमुखादारभ्य सहस्रमुखपर्यंत(र्यन्तं) द्विभुजादारभ्य सहस्रभुजपर्यंत(र्यन्तं). तस्य धान्यं (ध्यानं) महिमा च यितुं (भावयितुं) लिखितुं कथितुं चतुर्मुखो ब्रह्मा चतुर्भिर्मुखैश्चतुर्युगांतं(गान्तं) निरवशेषं त (न) शक्यते. किमु ।।१।। प्रज्ञापारमिता ।। श्वेता. षण्मुद्रा. एकमुखी धर्मचक्रमुद्रा जपमाला–**

दाहिनेतर्फ तीन हातले वरद मुद्रा, रत्न र नमस्कार मुद्रा लिएकी बायाँतर्फ तीन हातले ··· लिएकी (उक्त देवीको ध्यान गर्छु) । सहस्रभुज नामका अथवा हजार हात भएका लोकेश्वर बुद्धको चर्चा गरौं । चन्द्रमा, हिउँ, चाँदीजस्तै सेतो मूर्तिमा मुखहरू लेखिएका छन् । यी मुखहरू कहीं एघार, कहीं पाँच सय कहीं हजार (मानिएका छन्) । मुखहरू पाँच किसिमका रङ्गका छन्– सेतो, नीलो, पहेँलो, रातो र श्यामवर्ण । क्रमैले मिलेर हजार हातहरू छन् (कहीं) एक सय आठको पनि चर्चा पाइन्छ । त्यहाँ पनि आठ मुख्य छन् । दायाँ र बाय

दुवैतर्फका पहिला दुई हातले अञ्जलि जोडेका, दोस्रा दुई हातले जपमाला र पुस्तक लिएका, तेस्रा दुई हातले वरदमुद्रा र कमल लिएका, चौथा दुई हातले चक्र र धनु लिएका (देखिन्छन्)। छ मुद्राले अलङ्कृत, धेरै रत्नमाला लगाएका, पहेंलो कपडा लगाएका पद्मासनमा बसेका देखिन्छन्। यसपछि जति हतियारहरू छन् ती सबै यिनका हातमा सजीव छन्। रौंका प्वालबाट निस्केका तेजको पुञ्ज-(समूह)-ले चारै दिशा उज्यालो पारेका, माला र प्राकार-(पर्खाल, अलङ्कार)-ले घेरिएका यी सहस्रभुज नामका बुद्ध पद्मपाणि बुद्ध नै हुन्। पद्मपाणि बुद्ध त दुई हात र एक मुख भएका छन्। एक मुखदेखि लिएर हजार मुखसम्म, अनि दुई हातदेखि लिएर हजार हातसम्म तिनको ध्यान महिमाबारे भावना गर्न, लेख्न र भन्न चार मुख भएका ब्रह्माले चारै युगसम्म लगातार भने पनि सकिंदैन भने यहाँ कसरी वर्णन गर्न सकिन्छ र ।।१।। प्रज्ञापारमिता नामकी देवी सेतो वर्णकी, छ मुद्रा (हातको स्थिति) भएकी, एक मुख भएकी, धर्मचक्र मुद्रा धारण गरेकी, जपमाला–

धर्मः

॥३७॥

प्रज्ञापुस्तकं(कम्) ॥ या सर्वज्ञतेति ॥२॥ वैरोचनावतार– वादिराजमंजुश्री-(मञ्जुश्रीः) त्रिमुख(खः). कुं(कुङ्)कुमवर्ण(र्णः). श्वेतवर्ण(र्णः). पीतवर्ण(र्णः). प्रथमसव्ये हृत्प्रदेशे रत्नपूर्णपात्रं. द्वितीये खड्ग तृतीये शरं. चतुर्थे वज्रं प्रथम वामे बिंदु-(बिन्दु)मुद्रा. द्वितीये परशु(शुः). तृतीये धनु(नुः). चतुर्थे त्रिशूल. षण्मुद्रा कंठे(कण्ठे) जपमाला ॥३॥ वज्रतारा एकमुखा. श्वेतवर्ण(र्णः). द्विभुज(जाः). दक्षे जानुप्रदेशे वरदमुद्रा. सनालकमलवज्रं वामे अभयाकारेण सनालोत्पलगर्भवज्रं षण्मुद्रा ॥४॥ समंत(मन्त)भद्र(द्रः). एकमुख(खः). श्वेतवर्ण(र्णः). नानालंकार(लङ्कारः). द्विभुज(जः). धर्मचक्रमुद्रा. पार्श्वयोः सनालकमलखड्गं सनालमुकुलमुकुद(कुमुदः) प्रज्ञापुस्तक(कं) कुत्रचिन्मंजु(मञ्जु)श्रियो(यः) ॥५॥ रत्नज्वलिनी तारा एकमुखा. रत्नो ज्व(ज्ज्व)ला. द्विभुज(जा). पुष्पमुद्रांचि(द्राञ्चि)तेन. सनालपल्लवविश्वकमलं वामे नवरत्नज्वालिका ॥६॥ महादेव एकमुख(खः). चतुःकार(रः). हृत्प्रदेशे स्पर्शमणि डमरु वामे सजलकमंड(मण्ड)लुं सपात्रं त्रिशूलं(लुम्) ॥७॥ पार्वती. एकमुखा. कृतांजलिपुटा(कृताञ्जलिपुटा) ॥८॥ धर्मधातुचैत्यः तदधः प्रज्ञापारमिताद्वयं ॥९॥१०॥ हलाहललोकेश्वर(रः). हालाहली ॥११॥१२॥

प्रज्ञा र पुस्तक धारण गरेकी छन्, जसलाई सर्वज्ञता पनि भन्दछन् । वैरोचन बुद्धका अवतार मानिएका वादी-(बुद्ध)-हरूमा श्रेष्ठ मानिने मञ्जुश्री बुद्ध तीन मुख – कुङकुम जस्तो वर्ण भएको एक मुख, सेतो वर्ण भएको एक मुख पहेंलो वर्ण भएको एक मुख गरी जम्मा तीन मुख भएका, हृदयमा राखेको पहिलो दाहिने हातमा रत्नले पूर्ण पात्र लिएका, दोस्रामा खड्ग लिएका, तेस्रोमा वज्र लिएका, पहिलो बायाँ हातमा विन्दुमुद्रा धारण गरेका, दोस्रो हातमा बन्चरो, तेस्रोमा धनु र चौथोमा त्रिशूल लिएका छ मुद्रा भएका र कण्ठमा जपमाला लिएका छन् ॥३॥ वज्रतारादेवी एक मुख, सेतो वर्ण र दुई हात भएकी, घुँडामाथि राखिएको दाहिने

हातमा वरदमुद्रा र डाँठसहितको कमलयुक्त वज्र लिएकी, बायाँ हातमा अभय आकार (मुद्रा) र डाँठसहितको कमलभित्र रहेको वज्र लिएकी र छ मुद्रा धारण गरेकी छन् ।।४।। समन्तभद्र बुद्ध चाहिं एक मुख र सेतो वर्ण भएका, धेरै अलङ्कारले सजिएका, दुई हात भएका, धर्मचक्र-मुद्रा धारण गरेका, दुई बगलमा डाँठसहितको कमलयुक्त खड्ग र डाँठसहितको कोपिला आकारको चन्द्रकमल तथा प्रज्ञा र पुस्तक धारण गरेका छन् । त्यहीं मञ्जुश्रीहरू पनि छन् ।।५।। रत्नज्वालिनी तारा नामकी देवी एक मुख भएकी, रत्नजस्तै उज्ज्वल, दुई हात भएकी, पुष्पमुद्रा लिएकी, दाहिने हातमा डाँठ र पालुवासहितको विश्वकमल र बायाँ हातमा नौ रत्नको तेज धारण गरेकी छन् ।।६।। यसै गरी महादेव एक मुख र चार हात भएका, हृदयमा दायाँ हातमा स्पर्शमणि र डमरु लिएका, बायाँ हातमा पानीसहितको कमण्डलु र पात्रसहितको त्रिशूल लिएका छन् ।।७।। पार्वती एक मुख भएकी, दुई हात जोडेकी छन् ।।८।। त्यसपछि धर्मधातु चैत्य छ । त्यसमुनि दुई प्रज्ञापारमिता छन् ।।९-१०।। हलाहल लोकेश्वर बुद्ध, हालाहली देवी र

**षडक्षरी ।।१३।। प्रज्ञापारमिता ।।१४।। आर्यावलोकितेश्वरताराद्वयं(यम्) ।।१५।। ।। समंत(मन्त)भद्र(द्रः) पीतवर्ण(र्णः) ।।१।। अक्षयमति(तिः) पीत(तः) ।।२।। क्षितिगर्भ(र्भः) श्यामवर्ण(र्णः) पद्मकल्पद्रुम(मः) ।।३।। सागरमति(तिः). शंख(शङ्खः)ध्वज खड्गं सितवर्णः ।।४।। महास्थामप्राप्त(प्तः). पीतवर्ण(र्णः) ।।५।। चंद्र(चन्द्र)प्रभ(भः). शुभ्रवर्णचक्रं(क्रः) ।।६।। सर्वशोकतमोनिर्घातनमति(तिः). कुं(कुङ्)कुमवर्ण(र्णः) शंकित विभ्राण(णः) ।।७।। वज्रगर्भनीलोत्पलाभः सवज्र-वरदानं. दशभूमिषु ।।८।। अवलोकितेश्वर(रः). शुभवर्ण(र्णः) ।।९।। अमितप्रभ-(भः). सितवर्ण(र्णः) ।।१०।। सर्वणीवरण (वरणविष्कम्भी) अनलाभ(भः) ।।११।। प्रतिमानपीतकूट(टः). पीत(तः). छोटिकां वा ।।६।। रत्नोत्को रत्नपात्रं पद्मो(द्मम्) ।।५।। समंत(मन्त)भद्रो वा मंजु(मञ्जु)श्रीरपि ।। ।।रत्नज्वालिनीतारा ।।··· योगिनी हृत्प्रदेशे पुष्पमुद्राद्वयं किञ्चिदाकुंचि(कुञ्चि)तालीढपादद्वया ।। ।। प्रज्ञा-पारमिता ।। वैरोचनावतार. वादिराज मंजु(मञ्जु)श्रीः ।। ।। वज्रसत्वात्मिका वज्रतारा वा ।। ।। समंत(मन्त)भद्र(द्रः) ।। ।। कूटागारतोरणादिष वज्रसत्व-(त्वः) ।।३।। पार्श्वयोः व्याघ्रभैरवव्याघ्रभैरव्यौ ।। ।। षड्भुजसफलपाश· सफली तारा. एकमुख. द्विभुज. वामोरौ(रु)स्थावरदाभयमुद्रा दक्षे जपमाला**

षडक्षरी देवी पनि छन् ।।१३।। प्रज्ञापारमिता ।।१४।। आर्यावलोकितेश्वर बुद्ध र दुई ताराहरू पनि छन् ।।१५।। समन्तभद्र बुद्ध पहेंलो वर्णका छन् ।।१।। अक्षयमति पहेंलो वर्णका छन् ।।२।। क्षितिगर्भ (बुद्ध) श्यामवर्णका र कमल र कल्पवृक्षजस्तै छन् ।।३।। सागरमति (बुद्ध)

शङ्खध्वज र खड्ग लिएका सेतो वर्णका छन् ।।४।। महास्थामप्राप्त चाहिं पहेंलो वर्णका छन् ।।५।। चन्द्रप्रभ (बुद्ध) सेतो वर्ण र चक्र लिएका छन् ।।६।। सर्वशोकतम अथवा निर्घातनमति (बुद्ध) कुङ्कुमजस्तो पहेंलो वर्णका र शक्तिधारण गरेका छन् ।।७।। वज्रगर्भनीलोत्पलाभ (बुद्ध) वज्रसहित वरदमुद्रा लिएका र दश भूमिमा रहेका छन् ।।८।। अवलोकितेश्वर (बुद्ध) सेतो वर्णका छन् ।।९।। अमितप्रभ चाहिं सेतो वर्णका छन् ।।१०।। सर्वणीवरणविष्कंभी (बुद्ध) आगोको ज्वालाजस्तै वर्णका छन् ।।११।। प्रतिमानपीतकूट (बुद्ध) पहेंलो वर्णका छन् र छोटिका (?) लिएका छन् ।।६।। रत्नोत्क (बुद्ध) रत्नपात्र, पद्म धारण गरेका छन् ।।५।। समन्तभद्र (बुद्ध) पनि त्यहीं छन् । बायाँतर्फ मञ्जुश्री पनि छन् । साथै रत्नज्वालिनी तारा पनि छन् ।··· योगिनीले हृदयमा दुई पुष्पमुद्रा लिएकी केही निहुरेका दुई पाउ भएकी छन् । प्रज्ञापारमिता पनि छिन् । वैरोचन बुद्धका अवतारस्वरूप वादीराज (बुद्ध) मञ्जुश्री बुद्ध हुन् । वज्रसत्त्वस्वरूपकी वज्रतारा नामकी देवी छन् । समन्तभद्र बुद्ध पनि छन् । कोठाको माथि तोरण-(पाली)-हरूमा वज्रसत्त्व बुद्ध रहेका छन् ।।३।। दुई बगलमा व्याघ्रभैरव (बाघभैरव) र व्याघ्रभैरवी (बाघभैरवी) छन् । छ हात भएका सफलपाश (बुद्ध) र सफलीतारा (देवी) छन् । यी देवी एक मुख र दुई हात भएकी, बायाँ घुँडामा [बायाँ हात राखेकी] वरदमुद्रा र अभयमुद्रा धारण गरेकी छन् । दाहिने हातमा जपमाला

धर्म :

।।३८।।

पुष्पमालावरद(दः). वामे त्रिदंड(दण्ड)पुस्तककमंडलु(मण्डलुः) विरूपाक्ष(क्षः). केनापि क्षत्रियराजेत्युच्ये(ज इत्युच्य)ते ।। कर्मतो मातृसंभो(सम्भो)गो भविष्यतीति द्वादशवयं(य)स्को वैराग्यमाप. मातापि पुत्रवियोगाद् वैराग्यमाप ।। कियद्वर्षांत-(र्षान्त)रे तयोः संयोगः प्राप्तः संभोगश्च पश्चाद् विचारे संजा(सञ्जा)ते मातापुत्र. ततो विरूपाक्षः प्रायश्पित्तार्थं महादेवमापन्नः स च द्वादशपक्वताम्(म्र)रसं पिवेति कथितवान्. स चाप्रतीतो जीवितास(श)या बुद्ध भम(ग)वन्तमुपागछ(च्छ)त् ।। भगवति(वतापि) स्फटिकमालां दत्वा सूत्रशेषजपं कुर्वित्युक्ते विरूपाक्षो जजाप कियंति वर्षाणि. माला तथैव. स्पे(सो)लसत्वान्मालामुत्क्षिप्यान्यत्राचरत् ।। एकत्रैकेन सूचीपुंजे(पुञ्जे)नानोकहृच्छेत्तु मारब्धं दृष्टं कथितं च परशुना छेद्योयमिति. सोवोचत् परशौ महान् श्रमः ।। उद्यमे श्रमो न ।। इत्यनुबुध्य पुनर्मालां जजाप ।। ।। पुनरपि कियद्वर्षांत(र्षान्त)रे मालां विहायान्यत्रागमत् ।। सरोद्वयं ददर्श ।। हीनं पूर्णं ।। तत्रैकेन पतत्रिणा पूर्णसि(स)रसो जलं चुंचु(चञ्चु)नानीय शुष्के सरसि प्रक्षिप्तं-(प्तम्) ।। किमेतव्(त्) उद्यमेव(न) समजलं भविष्यती–

पुष्पमाला र वरदमुद्रा धारण गरेका, बायाँ हातमा त्रिदण्ड (त्रिशूल वा लट्ठी), पुस्तक र कमण्डलु लिएका विरूपाक्ष पनि छन् जसलाई कसैले क्षत्रियराज पनि भनेका छन् ।

यी विरूपाक्षले कर्मले नै आमासँग सम्भोग (मैथुन कर्म) हुन्छ कि भन्ने आशङ्काले बाह्र वर्षको उमेरमा वैराग्य (संसारसुखप्रति अनास्था) धारण गरे। आमाले पनि पुत्रको वियोगले वैराग्य लिइन् । केही वर्ष बितेपछि ती दुईको भेट भयो र सम्भोग (मैथुन कर्म) पनि भयो । पछि आमा छोरा भन्ने ज्ञान भएपछि छोरा विरूपाक्ष प्रायश्चित्त-(दोषशुद्धि)-को लागि महादेवसमक्ष गए । महादेवले पनि बाह्र (परिमाणको) आगोले जलेको तामा धातुको रस पिऊ भनी अह्राए । उनी विरूपाक्ष पनि त्यसमा पत्यार नगरेर जीवनको आशाले भगवान्

बुद्धको शरणमा गए । भगवान् बुद्धले पनि फटिकको माला दिएर सूत्रशेष [औंलाले फटिकको माला जप्दाजप्दा फटिक घिसिएर उनेको धागो मात्र बाँकी रहने भन्ने अर्थमा सूत्र अर्थात् उनिएको धागो मात्र शेष (बाँकी) नहुँदासम्म लगातार] माताले जप गर भनेर अह्राएपछि विरूपाक्षले केही वर्ष जप गरे । माला उस्तै रह्यो । त्यसपछि उनी अल्छी हुनाले माला फ्याँकेर अन्यत्र गए । कुनै ठाउँमा यिनले एउटा सानो सुइरोले रूख काट्न थालेछन् । अरूले देखेर भने– बन्चराले मात्र रूख काटिन्छ । यी विरूपाक्षले भने– बन्चरो चलाउन ठूलो परिश्रम हुन्छ । अरूले भने– उद्योगमा परिश्रम किन हुँदैन ? यस प्रसङ्गले बोध (ज्ञान) प्राप्त भई विरूपाक्षले फेरि माला जपे । फेरि पनि केही वर्षपछि माला छाडेर अन्यत्र गए । त्यहाँ यिनले दुई तलाउ देखे– एउटा पानी सुकेको र अर्को पानी भरिएको । त्यहाँ एउटा चराले भरिएको तलाउबाट चुच्चोले पानी लिएर सुकेको तलाउमा हाल्ने गर्थ्यो । के यस उद्योगले दुवै तलाउमा बरोबर पानी हुनेछ ? भन्ने स्वयं प्रश्न गरे ।

ति ।। पुनरपि सो (स) जजाप ।। पुनरप्यन्यत्रगतं दृष्टं च. आर्द्र वासमा(सा) मृत्पर्वतं कु(क)र्त्तुमारब्धं दृष्ट्वा पुनर्जजाप. तदनंत(नन्त)रं सूत्रशेषा माला जाता ।। ततः प्रष्टो (प्रहृष्टो) भगवतः पूजनमाधाय महोत्सवमकरोत्. ततो महादेवस्य विद्वेषिणो लिङ्गानि पादप्रहारतो भग्नानि कृतानि ।। ।। अथ च यदा पशुपतिक्षेत्रं प्राप्तं तदा महादेवविज्ञापनात् भगवान् बुद्धस्तल्लिङ्ग(ङ्गः) पंच(पञ्च)बुद्धाकारचैत्यात्मकमकरोत् ।। तदनु प्रहर्षितेन तेन महती पूजा कृताः(ता). स्वयमपि पानभोजनादिकं कृतं(त्वा) ततः सूर्योस्तं गछ(च्छ)तीति वामतर्जनी दृष्ट्वा (दर्शयित्वा) सूर्यस्य मम पूजाभोजनसमाप्तं मास्तं गछ(च्छ)तु भगवानिति ।। ।। कस्मिश्चित् प्रदेशे ।। शाक्यसिंहः सर्वज्ञः तप्तकांच(काञ्च)नसंनि(सन्नि)भः ।। ध्यानं पूर्ववत् ।। वज्रासने स्थित्वा धर्मं दिदेशः (श) ।। शालीपुत्रमौद्गल्यायनाभ्यां काषायांव(याम्ब)रनिवासिनौ खिकिरी कस्मिंश्चित् प्रदे(प्रदेशे) पिंड(पिण्ड)पात्रधारिणौ. दक्षवामे कंजोपरि सरलासनो(नौ) बभूवतु ।। वज्रधातुमंडल(मण्डलम्). ।। धर्मधातुवज्रधातं वागीश्वरं नमाम्यहं पंच(पञ्च)बुद्धमयं चैव (वैरोचनामिताभावतारो-वज्रपर्यंको(र्यङ्को) हिमगिरि-शिखरप्रभ–

विरूपाक्ष फेरि पनि माला जप्न थाले । फेरि [माला छाडेर] अन्त तै गए र कुनै व्यक्तिले भिजेको कपडाद्वारा माटाको पर्वत (ढिस्को) सम्याउन लागिरहेको देखेर [यसबाट पनि लगातार उद्योग गर्नुपर्ने ज्ञान भएर] उनले पनि फेरि फटिकको मालाले जप गर्दै गए । यसरी [धेरै समय लगातार जप गर्दै जाँदा फटिक जति औंलाको जोडले खिएर] माला चाहिं सूत्र

(उनेको धागो) मात्र शेष (बाँकी) रहेको भयो। त्यसपछि खुसी भएर विरूपाक्षले भगवान्-(बुद्ध)-को पूजा गरी ठूलो उत्सव गरे। अनि विद्वेषी (शत्रु) सम्झिएका महादेवका लिङ्गहरू-लाई पादप्रहारले (लात्तीले हानेर) तोडफोड गरे।

अनि जब पशुपतिक्षेत्रमा विरूपाक्ष पुगे त्यसवेला महादेवको भनाइबाट भगवान् बुद्धले त्यस लिङ्गलाई पाँच बुद्ध-(अक्षोभ्य आदि पाँच बुद्ध)-को आकार भएको चैत्य-(स्तूप)-स्वरूप बनाए। त्यसपछि खुशी भएका विरूपाक्षले (चैत्यस्वरूप महादेवको) ठूलो पूजा गरे। आफूले पनि पिउने खाने काम गरे। त्यसै वखत सूर्य अस्ताउँछन् कि भनेर विरूपाक्षले सूर्यलाई बायाँ चोर औंलो ठड्याउँदै भने– हे सूर्य! मेरो पान र भोजनको समयसम्म अस्ताउने काम नगर।

कुनै ठाउँमा सबै जान्ने शाक्यसिंह (बुद्ध) छन्। यिनी तताएको सुनजस्ता चम्किला छन्। ध्यान पहिलेजस्तै। शाक्यसिंहले वज्रासनमा बसेर धर्मको देशना (उपदेश) गरे। कुनै ठाउँमा गेरुवा वस्त्र धारण गर्ने खिक्खिरिका (दण्ड) र पिण्डपात्र (भिक्षापात्र) लिएका कमलमाथि सीधा आसनमा बसेका सारिपुत्र र मौद्गल्यायन (बुद्धका प्रमुख शिष्यहरू) भए। वज्रधातुमण्डलबारे चर्चा गरिन्छ। पाँच बुद्धस्वरूप भएका धर्मधातु, वज्रधातु र वागीश्वरलाई

धर्म :

॥३६॥

प्रणतोस्मि सदा मया ।। वज्रधातुमंड(मण्ड)ले. अंत(अन्त)रमंड(मण्ड)ल श्व वज्रपंज(पञ्ज)रादिभावना व्यवस्था. तत्र कूटागारस्य नाभौ. विश्वाब्जकर्णिकास्थिता(तौ) सिंहोपरि विश्वाम्भोजमध्य. वैरोचनो(ना)मिताभावतारौ वज्रपर्यंकौ-(र्यङ्कौ) हिमगिरिशिखरप्रभसोष्णीषप्रदक्षिणावर्तकुंचि(कुञ्चि)तनीलकेशभुजाभ्यां ध्यानमुद्रावसनावृता(तौ) ।।१।। पूर्वकोष्ठ(ष्ठ)स्य मध्ये गजराजोपरि अक्षोभ्य-(भ्यः). ध्यानं पूर्ववत् ।। ।। दक्षिणकोष्ठस्य मध्ये अश्वराजोपरि रत्नसंभ(सम्भ)-वः ध्यानं पूर्ववत् ।।३।। पश्चिमकोष्ठस्य मध्ये मयूरोपरि अमिताभ एकमुख(खः). वैरोचनावतार(रः). रक्तवर्ण(र्णः). भुजाभ्या(भ्यां) हृदये धर्मचक्रमुद्रा ।।४।। उत्तरे अमोघसिद्ध(द्धः). गरुडवाहन(नः) श्याम. एक. (एकमुखः) द्विभु. (द्विभुजः) दक्षेण हृदये अभयमुद्रा. वामे कुंडि(कुण्डि)कामुद्रालक्षण(णः). ।।५।। ईशानादिकोणे लोचना १ मामकि(की) २ पांड(पाण्ड)रा ३ तारा ४ ।। ।। पूर्वस्यां तद्बाह्यमंड-(मण्ड)ले षोडशबुद्धाः ।। ईशानकोणादिदक्षिणान(व)र्त्त एकबुद्ध(द्धः). श्वेतवर्ण. एकमुख(खः). द्विभुज(जः). दक्षे चक्रधृक् मुद्रा वामभुजपर्यं(यङ्)के स्थापितवज्रा-सनस्थः ।।१।। वज्रराज(जः). पीतवर्ण(र्णः). एकमुख(खो) द्विभु–

म सधैं नमस्कार गर्दछु । वज्रधातुमण्डल-(स्थान)-मा भित्री मण्डलमा जस्तै वज्रको पिंजरा (मन्दिर) आदिको भावना गरिएको छ । त्यहाँ माथिल्लो कोठाको नाभि-(बीच भाग)-मा विश्वकमलको कर्णिका-(फल, गट्टा)-मा सिंहको माथि विश्वकमलको मध्यमा रहेका, वज्रासन भएका, हिउँचुलीजस्तै सेतो वर्णका, पगरी गुतेका, नीलो केश घुम्रेका, कपडा पहिरेका र ध्यानमुद्रामा रहेका वैरोचन र अमिताभ नामका बुद्ध (बुद्धका अवतार) छन् ।।१।। पूर्वी कोठाको बीचमा हात्तीमाथि चढेका अक्षोभ्य बुद्ध छन्, ध्यान पहिलेजस्तै ।। दक्षिणी कोठाको बीचमा घोडामाथि रत्नसम्भव बुद्ध छन्, ध्यान पहिलेजस्तै ।।३।। पश्चिमी कोठाको बीचमा

मयूरमाथि अमिताभ बुद्ध छन् । यी बुद्ध वैरोचन बुद्धका अवतार हुन् । अमिताभ बुद्ध एक मुख भएका, रातो वर्णका र दुई हातले हृदयमा धर्मचक्रमुद्रा लिएका छन् । उत्तरतर्फ अमोघसिद्धि बुद्ध छन् । थिनी गरुडको वाहन गरेका, श्यामवर्णका, एक मुख र दुई हात भएका दाहिने हातले हृदयमा अभयमुद्रा लिएका र बायाँ हातले कुण्डिकामुद्रा लिएका छन् । ईशान आदि चार कुनामा लोचना, मामकी, पाण्डरा र तारा नामका चार देवी छन् । त्यसको बाहिर मण्डलमा पूर्व दिशातर्फ सोह्र बुद्ध छन् । ईशान कोण आदि दिशामा दाहिनेतर्फबाट रहेका बुद्धहरू हुन्– एकबुद्ध नामका बुद्ध जुन सेतो वर्णका, एक मुख र दुई हात भएका दाहिने हातमा चक्र लिएका बायाँ हातमा (वरद) मुद्रा लिएका र वज्रासनमा बसेका छन् । वज्रराज पहेंलो वर्णका, एक मुख

ज(जः) दक्ष सर्वराजेंद्र(जेन्द्र)मुद्रा वामपर्यंका(र्यङ्का)सनस्थः ॥२॥ वज्रराग. रक्त(रक्तवर्णः) एकमुख(खो). भुजाभ्यां धर्मचक्रमुद्रापर्यंका(र्यङ्का)सनस्थः ॥३॥ वज्रसाधो(धुः) ॥ एकमुख(खः). भुजाभ्यां धर्मचक्रमुद्रापर्यंका.(पर्यङ्कासनस्थः) ॥४॥ दक्षिणस्यां वज्ररत्नः ॥ पीतवर्ण. एकमुख(खो). दक्षभुजः ऊर्ध्वोत्ताव(नो). वामपर्यंक(र्यङ्क)स्थः ॥५॥ वज्रतेजः ॥ रक्तवर्ण. एकमुखः दक्षभुजः हृदये उत्तानपाणिः वामपर्यंके(र्यङ्क)स्थः ॥६॥ वज्रकेतुः ॥ श्यामवर्ण. एकमुख(खो). दक्षभुज(जः). हृदये उत्तानपाणिः ॥ वामपर्यंके(र्यङ्क)स्थः ॥७॥ वज्रहास(सो). रक्तवर्णः एकमुखः भुजाभ्यां हृदये अभयमुद्राधरः वज्रासनस्थः ॥८॥ पश्चिमायां-(याम्) ॥ वज्रधर्मः सितरक्तवर्णः ॥ एकमुखः द्विभुजः दक्षेण तर्पणः वामहृदये उत्तानपाणिः ॥९॥ वज्रतीक्ष्णः ॥ आकाशाभ. एकमुख(खो). द्विभुज(जः). दक्षे ऊर्ध्वोत्तान(नः). वामहृदये राजेंद्र(जेन्द्र)मुद्रा ॥१०॥ वज्रहेतु(तुः). ॥ पीतवर्णः एकमुखः द्विभुज(जः). दक्षे ऊर्ध्वोत्तान(नः). वामे राजेंद्र(जेन्द्र)मुद्रा ॥११॥ वज्रभास(सो). रक्तवर्ण. एकमुख. द्विभुज(जो). दक्षे सर्वराजेंद्र(जेन्द्र)मुद्रा. वामपर्यंकस्थ(र्यङ्कस्थः). ॥१२॥ वज्रकर्म. हरितवर्ण. एकमुख(खो). द्विभुज(जो). दक्षे सर्वराजें–

र दुई हात भएका दाहिने हातमा सर्वराजेन्द्रमुद्रा (अभयमुद्रा) लिएका र बायाँ हात पलङ्को आसनमा रहेका छन् ॥२॥ वज्रराग (बुद्ध) रातो वर्णका एक मुख भएका, धर्मचक्रमुद्रा लिएका र पलङ्को आसनमा रहेका छन् ॥३॥ वज्रसाधु (बुद्ध) एक मुख भएका, दुई हातमा धर्मचक्रमुद्रा लिएका र पलङ्मा बसेका छन् ॥४॥ दक्षिण दिशामा वज्ररत्न (बुद्ध) पहेंलो वर्णका, एक मुख भएका, दाहिने हात माथितिर उत्तानो पारेका र बायाँ हात पलङ्मा राखेका

छन् ॥५॥ वज्रतेज (बुद्ध) रातो वर्णका, एक मुख भएका दाहिने हात हृदयमा उत्तानो गरी राखेका र बायाँ हात पलङ्मा राखेका छन् ॥६॥ वज्रकेतु (बुद्ध) श्यामवर्णका, एक मुख भएका र दाहिने हात हृदयमा उत्तानो पारी राखेका र बायाँ पलङ्मा छ ॥७॥ वज्रहास (बुद्ध) रातो वर्णका, एक मुख भएका, दुई हातले हृदयमा अभयमुद्रा धारण गरेका र वज्रासनमा रहेका छन् ॥८॥ पश्चिम दिशामा वज्रधर्म (बुद्ध) सेतो-रातो वर्णका, एक मुख र दुई हात भएका, दाहिने हातले तर्पण (सन्तोष दिने) र बायाँ हात हृदयमा उत्तानो पारी राखेका छन् ॥९॥ वज्रतीक्ष्ण (बुद्ध) आकाशजस्तै नीला, एक मुख र दुई हात भएका दाहिने हात माथितिर उत्तानो पारेका र बायाँ हात हृदयमा राजेन्द्रमुद्रा (अभयमुद्रा) गरी राखेका छन् ॥१०॥ वज्रहेतु (बुद्ध) पहेँलो वर्णका एक मुख र दुई हात भएका, दाहिने हातमाथि उत्तानो पारेका र बायाँ हातमा राजेन्द्रमुद्रा लिएका छन् ॥११॥ वज्रभास (बुद्ध) रातो वर्णका, एक मुख र दुई हात भएका, दाहिने हातना राजेन्द्रमुद्रा धारण गरेका र बायाँ पलङ्मा राखेका छन् ॥१२॥ वज्रकर्म (बुद्ध) हरियो वर्णका, एक मुख र दुई हात भएका, दाहिने हातमा

द्र(जेन्द्र)मुद्रा. वामपर्यंक(र्यङ्क)स्थः ॥१३॥ वज्ररक्षः ॥ पीतवर्णः द्विभुजः दक्षवामाभ्यां धर्मचक्रमुद्राः पर्यंका(र्यङ्का)सनः ॥१४॥ वज्रयक्षः नीलवर्ण. एकमुखः द्विभुज(जो). दक्षवामाभ्यां धर्मचक्रमुद्राः पर्यंका(र्यङ्का)सनः ॥१५॥ वज्रसंधि-(सन्धि): ॥ पीतवर्णः एकमुखः द्विभुजः दक्षवामाभ्यां धर्मचक्रमुद्रा पर्यंका(र्यङ्का)-सनः ॥१६॥ तद्बाह्ये चतुःसु कोणेषु ईशानकोणे तारा रक्तवर्ण(र्णा). एकमुख-(खा). द्विभुज(जा). दक्षभुजशिरे(रः) उत्ताण(न)पाणि(णिः). वामभुजदक्षजानु-स्थापनः(ना). ॥१॥ आग्नेये सिततारा एकमुख द्विभुजौ(जा) पर्यंक(र्यङ्क)स्थापितः ॥२॥ नैऋत्ये पीततारा. एकवर्ण(र्णा). द्विभुज(जा). दक्षभुजपर्यंक(र्यङ्क)स्थ. वामाभयहृदि ॥३॥ वायव्ये रक्ततारा. एक(रक्त)वर्ण(र्णा). द्विभुज(जा). दक्षभुज-पर्यंकस्थ(र्यङ्कस्थो). वामराजेंद्र(जेन्द्र)मुद्रा हृदये पर्यंका(र्यङ्का)सनः ॥४॥ पूर्वद्वारे सितवर्ण एकमुख(खो). द्विभुज(जो). दक्षे हस्ते वज्रां(ज्राङ)कुश. वामहस्तकुंचि(कुञ्चि)तेन हृदि वज्रासनस्थः ॥१॥ दक्षिणद्वारे पीतवर्ण. एकमुख-(खः). द्विभुज(जो). दक्ष ऊर्ध्वोत्तान(नो). वामे वज्रपाशभृत् वज्रासनस्थः ॥२॥ पश्चिमद्वारे वज्रस्फोटा रक्तो वज्रं(ज्र)शृंख(शृङ्ख)ला(लो) वज्रासनस्थ-(स्थः). ॥ उत्तरद्वारे वज्रा–

राजेन्द्रमुद्रा लिएका र बायाँ पलङमा राखेका छन् ॥१३॥ वज्ररक्ष (बुद्ध) पहेंलो वर्णका, दुई हात भएका, दाहिने र बायाँ हातमा धर्मचक्रमुद्रा लिएका र पलङमा बसेका छन् ॥१४॥ वज्रयक्ष (बुद्ध) नीलो वर्णका, एक मुख र दुई हात भएका, दाहिने र बायाँ हातमा धर्ममुद्रा र चक्रमुद्रा लिएका तथा पलङमा बसेका छन् ॥१५॥ वज्रसन्धि (बुद्ध) पहेंलो वर्णका, एक मुख र दुई हात भएका, दाहिने र बायाँ हातमा धर्ममुद्रा र चक्रमुद्रा लिएका, अनि पलङमा रहेका छन् ॥१६॥ त्यसको बाहिर चार कुनामा ईशानकोणमा तारा (देवी) छन् । यी तारा देवी रातो वर्णकी, एक मुख र दुई हात भएकी दाहिने हात शिरतिर पुऱ्याएर उत्तानो गराई, बायाँ हात दाहिने घुँडामाथि राखेकी छन् ॥१॥ आग्नेयकोणमा सिततारा छन् र यिनी एक

मुख तथा दुई हात भएकी र पलङ्मा बसेकी छिन् ।।२।। नैऋत्य दिशामा पीततारा छिन् र यिनी रातो वर्णकी, दुई हात भएकी, दाहिने हात पलङतिर लगेकी, अनि बायाँ हाथ अभयमुद्राको रूपमा हृदयमा राखेकी छिन् ।।३।। वायव्यकोणमा रक्ततारा छिन् र यिनी रातो वर्णकी, दुई हात भएकी र दाहिने हात पलङतिर लगेकी, बायाँ हातमा राजेन्द्रमुद्रा (अभयमुद्रा) धारण गरेर हृदयमा राखेकी तथा पलङमा बसेकी छिन् ।।४।। पूर्वतिर ढोकामा सितवर्ण (बुद्ध) एक मुख र दुई हात भएका, दाहिने हातमा वज्र र अङ्कुश लिएका, बायाँ हात खुम्चाएर हृदयमा राखेका, अनि वज्रासनमा बसेका छन् ।।१।। दक्षिणतर्फको ढोकामा पीतवर्ण (बुद्ध) एक मुख दुई हात भएका, दाहिने हात माथितिर उत्तानो गराएका, बायाँ हातमा वज्र र पासो लिएका, अनि वज्रासनमा बसेका छन् ।।२।। पश्चिमपट्टिको ढोकामा वज्रस्फोट (बुद्ध) छन् । यिनी रातो वर्णका, अनि वज्र र सिक्री लिएका तथा वज्रासनमा बसेका छन् ।।४।। उत्तरतर्फको ढोकामा

**वेशः श्यामो वज्रगंधे(गन्धे)न करद्वयगृहीतवज्रासनस्थः ।।४।। ।। तद्बाह्ये पूर्वस्यां बोधिसत्वाश्चत्वारः सितवर्णः समंत(मन्त)भद्र(द्रः) १ अक्षयमति(तिः) २ क्षितिगर्भ ३ आकाशगर्भ ४ एकवदन(नो). द्विभुजः दक्षेण भुजेनः(न) आंकुचि-(आकुञ्चि)तेन वज्रं बिभ्राणः वामभुजकटिस्था(स्थो). वज्रासना(नः) ।।४।। आग्नेयकोणे तारासितवर्ण(र्णा). द्विभुजः दक्षिणपाणिकुंचि(कुञ्चि)तोर्ध्वहस्तः वज्रासनः १ दक्षिणे चत्वारो बोधिसत्वा(त्वाः) पीतवर्णाः गगनगंज(गञ्जः) १ रत्नपाणि(णिः) २ सागरमति(तिः) ३ वज्रगर्भ ४ एकमुखा(ख):. द्विभुजा(ज):. दक्षहस्तेन हृदये आकुंचि(कुञ्चि)तेन उत्तानपाणि(णिः). रत्नधृक्. वामकटिस्थबाहुः वज्रासनः ।।४।। नैऋत्यकोणे तारा पीतवर्णा एकवदना. ध्यानं पूर्ववत् ।।२।। पश्चिमायां चत्वारो बोधिसत्वा(त्वाः) संति(सन्ति) ।। अवलोकितेश्वर(रः) १ महास्थामप्राप्त(प्तः) २ चंद्र(चन्द्र)प्रभ(भः) ३ ज्वालिनीप्रभ(भः) ४ रक्तवर्णा-(र्णः). एकमुखा(ख): द्विभुजा(ज): दक्षभुजेन आकुंचितेन(आकुञ्चितेन) हृदये पद्मधृक् वामपाणिकटिस्थवज्रासनः ।।४।। वायव्यकोणे तारा. रक्तवणी(र्णा) एकमुखा. द्विभुजा. दक्षहस्तेन पद्मधृक् वामभुजकटिस्थः(स्था) वज्रासनाः(ना) ।।३।। उत्तरस्यां. चत्वा–**

वज्रावेश (बुद्ध) श्यामवर्णका, दुई हातले वज्रगन्ध (डन्डी) समातेका र वज्रासनमा रहेका छन् ।।४।। त्यसबाहिर पूर्व दिशामा चार बोधिसत्त्व छन् । यी चार बोधिसत्त्व हुन्– सेतो वर्णका समन्तभद्र, अक्षयमति, क्षितिगर्भ र आकाशगर्भ । यी बुद्ध एक मुख र दुई हात

भएका, दाहिने हात खुम्च्याएर वज्र लिएका, बायाँ हात कम्मरमा राखेका र वज्रासनमा रहेका छन् ।।४।। आग्नेयकोणमा तारा । सितवर्ण (बुद्ध) दुई हात भएका, दाहिने हात खुम्च्याएर माथितिर लगेका र वज्रासनमा बसेका छन् ।।१।। दक्षिणतर्फ चार बोधिसत्त्व छन् । ती हुन्– पहेंलो वर्णका गगनगञ्ज, रत्नपाणि, सागरमति र वज्रगर्भ । यी सबै एक मुख र दुई हात भएका, दाहिने हात हृदयतर्फ खुम्च्याएर उत्तानो पारेका, रत्न लिएका र बायाँ कम्मरमा हात राखेका, अनि वज्रासनमा रहेका छन् ।।४।। नैर्ऋत्यकोणमा पहेंलो वर्ण र एक मुख भएकी तारा छिन्, ध्यान पहिलेजस्तै ।।२।। पश्चिम दिशामा चार बोधिसत्त्व छन् । ती हुन्– अवलोकितेश्वर, महास्थामप्राप्त, चन्द्रप्रभ र ज्वालिनीप्रभ । यी सबै रातो वर्णका, एक मुख र दुई हात भएका, दाहिने हात खुम्च्याएर हृदयमा पद्म लिएका, बायाँ हात कम्मरमा राखेका र वज्रासनमा रहेका छन् ।।४।। वायव्य कोणमा तारा छिन् । यिनी रातो वर्णकी, एक मुख र दुई हात भएकी, दाहिने हातले पद्म लिएकी, बायाँ हात कम्मरमा राखेकी र वज्रासनमा रहेकी छिन् ।।३।। उत्तर दिशामा

।।४१।।

रो बोधिसत्वा(त्वाः). अमितप्रभ(भः). १ प्रतिभान(नः). २ सर्वशोकतमोनिर्घातन
मति(तिः) ३ सर्वणीवरणविष्कंभी(ष्कम्भी) नाम ४ श्यामवर्णाः एकमुखा. द्विभुज
दक्षेण विश्ववज्रधृक्. वामभुजकटिस्थ. वज्रासन ।।४।। ईशाने तारा. श्याम
एकमुखा. दक्ष(क्षे)ण विश्ववज्रधृक् पद्मासना ।।४।। तद्बाह्यांते(ह्यान्ते). पूर्वद्वारांत
(रान्त)रे यमांत(मान्त)कस्य दक्षवामे क्रोधद्वयं तथैव चतुर्षु दिक्षु. सितवर्ण
एकमुख. षट्भुज. त्रिनयन षट्(ड्)भुजे स्वस्वचिह्नं दधान(नः) प्रत्यालीढस्थ(स्थः
।।१।। दक्षिणोत्तरे. प्रज्ञांत(ज्ञान्त)क. पीतवर्ण. एकमुख. षड्भुजे स्वस्वचिह्नं दधान
(नः). प्रत्यालीढपदः ।।२।। पश्चिमद्वारांत(रान्त)रे पद्मांतक(द्मान्तकः). रक्तवर्ण
एकमुख(खः). त्रिनयन(नः). षट्(ड्)भुज(जः). स्वस्वचिह्नधर(रः). ।।३।
उत्तरद्वारांत(रान्त)रे. विघ्नांतक(घ्नान्तकः). श्यामरक्त. एकमुख(खः). त्रिनयन
(नः). षट्(ड्)भुज(जः). स्वस्वचिह्नधर(रः). ।।४।। तद्बाह्ये द्वारे. श्वेत(तः)
पूर्वे ।। पीत(तः). दक्षे ।। रक्त(क्तः). पश्चिमे ।। श्यामरक्त(क्तः)उत्तरे ।। ।। नमः
बुद्धाय ।। नमस्ते पंच(पञ्च)बुद्धानां जिनधातुकरंदकं(रन्दकम्) ।। मध्यवैरोचन
नाथं पंच(पञ्च)बुद्धं स्मराम्यहं(हम्) ।। अयं बुद्धचैत्यस्य पश्चिमदिशि स्थितश्चै
ध्या–

चार बोधिसत्त्व छन् । ती हुन्– अमिताभप्रभ, प्रतिभान, सर्वशोकतमोनिर्घातनमति
सर्वणीवरणविष्कम्भी । यी बुद्धहरू श्यामवर्ण, एक मुख र दुई हात भएका, दाहिने हातम
विश्ववज्र लिने र बायाँ हात कम्मरमा राखेका तथा वज्रासनमा बसेका छन् ।।४।। ईशानकोणम
श्यामवर्ण र एक मुख भएकी, पद्मासनमा बसेकी तथा दाहिने हातले विश्ववज्र लिएक
तारा छिन् ।।४।। त्यसबाहिर छेउमा, पूर्वी ढोकाको बीचमा यमान्तक-(यमराज)-क
दायाँ र बायाँतर्फ दुई क्रोध छन् । यसरी चारै दिशामा एक मुख, छ हात र तीन आँखा भएक

अनि छओटै हातमा आ-आफ्ना चिह्न लिएका तथा प्रत्यालीढ (निशाना ताकेको वा अडेस लगाएको आसन र बसाइ)-मा रहेका सितवर्ण (बुद्ध) छन् ।।१।। दक्षिण-उत्तरमा, पहेंलो, एक मुख र छ हात भएका आ-आफ्ना चिह्न लिएका प्रत्यालीढ पाउ गरेका प्रज्ञान्तक (बुद्ध) छन् ।।२।। पश्चिमी ढोकाको बीचमा राता, एक मुख, तीन आँखा र छ हात भएका आ-आफ्नो चिह्न लिने पद्मान्तक (बुद्ध) छन् ।।३।। उत्तरी द्वारमा श्याम र रक्तवर्ण, एक मुख, तीन आँखा र छ हात भएका आ-आफ्ना चिह्न लिने विघ्नान्तक छन् ।।४।। बाहरी ढोकामा पूर्वमा सेता, दक्षिणमा पहेंला, पश्चिममा राता र उत्तरमा श्याम (नीला) र राता छन् ।

बुद्धलाई नमस्कार । पाँच बुद्धलाई नमस्कार । यीमध्ये जिनधातुकरन्दक, बीचमा स्थित वैरोचन (बुद्ध), अनि पञ्च बुद्धलाई स्मरण गर्छु । यिनी बुद्धको चैत्यको पश्चिम दिशामा रहेका छन् भने

नी बुद्धः अमिताभो नाम. अमिततेजस्त्वात्. तस्य ध्यानानि बहूनी संति(सन्ति). तस्य मूलमुखं रक्तवर्णं द्वात्रिंशल्लक्षणद्वयं(यम्) उष्णीषं द्विभुजं ध्यानमुद्रालं(लङ्)कृतं प्रसृतां(ताङ्)गुलिं दक्षपाणितलसमर्पणं अं(अङ्)गुष्ठद्वयमीलनं वज्रासनोपरिस्थापनं ध्यानमुद्राकमलोपरि वज्रासनं ध्यानमुद्रितपाणितलोपरि केनचिद् बोधिसत्वे(त्वे)--नोपढो(ढौ)कितपिंड(पिण्ड)पात्रं दधानः ।।१।। ।। अथ च एतादृशं ध्यानं पश्चात् सर्वार्थसिद्धेन भिक्षुणा कृतं यथा सर्वार्थसिद्धो भिक्षुः शाक्यसिंहः तालीवनमनुप्राप्तः तदा बहुवातवृष्टिरभवत्. ततस्तालवृक्षो ध्यानमुद्रया स्थित(तः). तस्मिन् कालीय--नागेन तस्य सर्वांग(र्वाङ्गः) फणाभिराछा(च्छा)दयन्. वातवृष्टिं निवारयन् तं ररक्ष. ततो निर्वातवृष्टौ सत्यां नागराजेन व्यक्ते सति चीवरेणैकेन सर्वांगं(र्वाङ्गं) समाछा(च्छा)दिते ध्याते सति रथयाने निश्चलिते सति त्रपुषभल्लिकाख्यौ वनि(णि)जौ ध्यानमुद्रितस्य तस्य पाणितले पिंड(पिण्ड)पात्रं पायसपूर्णं दत्त(त्तं) तदर्थं शाक्य--सिंहस्यापि ध्यानं(नम्). अन्यत्र भूस्पर्शमुद्रा अक्षोभ्यस्येव

ध्यानी बुद्ध हुन्छन्– ठूलो तेज हुनाले अमिताभ नाम गरेका । यिनका ध्यान धेरै छन् । यिनको मूल मुख रातो वर्णको छ । बत्तीस लक्षणले युक्त उष्णीष (फेटा, पगरी) पहिरेका, दुई हात भएका, ध्यानमुद्रामा रहेका, औंला फैलाएका दाहिने हात तलतिर पसारेका र दुई औंला (बूढी औंला र चोर औंला) जोडेर वज्रासनमाथि राखेका यी ध्यानी बुद्धको ध्यानमुद्रावाे हत्केलामाथि कुनै बोधिसत्त्वले पिण्डपात्र राखिदिएको स्थिति देखिन्छ ।।१।।

यसपछि यस्तै ध्यान पछि सर्वार्थसिद्ध भिक्षुले गरेका हुन् । जसरी सर्वार्थसिद्ध भिक्षुका रूपमा रहेका शाक्यसिंह तालीवनमा पुगे त्यसवेला ठूलो हावा र वृष्टि (पानीको वर्षा) भयो। त्यसपछि तालवृक्ष (ताल रूखको मनि) ध्यानमुद्रामा बसे। त्यहाँ कालीय नागले उनको सबै अङ्ग फणाले ढाकेर हावा र वृष्टि हटाउँदै रक्षा गरे। हुरी बतास शान्त भएपछि कालीय नागले छाडेर एउटा गेरुवा वस्त्रले सबै अङ्ग छोपेर [शाक्यसिंहले] ध्यान गर्दा रथ (बनियाँ आइरहेको रथ) रोकियो र त्रपुष तथा भल्लिक नामका दुई व्यापारीले ध्यानमुद्रामा रहेका तिनको हातमा खीरले पूर्ण पिण्डपात्र दिए र शाक्यसिंहको ध्यान पनि गरे। अरू भूमिस्पर्शमुद्रा अक्षोभ्य बुद्धको जस्तै ।।२।।

धर्मः

॥४२॥

॥२॥ शाक्यसिंहः ध्यानं पूर्ववत् ॥१॥ आर्यतारा. एकवदना. द्विभुजा. सव्यभुज-जानुप्रदेशे वरद. वामे सनालनीलोत्पलं दधानः(ना) सर्वालंका(लङ्का)रभूषिता. रत्नमुकुटा कुंड(कुण्ड)लालं(लङ्)कृतकर्ण(र्णा). समुत्तुंग(त्तुङ्ग)कुचयुग(गा). विचित्रांब(त्राम्ब)रपरिधाय(ना). सिंहरथोपरि कंजे(कञ्जे)ललितासनः ॥२॥ अमिततेजो नाम तथागतः ॥ एकमुखः सोष्णीषः कुंचि(कुञ्चि)तकेशः द्विभुजः भुजाभ्यां ध्यानमुद्रान(म)ग्न. मंच(मञ्च)कोपरि वज्रासन(नः). दक्षवामे मारद्वयं(यम्) खड्गधारी(रिणौ) तौ. एकमुख(खो). द्विभुज(जो). दक्षभुजे शस्त्र-(स्त्रं). वामे तर्जनी दर्शयति वामस्थेन दक्षेन(ण) तर्जनीं वामशा(श)स्त्रप्रहारण. उपरि द्वाभ्यां छत्र. आछा(च्छा)दयामीति स्थितः तदग्रे मंच(मञ्च)कोपरि एकी-(का) नारी सुष्वाप एकी(का) तस्य शुश्रु(श्रू)षयति ॥३॥ ॥ पुरा प्रतीच्यां दिशि इंदु(इन्दु)पतिनाम(म्न्यां) प्रसिद्धभूमौ दांग्योकांयेमा चौंगछां नाम महत् सरोवरस्य मध्ये सरसीरुहोपरि लोर्वेरिंचुचिनाम प्रसिद्धोभूत्. तदा कमलजं प्रथमं इंदु-(इन्दु)पतिनामा राज्ञा(जा) स्वसंता(सन्ता)नं नास्तीति स राज्ञा(जा) प्रतिदिनं तस्मिन् तडागे स्नात्वा नित्यपूजां कृत्वा प्रतिदिनं द्रव्यमुपढौक्य नित्यसंता(नित्यं सन्ता)नमिछ(च्छ)ति

शाक्यसिंहको ध्यान पहिलेजस्तै ॥१॥ आर्यतारा देवी एक मुख र दुई हात भएकी, दाहिने हात घुँडामाथि वरदमुद्रामा राखेकी, बायाँ हातमा डाँठसहितको कमल लिएकी, सबै गहनाले सजिएकी, शिरमा रत्नजडित मुकुट र कानमा कर्णकुण्डलले शोभित तथा उच्च दुई स्तन भएकी, अनि विचित्र कपडा पहिरेर सिंहको रथमाथि कमलमा ललितासनमा बसेकी छिन् ॥२॥ अमिततेज नामका तथागत (बुद्ध) एक मुख भएका, पगरी गुतेका, घुम्रेका केश र दुई हात भएका र ध्यानमुद्रा लिएका, मञ्चमाथि वज्रासनमा बसेका, दायाँ र बायाँतर्फ दुई मार (कामदेव) छन्। ती मारहरू खड्ग लिएका, एक मुख र दुई हात भएका, दाहिनेतर्फका मारले दाहिने हातमा शस्त्र र बायाँ चोर औंला देखाउने तथा बायाँतर्फका मारले दाहिने चोर औंला र बायाँमा

शस्त्र लिएका, माथितिर छाता ओढाउने रूपमा रहेका छन् । अगाडि मञ्चमा एउटी स्त्री सुतेकी र अर्की सेवा गरिरहेकी छिन् ॥३॥ अधि पश्चिम दिशामा इन्दुपति नामको प्रसिद्ध भूमिमा दांग्योकांयेमा ञोंगछां नामको ठूलो तलाउको बीचमा कमलमाथि लोवेरिंचुचि नामका (बुद्ध) भए । त्यहाँ कमलबाट पहिले उत्पन्न यिनलाई इन्दुपति राजा आफ्नो सन्तान छैन भनेर दिनहुँ त्यस तलाउमा स्नान गरेर नित्यपूजा गरी प्रतिदिन द्रव्य (धन) चढाएर नित्य सन्तानको चाहना गर्छन् ।

एकस्मिन् समये तत्रैव सरसि कमले पेमाजुं नाम जातः तदा स इंदु(इन्दु)पतिनाऽपस्य(श्य)त्. तेन गृहीत्वा स्वगृहमानीय पुत्रवत् पालयामास. तत्पश्चात् तस्यां भूम्यां त्रयोदशाधिकद्विसहस्रवर्ष २०१३ तत्रै(त्र) राजा बभूव ।। ततः स लोवेंरिवुचिनाम सहोरराज्ञ(ज)स्य भूम्यां गत्वा तत्रोपेत्य शाक्यसिंहनामयोगचक्रे एकजन्मांतं(न्मान्तं) तत्रैव योगे स्थितः ।। पश्चात् नानागानामदेशस्य राज्ञा स्वपुत्री तस्मै विवाहिता दत्ता. तदारभ्य तस्य नाम प्यंजुंयावयुं इति प्रसिद्धोभूत्. कतिचिद् वर्ष(र्षं) तत्रैव स्थित्वा तदन्यमामूटिनानामभूम्यां गत्वा लोडेछोकसें इति नामो-(मा)भूत् ।। तत्र अनेकमारान् धर्षयन्. अकुशलचारिलोकेभ्यो धर्मोपदेशं श्रावयित्वा धर्मे. स्थापयित्वा पश्चात् ततो दिव्यां दिशि द्रामितेभू नाम भूम्यां (मौ) समुपेत्य तत्रापि योगं कृतवान्. तत्रापि सर्वेभ्यो धर्मोपदेशं श्रावयित्वा धर्मे नियोज्य स्थितिं चक्रे. तस्मिन् काले प्येमाज्ञांवो इति नाम स्थापितः ।। तत्रापि कतिचिद्वर्षं तत्रैव स्थित्वा. ततः प्राच्यां दिशि गत्वा ओनिंज्ञावोराज्ञस्य(राज्ञः) पुरे प्र–

एक समयमा त्यसै तलाउमा कमलमा पेमाजुं नामका (बुद्ध) उत्पन्न भए । त्यसवेला इन्दुपतिले देखे । उनले [पेमाजुंलाई] घर ल्याएर छोराजस्तै पाले । त्यसपछि सो भूमिमा २०१३ वर्षसम्म राजा भए । त्यसपछि लोवेंरिवुचिसँग उरराजको भूमिमा गएर त्यहाँ पुगी शाक्यसिंहनामक योगचक्रमा एक जन्मपर्यन्त त्यहीं योग गरे । पछि नानागा नामको देशका राजाले उनलाई आफ्नी छोरी विवाह गराइदिए । त्यहाँदेखि उनको नाम प्यंजुंयावयुं नामले प्रसिद्ध भयो । केही वर्ष त्यहीं रहेर त्यसदेखि अर्को मामूटिना नामको भूमिमा गएर लोडेछोकसें नाम गरेका भए । त्यहाँ धेरै मार-(कामदेव)-लाई दमन गर्दै अकुशल (दश अकुशल कर्म) गर्ने दुनियाँलाई धर्मको उपदेश सुनाएर धर्ममा स्थापित गरी पछिबाट दिव्य (उत्तर) दिशामा द्रामितेभू नामको भूमिमा पुगेर त्यहाँ पनि योग गरे । त्यहाँ पनि धर्मको उपदेश सुनाएर धर्ममा प्रवृत्त गर्दै स्थिति (लोकव्यवहार) गराए । त्यसै समयमा प्येमाज्ञावो नाम स्थापित भयो । त्यहाँ पनि केही वर्ष त्यहीं रहेर त्यसपछि पूर्व दिशामा गई ओनिंज्ञावो नामका राजाको शहरमा

धर्म :

॥४३॥

विश्य तस्मिन् देशे सर्वलोकाः दशाकुशलचारी भूत्वा महत्कष्टोभूत्. तच्छांत्यर्थं (च्छान्त्यर्थं) तत्रापि धर्मं श्रावयामास. लोकानुद्धृत्य, निमायुंजेरनाम स्थापयित्वा तत्रैव स्थितः ॥ ॥ ततः पुनः प्रतीच्यां दिशं गत्वा भंगादादों नाम. भूमौ गत्वा वरुणनागस्य पुरे प्रविश्य नागेभ्यो(भ्यः) उपदेशयमाना. उद्धारयामासः(स). तत्र तेन भैरवस्वरूपमाधाय दर्शयामासः(स), तत्र सिंगिटाडो इति नाम स्थापितमभूत्. यः कश्चित् नागं तं न गंन्यते (गण्यते) तेभ्योपि क्रोधं संद(सन्द)र्श्य वशमानीय स्थितिं चक्रे ॥ ॥ ततः पश्चात् याम्यां दिशि धर्मो नाम देशे गत्वा तस्मिन् देशेपि धर्मोपदिश्य स्थितिं कृतवान् तत्रस्था नाम दोजेटोले इति प्रसिद्धः ॥ ॥ पश्चात् स्वजन्मस्थाने गत्वा स्थितिः(तः) तत्र केनापि येमाजुं नाम प्रशंस्य. संक्षेपपट्टिका लिखिता ॥ ॥ नमो रत्नत्रयाय ॥ ॥ वसुंध(सुन्ध)रा. ध्यानं पूर्ववत् ॥१॥ वज्रविद्राविणि(णी) पंच(पञ्च)मुखि(खी). दशभुजा दक्षे. अं(अङ्)कुश. खड्ग. शर. वज्रवरद. वामे. पाश. चर्म. धनु. ध्वजा. अभय. प्रत्यालीढासन ॥२॥

प्रवेश गरेर त्यस देशमा सबै मानिसहरू अकुशल (दश अकुशल कर्म) गर्ने थाहा पाई ठूलो कष्ट भयो। त्यसको शान्तिको लागि त्यहाँ पनि धर्म सुनाए, अनि मानिसलाई उद्धार गरेर निमायुंजेर नामले त्यहीं बसे।

त्यसपछि फेरि पश्चिम दिशा गएर भंगादादों नामका भूमिमा गई वरुण नागको शहरमा पसेर नागहरूलाई उपदेश गर्दै उद्धार गरे। त्यहाँ यिनले भैरवको रूप लिएर प्रदर्शन गरे। त्यहाँ सिंगिटाडो नाम स्थापित भयो। जुन नागले उनको गन्ती (सम्मान) गरेनन्, तीप्रति क्रोध देखाई वशमा लिएर स्थिति गरे।

त्यसपछि पश्चिम दिशामा धर्म नामको देशमा पुगेर त्यस देशमा पनि धर्मोपदेश गरेर स्थिति गरे, त्यहाँ दोजेटोले नाम रह्यो।

पछि आफ्नो जन्मस्थानमा गएर रहे। त्यहाँ पनि येमाजुं नामद्वारा प्रशंसा गरिए।
यसरी संक्षिप्त पट्टिका (चरित्र-वर्णन, कयानभासमा शब्दचित्र) लेखियो।

तीन रत्न-(बुद्ध, धर्म, सङ्घ)-लाई नमस्कार। वसुन्धराको ध्यान पहिलेजस्तै ॥१॥
वज्रविद्राविणीदेवी, पाँच मुख र दश हात भएकी, दाहिनेतर्फ अङ्कुश, खड्ग, वाण, वज्र र
वरदमुद्रा लिएकी, बायाँतर्फका हातमा पाश, चर्म (छाला, ढाल), धनु, ध्वजा र अभयमुद्रा
लिएकी प्रत्यालीढ आसनमा रहेकी छन् ॥२॥

**पर्णशवरी. त्रिमुखं. पीत. रक्त. श्याम. षड्भुजा. दक्षे विश्ववज्रदंड(दण्ड)मुद्गर-शरानि(णि). वामे पाशकमलचापानि ॥३॥ मरीचि(चिः), त्रिमुख. श्वेत नील. पीत. षड्भुज(जाः). दक्षे शर वज्र अं(अङ्)कुशान्. वामे चाप. घंटा(घण्टा). पाशानि. सहस्रदलपद्मोपरि प्रत्यालीढ(ढः) ॥४॥ ध्वजाग्रकेयूरी ॥ चतुर्मुख. श्वेत. नील. पीत. रक्त. अष्टभुजा ॥ दक्षे आलिंग(लिङ्ग)नमुद्रा असि. त्रिशूल. मुशल. ॥ वामे ... वज्र. चक्र. कवच. प्रत्यालीढासन ॥५॥ गणपतिहृदया. एकमुख. द्विभुज वरद. अभय. नृत्यासन ॥६॥ उष्णीषविजया. एकमुख. षड्भुजा. दक्षे हृदि. प्रथमे विज्र-(विश्व)वज्र. दंड(दण्डः). द्वितीये तथागत(तः). तृतीये शरकमले वज्रासन(नम्) ॥७॥ ग्रहमातृका ॥ त्रिमुख. श्वेत. पीत. रक्त. षट्(ड्)भुज. दक्षे धर्मचक्रमुद्रा. वज्र. शर. वामे कमल. चाप. सहस्रदलपद्मे वज्रासनं(नम्) ॥८॥ प्रत्यंगि(त्यङ्गि)रा. पंच(पञ्च)मुख. श्वेत. नील. पीत. रक्त. श्याम. दशभुजा. दक्षे. वज्र. खड्ग. परशु. पात्र- अं(ङ्कु)कुशान्. वामे घंटा(घण्टा) खट्वांग(ट्वाङ्ग)तर्जनी. पाश. चक्राणि. ब्रह्मकमलप्रत्यालीढासनाः**

पर्णशवरीदेवी पहेंलो, रातो र श्यामवर्णको तीन मुख भएकी, छ हात भएकी, दाहिनेतर्फका हातमा विश्ववज्र नामको दण्ड, मुद्गर (मुङ्ग्रो) र बाण, अनि बायाँतर्फको हातमा पाशो, कमल र धनु लिएकी छिन् ॥३॥ मरीचिदेवता सेतो, नीलो र पहेंलो गरी तीन मुख भएका, छ हात भएका, दाहिनेतर्फ बाण, वज्र, अङ्कुश र बायाँतर्फ धनु, घण्टा र पाश लिएका, हजार पातको कमलमाथि बसेका छन् ॥४॥ ध्वजाग्रकेयूरीदेवी सेतो, नीलो, पहेंलो र रातो गरी चार मुख भएकी, आठ हात भएकी, दायाँतर्फ आलिङ्गनको मुद्रा, खड्ग, त्रिशूल र मुसल, अनि बायाँतर्फ वज्र, चक्र र कवच लिएकी तथा प्रत्यालीढ (निशान लिएर तयार भएको) आसनमा

बसेकी छिन् ।।५।। गणपतिहृदयादेवी एक मुख र दुई हात भएकी, वरद र अभयमुद्रा लिएकी तथा नाच्ने आसनमा रहेकी छिन् ।।६।। उष्णीषविजयादेवी एक मुख र छ हात भएकी, दायाँतर्फ हृदयमा पहिलोमा विश्ववज्रदण्ड, दोस्रोमा तथागत र तेस्रोमा बाण र कमल लिएकी, अनि वज्रासनमा रहेकी छिन् ।।७।। ग्रहमातृकादेवी सेतो, पहेँलो र रातो गरी तीन मुख भएकी, छ हात भएकी, दायाँतर्फ धर्मचक्रमुद्रा, वज्र र बाण लिएकी, अनि बायाँतर्फ कमल, धनु र हजार पात भएका, कमल लिएकी तथा वज्रासनमा रहेकी छिन् ।।८।। प्रत्यङ्गिरादेवी सेतो, नीलो, पहेँलो, रातो र श्यामवर्ण गरी पाँच मुख भएकी, दश हात भएकी, दायाँतर्फ वज्र, खड्ग, बन्चरो, पात्र र अङ्कुश लिएकी, बायाँतर्फ घण्टा, खट्वाङ्ग, तर्जनी (तर्साउने मुद्रा), पाश र चक्र लिएकी, ब्रह्मकमलमा प्रत्यालीढ आसन गरेकी छिन् ।

॥६॥ ॥ लं ३ योगांव(गाम्ब)रादीनां द्वारपाल ॥ दक्षे काकाश्या(स्या)नामदेवी चतुरानना काकमुखा ॥ षट्(ड्)भुजा. प्रथमाभ्यां वज्रघंटाऽलिंग(घण्टालिङ्ग)नमुद्रा द्वितीयाभ्यां डमरुखट्वांग(ट्वाङ्ग) तृतीयाभ्यां करतिकपालधरः ऊर्ध्वपिंग(पिङ्ग)लकेशः सर्वालंका(लङ्का)रभूषिता. मुंड(मुण्ड)मालालंबि(लम्बि)तकंठा(कण्ठा). व्याघ्रचर्मा व(र्माम्ब)रा. दक्षपदाकुंचि(कुञ्चि)त. वामपादवेतालपीठोपरि नृत्यपदा. पद्म वह्निज्वालालं(लङ्)कृतांगा(ताङ्गा) ॥१॥ तांत्रिक(तान्त्रिका) ॥ ॥ वामे उलूकास्या देवी चतुर्मुखा उलूकानना उ(ऊ)र्ध्वपिंग(पिङ्ग)लकेशा. षट्(ड्)भुजा. प्रथमभुजाभ्यां वज्रघंटालिंग(घण्टालिङ्ग)नमुद्रा. द्वितीयाभ्यां डमरु खट्वांग-(ट्वाङ्ग). तृतीयाभ्यां करतिकपालधरा. सर्वालंका(लङ्का)रभूषिता. मुंड(मुण्ड)-मालालंवि(लम्बि)तकंठा(कण्ठा). व्याघ्रचर्मा वररा(चर्माम्बरा). ज्वालालं(लङ्)-कृतकाया दक्षपादाकुंचि(दाकुञ्चि)त वामपाद वेतालपीठे नृत्यपदा पद्म ॥२॥ तांत्रिक(तान्त्रिका) ॥ श्वानास्या. सितवर्ण. उ(ऊ)र्ध्वपिंग(पिङ्ग)लकेश. चतुर्भुजा दक्षे प्रसारिते. करति. डमरु. वामे प्रसारित. कपालखट्वांग(ट्वाङ्ग) सर्वाभरण. मुंड(मुण्ड)मालालं(लङ्)कृतकंठ(कण्ठ) व्याघ्रचर्मवसन त्वा(ज्वा)लालं(-लङ्)-कृतकाय(या) गिरो(रौ) प्रत्यालीढासनः ॥१॥ तांत्रि.

॥६॥ लं (बीजमन्त्र ?) तीनपल्ट उच्चारण। योगाम्बर (देवता) आदिका द्वारपालहरू। दाहिनेतर्फ काकास्यादेवी चार मुख भएकी, कागको जस्तो मुख भएकी, छ हात भएकी, पहिला दुई हातले वज्रघण्टा र आलिङ्गनमुद्रा, दोस्रा दुई हातले डमरु र खट्वाङ्ग र तेस्रा दुई हातले करौंती (छुरी) र खप्पर लिएका, ठडिएको कैलो केश भएकी, सबै गहनाले सजिएकी, गलामा मुण्ड-(टाउकाको)-माला भिरेकी, बाघको छाला लगाएकी, दाहिने पाउ खुम्च्याउँदै बायाँ पाउ वेताल-(राक्षस)-को पिठ्यूँमाथि राखेकी कमलमा अग्निको ज्वालाले अङ्ग ढाकिएकी छिन्

॥१॥ तान्त्रिक देवीबारे चर्चा हुन्छ। बायाँतर्फ उलूकास्यादेवी चार मुख र लाटोकोसेरोजस्तो मुख भएकी, ठडिएको कैलो केश भएकी, छ हात भएकी, पहिला दुई हातले वज्रघण्टा र आलिङ्गनमुद्रा लिएकी, दोस्रा दुई हातले डमरु र खट्वाङ्ग, अनि तेस्रा दुई हातले करौंती र खप्पर लिएकी, सबै गहनाले सजिएकी, गलामा मुण्डमाला भिरेकी, बाघको छाला लगाएकी, अग्निज्वालाले शरीर सिंगारिएकी, दाहिने पाउ खुम्च्याउँदै बायाँ पाउ वेतालको पिठ्यूँमाथि राखेकी कमलमा नाचेकी छिन् ॥२॥ तान्त्रिकहरू हुन्। यसै गरी श्वानास्यादेवी सेतो वर्णकी, ठडिएका कैला केश भएकी, चार हात भएकी, पसारिएको दायाँ हातमा करौंती र डमरु तथा बायाँ हातमा खप्पर र खट्वाङ्ग लिएकी, सबै गहनाले सजिएकी, गलामा मुण्डमाला र व्याघ्रचर्म लगाएकी, अग्निज्वालाले शरीर शोभिएकी पहाडमा प्रत्यालीढ आसनमा बसेकी छिन् ॥१॥

क(तान्त्रिका) ।। शूकरमुख(खा)रक्तवर्णा उ(ऊ)र्द्ध्वपिंग(पिङ्ग)लकेशा चतुर्भुजा. दक्षे प्रसारितेन करति डमरु. वामप्रसारिते कपाल खट्वा(खट्वाङ्गा). सर्वाभरण-भूषिता. व्याघ्रचर्मवसना. मुंड(मुण्ड)मालालंवि(लम्बि)ता. ज्वालालं(लङ)कृत-काया. गिरौ प्रत्यालीढासनः ॥२॥ तांत्रिक(तान्त्रिका) ॥ ॥ एके प्रासादे तोरणाकारे त्रिकोणाकारं तत्र प्रज्ञोपाय. कः इति चिंति(चिन्ति)ते सति. सिंहवाहन-चिह्नत्वात् वैरोचन वज्रधात्वे(त्वी)श्वरीप्रज्ञोपायेति बोधनीयं(यम्) ॥ ॥ दक्षे सिंहिनी एकं सिंहिनी देवी. एकमुखी उ(ऊ)र्द्ध्वपिंग(पिङ्ग)लकेशी. सर्वालं(लङ)-कारभूषिता. चतुर्भुजा. प्रथमाभ्यां करतिकपाल. द्वितीयाभ्यां डमरु. खट्वांग-(ट्वाङ्ग)धरा. मुंड(मुण्ड)मालालं(लङ)कृतां(ता). विचित्रांव(त्राम्ब)रा. दक्षपद. प्रत्यालीढासनस्था ॥ ॥ वामे व्याघ्रिणी देवी. एकमुखी. उ(ऊ)र्द्ध्वपिंग(पिङ्ग)ल-केशी. सर्वालंका(लङ्का)रभूषिता. चतुर्भुजा. प्रथमाभ्यां करतिकपालं. द्वितीयाभ्यां डमरुखट्वांग(ट्वाङ्ग)धरां(रा). मुंड(मुण्ड)मालालं(लङ)कृता. विचित्रांव-(त्राम्ब)रा. वामपद प्रत्यालीढासनस्था ॥ ॥ एते तांत्रिका(तान्त्रिकाः) ज्ञेया ॥ ॥ योगांव(गाम्ब)रः ।। योग एव अंवर(अम्बरः) यस्य योगो नाम मूलमंत्र-(मन्त्रः) हृदयमंत्र(मन्त्रः) माला–

तान्त्रिक देवी। शूकरमुखादेवी रातो वर्णकी, ठडिएको कैलो केश र चार हात भएकी, पसारिएको दाहिने हातमा करौंती र डमरु, अनि बायाँ हातमा खप्पर र खट्वाङ्ग लिएकी, बाघको छाला र मुण्डमाला भिरेकी, अग्निज्वालाले शरीर शोभिएकी तथा पर्वतमा प्रत्यालीढ (वा अडेस लगाएको) आसनमा बसेका छन् ॥२॥ तान्त्रिकदेवी ॥ तोरण (चँदुवा) आकारको

एक दरबार-(मन्दिर)-मा तीन कुना भएको (मूर्ति ?) छ। त्यहाँ प्रज्ञा र उपाय कुन भनी सोध्दा सिंहवाहनको चिह्नले वैरोचन (बुद्ध) र वज्रधात्वीश्वरी नै प्रज्ञा र उपाय हुन् भनी बुझ्नुपर्छ। दाहिनेतर्फ सिंहिनी छिन्। सिंहिनीदेवी एक मुख र ठडिएको कैलो केश भएकी, सबै गहनाले सजिएकी, चार हात भएकी, पहिला दुई हातले कर्त्ती र खप्पर, अनि दोस्रा दुई हातले डमरु र खट्वाङ्ग लिएकी, मुण्डमाला भिरेकी, विचित्र कपडा पहिरेकी दाहिने पाउले प्रत्यालीढ (निशानाको) आसनमा बसेका छन्। बायाँतर्फ व्याघ्रिणीदेवी एक मुख र ठडिएको कैलो केश भएकी, सबै गहनाले सजिएकी, चार हात र पहिला दुई हातले कर्त्ती र खप्पर, अनि दोस्रा दुई हातले डमरु र खट्वाङ्ग लिएकी, मुण्डमाला भिरेकी, विचित्र कपडा पहिरेकी तथा बायाँ पाउले प्रत्यालीढ आसनमा रहेकी छिन्॥

योगाम्बर– योग नै अम्बर (कपडा) जसको भन्ने अर्थमा। योग भनेको मूलमन्त्र, हृदयमन्त्र, माला-

धर्म :

॥४५॥

मंत्र(मन्त्रः) धारणीजपादियोगः योगो नाम उपायप्रज्ञामीलनं. योगो नाम कमल-कुलीशसंयोजनं. हृदयानंदस्वरूपं(पम्). तस्मिन् योगे एकां तत्परां चतुरां प्रवृत्य-(प्रवृत्ति)धर्मनिरतां दक्षेण पादेनोपायनितंबालिंगि(तम्बालिङ्गि)तां वामेन पादेन सह सरलीकुर्वाणां शून्यस्वभावे. गगनाकारे. कोष्ठागारे विहरंतं(रन्तं) योगांव(गाम्ब)-रं भावयेत् ॥ ॥ योगांव(गाम्ब)रं दिगंव(गम्ब)रमपि रोमोद्गलित रोमोद्गलितकिरणाछा(च्छा)दिना दृश्यत्वाद् रूपं शृङ्गाररसार्णवमग्नं ताराप्रतिविम्बया. ज्ञानडाकिन्या. श्यामवर्णया मुक्तकेशिन्या दिगंव(गम्ब)रया. योगमग्नया. रोमविवरोद्गतकिरणाछा(च्छा)दिताऽदृश्यविग्रहया. कंठ(कण्ठ)प्रदेशे दृढमालिंगि(लिङ्गि)तं योगांव(गाम्ब)रं भावयेत् ॥ ॥ योगांव(गाम्ब)र उपाय. दिगंव(गम्ब)र प्रज्ञा ॥ बाह्यत्रयोदशसंस्कार. अभ्यंत(भ्यन्त)रदीक्षामंत्र(मन्त्र)दान. ॥ ॥ प्रवज्याव्रतः ॥ प्रकृष्टेन व्रज्यः आ समस्तप्रकारेण. व्रत. व्रतं चरितु व्रतं बोधिचर्याव्रतं चरितुं चारयितुं(तुम्) ॥ ॥ अमिताभाया(अमिताभं) प्रेषयित्वा. लोकानुद्धरणे तेन लोकानुद्धरणार्थं लोकावभासकरो नाम समाधौ व्यवस्थितः ॥ तत्र अहमपि गत्वा पश्या–

मन्त्र हो। धारणीजप आदिलाई पनि योग भन्दछन्। योग भनेको उपाय र प्रज्ञाको मेल हो। योग भनेको कमल र वज्रको मेल हो, हृदयको आनन्दस्वरूप हो। त्यस योगमा एक, चतुर, प्रवृत्तिमार्गमा संलग्न, दाहिने पाउले उपायको नितम्ब (जाँघको पृष्ठभाग) आलिङ्गन गरेकी तथा बायाँ पाउसँगै सीधा पारेकी (प्रज्ञा र) शून्य आकारको कोठामा विहार गरेका योगाम्बरको ध्यान गरोस् ॥

दिगम्बर (नाङ्गा), रौंबाट निस्केको किरण-(तेज)-ले देखिएका तथा शृङ्गाररसरूपी समुद्रमा डुबेका (शृङ्गारी) योगाम्बरलाई ताराको छायास्वरूप भएकी, श्यामवर्ण र फुकेको केश भएकी, दिगम्बर (नाङ्गी), रौंको प्वालबाट निस्केको तेजले गर्दा शरीर अदृश्य जस्तै

भएकी, योगमा लागेकी, ज्ञानडाकिनीले गलामा बलियो अँगालो हालिएका उक्त योगाम्बरला
ध्यान गरोस् । योगाम्बर भनेको प्रज्ञा र दिगम्बर भनेको उपाय हो । तेह्र संस्कार बाहिरी
दीक्षामन्त्रदान भित्री आचरण हो ।

अब प्रव्रज्या-(संन्यास)-व्रतको चर्चा गरिन्छ । विशेष रूपले व्रज्या (हिंड्ने, संसा
छाड्ने काम) प्रव्रज्या हो । 'आ' को अर्थ हो सबै प्रकारले, अनि व्रतको अर्थ हो बोधिचर्या
(बुद्धको ध्यान, योग आदि)-को व्रत गर्नु यसरी प्रव्रज्याव्रत बनेको छ ।

अमिताभ बुद्धलाई पठाएर लोक-(संसार)-को उद्धारको लागि लोकको ज्ञान गराउं
गरी लोकावभासकर नामको समाधिमा रहे । त्यहाँ म पनि गएर–

मीति ।। अक्षोभ्यस्य अंशात्. अमिताभ. नीलवर्ण(र्णो) नग्नो भूत्वा अत्रागत्य
व्यवस्थितः ।।२।। ।। स्वतेजसा अवभास्य प्रकाशयन्. ये ये लोका दुःखिता.
अज्ञानांधा(नान्धा). दशाकुशलचारिणा(णो) नरके पतिता. यत्र (यत्र-यत्र) सुखिता
इति चित(चिन्त)यन् ध्यानादपश्यतु(त्) तदा बहवो लोका दुःखिता दशाकुशलीना-
रकोऽ(अ)पश्यत्. तदा स्वतेजसा अवभासितमात्रेण तेषां नारकीयानां(णां)
अज्ञानांधानां(नान्धानाम्) अज्ञानांधाना चैतन्य. अभूत् ।। अहो कस्य देवस्यायं प्रभाव.
अस्य प्रभावात् अद्य शीतिभावमुपगता. इति स्मृतमात्रेण नरकादुद्धृष्य स्वर्गमवापः
(प) ।। ।। सुखावतीलोकधानावागत्य अपरिमितायुर्नाम तथागतस्तत्रैव स्थितः
।।३।। पुनः वज्रधातुभुवनात् वज्रसत्व(त्त्व) वज्रधात्वे(त्वी)श्वरीसमं कांवो-
(काम्बो)जीय लामावतारो उ ं रु(उर्ज्ञानरु)मूचि भूत्वा तत्रागत्यावस्थितः ।।
लोकानुद्धरणे अभासितसमाधिमकरोत् ।। ।। आचार्यः ।। अधुनाहं प्रवक्ष्यामि शृणु
वत्स महारत ।। व्ुना(व्रता)चारकथा चैव पंच(पञ्च)शिक्षा विधीयते ।। प्राणान्न
हन्यान्न पिवेद्यमद्यं मृषा न वाच्यं न हरेत् परस्वं(स्वम्) ।। मदस्य

दर्शन गर्छु । अक्षोभ्य बुद्धको अंशबाट अमिताभ बुद्ध, नीलो वर्ण र नग्न भएर यहाँ आई बसे
।।२।।

आफ्नो तेजले प्रकाश पार्दै जुन-जुन लोक (मानिसहरू) दुःखित छन्, अज्ञानले अन्धा
छन्, दश प्रकारका अकुशल (खराब कर्म) गर्छन् र नरकमा पर्छन्, अनि जहाँ-जहाँ सुखी छन
कि भनेर विचार गर्दा ध्यानले के देखे भने धेरै मानिसहरू दुःख पाएका, दश अकुशल गर्ने र
नारकी स्वभाव भएका रहेछन् । त्यसबेला अवभास-(दर्शन)-ले मात्रै आफ्नो तेजले अज्ञानद्वार

अन्धा ती नरकको दु:ख भोग्नेहरूको चैतन्य (ज्ञान) भयो– अहो ! कुन देवताको प्रभाव हो जसले गर्दा आज शीतिभाव (शान्ति, ज्ञान) प्राप्त भयो । यसरी सम्झनासाथ नरकबाट उद्धार भएर स्वर्गमा पुगे ।

सुखावतीनामक लोकधातु-(स्थान)-मा आएर अपरिमितायु नामका तथागत (बुद्ध) त्यहीं रहे ।।३।। फेरि वज्रधातुभुवनबाट वज्रसत्त्व (बुद्ध) र वज्रधात्वीश्वरीले तुल्य काम्बोजीय लामाका अवतार उर्ज्ञानरुमुचि नामले त्यहाँ आएर रहे । लोकको उद्धारको लागि गुह्य समाधि गरे ।

आचार्य (गुरु) भन्छन्– हे भक्त बाबु ! अहिले म प्रव्रज्या (सन्न्यास) व्रतको आचरणबारे भन्छु जसबाट पाँच शिक्षा प्राप्त हुन्छन्, सुन । कसैको प्राण जाने गरी हत्या नगरोस्, मदिरा नपिओस्, झूटो नबोलोस्, अर्काको धन हरण नगरोस् । मद-(घमन्ड)-को

भावं परितो विवर्ज्यं स्वर्गं च ग छे(च्छे)द् गृहवन्नरश्च ॥ हिंसाकारी तथा न्यूनो मनसा मनसापि च ॥ तस्माद्धिंसा न कर्तव्या अल्पायु. ना(युर्ना)रकी भवेत्. मिथ्यावादरता ये ते मान्य(न)हीना यदा भवेत्. तेन मिथ्या नसेव्या च दुर्गतौ च प्रजायते॥ दारिद्रा(द्र्या)र्णव पं(पङ्क)केषु परद्रव्योपहारकः ॥ कामक्रीडारतश्चापि सदा दुःखी भविष्यति ॥ शिष्योवाच ॥ अहं मा यावज्जीवं प्राणातिपातं अदत्तादानं. काममिथ्याचारं. मृषावादं मद्यपानं. एतान् परिवर्जयामि इत्युपासकचर्या ॥ ॥ गुरुरुवाच ॥ भो कुलपुत्र ! अद्यापि गृहिणा समान एव प्रव्रज्यालिंगि(लिङ्गी)ति निश्चयस्तवेति ॥ शिष्य उ(उवाच) ॥ अहमित्थं नामा यावज्जीवं धारयामि. समत्वाहरंतु(रन्तु) मां बुद्धा इति उपाध्याया. योजयंतु(यन्तु) प्रव्रज्यायां(याम्). ततो गुरुणा ज्येष्ठस्थविरस्य पैतृष्वस्त्रीयस्य वा हस्तपूजनं सुवर्णक्षुरसमर्पणं पितृष्वसु(सुः) सुवर्णस्थालीसमर्पणं ततः सर्वावरणछे(च्छे)दनादिवाक्यपूर्वकं ज्येष्ठस्थविरेण चूडाछेदनं. पितृष्वसृधारितः स्वर्णस्थाल्ये. तत(तः) चूडाछेदनानंत(नन्त)रं बहि(हिः) नि(निः)सरन् अष्टदलकमलमंड(मण्ड)लोप–

भावना हरप्रकारले छोड्नुपर्छ र घर गएझैं मानिस स्वर्ग जानुपर्छ । हिंसा गर्ने मानिस मनले पनि नीच हुन्छ । त्यसैले हिंसा (मारकाट, निन्दा) नगरोस् । हिंसा गर्ने व्यक्ति कम आयुको र नरक जाने हुन्छ । झूटो बोल्नेलाई कसैले मान गर्दैन, त्यसैले झूटो नबोल्नू । झूटो बोल्ने दुर्गतिमा फँस्छ । अर्काको धन चोर्ने व्यक्ति दरिद्रताको समुद्रको हिलोमा जाकिन्छ । कामक्रीडा-(विषयभोग)-मा लिप्त हुने व्यक्ति पनि सधैं दुःखी हुन्छ ।

शिष्य भन्छन्– जीवनभर प्राणहिंसा, नदिएको लिने काम, काम (विषयभोग) र झूटो व्यवहार, असत्य बोल्ने काम र मदिरापान त्याग्छु । उपासकको व्रत यही हो ।

गुरु भन्छन्– हे कुलपुत्र ! आजसम्म तिमी गृहस्थ भै रहे तापनि के त तिमी प्रव्रज्या–धारण गर्न सक्छौ नै भन्ने तिम्रो निश्चय छ ?

शिष्य भन्छन्– म यो सबै आचरण जीवनभर धारण गर्छु । गुरु मलाई बुद्धत्वमा पु¬याउनुहोस् । प्रव्रज्या दिनुहोस् । त्यसपछि गुरुले जेष्ठ स्थविरको वा फुपूको छोराको हात पूजा गरेर सुनको छुरी दिए, कर्ताको फुपूलाई सुनको थाली दिए । त्यसपछि सर्वाविरणच्छेदनं (सबै बाह्य रौं काट्ने) आदि मन्त्रले जेठा स्थविरले चूडा (रौं, आँठी) काटेर फुपूले लिएको सुनको थालीमा राखिदिए । चूडाछेदनपछि बाहिर निस्केर आठ पात भएको कमल–

रि उत्थापितं तं चतुःसमुद्रोदककंभे(कुम्भे)नाभिषेचयेत् ।। यन्मंग(न्मङ्ग)लमिति ।। ततः काषायवाससा तं छाद्य पूर्वासने संस्थं कृतांज(ताञ्ज)लिपुटं त्रिरत्नवंद-(वन्द)नपूर्वकं मंड(मण्ड)लमर्चयित्वा दश शिक्षा ।। ।। गुरुरु(गुरुरुवाच) ।। भो कुलपुत्र ! प्रव्रज्याव्रतं गृहीतं दशशिक्षापदं ददामि शृणु ।। ।। नृत्यं गीतं वाद्यं. सुगन्धवाससादिलेपनं. पुष्पमालादिभूषणं. अकालभोजनं उत्त(च्च)शय्या. महाशय्या. दीर्घशयन बहुभोजन शस्त्राऽस्त्रधारणं(णम्)एतानि त्याज्यानि ।। ।। चतुर्ब्रह्मविहार-धारणं(णम्) ।। दशकुशलं च ।। चतुरार्यभावना ।। एतानि दश शिक्षानि(शिक्षणानि) भावयितव्यानि ।। ।। शिष्य. (उवाच) अहं नामा. गुरो यावज्जीवं त्वद्देशितानि दश शिक्षा धारयामि ।। ।। पुनः प्रार्थयत् ।। इदं चीवरं संघ(सङ्घ)स्य विश्वासाय. संघ(सङ्घ)परिभोगाय. तथा राजकुलगमनाय. नगरग्रामगमनाय. त्रिचीवरं निवसनवस्त्रं देहि मे पिण्डपात्रं भिक्षापात्रं च. पुनः चैत्यलांछि(लाञ्छि)तखिक्खि-रिका. एतानि मे देहि प्रसन्नः ।। अहं धारयामि चीवरशोधनमंत्र(मन्त्र)वाक्यपूर्वकं-(कम्) ।। ।। तत इदमेकं चीवरं संघ(सङ्घ)स्य विश्वासाय

मण्डलको माथि रहेका ती शिष्यलाई चार समुद्रको जल रहेको घडाको जलले अभिषेक (सेचन) गरे यन्मङ्गलम् भन्ने मन्त्रद्वारा । त्यसपछि गेरुवा कपडा लाउन दिएर पूर्वतर्फ आसनमा बसेका, हात जोडेका शिष्यलाई तीन रत्न-(बुद्ध, धर्म, सङ्घ)-को नमस्कारपूर्वक मण्डलको पूजा गराएर गुरुले दश शिक्षा दिए ।

गुरुले भने– हे कुलपुत्र ! प्रव्रज्याव्रत लियौ, दश शिक्षा दिन्छु, सुन । छाड्नुपर्ने दश कुरा हुन्– नृत्य, गीत, वाद्य (बाजा बजाउनु), सुगन्ध र राम्रो वस्त्र पहिरनु, फूलमाला

आदिले सिंगारिनु, असमयमा भोजन, अग्लो र ठूलो शय्यामा सुत्नु, धेरै सुत्नु, धेरै खानु, शस्त्र र अस्त्र धारण गर्नु । चार ब्रह्मविहारको धारण, दश कुशलको आचरण चार आर्यभावना पनि अँगाल्नुपर्छ । यी दश शिक्षा हुन् ।

शिष्यले भने– हे गुरु ! यहाँले उपदेश गरेका दश शिक्षा जीवनभर धारण गर्छु । फेरि प्रार्थना गर्दै भने– यो चीवर (काषायवस्त्र) सङ्घको विश्वासको लागि, सङ्घको भोगको लागि, राजकुल जानको लागि, शहर र गाउँ जानको लागि हो । मलाई पहिरनको लागि तीन चार चीवर वस्त्र दिनुहोस्, पिण्डपात्र, भिक्षापात्र, फेरि चैत्य अङ्कित भएको खिक्खिरिका (दण्ड) प्रसन्न भएर दिनुहोस् । म चीवर (वस्त्र) शुद्ध पार्ने मन्त्रवाक्य पढेर लगाउँछु ।

त्यसपछि यो एक चीवर (वस्त्र) सङ्घको विश्वासको लागि

द्विचीवरं राजकुलगमनाय. त्रिचीवरं ग्रामनगरनिगमजनपदपरिवर्तनगमनाय अधितिष्ठंतु(ष्ठन्तु) इत्युच्चार्य समर्पयेत्. स्थविरहस्ततः ॥ इदं पात्रं भिक्षार्थं भोजनार्थं चाधितिष्ठंतु(ष्ठन्तु). पिंड(पिण्ड)पात्रसमर्पणं(णम्) ॥ खिक्खिरिकादंडं (दण्डं) धर्मधातु रत्नत्रयस्वभावं त्रिशरणगमनमधितिष्ठंतु(ष्ठन्तु). खिक्खिरिकादंड-(दण्डं)समर्पणं(णम्). ततश्चीवरनिवसनधारणं(णम्) ॥ सुवर्णतिलकधारणवाक्य-पूर्वकं(कम्) ॥ ॥ अथ नामकरण. ॥ अद्य शाक्य. अमु. (अमुक) नामा भिक्षुर्भवसीति वाक्यपूर्वकं(कम्) ॥ ततः पंच(पञ्च)सुगंदे(गन्धे)न शिरसि लेपनलिखनं(नम्). नंदावर्त्त लिखनं(नम्). ततः स्वस्तिवाक्यमुच्चारयन्. दधिपात्र-पुष्पोपढौकनं(नम्) ॥ ॥ काष्ठप्रस्थतः लाजाक्षतदु(दू)र्वासमाधि बलि.. सर्वदेवस्तुति. गुरुपूजा. दक्षिणासमर्पणं(णम्) ॥ आशीर्वाद. क्षमापणं(णम्). स्वस्तिवाक्यतो मंग(मङ्ग)लाचरणं(णम्) ॥ यज्ञश्चेत् शेषाहुतिः ॥ कलशार्पणं-(णम्). ततः सप्तपदचक्रमणं भूमौ सुवर्णचूर्णलिखित सप्तपद्मोपरि पदानुक्रमणं सपादुकेन. कमंड(मण्ड)लुदुग्धधारया दु(दू)र्वा. कुंद(कुन्द)सहितया छत्रध्वजपताक चामर व्यजन पुष्पवृष्टि सहितं स्व-

दुई चीवर राजकुल जानको लागि, तीन चीवर गाउँ, शहर र प्रान्त र देश जानको लागि हो भन्ने उच्चारण गरेर स्थविरको हातबाट लेओस् । यो भाँडो भिक्षा र भोजनको लागि हो भनेर पिण्डपात्र देओस् । धर्मधातु (बुद्ध) र तीन रत्न-(बुद्ध, धर्म, सङ्घ)-को सूचक खिक्खिरिका-नामक दण्ड तीन रत्नमा शरण पर्ने किसिमले देओस् । त्यसपछि चीवरवस्त्र (भिक्षुको गेरुवा वस्त्र) सुवर्णतिलक धारणको वाक्य पढेर धारण गरोस् ।

अब नामकरण । आज शाक्य (कुलका) फलानो नामका भिक्षु भयो भनी वाक्य पढोस् । यसपछि पाँच सुगन्धले शिरमा दल्ने र लेख्ने, नन्दावर्त लेख्ने काम सकेर स्वस्ति

(कल्याण होस्) भन्ने वाक्य पढ्दै दहीको भाँडो देग्रोस् । काठको भाँडो (पाथी)-त्राट ला
अक्षता, दूबो चढाउँदै समाधि-(योग)-मा समर्पित हुने र सबै देवताको स्तुति तथा गुरुको पृ
गर्ने र दक्षिणा दिने काम गरोस् । आशीर्वाद लिने, क्षमा माग्ने र मङ्गलाचरण (मङ्गल वा
पढ्ने) काम गरोस् । यज्ञ (होम) छ भने शेष (बाँकी) देवताको लागि हवन गरोस्, क
समर्पण गरोस् । यसपछि सात पाइला हिंड्ने, भूमिमा सुनको धूलोले लेखिएको सात कमलम
खराउ लगाएर हिंड्ने काम गरोस् । दूबो कुन्दपुष्पसहित राखिएको दूधको धारा बर्साउँदै छा
ध्वजा, पताका, चामर, पङ्खा र फूलको वृष्टिसहित

स्तिवाक्यपुरःसरं शंख(शङ्ख)ध्वनिना नाक्यमंग(वाक्यमङ्ग)लोत्सवं सप्तप
पदानुचंक्रमणं(णम्) ।। यथा शाक्यसिंहादीनां जातमात्रे एव ।। पंच(पञ्च)दि
सप्तपदानुक्रमणं(णम्) तत्रैव तदा कुटुंवा(टुम्बा)दिवंधु(बन्धु)जनैः रत्नवस्त्रदक्षि
निवेदनीया ।। प्रव्रजिताय कुलपुत्राय तेनाप्याशिषो देया(याः) ।। ततोऽन्यत्र विह
प्रति त्रिरत्नं चैत्यदर्शनार्थं. छत्रध्वजपताकादिभिः शंख(शङ्ख)वाद्य(द्या)दिभि(भि
दश स्थविरादि वंधु(बन्धु)जनानुचरैः सहगमनं(नम्). तत्र(तः) प्रत्यागत्य द्वारे
भूम्यां गोमयमृत्तिकालेपिते द्वीपमुज्वा(ज्ज्वा)ल्य स्थविराभिर्नायिकोभि(भिः
नीराजयित्वा मंग(मङ्ग)लमाचरन् गृहे प्रवेशा(श)यित्वोपरि शुद्धागारे पंच
(पञ्चा)मृतक्षीर(क्षीरभोजनं) भोजयेत्. प्रव्रजितं कुलपुत्रं(त्रम्) ।। ।। त
पुरोहित स्थविरादिभिर्वंधु(बन्धु)जनैर्भोजनीयं(यम्) ।। ।। इति प्रव्रज्या
चूडाछेदनं(नम्) ।। ।। ततः प्रव्रज्यादिनादारभ्य चतुर्थदिनपर्यंतं(र्यन्तम्) ।। चो
निवसनवासो खिक्खिरीदंड(दण्ड)धृक् पादुकानुचारी प्रत्यहं राजकुलादिकु
शाक्यश्च(श्चेद्)बहुषु. नोचेत् सप्तषु कुलेषु भिक्षित्वा प्रत्यागत्य शुद्धागारे एकव
पंचा(पञ्चा)मृतक्षीरभोजननं(भोजनम्) इति पिण्डपात्रयाचना ।।

स्वस्तिवाक्यको उच्चारण गर्दै शङ्खध्वनि र धेरै मङ्गलवाक्य पढ्दै सात पाइला हिंड्ने क
हुनुपर्छ । जसरी शाक्यसिंह आदिको जन्मनासाथ भएथ्यो । पाँच दिशामा सात पाइ
हिंड्नुपर्छ । त्यहाँ नै कुटुम्ब आदि बन्धुजनले रत्न, वस्त्र, दक्षिणा आदि दिनुपर्दछ । प्रव्र
(सन्न्यास) लिएका कुलपुत्रलाई बन्धुजनले पनि आशिष दिनुपर्छ । त्यसपछि अन्त बौद्धविहार
त्रिरत्न (बुद्ध, धर्म, सङ्घ) र चैत्यको दर्शनको लागि जाओस् । छाला, ध्वजा र पताकासँ

शङ्खध्वनि आदि र दश स्थविर (मूली बौद्ध भिक्षु) आदि बन्धुजन र सहायकहरूसाथ हिंडोस् । त्यसपछि फर्केर ढोकानजीकै गोवरमाटोले लिपेको भूमिमा बत्ती बालेर मूली स्थविरी-(बौद्ध भिक्षुणी)-द्वारा नीराजन (आरती) गरेर मङ्गलगान गर्दै घरमा प्रवेश गराएर शुद्ध कोठामा प्रव्रज्या भएको कुलपुत्रलाई पञ्चामृत र खीर भोजन गराओस् । अनि पुरोहित स्थविर (भिक्षु) र बन्धुहरूले पनि भोजन गर्नू । यसरी प्रव्रज्याव्रत र चूडाकर्म सकिन्छ ।

यसपछि प्रव्रज्या लिएको दिनवाट चौथो दिनसम्म चीवर (गेरुवा वस्त्र) लगाउने, खिक्खिरी दण्ड लिने, खराउ लगाएर हिंड्ने, प्रतिदिन राजाको कुलमा, सकिन्छ भने घरैमा र नभए सात कुल-(घर)-मा भिक्षा मागी फर्केर शुद्ध कोठामा [दिनको] एकपल्ट मात्रै पञ्चामृत र खीर भोजन गरोस् । यसैलाई पिण्डपात्रको याचना (भिक्षा) भन्दछन् ।

ततश्चतुर्थदिने चीवरादित्यागः कलशादिस्थापन. कृत्वा यथाविधि सूर्यार्घगुरुपादार्घं. पंच(पञ्च)गव्यशोधन. गुरुमंड(मण्ड)लादिकं समाप्य प्रव्रजितं कुलपुत्रं जलधारया मंग(मङ्ग)लवाक्यपुरस्सरं प्रत्यागत्य स्थविराणीहस्ततः स्वस्तिकासने निषिद्य गुरुमंड(मण्ड)लादिकं समापयित्वा. नीराजनादिभिः कर्म समापयित्वा तिष्ठेत् ।। ।। तदा शिष्यो गुरु प्रार्थयेत् ।। अहमेकां विज्ञप्ति करोमि गुरो ।। महादुर्लभमिदं व्रतं चरितुं धारितुं न शक्यते. चतुर्दिनमेव धारयामि ।। तस्योपाये कृपां कुरु ।। ।। गुरु. (गुरुणा उक्तं) ।। माया पूर्वं भाषितं कुलपुत्र त्वया न शक्यते इति. तस्योपायमहं करोमि ।। ।। न प्राणिहिंसां न परस्वचौरं तथा परस्त्रीगमनं न कार्यं (र्यम्)।। भाष्यं न मिथ्यावचनं न मद्यं पेयं परेषां हितमाचरस्वेति पूर्वं मया कथिता. तथापि यदिछा-(च्छा)तत्करोमीति कृतं शुभं(भम्) ।। ।। अथ चैत्यस्य नाम ।। कूटागारोपरि सप्तपद्मासनचैत्यमैत्रेयः ।।१।। वसुंध(सुन्ध)रादेवीस्थित कूटागारचैत्यः ।।२।। पद्म-पाणिस्थितकूटागारचैत्यः ३. देव १३ ।। ।। द्वितलकूटागाराकृतिचैत्य. मृदंग(दङ्ग)-राज ४ र–

यसपछि चीवर (वस्त्र) आदि त्याग गर्दै कलश आदिको स्थापना गरेर विधिपूर्वक सूर्यमा र गुरुको पाउमा अर्घ चढाई गुरुमण्डललाई पञ्चगव्यले शुद्ध पार्ने आदि काम सकी प्रव्रज्यामा गएका कुलपुत्रलाई मङ्गलवाक्य पाठ गर्दै जलधाराले सेचन गरी फर्काएर स्थविराणी-(बौद्ध भिक्षुणी)-द्वारा स्वस्तिकनामक आसनमा बसाल्दै गुरुमण्डल आदि कर्म र नीराजन (आरती) आदि सकेर रहोस् ।

अनि शिष्यले गुरुलाई प्रार्थना गरोस्– हे गुरु ! म एउटा कुरा भन्छु । ज्यादै दुर्लभ यो व्रत गर्न र धारण गर्न सकिदैन, चार दिन मात्र धारण गर्छु । त्यसको उपाय बताउनुहोस् ।

गुरुले भने– हे कुलपुत्र ! मैले पहिले भनेकै हुँ तिमी सक्दैनौ भनेर। त्यसको उपाय म गर्छु। मुख्य साधन हुन्– प्राणीको हिंसा नगर्ने, अर्काको धन नचोर्ने, अर्काकी स्त्रीसँग सहवास नगर्ने, झूटो नबोल्ने, मदिरा नपिउने र अरूको हित गर्ने। यी कुरा पहिले पनि भनेको हुँ तैपनि जे इच्छा त्यही गर्छु भन्छौ भने पनि ठीक छ। यो प्रसङ्ग सकियो।

अब चैत्यका नामहरू। ती चैत्यहरू हुन्– कूटागार-(बौद्ध विहार वा मन्दिरको माथिल्लो चोटा)-को माथि सात पद्मासन चैत्य मैत्रेय ॥१॥ वसुन्धरादेवी रहेको कूटागार चैत्य २, पद्मपाणि (बुद्ध) रहेको कूटागार चैत्य ३, देवताहरू १३, दुईतले कूटागार आकृतिको चैत्य, मृदङ्गराज (चैत्य) ४

म्यकूटागारचैत्य दे. (देव) १६ ॥५॥ मंजु(मञ्जु)श्रीस्थितकूटचैत्यदेव ४ ॥६॥ कूटागारचैत्यदेव ८ ॥७॥ जलहर्यो(हर्‍यु)परिस्थूल पंच(पञ्च) जिनालं(लङ)कृतचैत्य देवा ८ ॥८॥ जलहलो(हर्‍यु)परि मैत्रेय चैत्यदेव ५॥९॥ धर्मधातुमंड(मण्ड)लाकारचैत्य. ॥१॥ धर्मधातुजिनालयचैत्यः ३ मैत्रेयस्थितोपरिधर्मधातु ३ द्विवेदिकोपरिधर्मधातुदेव १२॥४॥ हर्म्याकारचैत्य ॥१॥ आछा(च्छा)दनगृहाकारचैत्य ॥२॥ धान्यराश्याकृतिचैत्य ॥३॥ कूटागारचैत्य अष्टशृंग(शृङ्ग)देव २०॥ प्रतापपुरदेवालय ॥१॥ सप्तपद्मासनपद्माकारचैत्यदेव १२॥१॥ पद्माकारचैत्यधर्मधातुपद्मपाणिस्थदेव५॥२॥ पद्माकार ॥३॥ पद्माकार धर्मधातु चैत्य ॥४॥ पद्मचैत्य ॥५॥ सप्तपद्मावल्यासनपद्माकारचैत्य ॥६॥ पंच(पञ्च)तलकूटागारोपरि. घंटा(घण्टा)गारचैत्य. ध्वजराज. बोधिसत्व(त्त्व) ॥१॥ दुर्गतिपरिशोधनमंड(मण्ड)लचैत्य ॥१॥ सुखावति(ती)भुवनाकारचैत्य ॥२॥ रत्ननिर्मितप्रासादचैत्य ॥१॥ रत्नचैत्यतारादिबोधिसत्व(त्त्व) युत ॥२॥ प्रासाद(दा)कार ॥१॥ कलशाकार ॥२॥ ब्रह्मांडा-(ह्माण्डा)कार ॥३॥ घंटा(घण्टा)कारः दोहराग्वा ३

राम्रो कूटागारस्थित चैत्यदेव १६॥५॥ मञ्जुश्री रहेको कूटचैत्यदेव ४॥६॥ कूटागारचैत्यदेव ८॥७॥ जलहरीको माथि स्थूल पाँच जिन-(बुद्ध)-ले सजिएका चैत्यदेवहरू ८॥८॥ जलहरीमाथि मैत्रेयचैत्यदेव ५॥९॥ धर्मधातुमण्डलको आकार भएको चैत्य ॥१॥ धर्मधातुजिनालयनामक चैत्य ३, मैत्रेय रहेमाथि स्थित धर्मधातुचैत्य ३, दुई देवीमाथि रहेका धर्मधातुदेव १२॥४॥ हर्म्य-

(दरवार)-को आकारको चैत्य ॥१॥ ढाक्ने घरको आकारको चैत्य ॥२॥ धानको रासको आकारको चैत्य ॥३॥ कूटागार चैत्य र अष्ट शृङ्गदेव २०, प्रतापपुर-देवालय ॥१॥ सात कमलको आसनमा स्थित पद्माकार चैत्यदेव १२॥१॥ पद्मको आकारको चैत्यस्वरूप धर्मधातु र पद्मपाणि (बुद्ध) रहेका देव ५॥२॥ पद्माकार ॥३॥ पद्माकार धर्मधातुचैत्य ॥४॥ पद्मचैत्य ॥५॥ सात कमलमालामा स्थित पद्माकार चैत्य ॥६॥ पाँचतले कूटागारमाथि स्थित घण्टागारचैत्य, ध्वजराज र बोधिसत्त्व ॥१॥ दुर्गतिबाट पार लगाउने मण्डलचैत्य ॥१॥ सुखावतीभुवनको आकारको चैत्य ॥१॥ तारा आदि र बोधिसत्त्वले युक्त रत्नचैत्य ॥२॥ दरबारको आकारको (चैत्य) ॥१॥ कलशको आकारको (चैत्य) ॥२॥ ब्रह्माण्डको आकारको (चैत्य) ॥३॥ घण्टाको आकारको दोहराग्वानामक चैत्य ३–

खासाचिथ नाम चैत्यपात्राकारचैत्य १२०॥ कुंने चैत्य ४॥१॥ पात्राकार प्रज्ञापारमिता देव २३॥२॥ चतुर्षु दिक्षु प्रासादाकृतिचैत्यदेव ॥५॥ ॥ एकवेदिकोपरि कोष्ठाकारचैत्य अक्षोभ्यमुखा ॥१॥ मंदि(मन्दि)राकारचैत्यदेवता: ॥४८॥ प्रासादाकारचैत्यदेव ॥८॥ कूटाकारद्वितलवेदिकादेव ॥४॥ मंदि(मन्दि)राकारचैत्यदेव ॥४८॥ मंदि(मन्दि)रकूटाकारचैत्य. अक्षोभ्यः ॥ ॥ विकसितकमलाकार चैत्य दे (देव) ॥४॥ ॥ चातुरवेदिकोपरि पात्राकार चैत्यदेव ॥४॥ चतुरवेदिकोपरि पात्राकारदेव ॥४॥ सुंद(सुन्द)र हर्म्याकार चैत्य दे (देव) ॥४॥ ॥ नमो लोकनाथाय ॥ ॥ योगेश्वरो महादेवोनुस्मरति ॥ ॥ पादकी देवी मानुषी. रूपिणी. एकमुखी. द्विनेत्रा. सुंद(सुन्द)रास्या. कमलाक्षी. स्मितमुखी. विंवो(विम्बो)ष्ठी. कुंड(कुण्ड)लिनी. सुवर्णवर्णा. कंवु(कम्बु)ग्रीवा. कंठ(कण्ठ)मालिनी. द्विभुजा. दक्षिणेन प्रसारितेन वरदमुद्रां. वामेनाकुंचि(कुञ्चि)तेनाभयमुद्रां दध(धा)ना. चतुश्चक्रांकि(क्राङ्कि)तपाणितला. विचित्रांव(त्राम्ब)रवृतशिरोध्र्वागा(ध्र्वाङ्गा). चित्रांव(त्राम्ब)रनीविका. पद्मासनस्था. अनुचा(च)रीद्वयान्वितपार्श्वा. गरुडतोरणां–

खासाचिथ नामको चैत्य र पात्राकार चैत्य १२० । कुन्ने चैत्य ४॥१॥ पात्रको आकारमा प्रज्ञापारमितादेव २३॥२॥ चारै दिशामा प्रासाद-(दरबार)-को आकारको चैत्यदेव ॥५॥ एक वेदीमाथि कोठाको आकारको चैत्य, अक्षोभ्य आदि गरेका ॥१॥ मन्दिरको आकारका चैत्यदेवता ॥४८॥ प्रासादको आकारका चैत्यदेवता ॥८॥ कूटाकारको दुईतले वेदीको देवता ॥४॥ मन्दिरको आकारका चैत्यदेवता ॥४८॥ मन्दिरको कूटको आकारका चैत्य अक्षोभ्य (बुद्ध) ॥ फुलेको कमलको आकारका चैत्यदेवता ॥४॥ चार वेदीमाथि पात्रको आकारका चैत्यदेवता ॥४॥ चार वेदीमाथि पात्राकारदेवता ॥४॥ राम्रो हंनेलीको आकारका चैत्यदेवता ॥४॥

लोकनाथ-(ईश्वर)-लाई नमस्कार। योगेश्वर (योगका मालिक) महादेव सम्झनु-हुन्छ। पादकीदेवी मानिसको रूप लिएकी एक मुख र दुई आँखा भएकी, राम्रो मुखकी, कमलको जस्तो आँखा भएकी, हँसमुख, बिम्ब (गोलकाँक्री) जस्तो ओठ भएकी, गहना लगाएकी, सुनको वर्ण भएकी, शङ्खजस्तो घाँटी भएकी, कण्ठमाला भएकी, दुई हात भएकी, पसारिएको दाहिने हातले वरदमुद्रा र खुम्च्याएको बायाँ हातले अभयमुद्रा लिएकी, पैतालामा चार चक्र अङ्कित भएकी, शिर र माथिल्लो अङ्गमा विचित्र कपडा पहिरेकी, छिरबिरे सारी लगाएकी, पद्मासनमा बसेकी, दुवैतिर दुई सेविका भएकी, गरुड अङ्कित–

कित(णाङ्कित) कोष्ठागारस्थ ।।१।। वैष्णवराजा ।। एकास्य. कुवलयदल. नेत्रद्वय-धूसरवर्ण. द्विभुज. वामेन हृत्प्रदेशे गदां विभ्रत्. दक्षेण प्रसारितेन वरदमुद्रां च. षण्मुद्राभरण. दंष्ट्रोत्कटभीषण. दंष्ट्रालु. विचित्रांव(त्राम्ब)र. ऋतु. सरलकमलासन. मयूरद्वयांकि(याङ्कि)ततोरणांकि(णाङ्कि)तकोष्ठागारस्थ ।।२।। सामान्यदेवराजः ।। एको(का)स्यः कुसुमनेत्रद्वय. कपिलवर्ण. षण्मुद्रालं(लङ)कृतः द्विभुज. दक्षसरल. वामेन हृत्प्रदेशे धनुःशरौ दधानः आकुंचि(कुञ्चि)तेन श्वेतगजोपरि पद्मासनस्थः विचित्रशाखांकि(खाङ्कि)ततोरणकोष्ठागारस्थः ।।३।। विश्वकर्मा ।। एकास्य. कुमुद-नेत्रद्वयः श्यामवर्णः षण्मुद्राभरणः ज्वालामालांकि(लाङ्कि)त कूटागारमुकुटधर. चक्रांक(क्राङ्क)चतुर्भुजः दक्षवामाभ्यां वरदाभयमुद्रे. चक्रशंखौ(शङ्खौ) दधानः विचित्रपीतांव(ताम्ब)रः गरुडवाहनः विचित्रशाखातोरणांकि(णाङ्कि)तकोष्ठागारे-(रः) ।।४।। चतुर्महाराजकायिका ।। ऊर्द्ध्वपं(पङ)क्तौ प्रथमकोष्ठे एकवक्त्रः द्विनेत्रः कुं(कुङ)कुमवर्णः षण्मुद्राभरणः द्विभुज. दक्षेण उत्तानपाणितलः वामेन ⋯ ल–

तोरण (चँदुवा) भएको कोठामा रहेकी छिन् ।।१।। वैष्णव राजा चाहिं एक मुख र कमलजस्तो दुई आँखा भएका धुस्रो वर्णका, दुई हात र बायाँ हातले हृदयमा गदा लिएका, अनि फैलेको दाहिने हातले वरदमुद्रा लिएका, छ मुद्राको आभरण (गहना) भएका, उत्कट दाह्राले डरलाग्दा, धेरै दाह्रा भएका, विचित्र कपडा पहिरेका सीधा र कमलासनमा रहेका, अनि दुई मयूर अङ्कित तोरण भएको कोठामा रहेका छन् ।।२।। सामान्य देवराजचाहिं एक मुख, फूलजस्ता दुई आँखा, कैलो वर्ण, छ मुद्राले अलङ्कृत, तथा दुई हात भएका दाहिने हात सीधा र बायाँ हातले हृदयमा धनुर्बाण लिएका सेतो हात्तीमाथि पाउ खुम्च्याएर पद्मासनमा बसेका, अनि

अनौठो हाँगा अङ्कित तोरण (चँदुवा, पाली) भएको कोठामा बसेका छन् ।।३।। विश्वकर्मा देवता एक मुख, कमलजस्ता दुई आँखा, श्यामवर्ण तथा छ मुद्राले अलङ्कृत भएका र ज्वाला र मालाले अङ्कित कूटागारजस्तै मुकुट लगाएका, चक्र चिह्नित चार हात भएका दायाँ र बायाँ हातले वरद र अभयमुद्रा, अनि चक्र र शङ्ख लिएका, अनौठो पीताम्बर (पहेंलो कपडा) लगाएका, गरुडमाथि बसेका, अनि विचित्र शाखा (हाँगा) अङ्कित तोरण भएको कोठामा रहेका छन् ।।४।। यी माथि वर्णित चार महाराजका मूर्ति हुन् । माथि पङ्क्तिमा पहिलो कोठामा एक मुख, दुई आँखा र कुङ्कुमजस्तै पहेलो वर्ण भएका, छ मुद्राले अलङ्कृत, दुई हात भएका, दाहिने हात उत्तानो गरी तल झारेका र बायाँ

लितासनः ॥ दक्षपार्श्वचामरधारिणी. सीमंति(मन्ति)नी. कुं(कुङ)कुमवर्णाः उत्थिताः चामरं बीजयंति(यन्ति) ॥ द्वितीये कोष्ठे पुरुषमूर्तिद्वयं(यम्). एकास्यं. द्व्यक्षं. कुं(कुङ)कुमवर्णं द्विभुजं. षण्मुद्राभरणं ललितासनं(नम्) उत्तानस्थदक्षपाणितलं जान्वधिष्ठितवामपाणितलं. कूटाकारमुकुटं. स्त्री चैका. वामभणे शिरोंग(रोङ्ग)परिवृतांव(ताम्ब)रा. विचित्र नीविवस्त्रा. उत्थिताः भूम्याक्रांत(क्रान्त)पाणितलयुगला. ॥२॥ तृतीये एकास्य. द्व्यक्षं(द्व्यक्षः). कुं(कुङ)कुमवर्ण. द्विभुज. ललितासन. षण्मुद्राभरण. विचित्राधोंवर(विचित्राधोम्बर). दक्षेण सरलेन जानुं वक्षं स्पृशन्. वामेन हृदि कमंड(मण्ड)लुं दधन्. पार्श्वयोश्चामरधारिसुंद(सुन्द)रीद्वयं(यम्). ॥३॥ चतुर्थे द्वितीयकोष्ठवत् ॥४॥ पंच(पञ्च)मे वनांत(नान्त)रे पर्वताकारपीठादुत्थितोर्द्ध्वांग(र्द्ध्वाङ्ग): एकास्य. द्व्यक्ष. कुं(कुङ)कुमवर्ण. द्विभुजः दक्षेण दर्पणं वामेनां(नाङ)कुशं बिभ्रत्:(त्) षण्मुद्राभरण. वृक्षस्ताधो(ध.) तस्थिवान् ॥५॥ अधो(धः)पं(पङ)क्तौ चत्वारो दिक्पालाः वामावर्तेन प्रथमकोष्ठे इंद्र(इन्द्र). एकास्य. हिमवर्ण. द्वय(द्व्य)क्ष. षण्मुद्राभरण. कूटाकारमुकुट. द्विभुज. दक्षेण दक्षजानुस्पर्शितपाणितलः वामेन

हात ⋯ललितासनमा बसेका [पुरुष] छन् । दाहिने बगलमा चवँर लिएकी, कुङ्कुमजस्तै पहेंलो वर्णकी, उठेकी चवँर हम्कने सीमन्तिनी (सिउँदो कोरिएकी स्त्री) छन् । दोस्रो कोठामा पुरुषका दुई मूर्ति छन् । यी मूर्तिहरू एक मुख, दुई आँखा, कुङ्कुम वर्ण र दुई हात भएका, छ मुद्राले अलङ्कृत, ललितासनमा बसेका दाहिने हात उत्तानो र बायाँ हात घुंडामाथि राखेका कूटाकारको मुकुट पहिरेका छन् । बायाँ बगलमा शिर र अङ्गमा कपडा पहिरेकी विचित्र साडी लगाएकी, उठेकी र दुई पाउ जमीनमा खडा गरेकी एक स्त्री छिन् ॥२॥ तेस्रो कोठामा एक मुख, दुई आँखा, कुङ्कुम वर्ण र दुई हात भएका, ललितासनमा बसेका, छ मुद्राले अलङ्कृत,

विचित्र कपडा पहिरेका, दाहिने सीधा हातले दाहिने घुंडा छोएका, बायाँ हातले हृदयमा कमण्डलु लिएका [पुरुष] छन्, दुवै बगलमा चवँर लिएका दुई सुन्दरी छन् ॥३॥ चौथो कोठामा दोस्रो कोठामा जस्तै ॥४॥ पाँचौ कोठामा जङ्गलमा पर्वतको आकारको पीठ-(आसन)-बाट माथिल्लो शरीर उठेजस्ता, एक मुख, दुई आँखा, कुङ्कुमवर्ण र दुई हात भएका दाहिने हातले ऐना र बायाँ हातले अङ्कुश लिएका, छ मुद्राले शोभित, अनि वृक्षमुनि बसेका [पुरुष] छन् ॥५॥ तलको पङ्क्तिमा चार दिक्पालमध्ये बायाँतर्फबाट पहिलो कोठामा इन्द्र छन् । यिनी एक मुख, हिउँजस्तो सेतो वर्ण, दुई आँखा भएका, छ मुद्राले शोभित, कूटाकार मुकुट पहिरेका, दुई हातमध्ये दाहिने पन्जाले दाहिने घुंडा छोएका, बायाँले

**हृदि गदाधरः ललितासनः पार्श्वयोर्मृदंगं(दङ्ग) वाद्यमानौ सुंद(सुन्द)रौ शुक्लवर्णौ तोपिकां धारिणौ ॥१॥ तद्दक्षकोष्ठे यमराजः एकास्यः कालवर्णः कूटाकारमुकुटः द्व्यक्षः षण्मुद्राभरण· द्विभुज· दक्षजानुदक्षपाणितलः वामहृत्प्रदेशे गदाधरः ललितासनः पीठोपरि पार्श्वयोः यमदूतौ कालवर्णौ गदाधरौ कोपीनगात्रौ· भयंक(यङ्क)रौ· व्यात्तास्यौ ॥२॥ तद्दक्षे वरुणनागराजः एकास्यः द्व्यक्षः कर्पूरवर्णः कूटागाराकार-मुकुटः षण्मुद्राभरण· द्विभुज· दक्षजानुदक्षपाणितल· वामगदाधरः ललितासन· पीठोपरि पार्श्वयोः सर्पफणामुकुटौ· एकास्यौ· द्विनेत्रौ· द्विभुजौ· दक्षे गदाधरौ· उत्थायमानौ· कर्बुरवर्णौ नागौ ॥३॥ तद्दक्षे कुवेरः पीतवर्णः अन्यत्संर्व(त्सर्वं)पूर्ववत् ॥ पार्श्वयोः गदाधरौ ॥५॥ ॥ अथ धर्मसं(सङ)ग्रहलिखितमष्टनरकनामा ॥ संजी(सञ्जी)वः कालसूत्रः संघा(सङ्घा)तः रौरव-महारौरवं· तपन· प्रतपन· अवीचिनरकं(कम्) ॥८॥ मतांत(त्तान्त)रतः ॥ क्षुरधारा· शाल्मलीवृक्षतप्तबालुका· अग्निघट· अधोगुटिकाशू-लनरक· ॥ ॥ प्रेतनरक· शूलनरक· अग्निज्वालानरक· छेदन—**

हृदयमा गदा लिएका र ललितासनमा बसेका छन् । दुवै बगलमा मृदङ्ग (मादल) बजाउने, सेतो वर्णका र तोपिका (?) धारण गर्ने (दुई सेवक) छन् ॥१॥ त्यसको दाहिने कोठामा यमराज दिक्पाल छन् । यिनी एक मुख, कालो वर्ण, कूटाकार मुकुट र दुई आँखा भएका, छ मुद्राले शोभित, अनि दुई हातमध्ये दाहिने हात दाहिने घुंडामा राखेका, बायाँ हातले हृदयमा गदा लिएका र ललितासनमा बसेका छन् । पीठमाथि दुवै बगलमा कालो वर्णका, गदा लिएका, रिसाहा शरीर भएका, भयङ्कर र मुख बाएका दुई यमदूत छन् ॥२॥ दाहिनेतर्फ वरुण नामका

नागराज छन् । यिनी एक मुख, दुई आँखा र कपूरजस्तो सेतो वर्ण भएका कूटागार मुकुट लगाएका, छ मुद्राले अलङ्कृत तथा दुई हातमध्ये दाहिने हात घुँडामाथि र बायाँ हातले गदा लिएका, अनि ललितासनसा बसेका छन् । पीठमाथि दुवै बगलमा सर्पफणाको मुकुट भएका, एक मुख, दुई आँखा र दुई हात भएका, दाहिने हातले गदा लिएका, उठेका र कपूर वर्णका दुई नाग छन् ।।३।। दाहिनेतर्फ कुबेर छन् । यिनी पहेंलो वर्णका र अरू सबै पहिलेजस्तै, दुवै बगलमा गदा लिएका सेवक छन् ।।५।।

अब धर्मसङ्ग्रहमा लेखिएका आठ नरकका नाम भनिन्छन् । ती आठ नरक हुन्– सञ्जीव, कालसूत्र, सङ्घात, रौरव, महारौरव, तपन, प्रतपन र अवीचि नरकहरू ।।८।। अर्को मतले नरकहरू हुन्– क्षुरधारा, शालमलीवृक्षतप्तवालुका, अग्निघट, अधोगुटिकाशूलनरक, अग्निज्वालानरक, छेदन–

भेदन· अग्निद(दा)ह· ताडन· मारन(ण)· असिप्रहार· पशुनरक लिखितं(तम्) ॥ ॥
अथ केतुग्रहः (॥) नव कोष्ठलिखितानि न(नव)मूर्तिव(मूर्ति)ध्यानानि ॥ मध्ये कोष्ठे एकास्य· श्वेतवर्ण द्वयक्ष· षण्मुद्राभरण· द्विभुज· दक्षेणाकुंचि(कुञ्चि)तेन पुस्तकं वामेनाकुंचि(कुञ्चि)तेन प्रणाममुद्रा· अर्द्धाङ्गा· कटिमारभ्य सर्पपुछ(च्छ)-वेष्टितः पादरहित· केतुग्रह इति कथितः ॥६॥ पूर्वकोष्ठे एकास्यः द्वयक्षः पीतवर्णः द्विभुजः दक्षेण सरलपाणितलः वामेनाकुंचि(कुञ्चि)तेन हृत्प्रदेशे व्यजनं दधानः श्वेततुरगासनः ॥ विचित्रांव(त्राम्ब)र ॥१॥ आग्नेयकोष्ठे ॥ एकास्य· द्वयक्ष· पीतवर्ण· द्विभुज· दक्षसरलपाणितल वामेन हृदि कलशं द्वीपिवाहन ॥२॥ दक्षिणकोष्ठे एकास्य· द्वयक्ष· नीलवर्ण· द्विभुजः दक्षसरलपाणितलः वामेनाकुंचि(कुञ्चि)तेन शंखं(शङ्खं) दधान· विचित्रांव(त्राम्ब)रः वृषभासनः ॥३॥ नैर्ऋत्यकोष्ठे एकास्य· द्वय(द्वय)क्ष· श्वेतवर्ण. द्विभुज· षण्मुद्राभरण· द्विभुज· दक्षसरल· वामेनाकुंचि(कुञ्चि)-तेन चामरं श्वेतगजवाहनः ॥४॥ पश्चिमे एकास्य· द्वयक्ष· कृष्णवर्ण· द्विभुज· दक्षेना-(णा)कुंचि(कुञ्चि)तेन अभयमुद्रां वामेनाकुंचि(कुञ्चि)तेन पद्माका–

भेदन-अग्निदाह-ताडन-मारण-असिप्रहार र पशुनरक लेखिएका छन् ।

अब केतुग्रहका नौ कोठामा लेखिएका नौ मूर्तिका ध्यानहरू लेखिन्छन् । बीचकोठामा एक मुख, सेतो वर्ण र दुई आँखा भएका, छ मुद्राले शोभित, दुई हातमध्ये खुम्च्याएको दाहिने हातले पुस्तक र खुम्च्याएको बायाँ हातले प्रणाममुद्रा लिएका, आधा अङ्ग भएका, कटिदेखि सर्पको पुच्छरले बेरिएका, अनि पाउ नभएका केतुग्रह छन् भन्ने बताइयो ॥६॥ पूर्व कोठामा एक मुख, दुई आँखा, पहेंलो वर्ण र दुई हात भएका, दाहिने हात सीधा गरी तल पुऱ्याएका, अनि खुम्च्याएको बायाँ हातले हृदयमा पङ्खा लिएका, अनि सेतो घोडा चढेका र विचित्र कपडा लगाएका [केतुग्रह] छन् ॥१॥ आग्नेय कोठामा एक मुख, दुई आँखा, पहेंलो वर्ण र दुई हात भएका, अनि दाहिने हात सीधै तल झारेका तथा बायाँ हातले हृदयमा कलश लिएका

र सिंहको वाहनमा रहेका (केतुग्रह) छन् ॥२॥ दक्षिण कोठामा एक मुख, दुई आँखा, नीलो वर्ण र दुई हात भएका, दाहिने हात सीधै तल झारेका र खुम्च्याएको बायाँ हातले शङ्ख लिएका, विचित्र कपडा लगाएका, अनि साँढेमा चढेका [केतुग्रह] छन् ॥३॥ नैर्ऋत्य कोठामा एक मुख, दुई आँखा, सेतो वर्ण र दुई हात भएका, अनि छ मुद्राले शोभित तथा दुई हातमध्ये दाहिने हात सीधा तल झारेका र खुम्च्याएको बायाँ हातले चवँर लिएका तथा सेतो हात्तीमा चढेका छन् ॥४॥ पश्चिमतर्फ एक मुख, दुई आँखा, कालो वर्ण र दुई हात भएका खुम्च्याएको दाहिने हातले अभयमुद्रा र खुम्च्याएको बायाँ हातले–

**रं छत्रं(त्रम्) ॥ विचित्रांव(त्राम्ब)र· काकवाहनः ॥५॥ वायव्यकोष्ठे· एकास्य· कृष्णसर्पमुख· कंठा(कण्ठा)दारभ्य सर्वांग(र्वाङ्ग): श्वेतवर्णः षण्मुद्रा द्विभुज· दक्ष-सरलपाणितलः वामेनाकुंचि(कुञ्चि)तेन व्यात्तमुखप्रदेशे मीनं दधानः विचित्रांव-(त्राम्ब)रः तुरगवाहनश्वेतः ॥६॥ उत्तरे· एकास्य· द्वयक्षर (द्वयक्षः) कबुंरवर्ण· षण्मुद्रा· द्विभुज· वक्षसरलपाणितलः वामेनाकुंचि(कुञ्चि)तेन हृदि अं(अङ)कुशं दधान· विचित्रांव(त्राम्ब)र· मयूरवाहनः ॥७॥ ईशाने· एकास्य· द्वयक्ष· द्विभुज· दक्षसरल· वामेनाकुंचि(कुञ्चि)तेन चामरं महिषासनः ॥८॥ मध्ये केतु ग्रहमारभ्य· पूर्वादिक्रमतः सूर्यादिग्रहा नव केषांचि(षाञ्चि)न्मते ॥ ॥ एकस्मिन् पत्रे चतुषु(र्षु) कोषे(ष्ठे)षु चतुर्णां देवतां(वानां) मूर्त्त यां(र्तयः) ॥ ॥ मूलमुखं पीतं· द्वय(द्वय)क्ष· पार्श्वमुखं द्वयं कर्बुरं सर्वाङ्गं पीतं कूटागारं मुकुटं· षण्मुद्रा· चतुर्भुजं दक्षेणैकेन हृत्प्रदेशे परशुं दधतः वामेन अभयमुद्रा· द्वौ वामदक्षौ सरलौ दक्षपादेन हंसमाक्रम्य ॥१॥ एकास्य· द्वय(द्वय)क्ष· पीतवर्ण· चतुर्भुजः द्वाभ्यां हृत्प्रदेशे धनुः पासौ(शौ)द्वौ सरलपाणितलौ वामपादेन गजशीर्षमाक्र–**

पद्माकार छत्र (छाता) लिएका, अनि विचित्र कपडा लगाएका र कागमाथि चढेका (ग्रह) छन् ॥५॥ वायव्य कोठामा एक मुख त्यो पनि कालो सर्पको जस्तो मुख भएका घाँटीदेखि लिएर सबै अङ्ग सेतो वर्णका, छ मुद्राले शोभित, दुई हात भएका र दाहिने हात सीधा तल हत्केला फैलाउँदै पसारेका, अनि खुम्च्याएको बायाँ हातले बाएको मुखमा माछा लिएका, विचित्र कपडा पहिरेका तथा सेतो घोडा चढेका [केतुग्रह] छन् ॥६॥ उत्तरतर्फ एक मुख, दुई आँखा, कपूरजस्तो सेतो वर्ण भएका, छ मुद्राले अलङ्कृत, दुई हातमध्ये दाहिने हात सीधा तल झारेका र खुम्च्याएको बायाँ हातले हृदयमा अङकुश लिएका, विचित्र कपडा पहिरेका र मयूर

वाहन भएका [केतुग्रह] छन् ।।७।। ईशान दिशामा एक मुख, दुई आँखा, दुई हात भएका, दाहिने हात सीधा तल झारेका र बायाँ हातले खुम्च्याएर चमर लिएका, अनि राँगामा चढेका [केतुग्रह] छन् ।।८।। कसैको मतमा भने बीचमा केतुग्रहदेखि लिएर पूर्वदेखिको क्रमले सूर्य आदि नौ ग्रह पनि भनिन्छ । एक पत्र-(चित्र)-मा चार कोठामा चार देवताका मूर्तिहरू छन् । मूल (मुख्य) मुख पहेंलो, दुई आँखा, बगलका दुई मुख कपूरजस्तै सेता, सबै अङ्ग पहेंलो, कूटागार (चुलिएको स्तूप) जस्तै मुकुट भएको, छ मुद्राले शोभित, चार हातमध्ये दक्षिणतर्फको एक हातले हृदयमा बन्चरो समातेका, बायाँ हातले अभयमुद्रा लिएका, बायाँ-दायाँ सीधा गरेका दुई र दाहिने पाउले हाँसलाई गाँजिका (टेकेका) मूर्ति छन् ।।१।। अर्को मूर्तिचाहिं एक मुख, दुई आँखा, पहेंलो वर्ण र चार हात भएका, दुई हातले हृदयमा धनु र पासो लिएका, अनि दुई हात सीधा तल झारेका तथा बायाँ पाउले हात्तीको शिरमा

म्य सरलासनः ॥२॥ एकास्य. द्वय(द्वच)क्ष. षण्मुद्राभरण. पीतवर्ण. द्विभुज. दक्षेण सरलेन सरलपाणितल. वामेन हस्तिशीर्षशुंडां(शुण्डां) दधानः ॥३॥ एकास्य. द्वचक्ष. षण्मुद्राभरण. द्विभुज. दक्षेन(ण) गदां वामेन चामरं. विचित्रांव(त्राम्ब)र. दक्षेन सरलपादेन हस्तिशीर्षशुंडा(शुण्डा)माक्रम्य ॥४॥ मध्यकोष्ठे एकास्य. पीतवर्ण. कूटाकारमुकुटषण्मुद्राभरण. द्विभुज. दक्षसरलपाणितल. वामेनाकुंचि(कुञ्चि)तेन अग्निज्वालाकारां गदां. विचित्रांव(त्राम्ब)र. सरलासन. अश्ववाहन आदित्य इति ॥१॥ दक्षपार्श्वे चतुर्षु कोष्ठेषु चत्वारो मूर्त्तयः॥ ॥अधः कोष्ठे एकास्य. श्वेतवर्ण. चक्रिकुंड(कुण्ड)लकंठि(कण्ठि)रुचक मेखला. पंच(पञ्च)मुद्राभरण. द्विभुज. दक्षेण सरलेन कुक्कुटपुछं(च्छं) स्पृशन्. वामेनाकुंचि(कुञ्चि)तेन मालां दधत्. अर्द्धांग-(र्धाङ्ग)नागपुंछ(च्छ)पादरहित. कुक्कुटवाहन. केतुग्रह इति ॥२॥ तदुपरि कोष्ठे मत्स्यमुखं. कर्पूरवर्ण. द्विभुज. षण्मुद्राभरण. वामेनाकुंचि(कुञ्चि)तेन मुखप्रदेशे मीनं दधान. दक्षेण सरलपाणितल. सर्पवाहन. राहुग्रह इति ॥३॥ तदुपरिकोष्ठे एकमुख. कर्पूरवर्ण. षण्मु–

टेकेर सरलासनमा रहेका छन् ॥२॥ अर्को मूर्ति एकमुख, दुई आँखा भएका, छ मुद्राले अलङ्कृत तथा पहेंलो वर्ण र दुई हात भएका, दाहिने हात सीधा किसिमले हत्केला फैलाई तल झारेका, अनि बायाँ हातले हात्तीको शिरको सुंड समातेका छन् ॥३॥ अर्का मूर्ति एक मुख, दुई आँखा भएका, छ मुद्राले शोभित, दुई हातमध्ये दाहिनेले गदा र बायाँले चमर लिएका, विचित्र कपडा पहिरेका, सीधा दाहिने पाउले हात्तीको शिरको सुंड अँठ्याएका छन् ॥४॥ बीच कोठामा एक मुख, पहेंलो वर्ण र कूटाकार (चुच्चिएको) मुकुट भिरेका. छ मुद्राले शोभित, दुई हातमध्ये दाहिने हात सीधा तल झारेका र खुम्चेको बायाँ हातले अग्निज्वालाको आकारको गदा लिएका, विचित्र कपडा पहिरेका सरलासनमा स्थित तथा घोडा चढेका सूर्यग्रह छन् ॥१॥

दाहिने बगलको चार कोठामा चार मूर्ति छन्। तल कोठामा एक मुख, सेतो वर्ण भएका, चक्र, कुण्डल र कण्ठी (आभूषण) भिरेका, रुचक, मेखला (धोती, कम्मरको वस्त्र बाला) लगाएका, पाँच मुद्राले अलङ्कृत, दुई हातमध्ये दाहिने हात सीधागरी बुखुराको पुच्छर छोएका र खुम्च्याएको बायाँ हातले माला लिएका, आधा अङ्गको तथा पुच्छर-पाउ नभएको नाग साथमा राखेका, कुखुरामाथि चढेका केतुग्रह छन् ॥२॥ त्यसमाथि कोठामा माछाको जस्तो मुख र कपूरजस्तो सेतो वर्ण भएका, दुई हात भएका, छ मुद्राले अलङ्कृत, बायाँ हात खुम्च्याएर मुखमा माछा च्यापेका, दाहिने हात सीधा तल गरेका, सर्पको वाहन भएका राहुग्रह छन् ॥३॥ त्यसमाथि कोठामा एक मुख, कपूरजस्तो सेतो वर्ण र

द्राभरण. दक्षेण सरलपाणितल. वामेनाकुंचि(कुञ्चि)तेन धनुषं दधानः वृषभवाहन. बुधग्रह इति ॥५॥ तदुपरि दक्षपार्श्वे द्वितीयकोष्ठे अधः कोष्ठमारभ्य. एकास्य. द्वचक्ष. पारलवर्ण. षण्मुद्रा. द्विभुज. दक्षसरलपाणितलः वामेनाकुंचि(कुञ्चि)तेन शंक्ति दधत्. विचित्रांवह(त्राम्बर). मयूरवाहन. अंगा(अङ्गा)रग्रह इति ॥३॥ वामपार्श्वे अधः कोष्टे एकास्य. श्यामवर्ण. षण्मुद्रा. विचित्रांव(त्राम्ब)र. द्विभुजा-(ज). दक्षेणाकुंचि(कुञ्चि)तेन माला. वामेन सरलेन वरदमुद्रा. काकवाहन ॥ शनिग्रह इति ॥१॥ तदुपरि एकास्य. द्वचक्ष. हिमवर्ण. षण्मुद्रा. द्विभुज. दक्षेणाकुंचि-(कुञ्चि)तेन अं(अङ)कुशं वामेनस्ता(ता)डनमुद्रां श्वेतगजवाहनः चंद्र(चन्द्र)ग्रह इति ॥२॥ तदुपरि एकास्य. श्वेतवर्ण. द्वचक्ष. षण्मुद्राभ. (भरण). द्विभुज. दक्षिणा-कुंचि(कुञ्चि)तेन मुकुलकमल. वामेन ताडनमुद्रा. वृषभवाहन. शुक्रग्रह इति ॥३॥ तदुपरि एकास्य. द्वचक्षः पीतवर्ण. षण्मुद्रा. द्विभुज. दक्षेणाकुंचि(कुञ्चि)तेन सुवर्णघटं वामेन वरदमुद्रां. वेतालवाहन. वृहस्पतिग्रह इति ॥४॥ मध्येकोष्ठे अधोभागे एकास्य. श्या–

छ मुद्राले अलङ्कृत, दाहिने हात सीधा तल झारेका, बायाँ हातले खुम्च्याएर धनु लिएका र साँढेको वाहन गरेका बुधग्रह छन् ॥५॥ त्यसमाथि दाहिने बगलमा दोस्रो कोठामा तलको कोठादेखि लिएर [मूर्तिहरू छन्]। यीमध्ये एक मुख, दुई आँखा, रातो वर्ण भएका, छ मुद्राले शोभित, दुई हातमध्ये दाहिने हात हत्केला सीधा गरी तल झारेका, खुम्च्याएको बायाँ हातले शक्ति लिएका, विचित्र कपडा पहिरेका तथा मयूरमाथि चढेका मङ्गल ग्रह छन् ॥३॥ बायाँ बगलमा तल कोठामा एक मुख र श्याम वर्ण भएका, छ मुद्राले शोभित, विचित्र कपडा पहिरेका,

दुई हातमध्ये खुम्चेको दाहिने हातले माला र सीधा बायाँ हातले वरदमुद्रा लिएका तथा कागमाथि बसेका शनिग्रह छन् ॥१॥ त्यसमाथि एक मुख, दुई आँखा र हिउँजस्तो सेतो वर्ण भएका, छ मुद्राले शोभित, दुई हातमध्ये खुम्चेको दाहिने हातले अङ्कुश (अङ्कुसी) र बायाँ हातले ताडन (पिट्न खोजेको) मुद्रा लिएका, सेतो हात्ती चढेका चन्द्रग्रह छन् ॥२॥ त्यसमाथि एक मुख, सेतो वर्ण र दुई आँखा भएका, छ मुद्राले अलङ्कृत, दुई हातमध्ये खुम्चेको दाहिने हातले कोपिलाएको कमल र बायाँ हातले ताडनमुद्रा लिएका, साँढेमा चढेका शुक्रग्रह छन् ॥३॥ त्यसमाथि एक मुख, दुई आँखा र पहेंलो वर्ण भएका, छ मुद्राले अलङ्कृत, दुई हातमध्ये खुम्चेको दाहिने हातले सुनको घडा र बायाँ हातले वरदमुद्रा लिएका, वेताल-(राक्षस)-माथि चढेका बृहस्पति ग्रह छन् ॥४॥ बीच कोठामा तल्लो भागमा एक मुख,

मवर्ण. म(मु)कुंद (कुमुद) द्विनेत्र. द(दं)ष्ट्राकराल. भयंक(यङ्क)र. अट्टहास. विचित्र कुंड(कुण्ड)ल. शिरषि सर्पत्रयमुकुट. दशभुज. द्वाभ्यां मूलभुजाभ्यां क्षुरबाण-धनुषी. उपरि दक्ष(क्षै)श्चतुर्भिः सर्पफणा. उपरि वामैश्चतुर्भिः अं(अङ)कुश. मालां. त्रिदलकमल. केतकी कुसुम मुंड(मुण्ड)माली. विचित्रांव(ताम्ब)र. उष्टु(ष्ट्र)वाहनः जन्मग्रह इति ॥ मतांत(तान्त)रे यमांत(मान्त)कक्रोध. यमराजो वा. उष्टु(ष्ट्र)-भैरवो वा ॥१०॥ अथ मतांत(तान्त)रनवग्रहध्यानं. एकास्य. द्वचक्ष. रक्तवर्ण. षण्मुद्राभरण. द्विभुज. द्वाभ्यां हृदिस्थाभ्यां कमले दधान. वज्रासनं दरिदश्ववाहनः आदित्यः ॥१॥ एकास्य. द्वचक्ष. सितवर्ण. षण्मुद्रा. द्विभुजा(जः) द्वाभ्यां हृत्प्रदेशे कमले. रक्तांव(क्ताम्ब)र. वज्रा(वज्रासन). हंसवाहन चंद्र(चन्द्र) ॥२॥ एकास्य. द्वचक्ष. रक्तवर्ण. षण्मुद्रा. द्विभुज. दक्षे खड्गं वामे नृमुंडं(मुण्डं). वज्रासन. अजवाहन. कुजः ॥३॥ एकास्य. द्वचक्ष. सित. षण्मुद्राभ(भरण). द्विभुज. शरधनुषी वज्रासन. सिंहवाहन. बुधः ॥४॥ एकास्य. द्वचक्ष. पीतं षण्मुद्राभ(भरण). द्विभुज. दक्ष पद्मं वामपुस्तकं. वज्रासन. गजवाहन. बृहस्पति ॥५॥ एकास्य. द्वचक्ष. सितवर्ण. षण्मु–

श्यामवर्ण र कमलजस्ता दुई आँखा भएका, दाह्राले डरलाग्दा, भयङ्कर, खित्का छाडेर हाँस्ने, विचित्र कर्णकुण्डल लगाएका शिरमा तीन सर्पको मुकुट भिरेका, दश हात भएका, दुई मूल हातले छुरा र धनुर्बाण लिएका माथि दाहिने चार हातले सर्पको फणा र बायाँ चार हातले अङ्कुश, माला, तीनपाते कमल र केतकीफूल लिएका, मुण्डमाला लगाउने, विचित्र कपडा पहिरेका, ऊँटमा चढेका जन्मग्रह छन् । अर्को मतमा यमान्तक क्रोध छन् अथवा यमराज छन् अथवा भैरव छन् ॥१०॥

अब अर्को मतले नौ ग्रहको ध्यान लेखिन्छ । एक मुख, दुई आँखा र रातो वर्ण भएका, छ मुद्राले शोभित, दुई हात भएका, हृदयमा रहेका दुवै हातले दुई कमल समातेका, वज्रासनमा

बसेका, घोडा चढेका सूर्यग्रह छन् ॥१॥ एक मुख, दुई आँखा र सेतो वर्ण भएका, छ मुद्राले अलङ्कृत, दुई हात भएका, दुवै हात हृदयमा पुऱ्याई दुई कमल लिएका, रातो कपडा लगाएका र वज्रासनमा बसेका हाँसको वाहन गरेका चन्द्रमा छन् ॥२॥ एक मुख, दुई आँखा र रातो वर्ण भएका, छ मुद्राले अलङ्कृत, दुई हातमध्ये दायाँ हातले खड्ग र बायाँ हातले नरमुण्ड (खप्पर) लिएका, वज्रासनमा बसेका, बोकामाथि चढेका मङ्गल ग्रह छन् ॥३॥ एक मुख, दुई आँखा र सेतो वर्ण भएका, छ मुद्राले अलङ्कृत, दुई हात भएका र बाण र धनु लिएका, वज्रासनमा बसेका, सिंहको वाहन गर्ने बुध ग्रह छन् ॥४॥ एक मुख, दुई आँखा र पहेंलो वर्ण भएका, छ मुद्राले शोभित, दुई हात भएका दाहिने हातले पद्म र बायाँ हातले पुस्तक लिएका वज्रासनमा बसेका, हात्तीको वाहन गरेको बृहस्पति ग्रह छन् ॥५॥ एक मुख, दुई आँखा र सेतो वर्ण भएका

द्राभ(षण्मुद्राभरणः). द्विभुज. त्रिशूलवज्रे. वज्रासन. अश्ववाहन. शुक्र. ॥६॥ एकास्य. द्वचक्ष. कृष्णन(कृष्णवर्णः) षण्मुद्रा. वर्त्तुन(ल)नेत्र. व्यात्ता(व्यात्तानन). कंका(कङ्का)लभीषणः द्विभुज. खड्गनृमुण्डे. ललितासन. कूर्मवाहन. शनि ॥७॥ एकास्य द्वचक्ष. नील. व्यात्ता(व्यात्ताननः) भीम. षण्मुद्रा. चतुर्भुज. द्वाभ्यां खड्गचर्माणि(खड्गचर्मणी) द्वाभ्यां चन्द्रसूर्य्यौ. हृदि ज्वालामालावृतपादः राहु ॥८॥ एकास्य. द्वचक्ष. कर्बुर. षण्मुद्राभरण. द्विभुज. खड्गनृमुंडे(मुण्डे) सर्पपुछ(च्छ)प्रदः केतु ॥९॥ ॥ अथ भूतचिकित्सितमतं द्वादशग्रहध्यानं(नम्) ॥ प्रथमं मातृनंद-(नन्द)ग्रहः ॥ एकास्य. द्वचक्ष· सितव(वर्णः). षण्मुद्राभरण· व्याघ्रचर्मावर· द्विभुज· दक्ष आदरमुद्रा वामे ताडनमुद्रा· एकवार्षिकं बालं त्रासयन् ॥१॥ सुनंद(नन्द)ग्रहः ॥ एकास्य· द्वचक्ष· रक्त· षण्मुद्रा· द्विभु· (भुजः) वरदताडनमुद्रे· व्याघ्रचर्माव(र्माम्ब)-रः ॥२॥ द्विवार्षिकं बालं [त्रासयन्] ॥ पूट(त)नग्रह ॥ व्याघ्रास्यः द्वचक्ष· दिगंव-(गम्ब)र· द्विभुज· वरदताडनमुद्रे· त्रिवार्षिकं बालं त्रासयन्. सर्व(र्प)पुछ(च्छ)पद ॥३॥ मुखमंडी(मण्डी)ग्रह कालमत्स्या (त्स्यास्यः) रक्तवर्ण. द्वचक्ष· द्विभु.(भुजः) वरदताडनमुद्रे सर्पपुछ(च्छपदः). चतुर्वार्षिकं बालं(लम्) ॥४॥ विजा(डा)लास्य. द्वचक्ष· र–

छ मुद्राले अलङ्कृत, दुई हात भएका र त्रिशूल र वज्र लिएका, वज्रासनमा बसेका, अनि घोडाको वाहन गराएका शुक्र ग्रह छन् ॥६॥ एक मुख, दुई आँखा र कालो वर्ण भएका, छ मुद्राले शोभित, बाटुलो आँखा र बाएको मुख भएका, कङ्काल (अस्थिपञ्जर) जस्तै भीषण, दुई हात भएका र खड्ग तथा नरमुण्ड (खप्पर) लिएका, ललितासनमा बसेका, कछुवा वाहन

पर्ने शनिग्रह छन् ।।७।। एक मुख, दुई आँखा र नीलो वर्णका मुख बाएका, डरलाग्दा, छ मुद्राले शोभित, चार हात भएका, दुई हातले खड्ग र चर्म (छालाको डोरी) र दुई हातले चन्द्र र सूर्य लिएका, हृदयमा ज्वालाको माला भएका र त्यसै पाउ बेरिएका (पादविहीन) राहुग्रह छन् ।।८।। एक मुख, दुई आँखा र कपूरजस्तो वर्ण भएका, छ मुद्राले अलङ्कृत, दुई हातले खड्ग र नरमुण्ड लिएका, सर्पको पुच्छर नै पाउ भएका केतुग्रह छन् ।।९।।

अब भूत-चिकित्सित-(तान्त्रिक औषधि)-को मतमा बाह्र ग्रहको ध्यान। पहिले मातृनन्दग्रह। एक मुख, दुई आँखा र सेतो वर्ण भएका छ मुद्राले अलङ्कृत, बाघको छाला भिरेका, दाहिने हातमा आदरको मुद्रा र बायाँ हातमा ताडनमुद्रा लिएका, अनि एक वर्षको बालकलाई तर्साउने खालका यी [मातृनन्दग्रह] छन्। सुनन्दग्रह एक मुख, दुई आँखा र रातो वर्णका छन्। यिनी दुई हात भएका र वरदमुद्रा र ताडनमुद्रा लिएका, अनि बाघको छाला भिरेका तथा दुई वर्षको बालकलाई तर्साएका छन् ॥२॥ पूतन-(पूतना)-ग्रह चाहिं बाघको जस्तो मुख र दुई आँखा भएका, दिगम्बर (नाङ्गा), दुई हात भएका, वरदमुद्रा र ताडनमुद्रा लिएका, तीन वर्षका बालकलाई तर्साएका र सर्पको पुच्छरको पाउ भएका छन्। मुखमुण्डीग्रह चाहिं कालो माछाको जस्तो मुख भएका, रातो वर्णका, दुई आँखा र दुई हात भएका, वरदमुद्रा र ताडनमुद्रा लिएका, सर्पको पुच्छरजस्तो पाउ भएका र चार वर्षको बालकलाई तर्साएका छन् ।।४।। बिरालाको जस्तो मुख र दुई आँखा भएका

क्तांग(क्ताङ्गः) द्विभु. (द्विभुजः) पेयालं. (पेयालङ्कार ?). सर्पपुछ(च्छः) पंच-(पञ्च)वार्षिकं बालं(लम्) ॥५॥ बिडालग्रहः ॥ शकुनिग्रहः ॥ पक्षिमुख. द्व्यक्ष. रक्त. द्विभुज. पेयालं. सर्पपुछ(च्छः) षाड्वार्षिकं बालं(लम्) ॥६॥ अछतिकग्रहः ॥ एकास्य. द्व्यक्ष. भ्रू भंग(भङ्ग) व्यात्ता(व्यात्ताननः). कंका(कङ्का)ल. कृष्ण. द्विभु. (द्विभुजः) पेयालं. व्याघ्रचर्मां व(र्माम्ब)र. वार्षिकं (सप्तवार्षिकं) बालं(बालम्) ॥७॥ जंबू(जम्बू)कग्रहाः ॥ फेरवास्य. द्व्यक्ष. कर्बुरवर्ण. भुजादि. पेयालं. अष्टवार्षिकं बालं(लम्) ॥८॥ मारीकग्रहः ॥ गृधा(ध्रा)स्य. द्व्यक्ष. रक्तव(र्णः) द्वि(द्विभुजः). पेयालं. नववा. (नववार्षिकं बालम्) ॥९॥ रेवतीग्रहः ॥ व्यात्ता-स्यदंष्ट्राकराल. रक्तबीभत्सषण्मुद्रा. व्याघ्रचर्मा(चर्माम्बरः) द्विभु (द्विभुजः). पेयालं. द्विपद. दशवार्षिकं(कम्) ॥१०॥ पिल···ग्रह (पिलवग्रहः) सिंहास्य. व्यात्ता (व्यात्ताननः). दंष्ट्राकराल. रक्त. द्विभुज. पेयालं. एकादशवार्षिकं(कम्) ॥११॥ स्कंद(स्कन्द)ग्रहः ॥ श्वेतसिंहास्य. द्व्यक्ष. रक्तांग(ताङ्ग)भुजादि. पेयालं. द्वादश-वार्षिकं बालं त्रासयन् ॥१२॥ ॥ ततो(तः) शांतिमंग(शान्तिमङ्ग)लबलिः ॥ ततः पंच(पञ्च)दशग्रह. ग्रीववासवलि. ततश्चतुर्दशग्रहबलिः ॥ ततः कालमृत्युवलि ॥ ततो द्वादशग्रहबलि ॥ दशग्रह ॥ दशक्रोधवलि ॥ सममंग(मङ्ग)लबलि ॥ ततश्चतुर्दशग्रहबलि. सर्परूपबलि. कृष्णरक्षा–

रातो अङ्ग, दुई हात भएका र पिउने स्वभाव भएका (अथवा पेय=गहना (?) अलङ्कार भएका) सर्पको जस्तो पुच्छर भएका पाँच वर्षको बालकलाई तर्साउने बिडालग्रह छन् ॥५॥ शकुनि ग्रह चाहिं चराको जस्तो मुख, दुई आँखा र रातो वर्ण भएका पिउने स्वभावका (?) सर्पको जस्तो पुच्छर भएका र छ वर्षको बालकलाई तर्साउने छन् ॥६॥ अछतिक ग्रह एक मुख, दुई आँखा र टेढो आँखीभौ भएका मुख बाएका, कङ्काल (सिट्ठी, दुब्लो), काला, दुई हात भएका, पिउने, बाघको छाला लगाएका र सातवर्षे बालकलाई तर्साउने खालका छन् ॥७॥ जम्बूक ग्रहचाहिं पयाउराको जस्तो मुख, दुई आँखा र सेतो वर्णका, दुई हात आदि भएका

पिउने स्वभावका, अनि आठवर्षे बालकलाई तर्साउने खालका छन् ।।८।। मारीक ग्रह गिद्धको जस्तो मुख, दुई आँखा, रातो वर्ण र दुई हात भएका पिउने प्रकृतिका, नौवर्षे बालकलाई तर्साउने किसिमका छन् ।।९।। रेवती ग्रह मुख बाएका, डरलाग्दो दाह्रा भएका, चर्को रातो वर्णका, छ मुद्राले शोभित, बाघको छाला भिर्ने, दुई हात भएका, पिउने प्रकृतिका, दुई पाउ भएका र दशवर्षे बालकलाई तर्साउने खालका छन् ।।१०।। पिलवग्रह सिंहको जस्तो आँखा भएका, मुख बाएका, भयङ्कर दाह्रा भएका, रातो वर्णका, दुई हात भएका, पिउने प्रकृतिका, अनि एघारवर्षे बालकलाई तर्साउने खालका छन् ।।११।। स्कन्दग्रह सेतो सिंहको जस्तो मुख भएका, दुई आँखा, रातो वर्ण र दुई हात आदि भएका, पिउने प्रकृतिका, अनि बाह्रवर्षे बालकलाई तर्साउने खालका छन् ।।१२।। यसपछि शान्तिमङ्गलको बलि । अनि पन्ध्र ग्रहको चर्चा । अनि ग्रीववासको बलि । त्यसपछि चौध ग्रहको बलि । अनि कालमृत्युको बलि । त्यसपछि बाह्र ग्रहको बलि । अनि दश ग्रह । दश क्रोधको बलि । सममङ्गलको बलि । अनि चौध ग्रहको बलि । सर्परूपको बलि, कृष्णरक्षाको

बलो(बलिः) एते ग्रहाणां ध्यानबलि विस्तरभयान्न लिखितं(तम्) ।। ।। ॐ नमो रत्नत्रयाय ।। श्रीमति नेपालमंड(मण्ड)ले गोपुछा(च्छा)ख्यपर्वते(तो) विराजमानोस्ति. यत्र सहस्रदलकर्णिकायां श्रीस्वयंभू(यम्भू)धर्मधातुवागीश्वरो निरंज(रञ्ज)न एकहस्तप्रमाणो ज्योतिरूपो विराजत(ते)तरां(राम्) ।। तदाछा(च्छा)दक. श्री शांति(शान्ति)कराचार्य विनिर्मितो धान्यराश्याकृतिर्लक्षणाढ्यः पंच(पञ्च)बुद्धाद्यालयश्चैत्यो व्यशोभतः(त) लोकोद्धरणकृत् ।। तस्मादाग्नेयकोणभागे ललितपत्तननामा महानगरवरो वरीवर्त्ति श्रीमदार्यावलोकितेश्वर. पद्मपाणिना बोधिसत्वे(त्वे)न प्रतिपालितश्चतुर्विशतिसाहश्रि(स्रि)क. चातुर्वर्णिकप्रज्ञापरिपूर्णः ।। मणिगल मणिकुमार मणिधारामणिमंड(मण्ड)प मणिमंग(मङ्ग)लभट्टविराजमानः ।। तस्याग्नेयभागे रुद्रदेवनामवैश्यराजेन प्रव्रजितेन विनिर्मितो रुद्रवर्णनामा महाविहारो विराजते ।। यत्र निर्मलबोधिमृत्तिकाविनिर्मित द्वात्रिंशल्लक्षणालं(लङ्)कृत. श्री शाक्यसिंहबुद्धमूर्तिरदीव्यत यस्य. चतुःशतसंख्या(सङ्ख्या)का भिक्षुसंघा(सङ्घाः) विलसंति(सन्ति) तस्य विहारस्य पृष्ठभागे दक्षिण–

बलि । यी ग्रहहरूका ध्यान बलि विस्तार हुने डरले लेखिएनन् ।

ॐ तीन रत्न-(बुद्ध, धर्म, सङ्घ)-लाई नमस्कार । श्री-(ऐश्वर्य)-ले युक्त नेपालमण्डलमा गोपुच्छ नामको पर्वत रहेको छ । जहाँ सहस्रदल (हजार पात भएको) कमलमा

श्री स्वयम्भू बुद्ध नाउँ गरेका धर्मधातु जसलाई वागीश्वर (वाणीका मालिक) पनि भन्दछन्, जो अञ्जन-(पाप, कलङ्क)-ले हीन छन्, एकहात-प्रमाणका र ज्योति-(तेज)-स्वरूप छन्, यस्ता स्वयम्भू अत्यन्त शोभित भएर रहेका छन्। यिनै बुद्धको आच्छादन (ढक्कन) स्वरूपको लागि श्री शान्तिकराचार्यले बनाएको धानको राशजस्तै चुलिएको, राम्रो लक्षणले युक्त, अनि पाँच बुद्ध आदिको पनि आश्रयस्थल भएको चैत्य शोभित छ, जो लोक-(जनता)-को उद्धार गर्दछ। यसबाट आग्नेय कोणमा ललितपत्तन (ललितपुर) नाम गरेको ठूलो नगर (शहर) छ। श्री आर्यावलोकितेश्वर र पद्मपाणिनामक बोधिसत्व-(त्व)-ले पालना गरेको चारै वर्ण-(ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्र)-का चौबीस हजार जनता बसेको यो (ललितपुर) शहर छ। यहाँ मणिगल, मणिकुमार, मणिधारा, मणिमण्डप र मणिमङ्गलभट्ट छन्। त्यसको आग्नेय भागमा रुद्रदेव नामका वैश्यराज जो प्रव्रज्या (सन्न्यास) लिएका छन् यिनले बनाएको रुद्रवर्ण नामको महाविहार छ। जहाँ निर्मल र बोधि (शुद्ध) माटोद्वारा बनाइएको वत्तीस लक्षणले युक्त श्री शाक्यसिंह बुद्धको मूर्ति शोभित छ। जसका चार सय भिक्षुसङ्घहरू छन्। त्यस विहारको पछाडिको भागमा दक्षिण

॥५५॥

दिशि चतुरस्ता(स्रा)कारा विशिखा विशिष्यते भाषयायं तालिवीति ख्याता व(ब)-हुभिर्गृहस्थभिक्षुगेहे(है)र्व्याकुला ॥ तन्मध्ये महान् निर्मलोपलविनिर्मितो लक्षणालं-(लङ्)कृतो हिरण्यछत्रपताकध्वजाभ्यलं(लङ्)कृत. सुधालेपितश्चैत्यराजो विहरति. श्रीमन्महाबुद्धविहारी येन धर्मराजाभिधेन भिक्षुवर्येण विज्ञेन शास्त्रविधानतो विधीयमानो नग्वोचिवाहा इति विष्या(ख्या)तो यस्चत्वारिंशद् बुद्धाद्विदेवदेवीपरि-वृतः ॥ ॥ अथ तेषां बुद्धादीनां नामध्यानादिकं लिख्यते ॥ तत्र प्रथमतरं गर्भस्थिता-दृष्टबुद्धस्य नामादि ॥ ॥ सुविशुद्धधर्मधातुज्ञानेनादिबुद्धो व्यसृजत् प्रवृत्त्यर्थी इत्युत्पत्तिः ॥१॥ यस्य नाम वैरोचनबुद्ध इति. विशेषेण सर्वं रोचयतीति वैरोचननामा महाबुद्ध इति नाम ॥२॥ यस्य भुवनं अकनिष्ठाख्यं सर्वभुवनानामुपरिष्ठं न कनिष्ठं तत् कस्यापि कनिष्ठं न सर्वजे(ज्ये)ष्ठं पूर्वजत्वादि. इति भुवनं(नम्) ॥३॥ मः एकवक्त्रः श्वेतवर्णः द्विभुज. उष्णीषी. धर्मचक्रमुद्राधर. यस्यां मुद्रायां धर्मचक्रसंसार-समूहः पुण्यसमूहश्च पद्मासनः ॥ इति ध्यानं(नम्) ॥४॥ सर्वात्मापि पृथि–

दिशामा चार कुना भएको (फैलेको) विशिखा (खुला ठाउँ, सार्वजनिक स्थल) छ जसलाई. भाषामा योतालिवी भन्दछन् र धेरै गृहस्थीहरू. जहाँ गएर सुस्ताउँछन् (आराम गर्छन्)। त्यसको बीचमा ठूलो सफा ढुङ्गाद्वारा बनाइएको सबै लक्षणले युक्त, सुन, छाता, पताका र ध्वताहरूले शोभित, सुधा-(अमृत, सेतो चुन)-ले लेपन गरिएको चैत्यराज (श्रेष्ठ चैत्य) विहार गर्छन्। त्यहीं श्री महाबुद्धविहारी (मूर्ति) पनि छन् जुन धर्मराज नाम गरेका, जान्ने, भिक्षुद्वारा शास्त्रको विधिपूर्वक बनाइएको हो र नग्वोच्चिबाहा नामले जः प्रख्यात पनि छ। साथै जुन चालीस बुद्ध आदि देव-देवीले घेरिएको छ।

अब ती बुद्धहरूका नाम र ध्यान आदि लेखिन्छन्। यिनमा सबभन्दा पहिले गर्भ-(भित्री भाग)-मा रहेका अदृश्य बुद्धका नामहरू। ज्यादै शुद्ध धर्मधातु-(बुद्ध)-ज्ञानस्वरूपबाट प्रवृत्तिमार्गको चाहनाले आदिबुद्धको सृष्टि भयो, यही नै पहिलो उत्पत्ति हो ॥१॥ जसको नाम

वैरोचन बुद्ध हो। विशेष गरेर सबैलाई रोचित (प्रकाशित, ज्ञानी) गराउने हुनाले वैरोचन नामका महाबुद्ध भन्ने नाम भएको हो ॥२॥ जसको भुवन अकनिष्ठ (कान्छो नभएको, जेठो), सर्व भुवनहरूमध्ये माथि रहेको, न कनिष्ठ को अर्थ हो कसैको पनि कान्छो (पछि) नभएको अर्थात् सबैभन्दा जेठो, पहिले जन्मेकाले। यसरी भुवनको चर्चा भयो ॥३॥ जुन (वैरोचन बुद्ध) एक मुख, सेतो वर्ण, दुई हात भएका र उष्णीष (पगरी, फेटा) भिरेका छन्। जसले धर्मचक्र-मुद्रा धारण गरेका छन्, जुन मुद्रामा धर्मचक्रसंसारको समूह छ र पुण्यको समूह छ, अनि पद्मासनमा बसेका पनि छन्। ध्यान यत्ति नै। सर्वात्मा (सबैको आत्मस्वरूप) पनि र

**वीचक्षुरूपात्मा प्रथमबुद्धत्वात्. प्रथम भूताद्यात्मा इत्यात्मा ॥५॥ सर्वाकारोपि ध्यानदृष्टित्वात् शांता(शान्ता)कार. यस्माच्चास्माकं दुःखादिशांति(शान्ति)रिति आकारः ॥६॥ युगरहितः युगादित्वात्. युगस्यापि सृष्टि कृत्वादिति युगं(गम) ॥७॥ एतद्ध्यानं मूलं क्रमतः कार्यतो बहूनि ध्यानानि संति(सन्ति) इति वैरोचनस्य ॥१॥ अथाक्षोभ्यस्य आदर्शनज्ञानेदन यमसृदादिबुद्धः इत्युत्पत्तिः यस्य भुवने अभिरतिनाम पूर्वदिग्भागे ॥१॥ यस्मिन् सर्वतो भवितरति बोधिज्ञाने रमणं(णम्) इति भुवनं-(नम्) ॥२॥ यस्य नाम अक्षोभ्य. कदाचित् कुत्रचित्त(त्र)क्षुभ्यते न कंप(कम्प)ते इति अक्षोभ्य. इति नाम ॥३॥ य एकमुख(खो) गगन(गगनाभः) अक्षोभ्य(भ्यः) नीलवर्णः द्विभुज(जः). भूमिस्पर्शनमुद्राधरः स्थानस्थितिकरणार्थं भूमिं स्पृशति पद्मासनं(नम्) इति ध्यानं(नम्) ॥४॥ यः सर्वात्मापि द्वितीयबुद्धत्वाद्विशेषतो जलात्मा जलाधिकारः श्रोत्रशब्दाधिकारत्वात् क्षेत्रसब्दात्मा (श्रोत्रशब्दात्मा)पि इत्यात्मा ॥५॥ सर्वाकारोपि शांता(शान्ता)कारो युद्धशांत(शान्त)स्वभावत्वात् इत्याकारं युगं तु पूर्ववत् ॥७॥ अथ रत्नसंभ(सम्भ)वस्य यस्योत्पत्तिरादिबुद्धतः**

पृथ्वीको चक्षु (आँखा, ज्ञान, चैतन्य) स्वरूप पनि मानिन्छन् पहिला बुद्ध हुनाले। सर्वप्रथम भूत (प्राणी) आदिको आत्मा हुनाले पनि आत्मा भनिएको हो ॥५॥ यी बुद्ध ध्यानदृष्टिले हेर्दा सबैका आकार हुन्, शान्त आकृतिका हुन्, जसबाट हाम्रो दुःख आदिको शान्ति हुन्छ भनेर यस्तो (शान्तिको) आकार भनिएको हो ॥६॥ युग (सत्य, त्रेता, द्वापर र कलि युग)-ले रहित, अनि युगका पनि आदि (पहिले उत्पन्न) हुनाले तथा सृष्टिका कारण हुनाले पनि युग हुन् ॥७॥ यो ध्यान मूल (मुख्य) हो र क्रमैले गर्नुपर्छ। साथै वैरोचनका धेरै ध्यान छन् ॥१॥

अब अक्षोभ्यको ध्यान। जुन अक्षोभ्यलाई आदिबुद्धले दर्शन पाउनासाथ ज्ञान प्राप्त हुने गरी सृष्टि गरेका थिए। यसरी उत्पत्ति भयो। जसको भुवन-(पृथ्वी)-मा पूर्व दिशामा

अभिरति भन्ने नाम रह्यो ॥१॥ जहाँ सबैतिरबाट बोधि-(बुद्धसम्बन्धी)-ज्ञान प्राप्त हुने र त्यसैमा रम्ने हुनाले भुवन भनिएको हो ॥२॥ जसको नाम अक्षोभ्य पनि हो । कहिले पनि कहीं पनि क्षोभ (विकार, परिवर्तन) नहुने अथवा कम्पन नहुने भन्ने अर्थमा अक्षोभ्य शब्द बनेको छ। यही नाम पनि हो ॥३॥ जुन अक्षोभ्य (बुद्ध) एक मुख भएका, आकाशजस्तै नीलो वर्ण भएका, दुई हात भएका, भूमिस्पर्श (एक हात सीधा पारी जमीन छोएर ध्यान गर्ने) मुद्रामा भएका तथा स्थान र स्थिति (पालना) गर्ने भूमि स्पर्श गर्ने र पद्मासनमा बसेका छन् । यही नै ध्यान हो ॥४॥ जुन अक्षोभ्य बुद्ध सर्वात्मा (सबैको आत्मामा रहने) भए पनि दोस्रा बुद्ध हुनाले जलात्मा (जलस्वरूप) र जलमा अधिकार भएका छन्। श्रोत्र (कानसम्बन्धी) शब्दको अधिकारले श्रोत्रशब्दात्मा पनि छन्। यही आत्मा हो ॥५॥ सर्वाकार (सबै आकृतिका) भए पनि शान्त आकारका छन्– युद्धमा पनि शान्त स्वभाव हुनाले । यसरी आकारबारे चर्चा भयो। युगबारे पहिलेजस्तै ॥७॥ अब रत्नसम्भवबारे चर्चा गरौं, जसको उत्पत्ति पनि आदिबुद्धबाट भएको हो ।

॥५६॥

प्रत्यवेक्षणानेनत (प्रत्यवेक्षणेनानेन) प्रतिसर्वतोभावेन अवेक्षणं अयं सृष्टो मया: अनेनापि चायं सृष्ट इति अवेक्षणमिति ॥ इत्युत्पत्तिः ॥१॥ यस्य भुवनं रत्नावती नाम यस्यां बहूनी(नि) रत्नानि यतो रत्नानानुप(त्प)त्तिः ॥ या रत्नावती दक्षिण-दिग्भागे. इति भुवनं(नम्) ॥२॥ यस्य नाम रत्नसंभ(सम्भ)व इति ॥ यस्माद् रत्नानां संभव(सम्भवः). रत्नावतीस्थितत्वाच्च इति नाम ॥३॥ यो रत्नसंभ-(सम्भ)व एकवक्त्रः पीतवर्णः तृतीयत्वात्. द्विभुजवरदमुद्राधर(रः) सर्वेभ्यो वरं दानार्थं(दातुं) पद्मवज्रासन. दक्षिणमुख इति ध्यानं(नम्) ॥४॥ सर्वात्मापि तेजोघ्राणगंधा(गन्धा)त्मा तृतीयबुद्धत्वात् तदधिकारित्वात् इत्यात्मा ॥५॥ सर्वाकारो निकारारोपि(निराकारोऽपि) शांत(शान्त)रत्नाकारः एतस्मात् दुःखशांति(शान्ति)-रथ च रत्नानि प्राप्यते इति आकारः ॥६॥ युगं पूर्ववत् युगस्यापि सृष्टिकृत्वा-(त्वा)त् सत्यगुगमिति कृता(तम्) ॥७॥ अथामिताभस्य. समतानाम ज्ञानेन आदिबुद्धो व्यसृजदिति आदिबुद्धादुत्पत्तिः इत्युत्पत्तिः ॥१॥ सुखावतीनामभुवनं यस्यां सर्वाणि सुखानि यतः सुखप्रवृत्तिः या सुखावती पश्चिमदिशि. इति भुवनं(नम्) ॥२॥ यस्य बुद्धस्य अमिताभ नाम ॥ असंख्य(सङ्ख्य)यतेजस्त्वात् यतस्तेजसामत्प–

यिनै आदिबुद्धले राम्रो प्रत्यवेक्षण गरेर यिनको सृष्टि गरेका हुन् । प्रत्यवेक्षण भनेको प्रति अर्थात् चारैतिर (?) अवेक्षण भने निरीक्षण (हेर्ने काम) हो । यसरी उत्पत्ति भएको हो ॥१॥ जसको रत्नावती नाम गरेको भुवन छ । जहाँ धेरै रत्नहरू हुन्छन् र जहाँबाट रत्नहरूको उत्पत्ति हुन्छ । जुन रत्नावतीभुवन दक्षिण दिशामा रहेको छ ॥२॥ जसको नाम रत्नसम्भव हो जहाँबाट रत्नहरूको सम्भव (उत्पत्ति) हुन्छ । रत्नावतीभुवनमा रहेकोले पनि रत्नसम्भव (बुद्ध) भनिएको हो । जुन रत्नसम्भव एक मुख र पहेंलो वर्ण भएका छन् । आदिबुद्धबाट सृष्टिक्रमले तेस्रो रूपमा उत्पन्न भएका हुन् । यिनी (रत्नसम्भव) दुई हात भएका, वरदमुद्रा र अभयमुद्रा धारण गर्ने, सबैलाई वर दिने, पद्मवज्रासनमा रहेका र दक्षिणतिर मुख फर्काएका

छन् । ध्यान यत्ति नै ॥४॥ यी सर्वात्मा (सबैका आत्मा) पनि हुन् तेजस्वरूप र घ्राण-(सुँघिने)-गन्धस्वरूप, अनि तृतीय बुद्ध हुनाले र त्यसको अधिकारप्राप्त हुनाले पनि । यसरी आत्माको व्याख्या भयो ॥५॥ यी सर्वाकार (सबैका आकृति) र निराकार (आकार नभएका) पनि छन् । शान्तरत्नका आकार पनि हुन् किनकि यिनैबाट दुःखको शान्ति हुन्छ र रत्नहरू प्राप्त हुन्छन् । यसरी आकारको व्याख्या भयो ॥६॥ युगको चर्चा पहिलेजस्तै । युगको पनि सृष्टि गर्ने हुन् यिनी । सत्ययुग (आदियुग) यिनैबाट भएको हो ॥७॥

अब अमिताभ बुद्धबारे चर्चा गरिन्छ । समतारात्मक (सबै प्राणी समान छन् भन्ने) ज्ञानले आदिबुद्धले यिनको सृष्टि गरे । यिनको आदिबुद्धबाट उत्पत्ति भयो । यसरी उत्पत्तिको व्याख्या भयो ॥१॥ यिनको भुवनको नाउँ सुखावतीभुवन हो, जहाँ सबै सुखहरू हुन्छन्, जसबाट सबैमा सुखको प्रवृत्ति हुन्छ । जुन सुखावतीभुवन पश्चिमदिशामा रहेको छ । यसरी भुवनको व्याख्या भयो ॥२॥ जुन बुद्धको नाम अमिताभ रह्यो अमित (गन्न नसकिने) अर्थात् असङ्ख्य आभा अर्थात् तेज हुनाले अमिताभ नाम रह्यो । जहाँबाट तेजहरूको–

त्तिः तस्मादमिताभनामा ॥३॥ यस्य वदनमेकं कोकनदवर्णं द्विभुजध्यानमुद्राधरं-(रम्) एवमनेन प्रकारेण लोकोद्धरणं क्रियते इति ध्यानमुद्रा. पद्मवज्रासनं(नम्) इति ध्यानं(नम्) ॥४॥ सोपि सर्वाकारो विश्वरूपत्वात्. विशेषतश्चतुर्थबुद्धत्वात्. चतुर्भूतवायुजिह्वारसात्मा इत्यात्मा ॥५॥ अमिताकारोपि विशेषतः करुणाकरः यः सर्वेषु करुणां स्थाप्य सर्वानुद्धरिष्यतीति इत्याकारः ॥६॥ युगं तु सत्ययुगादि ॥७॥ अथामोघसिद्धस्य यं कृत्वानुष्ठानज्ञानेनासृजदादिबुद्धः करणीयाधिष्ठानेन. इत्युत्पत्तिः ॥१॥ यस्य भुवनं(नम्) अमोघवतीसंज्ञं. यस्मिन् सकलं सफलं सफलामा(ना) मुदयः यदुत्तरभागे इति भुवनं(नम्) ॥२॥ यस्य नामामोघसिद्ध इति. यस्मात् सकलानां सफलं कार्यादिकं सफलं तस्मादमोघसिद्धनामा इति नाम ॥३॥ योमोघसिद्धः एकमुखः मरकतवर्ण(र्णः) द्विभुज.(जः),सम(भ)येभ्योभयदान(ना)र्थं अभयमुद्राधरः यतो भक्तैरभयं प्राप्तमिति अभयमुद्रा. पद्मवज्रासनं(नम्) उत्तर-दिक्संमुखः अमोघवतीस्थत्वात्. फणिमणिसप्तालं(लङ)कृतः इति ध्यानं(नम्) ॥४॥ सर्वात्मापि आकाशकायस्य–

उत्पत्ति हुन्छ, त्यसैले अमिताभ भनिएको हो ॥३॥ जसको एउटा मुख छ र कोकनद-(रातो कमल)-को जस्तो जसको वर्ण छ यस्ता अमिताभ बुद्ध दुई हात भएका, ध्यानमुद्रा लिएका, अनि यस्तै किसिमले लोक-(संसार)-को उद्धार गर्ने खालका र ध्यानमुद्रामा रहेका, अनि पद्मवज्रासनमा बसेका छन् । ध्यान यत्ति नै ॥४॥ यिनी पनि विश्वरूप (संसारकै स्वरूप)

हुनाले सर्वाकार छन्, विशेष गरेर (आदिबुद्धदेखि सृष्टि क्रममा) चौथो बुद्ध हुनाले पनि चौथो भूत (पञ्च महाभूतमध्ये, पहिलो– पृथ्वी, दोस्रो– जल, तेस्रो– तेज, चौथो– वायु र पाँचौ– आकाश, यी पाँच भूत वा तत्त्व हुन्) अर्थात् तत्त्वस्वरूप वायु र जिभ्रोको (कर्मेन्द्रियको रस-(रसतन्मात्रा)-स्वरूप हुनाले यिनको आत्मस्वरूपको व्याख्या गरिएको हो ॥५॥ यी अमिताभ बुद्ध अमित (ठम्याउन नसकिने) आकार भएका र विशेष गरेर करुणा-(दया)-क अकारस्वरूप छन् जसले सबैमा करुणाको स्थापना गरी सबैको उद्धार गर्नेछन् भन्ने अर्थमा आकारको व्याख्या गरिएको हो ॥६॥ युगको बारेमा पहिलेजस्तै ॥७॥

अब अमोघसिद्धिबारे चर्चा गरौं। आदिबुद्धले जुन अनुष्ठान (व्रत) गरेर अनुष्ठानको ज्ञानद्वारा अमोघसिद्धि बुद्धको सृष्टि गरेका छन्, कर्तव्य अनुष्ठानको दृष्टिले पनि। यसरी उत्पत्ति भयो ॥१॥ जसको अमोघवती नामको भुवन छ, जहाँ सबै (इच्छा) सफल (पूर्ण) हुन्छ र सफलताको उदय हुन्छ। यो अमोघवती भुवन उत्तरतर्फ छ। यसरी भुवनको वर्णन भयो ॥२॥ जसको नाम अमोघसिद्धि भयो, जसबाट सबैको कार्य आदि हुन्छ त्यसैले अमोघसिद्धि (सिद्धि व्यर्थ नहुने अर्थमा) नाम राखिएको हो ॥३॥ जुन अमोघसिद्धि एक मुख भएका, मरकत मणिजस्तै (हरियो) वर्ण भएका, दुई हात भएका र डराएकालाई अभयदान गर्नाको लागि अभयमुद्रा लिएका छन्, जसबाट भक्तहरूले अभय प्राप्त गरेका छन् –यस अर्थमा अभयमुद्रा भनिएको हो। यी बुद्ध पद्मवज्रासनमा बसेका, उत्तरतर्फ मुख गरेका छन् र अमोघवतीभुवनमा रहेका छन्। यिनी सात सर्प-(नाग)-को मणिले सजिएका छन्। यसरी ध्यानको वर्णन भयो ॥४॥ यी सर्वात्मा (सबैका आत्मस्वरूप) छन् पाँचौं तत्त्व आकाश नै यिनको शरीर भएको हुनाले।

र्शात्मा चतुर्थ(पञ्चम)बुद्धत्वादित्यात्मा ॥५॥ आकारोपि सर्वेषां तथापि अमोघां(घा)कारः यतः सर्वेषां कार्यादिकं सफलमिति अमोघाकारः ॥ इत्याकारः ॥६॥ युगं तु पूर्ववत् ॥७॥ ईशाण(न)कोणे लोचना नाम देवी प्रज्ञा तस्मादुत्पत्तिरकनिष्ठं दक्षिणाचारे आदिबुद्धोपायतः समुत्पत्तिः ॥ वामाचारे आदिप्रज्ञातः समुत्पत्तिः ॥ इत्युत्पत्तिः ॥१॥ अक्षोभ्यप्रज्ञात्वात्. अभिरतिभुवनं(नम्) ॥ इति भुवनं(नम्) ॥२॥ सवानु(न्) लोचयति दर्शयति सर्वैरपि लोचयते(लोच्यते) इति लोचना इति नाम ॥३॥ एकमुख(खः). गगनवर्ण(र्णः). द्वौ भुजौ यस्य वरदाभयमुद्रे शिरसि जटामुकुटं कर्णयोः कुंड(कुण्ड)ले कंठे(कण्ठे) कंठी(कण्ठी) कटौ मेखला हस्तयो रुचके पादयोर्नूपुरे रत्नमालाप्रलंवि(लम्बि)पद्मवज्रासनः ॥ अथ चेयं लोचना द्वयाकारा द्वयभिधाना गर्भस्थवज्रधात्वीश्वर्या(र्याः) प्रमाणतो धर्मचक्रमुद्रा. ईशानकोणस्थितत्वाल्लोचना इति ध्यानं(नम्) ॥४॥ शांता(शान्ता)क्षोभ्यात्मा शांते(शान्ते) अक्षोभ्यो(भ्ये) अततीति अथ च तस्याः सकाशात् सर्वेषां शांति-(शान्ति)र्भविष्यत्यक्षोभ्यश्चेति आत्मा ॥५॥ शांता(शान्ता)क्षोभ्याकारः ॥६॥ युगमक्षोभ्यवत् ॥७॥ अ(आ)ग्नेयकोणे स्थिता–

स्पर्श-(स्पर्शतन्मात्रा)-स्वरूप पनि छन् चौथो बुद्ध (पाँचौं बुद्ध ?) हुनाले पनि। यसरी आत्माको व्याख्या गरियो ॥५॥ यी सबैका आकार हुन्, त्यसैले अमोघाकार हुन्। जसबाट सबैका कामहरू सफल हुन्छन् त्यसैले अमोघाकार भनिएको हो। यसरी आकारबारे भनियो ॥६॥ युगबारे पहिलेजस्तै ॥७॥

ईशान कुनामा लोचना नामकी प्रज्ञास्वरूप देवी छिन्। दक्षिणाचारको दृष्टिले आदिबुद्ध र उपायबाट अकनिष्ठ (सबभन्दा पहिले) रूपमा यिनको उत्पत्ति भएको हो। वामाचारको दृष्टिले आदिप्रज्ञाबाट उत्पत्ति भएको हो। यसरी उत्पत्तिबारे भनियो ॥१॥ यी लोचनादेवी अक्षोभ्यबुद्धकी प्रज्ञास्वरूप हुनाले यिनको भुवन अभिरतिभुवन हो। भुवनबारे पनि

भनियो ॥२॥ सबैलाई लोचन अर्थात् दर्शन गराउने र सबैद्वारा देखिने हुनाले पनि लोचना नाम रहेको हो ॥३॥ यी एक मुख, आकाशजस्तै नीलो वर्ण, दुई हात भएकी हुन् र यिनले वरदमुद्रा तथा अभयमुद्रा लिएकी छिन् । यिनको शिरमा जटा-(केशपाश)-को मुकुट, कानमा कुण्डल, गलामा कण्ठी, कटि-(कम्मर)-मा मेखला (कम्मरमा लाइने वस्त्र), हातमा रुचक (सुनको बाला) पाउमा पाउजेब लगाएकी, रत्नमाला भिरेकी र पद्मवज्रासनमा बसेकी छिन् । फेरि यी लोचनादेवी दुई आकार भएकी र दुई नामले प्रसिद्ध छिन् । गर्भमा स्थित वज्रधात्वीश्वरीको प्रमाणले धर्मचक्रमुद्रा लिएकी तथा ईशानकोणमा रहेकी छिन् लोचना । यसरी ध्यानबारे चर्चा गरियो ॥४॥ यी शान्त अक्षोभ्य (बुद्ध) स्वरूपकी छिन् । अक्षोभ्य शान्तस्वरूप हुनाले, सो अनुसार गर्ने हुनाले यी लोचनाबाट सबैको शान्ति हुन्छ । यसरी आत्माको चर्चा गरियो ॥५॥ यिनी शान्त अक्षोभ्य-(बुद्ध)-की आकारस्वरूपा छिन् । युगको बारेमा अक्षोभ्यमा जस्तै ॥७॥ आग्नेय कोणमा–

**याः प्रज्ञाया आदिबुद्धोपायतः समुत्पत्तिः ॥१॥ रा(र)त्नसंभवी(सम्भवि)त्वात्. रत्नावतीभुवनं(नम्) ॥२॥ यस्मा(स्याः) मामकीति नाम केनचिदियं मम प्रज्ञा. केनचिन्ममाता(न्माता) केनचिदस्माकं पालित(ता) इति मामकी नाम ॥३॥ एकमुखी. पीतवर्णा. यथोपायस्तथा प्रज्ञेतिवचनात्. द्विभुजा वरदाभयमुद्रा. षण्मुद्राभरणेज्व(णोज्ज्व)ला. पद्मवज्रासनध्यानं(नम्) ॥४॥ जलशब्दश्रोतात्मा. शांत-(शान्त)रत्नात्मापि शांते(शान्ते) रत्नसंभ(सम्भ)वे अतति इत्यात्मा ॥५॥ शांता(शान्ता)काराः रत्नाकाराः अस्याः शांति(शान्ति)रस्माकं रत्नानि चास्माकमित्याकारः ॥६॥ युगं रत्नसंभ(सम्भ)वीयं(यम्) ॥७॥ नैऋ्र्त्यकोणे स्थितायाः ॥ आदिप्रज्ञायाः समुत्पत्तिर्वामाचारे दक्षिणाचारे बुद्धोपायात् इति समुत्पत्तिः ॥१॥ सुखावतीभुवनं(नम्) अमिताभीतिभुवनं(नम्) ॥२॥ पण्डया बोधिबुद्ध्या(बुद्ध्या) लोकान् राति आददातीति पांड(पाण्ड)रा शब्दायति वा पांड(पाण्ड)रा मा(ना)म इति नाम ॥३॥ एकानन. रक्तवर्ण. द्विभुज. वरदाभयमुकुट. कुंड(कुण्ड)ल कंठी-(कण्ठी)रोचकपायलभूषिता रक्तालंका(लङ्का)रः कमले वज्रासन इति ध्यानं(नम्) ॥४॥ अमिताभस्यैवात्मा ॥५॥ आकारोपि ॥ युगं चः (च) ॥७॥ वायव्यकोणस्थायः (याः) त–**

रहेकी प्रज्ञाको आदिबुद्ध र उपायबाट उत्पत्ति भएको हो ॥१॥ रत्नसम्भवसँग सम्बद्ध हुनाले यिनको भुवन रत्नावतीभुवन हो ॥२॥ यी प्रज्ञाको नाम मामकी हो । कसैले यी मेरी प्रज्ञा हुन् भने, कसैले मेरी आमा हुन् भने र केहीले हामीद्वारा पालिएकी भने । त्यसैले यिनको

नाम मामकी रह्यो ॥३॥ यिनी एक मुख र पहेंलो वर्णकी छिन् जस्तो उपाय त्यस्तै प्रज्ञा भन्न नियमले । यी मामकी प्रज्ञा दुई हात भएकी, वरदमुद्रा र अभयमुद्रा लिएकी, छ मुद्राले अलङ्कृत र पद्मवज्रासनमा बसेकी छिन् । यही नै यिनको ध्यान हो ॥४॥ यिनी जलस्वरूप र कानले सुनिने शब्दस्वरूप छिन् साथै शान्तरत्नात्मा (शान्त रत्नसम्भवस्वरूप) पनि । शान्तरत्नसम्भव भएकीले सो अनुसार यिनी पनि शान्तात्मा छिन् ॥५॥ यी शान्ताकार र रत्नाकार छिन् । यिनको शान्तिरूपले र हाम्रो रत्नस्वरूप हुनाले पनि यसो भनिएको हो । आकार यही हो ॥६॥ युग रत्नसम्भव बुद्धको जस्तै ॥७॥

नैर्ऋत्य कोणमा रहेकी आदिप्रज्ञाको उत्पत्ति वामाचार र दक्षिणाचार दुवै दृष्टिले बुद्धोपाय-(बुद्धको उपाय)-बाट भएको हो । यिनको भुवन चाहिं सुखावतीभुवन हो जसलाई अमिताभीतिभुवन पनि भन्दछन् ॥२॥ उक्त आदिप्रज्ञाको नाम पाण्डरा हो । राम्रो-नराम्रो छुट्टयाउने बुद्धिलाई पण्डा भन्दछन् । पण्डाले अर्थात् बोधि-(ज्ञान)-सम्बन्धी बुद्धले लोक-(संसार)-लाई जसले वश गर्छ त्यो पाण्डरा हो अथवा शब्द गर्ने चाहिं पाण्डरा हो । यसरी नाम रह्यो ॥३॥ यी एक मुख, रातो वर्ण र दुई हात भएकी छिन् । वरदमुद्रा र अभयमुद्रा लिएकी, शिरमा मुकुट पहिरेकी, कानमा कुण्डल र गलामा कण्ठी लगाएकी तथा हातमा रुचक (बाला) र पाउमा पायलले सजिएकी, रातो गहनाले सिंगारिएकी पद्मवज्रासनमा बसेकी छिन् । यही ध्यान हो ॥४॥ अमिताभ-(बुद्ध)-को जस्तै आत्मा हो ॥५॥ आकार र युग पनि ॥७॥ वायव्य कोणमा रहेकी—

स्मादादिबुद्धादुत्पत्तिः ॥१॥ भुवनं(नम्) अमोघवती नाम ॥२॥ सर्वांस्तारयते स्वयमुत्तीर्तो(र्णो)ति तारा नाम ॥३॥ एकमुख(खः). श्यामवर्ण(र्णः). द्विभुज(जः). वरदाभयमुद्रा(द्रः). षण्मुद्राभरण(णः). पद्मवज्रासन इति ध्यानं(नम्) ॥ अमोघसिद्धस्येवात्माकारयुगं च ॥७॥ अमोघसिद्धबुद्धस्य दक्षिणपार्श्वे स्थितानां चतुर्णां देवदेवीनां उत्पत्त्यादिकं(कम्) ॥ प्रथम क्षितिगर्भस्य रत्नसंभ(सम्भ)वादुत्पत्तिः ॥१॥ रत्नावती भुवनं(नम्) ॥२॥ क्षितिगर्भ इति नाम ॥३॥ एकमुख. काञ्चनवर्ण. द्विभुज. दक्षिणप्रसारितेन पद्मतानं(पद्मताडनं) क्षितिगर्भत्वात्. भूमिताडनं वामे पद्मवज्रासनं षण्मुद्रालं(लङ्)कृतं इति ध्यानं(नम्) ॥४॥ शोता-(शान्ता)त्मा भूम्यात्मा ॥५॥ क्षित्याकारः ॥६॥ सत्ययुगं(गम्) ॥७॥ तस्य पक्षपार्श्वे अमिताभादुत्पत्तिः ॥१॥ सुखावतीभुवनः ॥२॥ ख(रत्न)गर्भनामा बोधिसत्व(त्त्व): ॥३॥ एकमुख(खः). रक्तवर्ण(र्णः). द्विभुज(जः). दक्षेण बहिराकुंचि(कुञ्चि)तेन रत्नदीपिकां वामेन हृद्याकुंचि(कुञ्चि)तेन किंकि(किङ्कि)-णीजालं बिभ्राणः नानारत्नाभरण. षण्मुद्रालं(लङ्)कृत(तः). पद्मवज्रासनः ॥४॥ उज्व(ज्ज्व)लात्मा ॥५॥ शांता(शान्ता)कारः ॥६॥ सत्ययुगं(गम्) ॥७॥ ॥ तस्य दक्षे वरुया (वरुणा) नाम देवी. एकमुख(खा). कांच(काञ्च)नवर्ण(र्णा). द्विभुज(जा). द्राभ्यां जठरे आकंचि-

(अर्की प्रज्ञा)-को आदिबुद्धबाट उत्पत्ति भएको हो ॥१॥ यिनको भुवन अमोघवतीभुवन हो ॥२॥ सबैलाई पार तार्ने र स्वयं पनि तर्ने हुनाले यिनको नाम तारा रहेको हो ॥३॥ यिनी एक मुख, श्यामवर्ण र दुई हात भएकी छन्, अनि वरदमुद्रा र अभयमुद्रा लिएकी छिन् । यिनी छ मुद्राले अलङ्कृत र पद्मवज्रासनमा बसेकी छिन् । ध्यान यही हो ॥४॥ आत्मा, आकार र युग अमोघसिद्धि-(बुद्ध)-को जस्तै ॥७॥

अमोघसिद्धि बुद्धको दाहिने बगलमा रहेका चार देव-देवीहरूको उत्पत्ति आदिबारे वर्णन गरिन्छ । पहिले क्षितिगर्भ-(बोधिसत्त्व)-को रत्नसम्भव-(बुद्ध)-बाट उत्पत्ति भएको हो

॥१॥ यिनको भुवन रत्नावतीभुवन हो ॥१॥ नाम क्षितिगर्भ हो ॥३॥ यिनी एक मुख, सुनको जस्तै वर्ण र दुई हात भएका छन् । यिनले क्षितिगर्भ हुनाले पसारिएको दाहिने हातले पद्मताडन (कमलको दण्ड) लिएका र बायाँ हातले भूमिताडन (पृथ्वीको स्पर्श ?) गरेका छन् । छ मुद्राले अलङ्कृत क्षितिगर्भ पद्मवज्रासनमा बसेका छन् । ध्यान यही हो ॥४॥ यिनी शान्त आत्मा र भूमिरूप आत्मा भएका छन् ॥५॥ यी क्षितिगर्भ क्षिति-(पृथ्वी)-को आकार भएका छन् ॥६॥ सत्ययुगस्वरूप छन् ॥७॥

त्यसको दायाँ बगलमा अमिताभभन्दा माथि ॥१॥ सुखावतीभुवन छ ॥२॥ रत्नगर्भ-नामक बोधिसत्त्व छन् ॥३॥ यी एक मुख, रातो वर्ण र दुई हात भएका छन् । बाहिरतर्फ खुम्चेको दाहिने हातले रत्नदीपिका (चम्किलो रत्न) र हृदयमा खुम्चाई पुऱ्याइएको बायाँ हातमा घुङ्घरुदार गहना धारण गरेका, विभिन्न रत्नले सिंगारिएका तथा छ मुद्राले अलङ्कृत, अनि पद्मवज्रासनमा बसेका छन् ॥४॥ यिनी उज्ज्वल आत्मा भएका छन् ॥५॥ शान्त आकारका छन् ॥६॥ र सत्ययुगस्वरूप छन् ॥७॥

त्यसको दाहिनेतर्फ वरुणानामकी देवी छिन् । यिनी एक मुख, सुनको जस्तो वर्ण र दुई हात भएकी छिन् । दुवै हात पेटमा पुऱ्याई-

**ताभ्यां (आकुञ्चिताभ्यां) रूप्यदर्शनमादर्शयंती(यन्ती) षण्मुद्राभरणा ॥ रत्नमाला-लं(लङ)कृतपद्मवज्रासना ॥१॥ तस्या दक्षे वज्रवीणादेवी. एकमुख(खा). हिरण्यवर्णा. द्विभुजा. वीणां वादयन्ती. षण्मुद्रालं(लङकृता). रत्नमालालं(लङ)कृता. पद्मवज्रासनः (ना) ॥२॥ अथ वामपार्श्वे अक्षयमतिनामा बोधिसत्व(त्वः) अक्षोभ्यात् समुत्पन्न. अभिरतिभुवनं(नम्). एकमुख(खः). नीलवर्ण(र्णः). द्विभुज-(जः). दक्षेण हृद्याकुंचि(कुञ्चि)तेन खड्गं बिभ्राण(णः). वामेनोरुप्रदेशे आकुंचि-(कुञ्चि)तेन कमलं बिभ्राणः षण्मुद्रालं(लङ)कृत(तः). पद्मवज्रासन(नः). अक्षोभ्यात्मा. अक्षयाकार(रः). युगं सत्यं(त्यम्) ॥१॥ तस्य वामे समंत(मन्त)-भद्रनामा बोधिसत्व(त्वः) वैरोचनादुत्पन्नः भुवनमकनिष्ठं एकमुख(खः). श्वेतवर्ण-(र्णः). द्विभुजदक्षेण प्रसारितेन वरदं वामेनोरुप्रसारितेन सदलकमलोपरि खड्गं बिभ्राणः षण्मुद्राद्याभरणविभूषितं पद्मवज्रासन(नः). पृथिवीचक्षुरूपात्मा. शांता(शान्ता)-कार(रः). सत्ययुगं(गम्) ॥२॥ तस्य वामे पुष्प(ष्पा) नाम देवी. एकमुख(खा). हेमवर्ण(र्णा). द्विभुज(जा). पूजांते(जान्ते) हृत्प्रदेशे कृतांज(ताञ्ज)लिपुटः(टा) षण्मुद्राद्यलं(लङ)कृतः(ता) पद्मवज्रासन(ना) ॥१॥ तस्या वामे लास्या नाम देवी एकमुख(खा). जांबू(जाम्बू)नदवर्ण(र्णा). द्विभुज(जा). दक्षे-**

खुम्चाइएकाबाट राम्रो दर्शन (स्वरूप) देखाएकी र छ मुद्राले अलङ्कृत छिन् । रत्नमालाले सिङ्गारिएकी र पद्मवज्रासनमा बसेकी छिन् ॥१॥

यिनको दक्षिणतर्फ वज्रवीणा नामकी देवी छिन् । यिनी एक मुख, सुनको जस्तो वर्ण र दुई हात भएकी छिन् । वीणा बजाउँदै गरेकी यी बज्रवीणादेवी छ मुद्राले अलङ्कृत र रत्नमालाले सजिएकी तथा पद्मवज्रासनमा बसेकी छिन् ॥२॥

यसपछि बायाँ बगलमा अक्षयमति नाम गरेका बोधिसत्त्व छन् अक्षोभ्य-(बुद्ध)-बाट उत्पन्न । यिनको अभिरतिभुवन हो । यिनी एक मुख, नीलो वर्ण र दुई हात भएका छन् । यिनले हृदयमा खुम्चाइएको दाहिने हातले खड्ग र बायाँ हात घुँडासम्म केही खुम्चाई पुऱ्याएर कमल लिएका, अनि छ मुद्राले अलङ्कृत र पद्मबज्रासनमा बसेका छन् । यिनी अक्षोभ्यबुद्धको आत्मस्वरूप भएका, अक्षय आकारका र सत्ययुगस्वरूप छन् ॥१॥

त्यसको बायाँतर्फ समन्तभद्र नामका बोधिसत्त्व छन् । वैरोचन-(बुद्ध)-बाट उत्पन्न भएका । यिनको अकनिष्ठभुवन हो । यी एक मुख, सेतो वर्ण र दुई हात भएका छन् । पसारिएको दाहिने हातले वरदमुद्रा र घुँडासम्म पसारिएको बायाँ हातले पातसहितको कमलमाथि खड्ग लिएका छन् । साथै छ मुद्रा आदि आभूषणले सिंगारिएका र पद्मवज्रासनमा बसेका छन् । यिनी पृथ्वीको चक्षु-(आँखा)-स्वरूप आत्मा भएका, शान्त आकारका र सत्ययुगस्वरूप छन् ॥२॥

त्यसको बायाँतर्फ पुष्पा नामकी देवी एक मुख, सुनको जस्तो वर्ण र दुई हात भएकी छिन् । पूजापछि हृदयमा हात पुऱ्याई अञ्जलि जोडेकी, छ मुद्रा आदिले अलङ्कृत र पद्मवज्रासनमा बसेकी छिन् ॥१॥

यिनको बायाँतर्फ लास्या नामकी देवी एक मुख, सुनको जस्तो वर्ण र दुई हात भएकी छिन्,

ण वज्रं वामेन घंटां(घण्टां) वादि(दयि)त्वा लास्यं कुर्वंतो षण्मुद्रालं(लङ्)कृ(कृत) पद्मवज्रासनः ॥२॥ इत्येते पूर्वपट्टिकायां(याम्) ॥ अथ दक्षिणपट्टिकायां रत्नसंभ-(सम्भ)वस्ये(स्य) दक्षपार्श्वे सागरमतिनामा बोधिसत्त्व. वैरोचनादुत्पत्तिः भुवन-कनिष्ठं. एकमुखं(खः). श्वेतवर्ण(र्णः). द्विभुज(जः). दक्षेणाकुंचि(कुञ्चि)ते हृदि संखं(शङ्खं) वामेन प्रसारितेन जानुदेशे गदां बिभ्राणः षण्मुद्रालं(लङ्)कृतः पद्मवज्रासनः आत्माकारादिकं वैरोचनवत् इति ॥१॥ तस्य दक्षे वज्रगर्भो नाम बोधिसत्व(त्वः). अक्षोभ्यात्समुत्पत्ति.(त्तिः). भुवनमभिरति. एकमुख(खो). गगनवर्ण(र्णो). द्विभुज(जो). दक्षेणाकुंचि(कुञ्चि)तेन वहिर्वज्रं वामेन हृद्याकुंचि-(कुञ्चि)तेन पुस्तकं विभ्राणः षण्मुद्राभूषितः पद्मवज्रासन-आत्माकारादिकमक्षोभ्यवत् ॥२॥ तस्य दक्षे शब्दा नाम देवी. एकमुख(खा). हाटकवर्ण(र्णा). द्विभुज(जा). हस्ताभ्यां वीणां शब्दयंती(यती) त्रिरत्नसेवां कुर्वंति(र्वंती) षण्मुद्रालंका(लङ्का)-रालं(लङ्)कृता कमलवज्रासनः(ना) ॥३॥ तस्य दक्षे वंशा नाम देवी. एकमुख-(खा) तपनीयवर्ण(र्णो). द्विभुज(जा). द्वाभ्यां कराभ्यां वंश(शं) मुखवायुना पूरयंती(यती). पूजायां सुखयंती(यती) नानालंका(लङ्का)रालं(लङ्)कृता षण्मुद्राज्व(द्रोज्ज्व)ला .कमलवज्रासनः (ना) ॥ ॥ र–

यिनी लास्यादेवी दाहिने हातले वज्र र बायाँ हातले घण्टा बजाएर नाच गर्ने भएकी र छ मुद्राले अलङ्कृत तथा पद्मवज्रासनमा बसेकी छिन् ॥२॥ यी सबै पूर्वतर्फको पट्टिकामा ॥ अब दक्षिणतर्फ पट्टिका-(आसन)-मा रत्नसम्भव-(बुद्ध)-को दाहिने बगलमा सागरमति नामका बोधिसत्त्व छन् जसको उत्पत्ति वैरोचन-(बुद्ध)-बाट भएको हो । यिनको कनिष्ठ भुवन हो । यिनी एक मुख, सेतो वर्ण र दुई हात भएका छन् । खुम्चाएको दाहिने हातले हृदयमा शङ्ख र घुँडासम्म पसारिएको बायाँ हातले गदा लिएका, छ मुद्राले अलङ्कृत र पद्मवज्रासनमा बसेका छन् । आत्मा, आकार आदि वैरोचनको जस्तै ॥१॥ त्यसको दायाँतर्फ वज्रगर्भ नामका बोधिसत्त्व छन् जसको अक्षोभ्य-(बुद्ध)-बाट उत्पत्ति भएको हो । यिनको भुवन अभिरतिभुवन

हो। यिनी एक मुख, आकाशजस्तै नीलो वर्ण र दुई हात भएका छन्। खुम्चाएको दाहिने हातले बाहिर वज्र र हृदयमा खुम्चाएको बायाँ हातले पुस्तक लिएका, छ मुद्राले सजिएका र पद्मवज्रासनमा बसेका छन्। आत्मा र आकार आदि अक्षोभ्य-(बुद्ध)-को जस्तै ॥२॥ त्यसको दाहिनेतर्फ शब्दा नामकी देवी छिन्। यिनी एक मुख, सुनको जस्तो वर्ण र दुई हात भएकी छिन्। यिनी दुई हातले वीणा बजाउने र त्रिरत्न-(बुद्ध, धर्म र सङ्घ)-को सेवा गर्दै रहेकी छिन्। साथै छ मुद्रा आदि अलङ्कारले सजिएकी तथा कमलवज्रासनमा बसेकी छिन् ॥३॥ यसको दाहिनेतर्फ वंशा नामकी देवी छिन्। यिनी एक मुख, आगोको जस्तो वर्ण र दुई हात भएकी छिन्। दुवै हातले वंश (वेणु, मुरली) मुखको हावाले भर्दै बजाउने, अनि पूजामा सुख दिने, धेरै अलङ्कारले अलङ्कृत, छ मुद्राले सजिएकी र कमलवज्रासनमा बसेकी छिन्।

त्नसंभ(सम्भ)वस्य वामपार्श्वे रत्नपाणिनामा बोधिसत्व(त्त्व): रत्नसंभ(सम्भ)वादुत्पन्नः एकमुख(खः). पीतवर्ण(र्णः). द्विभुज(जः). दक्षेण हृद्याकुंचि(कुञ्चि)तेन रत्नं वामेनोरुप्रसारितेन सनालकमलोपरि आदर्शाविवं(बिम्बं) बिभ्राणः ॥ शेषं रत्नसंभ(सम्भ)ववत् ॥ ॥ तस्या(स्य) वामे गगनगंज(गञ्ज)बोधिसत्व(त्त्व): अक्षोभ्यात्समुत्पन्नः भुवनमभिरतिनाम. एकमुख(खः). गगनवर्ण(र्णः). दक्षेणाजानुप्रसारितेन वरदं गगनगंज(गञ्जं) च विभ्राणः वामेनोरुप्रसारितेन सनालकमला-(लो)परि रत्नगंजं(गञ्जं) दधानः ॥ षण्मुद्रालं(लङ्)कृतः पद्मवज्रासन(नः). शेषमक्षोभ्यवत् ॥ ॥ तस्य वामे वज्रधूपा नाम देवी. एकमुख(खा). शातकुंभ-(कुम्भ)वर्णा· द्विभुज(जा). दक्षप्रसारितेन. सधूपधूमं धूमकटछुकं विभ्राण(णा). वामेन हृद्याकुंचि(कुञ्चि)तेन· अभयमुद्रा(द्रां) दधाना. षण्मुद्राभरणोज्व(ज्ज्व)ला· पद्मवज्रासन(ना)· धूपं धूपयंती(यन्ती). त्रिरत्नं भजंती(जन्ती) ॥ तस्या वामे माल्या नाम (म्नी) देवी· एकमुख(खा). चामीकरवर्ण(र्णा). द्विभुज(जा)· हस्ताभ्यां मालामुपढौकयंती(यन्ती) षण्मुद्रामुद्रिता· हसंती(सन्ती)· पद्मवज्रासन(ना). ॥ ॥ पश्चिमपट्टिकायां(याम्) ॥ अमिताभस्य दक्षे पार्श्वे चंद्र(चन्द्र)प्रभनामा बोधिसत्व-(त्त्व)· वैरोच–

रत्नसम्भव-(बुद्ध)-को बायाँ बगलमा रत्नपाणि नामका बोधिसत्त्व छन्। यिनी रत्नसम्भवबाट उत्पन्न भएका हुन्। यी एक मुख, पहेंलो वर्ण र दुई हात भएका छन्। हृदयमा खुम्चाइएको दाहिने हातले रत्न र घुँडासम्म पसारिएको बायाँ हातले डाँठसहितको कमलमाथि आदर्शबिम्ब लिएका छन्। बाँकी रत्नसम्भवजस्तै। यिनको बायाँतर्फ गगनगञ्ज नामका बोधिसत्त्व छन् अक्षोभ्य-(बुद्ध)-बाट उत्पन्न भएका। यिनको अभिरतिभुवन हो। यी एक मुख र आकाशको

जस्तै नीलो वर्ण भएका छन् । घुंडासम्म फैलाइएको दाहिने हातले वरदमुद्रा र गगनगञ्जलाई लिएका, अनि घुंडासम्म पसारिएको अर्को बायाँ हातले डाँठसहित कमलको माथि स्थिर रत्नगञ्जलाई लिएका छन् । यिनी छ मुद्राले अलङ्कृत र पद्मवज्रासनमा बसेका छन् । बाँकी अक्षोभ्य जस्तै । यिनको बायाँतर्फ वज्रधूपा नामकी देवी छिन् । यिनी एक मुख र सुनको जस्तो वर्ण भएकी छिन् । दुई हातमध्ये पसारिएको दायाँ हातले धूवाँ (सुगन्धी धूवाँ) सहितको धूप र धूवाँको भाँडो लिएकी, हृदयमा खुम्चाइएको बायाँ हातले अभयमुद्रा धारण गरेकी, छ मुद्राले अलङ्कृत तथा पद्मवज्रासनमा बसेकी छिन् । यिनले धूप सल्काउँदै त्रिरत्न-(बुद्ध, धर्म, सङ्घ)-को सेवा गरेकी छिन् । यिनको बायाँतर्फ माल्या नामकी देवी छिन् । यिनी एक मुख, सुनको जस्तो वर्ण र दुई हात भएकी छिन् । दुवै हातले माला समाएकी, छ मुद्राले सजिएकी, मुस्कुराएकी र पद्मवज्रासनमा बसेकी छिन् ।

अब पश्चिमपट्टिको-(भाग)-बारे चर्चा गरिन्छ । अमिताभ-(बुद्ध)-को दाहिने बगलमा चन्द्रप्रभ नाम गरेका बोधिसत्त्व छन् । यिनी

नाबुत्पन्नः भुवनमकनिष्ठं(ष्ठम्). एकमुख(खः). श्वेतव(वर्णः). द्विभुज(जः). दक्षेण हृत्प्रदेशे आकुंचि(कुञ्चि)तेन चक्रं वामेन सनालपद्मोपरि चंद्रमंडल(चन्द्रमण्डलं) विभ्राणः ॥ चक्रि(क्र)कुंड(कुण्ड)लभूषणपद्मवज्रासन. आत्मादिकं वैरोचनस्येव ॥१॥ तस्य दक्षे जालिनीप्रभो नाम वो(बो)धिसत्व(त्त्वः) अक्षोभ्यादुत्पन्न(न्नः). भुवनमभिरति(तिः). एकमुख(खः). गगनवर्ण(र्णः). द्विभुज(जः). हृत्प्रदेशाकुंचि-(कुञ्चि)तेन दक्षेणासिं वामेनोरुप्रदेशे प्रसारितेन. सनालकमलोपरि चंद्रमंड(चन्द्र-मण्ड)लं विभ्राणः मुकुटकुंड(कुण्ड)ल. ग्रैवेयक-कंक(कङ्क)णशृंख(शृङ्ख)लानूपु-राणि विभ्राण(णः). पद्मवज्रासन(नः). शेषमक्षोभ्यवत् ॥ तस्य दक्षे वज्ररसा नाम(म्नी) देवी एकमुख(खा). जातरूपवर्ण(र्णा). द्विभुज(जा). द्वाभ्यां भुजाभ्यां रसपूर्णपात्रं विभ्रती षण्मुद्राभरणोज्व(ज्ज्व)ला. पद्मवज्रासना ॥ ॥ तस्या दक्षे मृदंगा(दङ्गा) नाम(म्नी) देवी. एकवदन(ना). महारजतवर्ण(र्णा). द्विभुज(जा). द्वाभ्यां क्री(क्रो)डास्थितमृदंगं(दङ्गं) वादयंती(यती). पूजायां हर्षयंती(यती). षण्मुद्राभरणोज्व(ज्ज्व)ला. हंसती(हसती). शिरः कंपयंती(कम्पयती). पद्मवज्रा-सनः(ना) ॥ अमिताभस्य वामपार्श्वे महास्थामप्राप्तो नाम वो(बो)धिसत्व(त्त्वः). अमिताभ(भा)दुत्पन्न(नः). सुखावतीभुवनं(नम्). एकमुख(खः). कोकनद–

वैरोचन-(बुद्ध)-बाट उत्पन्न भएका हुन् । यिनको अकनिष्ठ भुवन हो । यी एक मुख, सेतो वर्ण र दुई हात भएका छन् । हृदयमा खुम्चाइएको दाहिने हातले चक्र र बायाँ हातले डाँठसहितको कमलको माथि चन्द्रमण्डल लिएका छन् । यिनी चक्र, कर्णकुण्डल र गहनाले सिँगारिएका, अनि वज्रासनमा बसेका छन् । आत्मा आदि वैरोचनको जस्तै ॥१॥ यसको दक्षिणतर्फ जालिनीप्रभ नामका बोधिसत्त्व छन्, जो अक्षोभ्य-(बुद्ध)-बाट उत्पन्न भएका हुन् । यिनको अभिरतिभुवन हो । यी एक मुख, आकाशको जस्तो वर्ण र दुई हात भएका छन् । हृदयमा खुम्चाइएको दाहिने हातले तरबार (खड्ग) र घुँडामा पसारिएको बायाँ हातले डाँठसहित कमलको माथि

चन्द्रमण्डल लिएका, मुकुट, कर्णकुण्डल, गलाको हार, कङ्कण (बाला), सिक्री (अन्य हार) र पाउजेब पहिरेका, अनि पद्मवज्रासनमा बसेका छन्। बाँकी अक्षोभ्यजस्तै। यिनको दायाँतर्फ वज्ररसा नामकी देवी छिन्। यिनी एक मुख, सुनको जस्तै वर्ण र दुई हात भएकी छिन्। दुवै हातले रस-(अमृत)-ले पूर्ण कलश समातेकी, छ मुद्राले अलङ्कृत र पद्मवज्रासनमा बसेकी छिन्। यिनको दाहिनेतर्फ मृदङ्गा नामकी देवी छिन्। यिनी एक मुख, सुनको जस्तो वर्ण र दुई हात भएकी छिन्। दुवै हातले काखमा रहेको मृदङ्ग (मादल) बजाउने, पूजामा खुशी मान्ने, छ मुद्राले अलङ्कृत, मुस्कुराएकी, शिर केही काम्ने र पद्मवज्रासनमा बसेकी छिन्। अमिताभ-(बुद्ध)-को बायाँ बगलमा महास्थामप्राप्त नामका बोधिसत्त्व छन्, अमिताभ-(बुद्ध)-बाट नै उत्पन्न भएका। यिनको सुखावतीभुवन हो। यी एक मुख र रातो कमलको जस्तै–

वर्ण(र्णः). द्विभुज(जः). हृद्याकुंचि(कुञ्चि)तेन दक्षेन(ण) चंद्र(चन्द्र)हासं वामेन सनालकमलं विभ्राणः षण्मुद्रामुद्रितः पद्मवज्रासन शेषमभिताभस्येव ।। ।। तस्य वामे लोकेश्वरनामा वोधिसत्व(त्व): ।। अमिताभादुत्पन्नः सुखावतीभुवनं(नम्). एकमुख(खः). वंधू(बन्धू)कवर्ण(र्णः). द्विभुज(जः). आजानुप्रसारितेन दक्षेण वरदं वामेन सनालकमलं दधान. षण्मुद्राद्याभरणभूषित(तः). कमलवज्रासनः ।।२।। तस्य वामे दीपा नाम देवी. एकास्या. कार्त्तस्वरवर्ण(र्णा). द्विभुजा. दक्षेण बहिराकुंचि-(कुञ्चि)तेन प्रदीपमात्रं विभ्राणा. दीपमुपनिवेद्य. वामेन हृद्याकुंचि(कुञ्चि)तेनाभयं ददंती(दती). यद्भूषणभूषिता. पद्मवज्रासन(ना). ।। ।। तस्या वामे गीता नाम देवी. एकमुख(खा). जांवू(जाम्बू)नदवर्ण(र्णा). द्विकराभ्यां विपंचीं(पञ्ची) वादयंती(यती). सप्तस्वरेण गानं कुर्वंती(र्वती). हसंती(सती). भजंती(जती). षण्मुद्राद्याभरणा. पद्मकुलिशासना ।। ।। उत्तरपट्टिकायां(याम्). अमोघसिद्धस्य दक्षे पार्श्वे सर्वशोकतमोनिर्घातनमतिनामा वोधिसत्व(त्व). वज्रसत्वा(त्वा)दुत्पन्नः मेरुमंड(मण्ड)लभुवनं(नम्). एकमुख(खः). नीलवर्ण(र्णः). द्विभुज(जः). दक्षेण बहिः-प्रदेशे आकुंचि(कुञ्चि)तेन वज्रं हृत्प्रदेशाकुंचि(कुञ्चि)तेन वामेन मयूरपिछं(च्छं) रक्षार्थं विभ्राणः चक्रि(क्र)–

वर्ण भएका, दुई हात भएका, हृदयमा खुम्चाइएको दाहिने हातले चन्द्रहास (चम्किलो तरवार) र बायाँ हातले डाँठसहितको कमल लिएका, छ मुद्राले अलङ्कृत तथा पद्मवज्रासनमा बसेका छन्। बाँकी अमिताभबुद्धको जस्तै। यसको बायाँतर्फ लोकेश्वर नामका बोधिसत्त्व छन्। यिनको उत्पत्ति अमिताभ-(बुद्ध)-बाट भएको हो। यिनको सुखावतीभुवन हो। यिनी एक मुख भएका, बन्धूक वृक्षजस्तै रातो वर्ण भएका र दुई हातमध्ये घुँडासम्म पसारिएको दायाँ हातले

वरदमुद्रा र बायाँ हातले डाँठसहितको कमल लिएका, छ मुद्राले अलङ्कृत र कमलवज्रासनमा बसेका छन् ।।२।। यिनको बायाँतर्फ दीपा नाम गरेकी देवी छिन् । यिनी एक मुख, सुनको जस्तो वर्ण र दुई हात भएकी छिन् बाहिर खुम्चाइएको दाहिने हातले प्रदीप (बत्ती) लिएकी र बत्ती निवेदन (नीराजन) गरेर हृदयमा खुम्चाइएको बायाँ हातले अभयदान दिएकी, भूषण-(गहना)-ले सजिएकी र पद्मवज्रासनमा बसेकी छिन् । यिनको बायाँतर्फ गीता नामकी देवी छिन् । यी एक मुख र सुनको जस्तो वर्ण भएकी छिन् । दुई हातले वीणा बजाएकी तथा सात स्वर-(स, रे, ग, म, प, ध, नि)-ले गाना गाएकी, हाँसेकी र भजन गरेकी छिन् । छ मुद्राले अलङ्कृत यिनी पद्मवज्रासनमा बसेकी छिन् ।

उत्तरपट्टिका-(भाग)-मा अमोघसिद्धि-(बुद्ध)-को दायाँ बगलमा सर्वशोकतमोनिर्घात-नमति नामका बोधिसत्त्व छन् , वज्रसत्त्व-(आदि बुद्ध)-बाट उत्पन्न भएका । यिनको मेरुमण्डल भुवन हो । यिनी एक मुख, नीलो वर्ण र दुई हात भएका छन् । बाहिरफेर खुम्चाइएको दाहिने वज्र र हृदयमा खुम्चाइएको बायाँ हातले मयूरको प्वाँख रक्षाको लागि लिएका तथा चक्र,

॥६१॥

कुंड(कुण्ड)लादिरत्नमालोज्वला(लः) कमलोपरि ह्लादिन्यासना(नः). शेषं वज्र-सत्व(त्त्व)स्येव ॥१॥ तस्य दक्षे सर्वणीवरणविष्कंभी(ष्कम्भि)नाम बोधिसत्व(त्त्वः) ॥ अमोघसिद्धा(द्धात्) समुत्पन्नः अमोघवतीभुवनं(नम्) ॥ एकानन(नः). श्यामवर्ण(र्णः). द्विभुज(जः). हृत्प्रदेशाकुंचि(कुञ्चि)तेन दक्षेण गदां संद(सन्द)-धानः प्रसारितेन वामेन दंडो(दण्डो)परि विश्ववज्रं दधानः ॥ षण्मुद्राद्यलंका-(लङ्का)रालं(लङ)कृत(तः). कमलकुलिशासन(नः). शेषममोघसिद्धस्येव ॥२॥ तस्य दक्षे वज्रस्पर्शा नाम(म्नी) देवी. एकानना. अष्टापदवर्णा. द्विदोषा. द्वाभ्यां मर्दलं वादयंती(यती) भजंती(जती). षण्मुद्रा(द्रां) वहंती(हती) कमलोपरि वज्रासनं-(ने). वसंती(सती) इषद्धसंती(सती)षच्चलंती(लती) ॥१॥ तस्या दक्षे मुरुजा नाम(म्नी) देवी. एकलपना. पीतवर्णा. द्विभुजा. मुरुजावाद्यं हस्ताभ्यां वादयंती (यती) हसंती(सती) भजंती(जती). षण्मुद्रा(द्रां) वहंती(हती). शिरः कंपयंती-(कम्पयती) कमलकुलिशासन(ने). वसंती(सती) ॥ ॥ अमोघसिद्धस्य वामपार्श्वे ॥ प्रतिमा(भा)नकूटनामा बोधिसत्व(त्त्वः). अमोघसिद्धाद्‌उत्पन्नः अमोघवतीभुवनं-(नम्). एकवदन(नः). श्यामवर्ण(र्णः). द्विभुज(जः). हृत्प्रदेशाकुंचि(कुञ्चि)तेन दक्षेणाभयं दत्वा वामोरुप्रदेशाकुंचि(कुञ्चि)तेन वामेन सनालकमलोपरि समालिक-र्मासि विभ्रा–

कर्णकुण्डल र रत्नको माला आदिले सजिएका तथा कमलमाथि ह्लादिनी-(वज्र)-को आसनमा बसेका छन् ॥१॥ यिनको दायाँतर्फ सर्वणीवरणविष्कम्भी नामका बोधिसत्त्व छन्, अमोघसिद्धि-(बुद्ध)-बाट उत्पन्न भएका । यिनको अमोघवतीभुवन हो । यिनी एक मुख, श्यामवर्ण र दुई हात भएका छन् । हृदयमा खुम्चाइएको दाहिने हातले गदा र फैलाइएको बायाँ हातले दण्डमाथि (बींडसहित) विश्ववज्र लिएका छन् । यी छ मुद्रा आदि अलङ्कारले सजिएका र कमलवज्रासनमा बसेका छन् । बाँकी अमोघसिद्धिको जस्तै ॥२॥ यिनको बायाँतर्फ वज्रस्पर्शा नामकी देवी छिन् । यिनी एक मुख, सुनको जस्तो वर्ण र दुई बाहु (भुजा) भएकी, दुवै हातले

मादल बजाएकी, भजन गर्ने तथा छ मुद्रा धारण गर्ने हुन् । यिनी कमलमाथि वज्रासनमा बसेकी, अलिअलि हाँसेकी र अलिअलि चलेकी (चलमलाएकी) छिन् ॥१॥ यिनको दायाँतर्फ मुरुजा नामकी देवी छिन् । यिनी एक मुख, पहेंलो वर्ण र दुई हात भएकी छिन् । दुवै हातले मुरुजा (ठूलो ढोलक वा मृदङ्ग) बजाउने, हाँस्ने, भजन गर्ने, छ मुद्रा लिएकी, शिर काम्ने र पद्मवज्रासनमा बसेकी छन् ॥ अमोघसिद्धि-(बुद्ध)-को बायाँ बगलमा प्रतिभानकूट नामका बोधिसत्त्व छन् । यिनी अमोघसिद्धिबाट उत्पन्न भएका हुन् । यिनको अमोघवतीभुवन हो । यिनी एक मुख, श्यामवर्ण र दुई हात भएका छन् । हृदयमा खुम्चाइएको दाहिने हातले अभयमुद्रा र बायाँ घुँडासम्म पुऱ्याइएको बायाँ हातले डाँठसहितको कमलमाथि मालासमेत तरवार

ण(णः) चक्रि(क्र)कुंड(कुण्ड)लकंठि(कण्ठी)रोचकमेखलनपुरभूषण(णः) मणिमय-मालिकसुंद(सुन्द)रदेहोरविन्दकुलिशासनमासीनः ॥ शेषममोघसिद्धस्येव ॥ ॥ तस्य वामे अमितप्रभो नाम बोधिसत्व(त्त्वः) ॥ अमिताभादुत्पन्नः ॥ सुखाव-वतीभुवनं(नम्). एकमुख(खः). शोणवर्ण(र्णः). द्विभुज(जः). दक्षेणाकुंचि-(कुञ्चि)तेन मुकुलकमलं वामेन सनालकमलोपरि सुवर्णकलशं दधानः ॥ षण्मुद्रा-लं(लङ)कृत(तः). कमलकुलिशासनः ॥ अमोघसिद्धस्येव शेषं(षम्) ॥ ॥ तस्य वामे गंधा(गन्धा) नाम देवी एकानना. कनकवर्णा. द्विभुजाः द्वाभ्यां हस्ताभ्यां पंच-(पञ्च)रत्नसुगंधा(गन्धा)मृतलाजाक्षताष्टांग(ष्टाङ्ग)जलपूर्णशंखं(शङ्खं) धृत्वार्घं ददंती(दती) नानाभरणानि वहंती(हती) ईषद्धसंती(सती) कमलकुलिशासनः(ने) लसंती(सती) ॥ ॥ तस्या वामे ॥ नृत्या नाम(म्नी) देवी एकलपना. हाटकवर्णा. द्विभुजा. दक्षेण शिरःप्रदेशे आकुंचि(कुञ्चि)तेन कुलिशं धृत्वा. आनाभ्याकुंचि-(कुञ्चि)तेन वामेन घंटां(घण्टां) वादयित्वा नृत्यंती(त्यती). पद्मोपरि कुलिशासना ॥४०॥ षोडशानां तारादेवीनां समुत्पन्न(त्त)यस्तु आर्यतारायाः सकाशात्. सर्वासां भुवनं तुषिताभिधं(धम्) आत्माकारौ स्वस्वनामश(स)दृशौ

लिएका, चक्र, कर्णकुण्डल र गलामा कण्ठी, रुचक (बाला), मेखला (कम्मरमा लगाइने वस्त्र), पाउजेब आदि आभूषणले गर्दा मणिले झकझकाउँदो सुन्दर शरीर भएका र पद्मवज्रासनमा बसेका छन् । बाँकी अमोघसिद्धिको जस्तै । यिनको बायाँतर्फ अमितप्रभ नामका बोधिसत्त्व छन् अमिताभ-(बुद्ध)-बाट उत्पन्न भएका । यिनको सुखावतीभुवन हो । यिनी एक मुख, सुनको जस्तो वर्ण र दुई हात भएका छन् । यिनले खुम्चाएको दाहिने हातले कोपिला रूपको कमल र बायाँ हातले डाँठसहितको कमलमाथि सुनको कलश लिएका छन् । यी छ मुद्राले अलङ्कृत र

पद्मवज्रासनमा बसेका छन् । बाँकी अमोघसिद्धिको जस्तै । यिनको बायाँतर्फ गन्धा नामकी देवी छिन् । यिनी एक मुख, सुनको जस्तो वर्ण र दुई हात भएकी छिन् । दुवै हातले पञ्चरत्न, सुगन्धी अमृत, लावा, अक्षता र अष्टाङ्ग जलले पूर्ण भएको शङ्ख लिएर अर्घ दिँदै गरेकी तथा नाना अलङ्कारले सजिएकी, अलिअलि हाँसेकी, पद्मवज्रासनमा बसेकी र शोभित भएकी छिन् । यिनको बायाँतर्फ नृत्या नामकी देवी छिन् । यिनी एक मुख, सुनको जस्तो वर्ण र दुई हात भएकी छिन् । शिरतर्फ पुऱ्याएर खुम्चाएको दाहिने हातले वज्र लिएर, अनि नाभिसम्म पुऱ्याई खुम्चाएको बायाँ हातले घण्टा बजाएर नाच्दै गरेकी, अनि कमलमाथि वज्रासनमा बसेकी छिन् ॥४०॥

सोह्र तारादेवीहरूको उत्पत्ति आर्यताराबाट भएको हो । सबैको भुवन तुषितभुवन हो । आत्मा र आकार आ-आफ्ना आकारसित तुल्य छन् ।

युगं सत्यं(त्यम्) ॥ इति पुराणांत(णान्त)रप्रज्ञामाहात्म्ये ॥ पूजाकांडे(काण्डे)तु स्वयं स्वयमेव स्वस्वबीजाक्षरतः समुत्पन्ना ॥ भुवनं सुमेरुमंड(मण्ड)लं षोडशोपचार-विधिपूरणार्थं पूजायामीति ॥ बहुविस्तरं निरस्तं(स्तम्) ॥ ॥ नमो मंजु(मञ्जु)-नाथाय ॥ ॥ ज्ञानेश्वरीवर्णनं(नम्) ॥ नामसंगी(सङ्गी)तिटीकोद्धृतानि अमृत-कर्णिका नाम ॥ ॥ सद्धर्मो धर्मराट् भास्वान् इति. सत् चासौ सद्गुरूपदेशसंभ-(सम्भ)वत्वात्. धर्मतश्च एवंकाररूप. सुखस्वलक्षणधारणात्. सद्धर्मः ॥ ॥ उक्तं च धर्मस्कंध(स्कन्ध)सहस्राणां चतुराशीतिसंख्य(सङ्ख्य)या ॥(।) सर्वाश्रयं विना माता ह्यक्षरं कथितं मया ॥ एकारस्तु भवेन्माता वकारस्तु पिता स्मृतः(।) विंदु-(विन्दु)स्तत्र भवेद् योगः संयोगः परमाद्भुतः ॥ एकारं पद्ममित्युक्तं वकारो वज्रमेव च (।) विंदु(विन्दु)स्तत्र भवेद् बीजं तत्प्रसृतं जगत्त्रयं(यम्) ॥ एकारस्तु भवेत्प्रज्ञा वकारः सुरताधिपः ॥ (।) विन्दुश्चानाहतं तत्त्वं तज्जातान्यपराणि च ॥ यो विजानाति तत्त्वज्ञो धर्ममुद्राक्षरं द्वयं(यम् ।). स भवेत्सर्वसत्वा(त्त्वा)नां धर्मचक्रप्रवर्तकः ॥ ॥ अन्यच्च ॥ एकारो गगनालोको धर्मधातुः प्रकीर्तितः ॥ (।) वंकारः सुगतव्यूहः एकारे संव्यवस्थितः ॥ एरहस्ये ख(रत्न)धातोवा(र्वा) भ–

युगचाहिं सत्ययुग हो । अर्को पुराणको प्रज्ञाको माहात्म्यमा यी कुरा छन् ।

पूजाकाण्ड-(पूजाविधि)-मा स्वयं नै आ-आफ्ना बीजाक्षर-(ऐं, ह्रीं आदि तान्त्रिक अक्षर)-बाट उत्पन्न भएका हुन् । यिनको सुमेरुमण्डल भुवन हो । सोह्र किसिमको पूजाविधि पूरा गर्नको लागि । धेरै बिस्तार नगरौं ।

मञ्जुनाथलाई नमस्कार । अब ज्ञानेश्वरी-(देवी)-को वर्णन गरिन्छ । नामसङ्गीति-(नामवर्णन)-को टीकाबाट उद्धृतमध्ये अमृतकर्णिका पनि एक नाम हो । सद्धर्म, धर्मराट् र भास्वान् नाम पनि उल्लेख्य छन् । सद्धर्म (असल धर्म) धर्मको राजा हो र प्रकाशमान पनि छ । असल गुरुको उपदेशबाट प्राप्त तत्त्वलाई 'सत्' भन्दछन्; धर्मद्वारा यो 'एवं' को रूपमा

छ। यसरी सुखमय आफ्नो लक्षण धारण गर्ने हुनाले सद्धर्म भनिएको हो। यही कुरा धर्मस्कन्धको चौरासी हजार सङ्ख्याले बताएको छ। कुनै आश्रयविना (स्वतः उत्पन्न रूपमा) माता वा देवी अक्षर अर्थात् अमर छन् भन्ने कुरा बताइयो।

'एवं' शब्द, जुन धर्मको रूप भनियो, त्यसको अर्थ बताइन्छ। 'ए' भनेको माता, 'वं' भनेको पिता र शिरबिन्दु (ं) चाहिं ती दुईको अनौठो संयोग हो। अथवा 'ए' भनेको पद्म, 'वं' भनेको वज्र र शिरबिन्दुचाहिं बीज (आद्य तत्त्व) हो जसबाट तीनै लोकमा फैल्यो। अथवा 'ए' भनेको प्रज्ञा हो, 'वं' भनेको सुरताधिप (मारजित् बुद्ध वा कामदेव) हो, अनि शिरबिन्दु चाहिं आह्वान (बोलाउने) तत्त्व हो, अरू सबै त्यसैबाट जन्मेका हुन्। जसले यी दुई धर्ममुद्राका अक्षर ('ए' + 'वं' अक्षर) जान्दछ त्यो तत्त्वज्ञ (तत्त्व जान्ने) र धर्मचक्रप्रवर्तक व्यक्ति हो। अरू पनि। 'ए' भनेको गगन-(आकाश)-रूप धर्मधातु हो। 'वं' भने सुगतहरूको समूह हो। यी सबै 'ए' अक्षरमा व्यवस्थित छन्। 'ए' अक्षर रत्नधातुको रहस्य (मुख्य तत्त्व) हो।

गे धर्मोदये व्रजे ।। सिंहासने स्थितो वज्री उक्तं तत्रांत(त्रान्त)रे मया ।। वं वज्री वज्र-सत्व(त्त्व)श्च वज्रभैरव ईश्वरः ।। हेरुकः कालचक्रश्च आदिबुद्धादिनामभिः ।। ।। अन्यत्र च एवंकारहोते (ने) वुज्जिअते वुज्जिअसअलः शेषः ।। धर्मरुरण्डा (रुण ?) सोजूरेणि अप इव उवेस· इति ।। धर्मो धर्मधातुः स्वाधिस्थानं (स्वाधिष्ठानं) जत्र (तत्र) तेन वा राजत इति धर्मराट्. सहजा(ज)ज्ञानलोकरूपत्वात्. भास्वान्. भासन-शीलः ।। निरंत(रन्त)रनिराभासभावनया धूमादिदर्शनिमित्तबुद्धविवे(विम्बे)नाज्ञान-तमोवृत्तानां लोकानामालोकं करोतीति लोकालोककरः परः ।। उत्कृष्टप्रभास्वरमंत-(मन्त)र्गतसरसमहासुखरश्मिरूपः सूर्य्याद्यालोकोत्कृष्टत्वात्· धर्मेण सहजानंद(नन्द)-चतुष्टयेन ईश्वरस्त्रिलोकस्वामी नित्यबोधिचित्तवशत्वात्· अनैश्वर्यात् ।। ।। त्रैलोक्यैककुमारांगी(राङ्गी)ति ।। त्रैलोक्यं कायत्रयं तदेकस्त्व(स्त)दभिन्नो महासुखकायः।। स एव कुमारो धर्मधातुरूपेण विकाराभावा(वात्) स एवांगं(वाङ्गं) सर्वोत्पत्तिहेतुर्यस्य सः ।। त्रैलोक्यैककुमारांगी(राङ्गी)ति. विव्यमुद्रासमुद्भूत(तः). सुखरूप इत्यर्थः ।। पूर्वोक्तमुद्राप्रकर्षगतत्वात् सर्व–

'ए' अक्षरले धर्मोदय (सत्सङ्ग गर्ने) वज्र-(सभा)-तिर पनि सङकेत गर्छ। वज्री (वज्रधातु-रूप बुद्ध) सिंहासनमा रहेको कुरा अर्को तन्त्र-(शास्त्र)-मा पनि भनियो। 'वं' अक्षरले चिनिने देवता-(बुद्ध)-हरू हुन्– वज्री, वज्रसत्त्व, वज्रभैरव, ईश्वर, हेरुक, कालचक्र र आदिबुद्ध आदि

नामहरू । अन्यत्र (अरू भाषामा पनि) 'एवं' स्वरूप दुई अक्षरसँग सम्बद्ध 'बुज्जिग्रते बुज्जिअसअल : शेषः । धर्म रुरण्डा सोजूरेणि अप इव उवेस' आदि उक्ति पाइन्छन् ।

धर्म भनेको धर्मधातु हो, स्व-(धर्म)-को रहने ठाउँ वा स्वाधिष्ठान हो । त्यहाँ वा त्यसद्वारा जो शोभित हुन्छ त्यो धर्मराट् हो। सहज (आफै) ज्ञानस्वरूप हुनाले भास्वान् भनिएको हो, प्रकाशमान हुनाले पनि ।

अर्को नाम श्रेष्ठ लोकालोककर (लोकलाई आलोक दिने) पनि हो । यसको अर्थ हो– लगातार निराभास-(आभास नहुने अर्थात् अज्ञात)-को भावनाले, धूम (धूवाँ, अज्ञानको आवरण) आदि दश प्रकारका निमित्त बुद्ध बिम्ब-(छायारूप वा मायामय बुद्ध ?)-ले गर्दा अज्ञानको अन्धकारले घेरिएका लोक-(मानिसहरू)-को लागि आलोक अर्थात् ज्ञानको उज्यालो जसले दिन्छ त्यो लोकालोककर हो। यो तत्त्व उत्कृष्ट (ज्यादै) प्रभास्वर (चम्किलो) छ र यसैअन्तर्गत (ज्ञानस्वरूप प्रकाशअन्तर्गत) रसमय ठूलो सुखको रश्मि-(किरण, प्रकाश)-स्वरूप छ, किनकि सूर्य आदि प्रकाशपुञ्जभन्दा उत्कृष्ट (माथिल्लो दर्जाको) हुनाले। धर्मले, अनि सहजस्वरूप चार प्रकारको आनन्दले यो ईश्वरतत्त्व तीनै लोक-(स्वर्ग, मर्त्य, पाताल)-को मालिक हो, नित्य बोधि-(बोधिसत्त्व, ज्ञान)-को चित्तको वशमा पर्ने हुनाले र अनैश्वर्य (बाह्य सम्पत्तिको बेवास्ता गर्ने) हुनाले पनि। यी लोकालोककर चाहिं त्रैलोक्यैककुमाराङ्गी पनि हुन् । यहाँ त्रैलोक्यको अर्थ हो– तीनै लोक अर्थात् तीन काय-(शरीर)-स्वरूप। त्यससँग अभिन्न (सरूप) हुनाले महासुख (ठूलो सुखको) शरीर भएका पनि छन् । यिनै कुमार धर्मधातु-(बुद्ध)-को रूपले विकार नहुने हुनाले, अनि त्यही अङ्ग अर्थात् सबैको उत्पत्तिको कारण हुनाले त्रैलोक्यैककुमाराङ्गी भनिएको हो । जसको अर्थ हो– दिव्य मुद्राबाट पैदा भएको र सुखस्वरूप । पहिले मुद्राको उत्कृष्ट स्थिति हुनाले, अनि सबै

सिद्धिज्येष्ठत्वाच्च स्थविर इत्युच्यते ॥ महाराजः समाधिक्रमेण वृद्धज्ञानमयत्वात्. वृद्धा ॥ ज्ञानप्रबोधन तुर्यातीतप्रभास्वरमयज्ञानविंव(विम्ब)मयत्न(त्ने)न सव(र्व)-जंतू(जन्तू)नामुत्पादनात् प्रजानां जंतू(जन्तू)नां पतिः प्रजापतिः ॥ शुक्लप्रतिपदादि पंच(पञ्च)दशकलातिक्रांत(क्रान्त)षोडशकला. कृष्णप्रतिपदादिपंच(पञ्च)दशकला-तिक्रांत(क्रान्त)षोडशकला. द्वयैकलक्षणरूपत्वात्. द्वात्रिंशल्लक्ष्यंत(क्ष्यन्त) इति लक्षणानि तानि धरतीति द्वात्रिंशल्लक्षणधरः ॥ संवृतिविवृतिक्रमेण षोडशानंद(नन्द)द्वयधार-णाद्वा तथा ॥ सर्वधर्मैकरसत्वेन सर्वजनाभिलाषीयत्वात्. कांता(कान्ता)-स्वाधिष्ठानस्फुटीभावेन सेचनकरूपत्वात्. त्रैलोक्येन कायत्रयैकत्वेन सुंद(सुन्द)री ॥ उक्तं च ॥ द्वात्रिंशल्लक्षणी शांता(शान्ता) अशीत्यनुव्यंज(व्यञ्ज)नीप्रभुः । योषिद्भगे सुखावत्यां शुक्रनाम्ना व्यवस्थितः ॥ ततश्च महता तेन सर्वसत्वा(त्वा)नुकंप(कम्प)-या. कृतं नैर्माणिकं कायं द्वात्रिंशल्लक्षणान्वितं(तम्) ॥ विना तेन न सौख्यं स्यात् सुखं हित्वा भुवेन्न सः ॥ शुक्राकारो भवेद् भगवान् तत्सुखं कामिनी स्मृता ॥ न तत् प्रत्येकबुद्धानां श्रावकाणां च गोचरं(रम्) ॥ गोचरं बुद्धपुत्राणां वज्रपद्मोद्भवं पदमिति ॥ ॥ ततः पुनश्चोक्तं(क्तम्) ॥ पंच(पञ्च)बुद्धात्मकसर्वजज्ञो(नो)यं पश्य कुचित्तकुनाटकुदिव्यं(व्यम्) ॥ एदृशा(एतादृशा) परममहासुखनामा नृत्यति एकमनेकरसेन ॥ गगनाभोगसंभो(सम्भो)ग इ–

सिद्धिहरूमध्ये जेठो (पहिलो) हुनाले 'स्थविर' भनिन्छ । समाधिको क्रमले बुद्ध (पुरानो) ज्ञान हुनाले महाराज, अनि वृद्ध भनिएको हो । ज्ञानको प्रकाशले तुर्य-(आत्माको चौथो अवस्था जसमा आत्मा ब्रह्ममा लीन हुन्छ)-भन्दा पनि परको चम्किलो ज्ञानस्वरूप भएकोले, अनि सबै प्राणीहरू उत्पन्न गर्ने हुनाले पनि प्रजा-(जन्तु)-हरूका मालिक हुन गई यिनलाई प्रजापति भनिएको हो । शुक्लपक्षको प्रतिपदादेखि पन्ध्र कला पूरा गरेको सोह्रौं कला र कृष्णपक्षको प्रतिपदादेखि पन्ध्र कला पूरा गरेको सोह्रौं कला समेत दुवैतर्फको लक्षण मिलाएर जोड गर्दा बत्तीस लक्षण (चिह्न, शोभा) धारण गर्ने हुनाले द्वात्रिंशल्लक्षणधर भनिएको हो । अथवा संवृति

(कृष्णपक्षको प्रतिपदाबाट चन्द्रमाको एक-एक कला घट्दै गएजस्तै क्रमैले कम्ती-कम्ती हुँदै गएर शून्य जस्तै अवस्थामा पुग्ने स्थिति) तथा विवृति-(शुक्लपक्षको प्रतिपदाबाट चन्द्रमाको एक-एक कला थपिंदै-बढ्दै गएर अन्तमा पूर्ण सोह्र कलामा पुगेर पूर्णता प्राप्त गरेजस्तै सबै सम्पन्न अवस्थामा पुग्ने स्थिति)-को क्रमले सोह्र प्रकारका दुई थरी-(पूर्णताबाट घटेर शून्यमा पुग्ने, अनि शून्यबाट थालनी भएर पूर्णतामा पुग्ने)-बाट युक्त हुनाले पनि द्वात्रिंशल्लक्षणधर (बत्तीस लक्षणले युक्त) भनिएको हो। सबै जनाले चाहना गर्ने तथा सबै धर्मको एउटै रस (मुख्य अभिप्राय) हुनाले पनि धर्मराट्, धर्मधातु आदि नामले सम्बोधन गरिएको हो। कान्ता-(नारी, सुन्दरी)-को स्वाधिष्ठान (आफ्नो मूल स्थान अर्थात् सौन्दर्यतत्त्व) प्रकट गर्ने हुनाले, अनि त्यस्तो दिव्य सौन्दर्यको सेचन (प्रसारण) गर्ने, अनि तीन लोकको प्रतिनिधिस्वरूप तीन प्रकारको काय-(शरीर, भुवन)-ले युक्त भएकोले पनि (प्रज्ञालाई) सुन्दरी भनिएको हो। भनिएको पनि छ– (प्रवृत्तिमार्गमा लाग्दा) शान्त र अस्सी प्रकारको व्यञ्जन-(लक्षण)-ले युक्त प्रभु-(ईश्वर, परमात्मा पुरुष आदि नामले भनिने आदितत्त्व)-ले नारीको (प्रकृतिको) भग-(योनि, आश्रय)-मा शुक्र-(पुरुषवीर्यकण, पुरुषतत्त्व)-को रूपले रहेर सबै प्राणीको दयाको लागि बत्तीस लक्षणले युक्त निर्माण-(सृष्टि)-मूलक देहको रचना गरे। यस संसारमा उनीविना सुख हुँदैन। यसरी भगवान् शुक्र-(वीर्य)-को आकारमा छन्, अनि कामिनी (स्त्री, प्रकृति) उनको सुखस्वरूप हुन्, सुखावती भुवन हो। यो सबै हरेक बुद्ध र श्रावक-(भिक्षु)-लाई थाहा हुँदैन। केही बुद्धपुत्रहरू मात्रै वज्रपदबाट उत्पन्न पदबारे जान्दछन्। यसपछि फेरि पनि भनियो– पाँच बुद्धस्वरूप, अनि सबै जनमा रहने यी बुद्ध संसारमा खराब चित्त, खराब नाटक (आचरण) र खराब दिव्य (ऐश्वर्य, स्थिति) देखेर (चिन्तित भए)। यस प्रकारका अपरममहासुख नाम गरेका (बुद्ध ?) अनेक रस (अवतार) लिएर नृत्य (संसारको व्यवहार) गरिरहेका छन्। अब गगनाभोग सम्भोगबारे चर्चा गरौं।

त्यादि ।। गगनं कमलकुलिशसंयोगेन वरटकाकाशदेशं स्त(त)स्याभोगो विस्तारस्तत्र सम्यग्भोगोऽद्वयसुखभुंज(भुञ्ज)नं यस्य स तथा स गगनाभोगसंभो(सम्भो)गः ।। कायवाक्चित्तप्रहाना(णा)त्मकमहावज्रधरज्ञानरत्नाकरत्वात्. सर्वज्ञज्ञानसागरः ।। अविद्यांड(द्याण्ड)संसारवासना सैवाण्डकोशो जगदुत्पत्तिहेतुत्वात् तस्य संभ(सम्भ)वेत्तामहासुखैकतापादकः ।। कायवाक्चित्तरूपा(रूपादि)परिज्ञानं स एव पंज-(पञ्ज)रो निर्गमनहेतुत्वात्. तद् दारयतीति भवपंज(पञ्ज)रदारणः ।। शमिताशेष-संक्लेश इति. शमिता निरावरणानां नीता. अशेषा. सवासना. संक्लेशा. अविद्यादि. अन्यत्र च योगाचाराभिसंवो(सम्बो)धैर्विलक्षणापर्यं तं(र्यन्तं). एकपादतलाक्रांते-(क्रान्ते)त्यादितिवष्टसिद्धिप्रदात्रीति पर्यं तं(र्यन्तम्) ।। इदानी(नीं)नयन्त्र इत्यादि ।। ।। इति पंच(पञ्च)तथागतज्ञानस्तुतिगाथा पंच(पञ्च) ।। ।। शुभम् ।। ।। अथ बुद्धशास्त्रग्रंथा(ग्रन्था)नां विषयसूचनपूर्वकं(क)मुच्चावचतारतम्यं लिख्यते ।। तत्र तावद् वक्ष्यमाणग्रंथा(ग्रन्था)नां स्वरूपज्ञानाय तन्नामपूर्वकं लक्षणमुच्यते ।। ।। सूत्रं १ गेयम् २ व्याकरणम् ३ गाथा ४ उदानम् ५ निदानम् ६ इत्युक्तकम् ७

गगनको अर्थ हो कमल र वज्रको संयोगले वरटक-(हाँस, प्राणी)-ले युक्त आकाश। त्यसको आभोग भनेको विस्तार (फैलावट) हो। त्यसको भोग भनेको अद्वैत (नित्य, द्वन्द्वरहित, निर्विषय) सुखको उपभोग गर्नु हो। यसरी (सर्वव्यापी चिरन्तन सुखभोग गर्ने अर्थमा) गगनाभोगसम्भोग (भनेर तथागत बुद्धको गुणको वर्णन गरिएको) भनिएको हो। शरीर, वचन र चित्त अर्थात् मन, वचन र कर्मले रहित महावज्रस्वरूप र सबै ज्ञानका समुद्र (खानी) हुनाले पनि (यी पाँच तथागतहरू) सर्वज्ञज्ञानसागर भनिएका हुन्। अविद्या (माया) भनेको अण्ड-(ब्रह्माण्ड)-रूप संसारको वासना वा प्रपञ्च हो। त्यसैलाई अण्डकोश (ब्रह्माण्डस्वरूप दृश्य तत्त्व) भन्दछन्। यही नै संसारको उत्पत्तिको कारण हो। त्यस्तो विश्वब्रह्माण्डको उत्पत्तिको आदिकारण भएर सांसारिक महासुखको प्रतिपादन गर्ने क्षमता तथागत-(बुद्ध)-मा रहेको छ। शरीर, वचन चित्त (मन) आदि विभिन्न सांसारिक रूपलाई पञ्जर (पिंजडा) भन्दछन्। निर्वाण चाहने व्यक्ति यस मायिक संसारबाट उम्कन चाहने हुनाले पनि संसार पिंजडा भनिएको हो। त्यस्तो पिंजडालाई भेदन (नाश) गर्न सक्ने गुण भएको हुँदा तथागतलाई 'भवपञ्जरदारण' भनेका हुन्। यिनलाई 'शमिताशेषसंक्लेश' पनि भन्दछन्। 'शमित'को अर्थ हो निवारण (नाश) गरिएको, अशेषको अर्थ हो सबै विषयवासनासहितको, अनि संक्लेशको अर्थ हो अविद्या (माया) आदि। यसरी सबै सांसारिक विषय र माया आदि कष्टदायक प्रपञ्चलाई शान्त गर्ने भन्ने अर्थमा 'शमिताशेषसंक्लेश' भनिएको हो। अन्यत्र पनि योगाचाराभिसम्बोधि भन्ने शब्ददेखि बिलक्षणा भन्ने शब्दसम्म र 'एकपादतलाक्रान्ता' भन्ने शब्ददेखि 'इष्टासिद्धिप्रदात्री' भन्नेसम्मका श्लोकहरूले तथागत बुद्धका गुणको वर्णन गरेका छन्। अहिले 'नयन्न' इत्यादिको पनि चर्चा गर्न सकिन्छ। यसरी पाँच तथागत बुद्धका ज्ञान र स्तुतिसम्बन्धी पाँच गाथा-(विशेषता)-को वर्णन गरियो। शुभम्।

अब बुद्धसम्बन्धी शास्त्रका ग्रन्थहरूको विषयको सूचना (जानकारी) दिंदै विभिन्न तारतम्य-(क्रम)-हरू भनिन्छन्। ती बुद्धग्रन्थ मुख्य रूपले बाह्र छन्। ती हुन्– सूत्र– १, गेय-२, व्याकरण-३, गाथा-४, उदान-५, निदान-६, इत्युक्तक-७,

जातकम् ८ वैपुल्यम् ९ अद्भुतधर्म १० अवदानम् ११ उपदेशः १२ एतानि बुद्ध-शास्त्रस्थग्रंथ(ग्रन्थ)नामानि ॥ ॥ मूलग्रंथ(ग्रन्थ): सूत्रम् ॥१॥ सामवेदगीतगोविं-दा(विन्दा)दिस्थानामपन्नो(स्थानापन्नो)ग्रंथ(ग्रन्थ)विशेषो गेयम् ॥२॥ आशीर्वादप्र-तिपादक वाक्यघटितशब्दसाधुत्वप्रतिमा(पा)दकग्रंथ(ग्रन्थ)विशेषो व्याकरणम् ॥३॥ अनेककथाघटितो ग्रंथ(ग्रन्थ)विशेषो गाथा ॥४॥ विज्ञप्तिपूर्वकभिन्नकर्तृकोत्तर-दानमुदानं तत्प्रतिपादकग्रंथो(ग्रन्थो)ऽप्युदानं(नम्) ॥५॥ आदिकारणप्रतिपादकग्रंथ-(ग्रन्थ)विशेषो निदानम् ॥६॥ इतिशब्दघटितव्याख्यानप्रतिपादको ग्रंथ(ग्रन्थ) इत्युक्तम् ॥७॥ जन्मांत(न्मान्त)रीयकथाप्रतिपादकग्रंथ(ग्रन्थ)विशेषो जातकम् ॥८॥ धर्मार्थकामानां बाहुल्येन प्रतिपादको ग्रंथ(ग्रन्थ)विशेषो वैपुल्यम् ॥९॥ आश्चर्यप्रति-पादकवाक्यघटितग्रंथ(ग्रन्थ)विशेषोऽद्भुतधर्मः ॥१०॥ कर्मफलप्रदर्शकवाक्यघटित-ग्रंथ(ग्रन्थ)विशेषोऽवदानम् ॥११॥ गुरुकर्तृकशिष्यसंप्र(सम्प्र)दानकं मंत्रा-(मन्त्रा)दिदानमुपदेशः ॥१२॥ [इति बुद्धशास्त्रग्रंथ(ग्रन्थ):] ॥ ॥ अथ प्रथम षंड(खण्ड)रक्षा भगवती. महायानसूत्रं शास्त्रं प्रथमं शाक्यसिंहत(ते)जोवर्णनं बोधिसत्वे(त्त्वे)न प्रज्ञापारमिता अनुष्ठेया इत्युपदेशः अ–

जातक-८, वैपुल्य-९, अद्भुतधर्म-१०, अवदान-११, उपदेश-१२ । यी बुद्धशास्त्रका ग्रन्थहरूका नाम हुन् ।

मूल ग्रन्थ 'सूत्र' हो ॥१॥ सामवेद र गीतगोविन्द आदि गीतशास्त्रको ठाउँमा रहेको ग्रन्थलाई 'गेय' भन्दछन् ॥२॥ आशीर्वाद दिने आदि वाक्यमा रहेका शब्दको शुद्धताबारे बताउने ग्रन्थ चाहिं 'व्याकरण' हो ॥३॥ धेरै कथाहरू भएको विशेष ग्रन्थलाई 'गाथा' भन्दछन् ॥४॥ विज्ञप्ति (विज्ञापन, जानकारी) दिने गरी भिन्न कर्ता-(भन्ने व्यक्ति)-द्वारा उत्तर दिने ग्रन्थलाई 'उदान' भन्दछन्, त्यस्तो विषय प्रतिपादन (तयार) गर्ने ग्रन्थ पनि 'उदान' हो ॥५॥ सबैको आदिकारण प्रतिपादन गर्ने ग्रन्थ 'निदान' हो ॥६॥ इति भन्ने शब्दसहित व्याख्यान (वर्णन)

भएको ग्रन्थ 'इत्युक्त' (इत्युक्तक) हो ।।७।। अर्को जन्मको कथा भन्ने ग्रन्थलाई 'जातक' भन्दछन् ।।८।। धर्म, अर्थ र कामजस्ता पुरुषार्थबारे बढी मात्रामा वर्णन भएको ग्रन्थ 'वैपुल्य' हो ।।९।। आश्चर्य गराउने वाक्य भएको ग्रन्थ चाहिं 'अद्भुतधर्म' हो ।।१०।। कर्मअनुसारको फल बताउने वाक्य भएको ग्रन्थ 'अवदान' हो ।।११।। गुरु कर्ता भएर शिष्यलाई उद्देश्य गरी गरिएको मन्त्र आदिको दान-(मन्त्रदान)-लाई 'उपदेश' भन्दछन् ।।१२।। बुद्धशास्त्रग्रन्थ यी माथि वर्णन गरिएका हुन् ।

अब प्रथम खण्डको रूपमा रक्षाभगवती महायानसूत्रशास्त्रबारे वर्णन गरिन्छ । पहिले शाक्यसिंहको तेज-(शक्ति)-को वर्णन हुन्छ। बोधिसत्त्वले 'प्रज्ञापारमिता'को अनुष्ठान गर्नुपर्छ । यही उपदेश हो ।

विद्यादिप्रत्ययः अविद्यादिनिरोधवर्णनं. शून्यतावर्णनं वक्ता शाक्यसिंहः श्रोतारः सुभूत्यादयः गद्यमयं ज्ञानप्रतिपादकम् वेदस्थानीयं(यम्) ।। ।। द्वितीयखंड(खण्ड)-वत् ।। तृतीयखंडो(खण्डो)प्येवमेव ।। चतुर्थोप्येवमेव ।। सर्वाकारज्ञतावर्णनं विशेषः ।।४।। पंच(पञ्च)विंशतिसाहस्त्रिकाप्ये(ण्ये)वमेव ।।५।। प्रथमखंड(खण्ड): पूर्ववत्. विशेषो नेपालीयलिप्य(प्या) ।।६।। तृतीयखंड(खण्ड)एवमेव. विशेष. तालपत्र [लाजाक्षरीयं(यम्) ।।७।। पंच(पञ्च)साहस्त्रिका ।।५।। पूर्ववत् नेपालीयलिप्या ।।८।। प्रथमखंड(खण्ड)एवमेव. देवनागरलिप्या ।।९।। द्वितीयखंड(खण्ड). पूर्ववत् देवनागरलिप्या ।।१०।। तृतीयखंड(खण्ड) देवनागर ।।११।। चतुर्थखंडो(खण्डो)प्येवमेव नागरलिप्या ।।१२।। पंच(पञ्च)विंशतिसाहस्त्रिका पूर्ववत् ।। देवनागरलिप्याः ।।१३।। अष्टसहस्त्रिका प्रज्ञापारमिता एवमेव तालपत्ररजाक्षरीयं(यम्) ।।१४।। अष्टसहस्त्रिका प्रज्ञापारमिता नेपालीयलिप्या ।।१५।। ] अष्टसहस्त्रिका व्याख्या महायानं. प्रज्ञापारमितार्थप्रदर्शकं वेदभाष्यस्थानीयं वक्ता हरिभद्रपाद(दः). गद्यपद्यमयं नेपाललिप्या. शाक्यसिंहोपदिष्टपूर्वं ज्ञानविज्ञानमयं(यम्) ।।१६।। गंड-(गण्ड)व्यूहव्याकरणशास्त्रं आशीर्वादप्रतिपादकवाक्यघटितं बौद्धशास्त्रसं(सङ्)केत-व्याकरणं. स्मृतिस्थानीयं गद्यमयं बोधिप्राप्तिवर्णनं वक्ता शाक्यसिंहः श्रोता सुधनकुमारः ।।१७।। दशभूमीश्वरव्याकर्णं(रण)दशभूमिवरणनं(वर्णनम्). वक्ता शाक्यसिंहः श्रोता आनन्द(न्दः). गद्यमयं स्मृतिस्थानीयम्. समाधिज्ञानप्रतिपादकम् ।।१८।। समाधिराजव्याकरणशास्त्रं. समाधिध्यानवर्णनं स्मृतिस्थानीयं गद्यमयं बोधिप्राप्तिवर्णनं(नम्). वक्ता शाक्यसिंहः श्रोता सुधनकुमार(रः). वक्ता शाक्यसिंह(हः). श्रोता आनंद(नन्द) गद्यमयं स्मृतिस्थानीयं दशभूमिज्ञानप्रतिपादकम् ।।१९।। लंका(लङ्का)वतारव्याक–

पहिले अविद्या (माया) आदिको पहिचान हुनुपऱ्यो । अनि अविद्या हटाउने वर्णन र शून्यता-(बौद्ध धर्मको शून्य दर्शन)-को वर्णनवारे जानकारी हुन्छ । बुद्धशास्त्रसँग सम्बद्ध उक्त (महायान-सूत्र) ग्रन्थको प्रथम खण्डका वक्ता शाक्यसिंह हुन् । श्रोताहरू सुभूति आदि गरेका (भिक्षुहरू) हुन् । यो ग्रन्थ ज्ञान दिने र गद्यमा लेखिएको छ । यसको महत्त्व वेदको जस्तै छ अथवा यो बुद्धशास्त्रको वेदको ठाउँमा रहेको छ । द्वितीय खण्डजस्तै । तृतीय खण्ड पनि यस्तै हो । चतुर्थ खण्ड पनि यस्तै । यहाँ विशेष गरेर सबै आकारको ज्ञानबारे वर्णन पाइन्छ ॥४॥ पच्चीस हजार (श्लोक भएको) ग्रन्थ पनि यस्तै वर्णन भएको ग्रन्थ हो ॥५॥ प्रथम खण्ड पहिलेजस्तै, विशेष नेपाली लिपि-(नेपालाक्षर)-मा लेखिएको छ ॥६॥ तृतीयखण्ड पनि यस्तै नै छ, विशेष तालपत्रमा विशेष अक्षर-[(लाजाक्षर)-ले लेखिएको छ ॥७॥ पाँच हजार (श्लोक भएको) ग्रन्थ ॥५॥ पनि पहिलेजस्तै नेपाली लिपिमा छ ॥८॥ पहिलो खण्ड यस्तै देवनागरी लिपिमा छ ॥९॥ दोस्रो खण्ड पहिलेजस्तै देवनागरी लिपिले लेखिएको छ ॥१०॥ तेस्रो खण्ड पनि यस्तै देवनागरी लिपिमा छ ॥११॥ चौथो खण्ड पनि यस्तै देवनागरी लिपिमा छ ॥१२॥ पञ्चविंशतिसाहस्र (पच्चीस हजार श्लोक भएको ग्रन्थ) पनि यस्तै देवनागरी लिपिमा छ ॥१३॥ आठ हजार श्लोक भएको प्रज्ञापारमिता ग्रन्थ पनि यस्तै तालपत्रमा विशेष अक्षर-(रजाक्षर, रञ्जनाक्षर ?)-ले लेखिएको छ ॥१४॥ अठार हजार श्लोक भएको प्रज्ञापारमिता ग्रन्थ नेपाली लिपिमा छ ॥१५॥] आठ हजार श्लोकको व्याख्या हो महायान-ग्रन्थ जसले प्रज्ञापारमिताको अर्थ बुझाउँछ । यो वेदभाष्य (वेदको टीका) जस्तै छ । यसलाई पहिले शाक्यसिंहले उपदेश गरेका हुन् र यतिखेरका वक्ता हरिभद्रपाद हुन् । यो गद्य र पद्य दुवै मिसिएको, अनि ज्ञान-विज्ञानमय ग्रन्थ हो ॥१६॥ गण्डव्यूहव्याकरणशास्त्र चाहिं आशीर्वाद दिने वाक्य भएको, अनि बौद्ध शास्त्रलाई सङ्केत गर्ने व्याकरण हो । यो स्मृतिग्रन्थ-(श्रुति वा वेदपछि मनुस्मृति आदि जस्तै)-को ठाउँमा रहेको छ । यो गद्यमा छ र यसमा बोधि-(ज्ञान)-प्राप्तिको वर्णन छ । यसका वक्ता शाक्यसिंह र श्रोता सुधनकुमार हुन् ॥१७॥ दशभूमीश्वर-व्याकरणचाहिं दशभूमिको वर्णन भएको छ । यसका वक्ता शाक्यसिंह र श्रोता आनन्द हुन् । यो गद्यमय र स्मृतिग्रन्थको ठाउँमा छ, अनि यसले समाधिज्ञानको प्रतिपादन गर्छ ॥१८॥ समाधिराज व्याकरणशास्त्रमा समाधिध्यानको वर्णन छ । यो पनि स्मृतिग्रन्थको ठाउँमा छ, गद्यमय छ र यसमा बोधि-(ज्ञान)-प्राप्तिको वर्णन छ । यसका वक्ता शाक्यसिंह र श्रोता सुधनकुमार हुन् । यसै गरी वक्ता शाक्यसिंह र श्रोता पनि आनन्द हुन् । यो गद्यमय छ, स्मृतिग्रन्थजस्तै छ र दशभूमिज्ञानको प्रतिपादक पनि छ ॥१९॥ लङ्कावतार–

रण(रणं) बोधिप्राप्तिबोधिसत्व(त्त्व)नियमवर्णनं गद्य(द्य)मयं(यम्). वक्ता शाक्यसिंह. श्रोतारो रावणादयः महामतिश्च. स्मृतिस्थानीयम् ॥ मांसत्यागतो ज्ञानप्रतिपादकम् ॥२०॥ सद्धर्मपुंड(पुण्ड)रीकव्याकरण(णं). महादीपादिवर्णनं गद्यपद्यमयं वक्ता शाक्यसिंह· श्रोता (श्रोतारः) आनंदा(नन्दा)दयः स्मृतिस्थानीयं-(यम्) ॥ सद्धर्मतः सद्ज्ञा(सज्ज्ञा)नप्रतिपादकम् ॥२१॥ ललितविस्तरव्याकरण-(णं). शाक्यसिंहस्य जन्मादिबोधिज्ञानप्राप्तिकथावर्णनं वक्ता शाक्यसिंहः श्रोता-(श्रोतरो) मैत्रेयादि(यादयो). गद्यपद्यगाथामयं(यम्) ॥२२॥ गुह्यसमाजतंत्रं (तन्त्रं). गुह्यं व्याकरणसदृशं मंत्र(मन्त्र)पूजाकर्मादिवर्णनं वक्ता शाक्यसिंह(हः). श्रोतारो वज्रपाण्यादयो गद्यपद्यमयं(यम्). आगमज्ञानप्रतिपादकं(कम्) ॥२३॥ सुवर्णप्रभाव्याकरणं भगवद्धातुवर्णनं लक्ष्मीदेव्यादिवर्णनं वक्ता शाक्यसिंह(हः). श्रोता लित्सविकुमार(र). गद्यपद्यमयं कथाप्रतिपादकम् ॥२४॥ स्वयंभु(यम्भू) पुराणबृहत्स्वयंभू(यम्भू)धर्मधातुवर्णनं नेपालमाहात्म्यं वक्ता शाक्यसिंहः श्रोतानंद-(नन्द): पद्यमयं(यम्). अद्भुत धर्ममिति च कथाप्रतिपादकम् ॥२५॥ स्वयंभु-(यम्भू)पुराणं स्वल्पपुराणं पूर्ववत् गद्यपद्यमयं(यम्). अद्भुतधर्म(र्म)कथा-प्रतिपाद–

व्याकरणचाहिं बोधि (ज्ञान) प्राप्त गर्ने र बोधिसत्त्वको नियम वर्णन गर्ने खालको छ तथा गद्यमा छ। यसका वक्ता शाक्यसिंह र श्रोता रावण आदि हुन्। यो महामति (बुद्धिदायक) र स्मृतिग्रन्थको ठाउँमा छ। मांस-(मासु, हिंसा)-त्यागद्वारा ज्ञान दिलाउने खालको छ ॥२०॥ सद्धर्मपुण्डरीक व्याकरणचाहिं महादीप आदिको वर्णन भएको तथा गद्य-पद्यमिश्रित छ। यसका वक्ता शाक्यसिंह र श्रोता आनन्द आदि हुन्। यो स्मृतिग्रन्थको ठाउँमा छ। यसले असल धर्मद्वारा असल ज्ञानको प्रतिपादन गर्छ ॥२१॥ (अर्को) ललितविस्तरव्याकरणमा शाक्यसिंहको जन्मदेखि लिएर बोधिज्ञान-(बुद्धत्वज्ञान)-प्राप्तिसम्मको कथाको वर्णन छ। यसका वक्ता

शाक्यसिंह र श्रोता मैत्रेय आदि हुन् । यो गद्य तथा पद्यमा र गाथा-(गीत)-को रूपमा पनि छ ।।२२।। गुह्यसमाजतन्त्रचाहिँ गुह्य (गुप्त) खालको र व्याकरणकै समान छ । यसमा मन्त्र र पूजाकर्म आदिको वर्णन छ । यसका वक्ता शाक्यसिंह र श्रोता वज्रपाणि आदि हुन् । यो गद्यपद्यमय छ र वेदको ज्ञानको प्रतिपादक पनि छ ।।२३।। सुवर्णप्रभासव्याकरणमा भगवान्-(बुद्ध)-का धातुको वर्णन तथा लक्ष्मीदेवी आदिको वर्णन भएको छ । यसका वक्ता शाक्यसिंह र श्रोता लित्सवि-(लिच्छवि ?)-कुमार हुन् । यो गद्यपद्यमय छ र यसले कथा बताउँछ ।।२४।। स्वयम्भूपुराणमा बृहत् (महान्) स्वयम्भू धर्मधातुको वर्णन छ, नेपालको माहात्म्य छ । यसका वक्ता शाक्यसिंह र श्रोता आनन्द हुन् । यो पद्यमय छ र अद्भुत धर्म तथा कथाको वर्णन भएको छ ।।२५।। स्वयम्भूपुराण सानो पुराण हो । अघि भनेजस्तै गद्यपद्यमय अद्भुत धर्म तथा कथाको–

**कं(कम्) ।।२६।। कारंड(रण्ड)व्यू(व्यूह)पुराणं पंच(पञ्च)मलक्षणं लोकेश्वरवर्णनं वक्ता शाक्यसिंह(हः). श्रोता आनंद(नन्दः). गद्यमयं(यम्) अद्भुतधर्मकथाप्रतिपादकम् ।।२७।। कारंड(रण्ड)व्यूह एवमेव ।।२८।। गुणकारंड(रण्ड)व्यूहपुराणं(णम्). अध्यायस्थाने प्रकरणं प्रकरणपदार्थस्तु एकं वस्त्वधिकृत्य सांगं(साङ्गं) तद्वर्णं लोकेश्वरवर्णनं वक्ता शाक्यसिंह(हः). श्रोता आनंद(नन्दः) पद्यमयं(यम्). अद्भुतधर्मम् ।।२९।। महावस्तु अवदानं अवदानं कर्मवृत्तं कर्मफलप्रदर्शकवाक्यघटितो ग्रंथो(ग्रन्थो)वदानं शिवमार्गे कर्मविषा(पा)कादिवत्. दीपंक(पङ्क)रादिशाक्यसिंहवर्णनं वक्ता शाक्यसिंह(हः) श्रोता(श्रोतारः) आनंदादि(आनन्दादयो) गद्यमयं कथाप्रतिपादकम् ।।३०।। अशोकावदानं(नम्) अवदानत्रिरत्नचैत्यव्रतादिवर्णनं वक्तोपगुप्त(प्तः). श्रोता अशोक(कः). पद्यमयं कथाप्रतिपादकम् ।।३१।। भद्रकल्या(ल्पा)वदानं. बोधिप्राप्त्यनंत(नन्त)रं. शाक्यसिंहवर्णनं. वक्तोपगुप्त(प्तः). श्रोताशोक(कः). पद्यमयं कल्याणपूरकत्वात्. भद्रकल्पं कथाप्रतिपादकम् ।।३२।। जातकमाला ।। जातकं जन्मांत(न्मान्त)रीयकथाप्रतिपादकवाक्यघटितो ग्रंथो(ग्रन्थो) ज्ञा(जा)तकं शिवमार्गे भृगुसंहितादिवत्. शाक्यसिंह(हः). पूर्वजन्मांत(न्मान्त)रीयदानकथा–**

वर्णन गर्ने खालको छ ।।२६।। कारण्डव्यूहव्याकरणचाहिँ पञ्चम लक्षणको छ । यसमा लोकेश्वरको वर्णन छ । यसका वक्ता शाक्यसिंह र श्रोता आनन्द हुन् । यो गद्यमय तथा अद्भुत धर्मकथाको प्रतिपादक (वर्णन गर्ने) छ ।।२७।। कारण्डव्यूह (पुराण) पनि यस्तै ।।२८।। गुणकारण्डव्यूहनामक पुराणमा अध्यायका ठाउँमा प्रकरण छ । प्रकरणको अर्थ हो एक वस्तु-

(विषय)-लाई लिएर अङ्गसहित त्यसको वर्णन र लोकेश्वरको वर्णन पनि। यसका वक्ता शाक्यसिंह र श्रोता आनन्द हुन्। यो पद्यमय छ र अद्भुत धर्मको प्रतिपादक पनि ॥२९॥ महावस्तु भन्ने ग्रन्थ अवदानकोटिमा आउँछ। अवदान भनेको कर्म हो। कर्मअनुसारको फल देखाउने वाक्य भएको ग्रन्थ अवदान हो शैव सम्प्रदायमा कर्मको विपाक-(प्रतिफल)-को वर्णन भएजस्तै। यसमा दीपङ्कर आदि शाक्यसिंहको वर्णन छ। यसका वक्ता शाक्यसिंह र श्रोता आनन्द आदि हुन्। यो गद्यमा छ र कथाको वर्णन छ ॥३०॥ अशोक नामको अवदान छ। अवदान भनेको त्रिरत्न-(बुद्ध, धर्म, सङ्घ)-का चैत्य र व्रतको वर्णन हो। यसका वक्ता उपगुप्त र श्रोता अशोक हुन्। यो पद्यमय छ र यसमा कथाको वर्णन छ ॥३१॥ भद्रकल्प नामको अवदानचाहिं बोधि-(बुद्धत्व)-प्राप्तिपछिका शाक्यसिंहको वर्णन हो। वक्ता उपगुप्त र श्रोता अशोक हुन्। यो पद्यमा छ र कल्याणकारक छ। साथै भद्रकल्प (कल्याणकारी) तथा कथाको वर्णन भएको छ ॥३२॥ अब जातकबारे चर्चा गरौं। जातक भनेको अन्य जन्मका कुराको प्रतिपादन गर्ने ग्रन्थ हो, शैव मार्ग-(सम्प्रदाय)-मा भृगुसंहिता ग्रन्थजस्तै। यसमा शाक्यसिंहका पूर्वजन्मका दानका कथाको

वर्णनं वक्ता शाक्यसिंह(हः). श्रोता श्रानंद(नन्दः). पद्यगद्यमयं कथाप्रतिपादकम्-पश्चात् उपगुप्ताशोकसंवादः ॥३३॥ मणिचूडावदानं शाक्यसिंहैकजन्मकथावर्णनं वक्ता शाक्यसिंह(हः). श्रोता श्रानंद(नन्दः). गद्यमयं कथाप्रतिपादकम् ॥३४॥ द्वाविंशत्या(त्य)वदानं(नम्). श्रवदानं चैत्यसेवावर्णनं वक्ता शाक्यसिंह(हः). श्रोता(श्रोतारः) श्रानंदादि(श्रानन्दादयः). गद्यपद्यमयं कथाप्रतिपादकम् ॥३५॥ नंदी(नन्दी)मुखास्व(श्व)घोष. श्रवदानं. वसुंध(सुन्ध)राव्रतवर्णनं. सूर्योदयराजकर्म-वृत्तं वक्ता शाक्यसिंह(हः) श्रोता श्रानंद(नन्दः). गद्यमयं कथाप्रतिपादकम् ॥३६॥ बोधिचर्यावतारकाव्यं. दानपारमितादिबोधिचर्मा(चर्या)वर्णनं(नम्). वक्ता मैत्रेयनाथ(थः). श्रोता सुधनकुमार(रः). पद्यमयं शिवमार्गे माद्य(घ)काव्यादिवत्. बोधिचर्याज्ञानप्रतिपादकम् ॥३७॥ करुणापुंड(पुण्ड)रीकं(कम्). श्रवदानं(नम्). श्ररणो(णी)भी(:) भूपसमुद्ररेण(णु)पुरोहि(रोहित) रत्नगर्भतथागतवर्णनं वक्ता शाक्यसिंह(हः). श्रोता(श्रोतारो) मैत्रेयादि(मैत्रायादयः). गद्यमयं(यम्). श्रवलो-कितेश्वरनामवर्णनम् कथाप्रतिपादकम् ॥३८॥ छंदो(छन्दो)मृतलताकाव्य(व्यं). शाक्यसिंहवर्णनं वक्ता श्रमृतभि–

वर्णन छ । यसका वक्ता शाक्यसिंह र श्रोता श्रानन्द हुन् । यो पद्यगद्यमय ग्रन्थ हो र यसमा पनि कथा छन् । पछि उपगुप्त र श्रशोकको संवाद छ ॥३३॥ मणिचूडनामक श्रवदानमा शाक्यसिंहको एक जन्मको कथावर्णन छ । वक्ता शाक्यसिंह र श्रोता श्रानन्द हुन् । यो गद्यमय र कथात्मक छ ॥३४॥ द्वाविंशतिनामक श्रवदानको चर्चा गरौं । श्रवदान भनेको चैत्यको सेवाको वर्णन हो । वक्ता शाक्यसिंह र श्रोता श्रानन्द श्रादि हुन् । यो गद्यपद्यमिश्रित ग्रन्थ हो र कथात्मक छ ॥३५॥ नन्दीमुखाश्व नामको श्रवदानमा वसुन्धरा-(पृथ्वी)-को व्रतको वर्णन छ । सूर्योदयराजको कर्मको वर्णन छ । वक्ता शाक्यसिंह र श्रोता श्रानन्द हुन् । यो गद्यमय छ

र कथाको वर्णन छ ॥३६॥ बोधिचर्यावतार नामको काव्यमा दान, पारमिता आदि बोधिचर्याको वर्णन छ । वक्ता मैत्रेयनाथ र श्रोता सुधनकुमार हुन् । यो पद्यमय छ, शैव मार्गमा माघकाव्यजस्तै । यसमा वोधिचर्याज्ञानको वर्णन छ ॥३७॥ करुणापुण्डरीक नामको अवदानमा अरणी (अग्नि पैदा गर्ने काठ ?)-को वर्णन छ । यसमा भूप (राजा), समुद्र, रेणु (धूलो, पृथ्वी), पुरोहित तथा रत्नगर्भ तथागतको वर्णन छ । वक्ता शाक्यसिंह र श्रोता मैत्रेय आदि हुन् । यो गद्यमय छ र अवलोकितेश्वरको नामको वर्णन छ । यसमा कथाको वर्णन छ ॥३८॥ छन्दोमृतलताकाव्यमा शाक्यसिंहको वर्णन छ । यसका वक्ता अमृत–

**क्षु(क्षुः) पद्यगद्यमयछन्दशास्त्रकथाप्रतिपादकम् ॥३९॥ लोकेश्वरशतकं पद्मपाणिवर्णनं शिवमार्गसूर्यशतकवत् वक्ता वज्रदत्तकविभिक्षुः पद्यमयं वर्णनाप्रतिपादकम् ॥४०॥ स्रग्धराटीकासमेता काव्यं(व्यम्). आर्यतारास्तुति(तिः). वक्ता सर्वज्ञमित्रपादभिक्षु-(क्षुः). पद्यमयं कथाप्रतिपादकम् ॥४१॥ अपरमिताधारणीमंत्र(मन्त्र)वीजादिसहि-तस्तोत्रवर्णनं धारणी नाम अस्यां धारण्यां. अपरिमितायुषस्तथागतस्य वर्णनं वक्ता शाक्यसिंह(हः). श्रोता आनंद(नन्दः). गद्यमयं पुण्यप्रतिपादकम् ॥४२॥ नामसंगी-(सङ्गी)तिसमेतधारणीसंग्रहतंत्रं(सङ्ग्रहतन्त्रं) महावैरोचनमहामंजु(मञ्जु)श्रीवर्णनं. वक्ता शाक्यसिंह(हः). श्रोता वज्रपाणिः पद्यमयं सर्वदेववर्णनं बाह्याभ्यंत(भ्यन्त)-रवर्ति स्वस्वनामतो धारणीनामज्ञानप्रतिपादकम् ॥४३॥ पंच(पञ्च)रक्षाधारणी-मंत्रं(मन्त्रं) प्रतिसरादिपंच(पञ्च)देवीनां मंत्र(मन्त्र)धारणीम(मा)हात्म्यकथा-वर्णनं वक्ता शाक्यसिंह(हः). श्रोतानंद(नन्दः). गद्यमयं कथाप्रतिपादकम् ॥४४॥ पंच(पञ्च)रक्षा एवमेव. पुनरपि पुस्तकसं(सङ)ग्रह(हः). शिवमार्गे रामरक्षावत्. पंच(पञ्च)रक्षा अत्र च प्रतिसरादिपंच(पञ्च)देवीकर्तृक भक्तकर्मक–**

भिक्षु हुन् । यो पद्य तथा गद्यमा छ । यसमा छन्दशास्त्र तथा कथाको वर्णन छ ॥३९॥ लोकेश्वरशतक ग्रन्थमा पद्मपाणि-(बुद्ध)-को वर्णन छ, शैव मार्गमा सूर्यशतकजस्तै । वक्ता वज्रदत्तकवि भिक्षु हुन् । यो पद्यमय र वर्णनप्रधान छ ॥४०॥ स्रग्धराटीका भएको काव्यमा आर्यताराको स्तुति छ । वक्ता सर्वज्ञमित्रपाद भिक्षु हुन् । यो पद्यमय र कथात्मक छ ॥४१॥ अपरिमिता, धारणीमन्त्र, बीज आदि सहितको स्तोत्र-(स्तुति)-को वर्णन भएको ग्रन्थ हो धारणी । यस धारणीमा अपरिमित (यति-उति भन्न नसकिने) आयु भएका तथागतको वर्णन

छ । वक्ता शाक्यसिंह र श्रोता आनन्द हुन् । यो गद्यमय छ र पुण्यप्रतिपादक ग्रन्थ हो ।।४२।। नामसङ्गीति भएको धारणीसङ्ग्रहतन्त्रमा महावैरोचन महामञ्जुश्रीको वर्णन छ । वक्ता शाक्यसिंह र श्रोता वज्रपाणि हुन् । यो पद्यमय छ र यसमा सबै देवताको वर्णन छ । बाहिर र भित्र रहने देवताको आ-आपना नामबाट धारणी नामको ज्ञानको प्रतिपादक ग्रन्थ हो यो ।।४३।। पञ्चरक्षाधारणीमन्त्र चाहिं प्रतिसरा आदि देवीहरूको मन्त्रधारणीको माहात्म्यरूप कथाको वर्णन हो । वक्ता शाक्यसिंह र श्रोता आनन्द हुन् । यो गद्यमय र कथात्मक छ ।।४४।। पञ्चरक्षा यसरी नै हो । फेरि पनि पुस्तकको सङ्गह, शैव सम्प्रदायमा रामरक्षा (स्तोत्र) जस्तै । पाँच किसिमका रक्षाको चर्चा गरौं । यहाँ पनि प्रतिसरा आदि पाँच देवी कर्ता भएको; अनि भक्त-(भिक्षु)-कर्म भएको

रक्षावर्णनं(नम्) ॥४५॥ प्रत्यंगि(त्यङ्गि)रातंत्र(तन्त्र)धारणी. प्रत्यंगि(त्यङ्गि)-रादेवीवर्णनं वक्ता शाक्यसिंहोष्णीष(षः) श्रोता आनंद(नन्दः) गद्यमयं(यम्). सर्वभयनिवारण–सर्वविद्याछेदनप्रतिपादकम् ॥४६॥ ताराशतनामधारणी पद्मपाणि-(णिः) वक्ता आर्या(र्य)तारावर्णनं पद्यमयं धारण्यंत(ण्यन्त):पातिशतनाम ॥४७॥ सुगतावदान(नम्). अवदानं संघ(सङ्घ)भोजनादिवर्णनं कर्मवृत्तं च. वक्ता वसुवंधु-(बन्धु)नामा बोधिसत्व(त्वः). श्रोता पुष्पकेतुराजकुमार(रः). पद्यमयं कथाप्रतिपा-दकम् ॥४८॥ सुखावतीव्यूहः व्याकरणं अमिताभतथागतभुवनसुखावती. लोकधातु-वर्णनं वक्ता शाक्यसिंह(हः) श्रोतार आनंदा(नन्दा)दयः गद्यमयं ज्ञानप्रतिपादकम् ॥४६॥ सप्तवारधारणीतंत्र(तन्त्र)धारणी. वसुंध(सुन्ध)रादेवी. वज्रविदारिणीदेवी. गणपतिहृदयादेवी. उष्णीषविजयादेवी. पर्णशवरीदेवी. मारीचीदेवी· गृहमातृकादेवी. सप्तानां देवीनां धारणीसं(सङ)ग्रहत्वात्. सप्तवारधारणीदेवं(व)देवीवर्णनं वक्ता शा. (शाक्यसिंहः) श्रो. (श्रोतारः) आनंदा(नन्दा)दयः मंग(मङ्ग)लप्रतिपादकम् ॥५०॥ क्रियासं(सङ)ग्रहतंत्रं(तन्त्रं). पूजादिक्रियावर्णनं. वक्ता शाक्य. (शाक्यसिंहः) श्रो. (श्रोतारः) वज्रपाण्यादय(यः). गद्यमयं· शिवमा–

रक्षाको वर्णन गरिन्छ ॥४५॥ प्रत्यङ्गिरातन्त्रधारणीमा प्रत्यङ्गिरादेवीको वर्णन हुन्छ । वक्ता शाक्यसिंहोष्णीष (उष्णीषसमान शाक्यसिंह) र श्रोता आनन्द हुन् । यो गद्यमय र सबै भय (डर) हटाउने खालको छ, अनि सबै खालको विद्या-(अविद्या ?)-को छेदन (नाश) गराउने किसिमको छ ॥४६॥ ताराशतनामधारणीका वक्ता पद्मपाणि हुन् । यसमा आर्यताराको वर्णन छ । यो पद्यमय छ र यो धारण्यन्त:पातिशतनाम हो ॥४७॥ सुगत नाम गरेको अवदानबारे भनौं । अवदान भनेको सङ्घ, भोजन आदिको वर्णन हो र कर्मको वर्णन पनि । यसका वक्ता वसुबन्धु नामका बोधिसत्त्व र श्रोता पुष्पकेतु राजकुमार हुन् । यो पद्यमय तथा कथात्मक छ·

॥४८॥ सुखावतीव्यूह नामको व्याकरण भनेको अमिताभ नामको तथागत, सुखावतीभुवन र लोकधातुको वर्णन हो। यसका वक्ता शाक्यसिंह तथा श्रोता आनन्द आदि हुन्। यो गद्यमय छ, ज्ञान दिने खालको छ ॥४९॥ सप्तवारधारणीतन्त्रधारणी चाहिं सात देवीहरूको धारणीमन्त्रहरूको सङ्ग्रह हो। यसमा सात वार धारणीदेवीको वर्णन छ। ती सात देवी हुन्– वसुन्धरादेवी, वज्रविदारिणीदेवी, गणपतिहृदयादेवी, उष्णीषविजयादेवी, पर्णशवरीदेवी, मारीचीदेवी र गृहमातृकादेवी। यसका वक्ता शाक्यसिंह र श्रोता आनन्द आदि हुन्। यो मङ्गल दिने खालको छ ॥५०॥ क्रियासङ्ग्रहतन्त्रमा पूजा आदि कर्मको वर्णन छ। यसका वक्ता शाक्यसिंह र श्रोता वज्रपाणि आदि हुन्। यो गद्यमय छ र शैव

**गोंयमंत्र(मन्त्र)महोदध्यादिवत्. मंड(मण्ड)लादिज्ञानप्रतिपादकम् ॥५१॥ क्रियासं-(सङ)ग्रह एवमेव ॥५२॥ सुवंतरत्नाकर. प्रक्रियाव्याकरणं. प्रक्रियादिकशब्दादिसाधुत्वकरण(णम्)· व्याकरणं. वक्ता दुर्गसिंह(हः)· गद्यमयं प्रक्रियादिशब्दप्रतिपादकम् ॥५३॥ प्रयोगमुखं व्याकरणं(णम्) एवमेव ॥५४॥ बुद्धिचानक (चाणक्य)-नीतिशास्त्रनीतिप्रतिपादकम्· वक्ता चान(ण)कनामा ऋषि. पद्यमयं. बुद्धिवर्णनं. प्रणम्य शिरसा विष्णुमिति विष्णुमार्गीयं(यम्)· प्रणम्य शिरसा बुद्धमिति बौद्धमार्गीयं(यम्). ॥५५॥ सुमागधावदानं(नम्) अवदानं भिक्षुलोकवर्णनं. सुमागधावणिक-(व)पत्नीवर्णनं च वक्ता शाक्य. (शाक्यसिंहः) श्रोता आनंद(नन्दः). गद्यमयं. कथाप्रतिपादकम् ॥५६॥ चैत्यपुंग(पुङ्ग)व अवदानं चैत्यभजनवर्णनं वक्ता शा. (शाक्यसिंहः) श्रो. (श्रोता) सुचेतनभिक्षु(क्षुः). गद्यमय(यम्) कथाप्रतिपादकम् ॥५७॥ कठिनावदानं(नम्)· अवदान(नं)· पिण्डपात्र दानवर्णनं वत्ता(क्ता) शा· (शाक्यसिंहः) श्रो. (श्रोता) काश्यपभिक्षु गद्यमयं दानकथाप्रतिपादकम् ॥५८॥ पिण्डपात्रावदानं पिण्डपात्रा(पात्र)दानादिवर्णनं वक्ता शाक्य. (शाक्यसिंहः) श्रो· (श्रोता) काश्यपभिक्षु(क्षुः). गद्यमयं दानकथाप्रतिपादकम्–**

सम्प्रदायको मन्त्रमहोदधि आदि ग्रन्थजस्तै छ। यसले मण्डल आदिको ज्ञान दिन्छ ॥५१॥ क्रियासङ्ग्रह पनि यस्तै हो ॥५२॥ सुबन्तरत्नाकर चाहिं प्रक्रिया (व्युत्पत्ति) सिकाउने व्याकरण हो। यो प्रक्रिया आदि किसिमले शब्दहरूको साधुत्व (शुद्ध प्रयोग) गर्ने व्याकरण हो। यसका वक्ता दुर्गसिंह हुन्। यो गद्यमय छ र प्रक्रिया शब्दको सिद्धि गर्ने खालको छ ॥५३॥ प्रयोगमुख

व्याकरण पनि यस्तै ।।५४।। बुद्धिचाणक्यनीतिशास्त्र चाहिं नीतिबारे वर्णन भएको ग्रन्थ हो। यसका वक्ता चाणक्य नाम गरेका ऋषि हुन् । यो पद्यमय छ यसमा बुद्धि-(चलाकी)-बारे वर्णन छ । वैष्णव मार्गमा ''प्रणम्य शिरसा विष्णुं'' (शिरले विष्णुलाई नमस्कार गरेर) भनेजस्तै बौद्ध मार्गमा ''प्रणम्य शिरसा बुद्धं'' (शिरले बुद्धलाई नमस्कार गरेर) भनेर यस ग्रन्थको प्रारम्भ भएको छ ।।५५।। सुमागधावदानबारे चर्चा गरौं । अवदान भनेको भिक्षुलोकको वर्णन हो । यसमा सुमागधा नामकी, व्यापारीकी स्त्रीको वर्णन छ। वक्ता शाक्यसिंह र श्रोता आनन्द हुन् । यो गद्यमय र कथात्मक छ ।।५६।। चैत्यपुङ्गव नामको अवदानमा चैत्यको भजन-(पूजा)-को वर्णन छ। वक्ता शाक्यसिंह र श्रोता सुचेतन भिक्षु हुन्। यो गद्यमय र कथात्मक छ ।।५७।। कठिनावदानको चर्चा गरौं । अवदान भनेको पिण्डपात्रदानको वर्णन पनि हो । यसका वक्ता शाक्यसिंह र श्रोता काश्यपभिक्षु हुन् । यो गद्यमय छ र यसमा दानसम्बन्धी कथाको वर्णन छ ।।५८।। पिण्डपात्रावदानमा पिण्डपात्रको दान आदिको वर्णन छ । वक्ता शाक्यसिंह र श्रोता काश्यपभिक्षु हुन् । यो गद्यमय छ र यसमा दानसम्बन्धी कथाको वर्णन छ ।।५९।।

॥५६॥ ध्वजाग्रकेयूरीधारणी. गणपतिहृदयाधारणीतंत्र(तन्त्र)धारणी ध्वजाग्रकेयूरी-देवीवर्णनं वक्ता शा. (शाक्यसिंहः) श्रोता इंद्र(इन्द्रः). गद्यमयं तंत्र(तन्त्र)धारणी गणपतिहृदया वक्ता शा. (शाक्यसिंहः) श्रोता आनंद(नन्दः) गद्यमयं भवनिवारण-प्रतिपादकम् ॥६०॥ ग्रहमातृकातंत्र(तन्त्र)धारणी ग्रहमातृकादेवीवर्णनं ग्रहभयनिवा-रणप्रतिपादक(कं) वक्ता शाक्यसिंह. श्रोता आनंद(नन्दः). गद्यमयं(यम्). आयु-र्वर्द्धनम् ॥६१॥ नागपूजापद्धति(तिः). नागपूजावर्णनं(नम्). साधनमालानिःसृतेयं विरचिता च गद्यमय(यं). कश्चित्कर्म ॥ शिवमार्गे व्रतार्कान्निःसृतव्रतपद्धतिवत्. साधनमाला. वक्ता शाक्यसिंह(हः) वर्षायणप्रतिपादकम् ॥६२॥ महाकालतंत्र-(तन्त्रो) महाकालकर्ता(र्मा)दिवर्णनं वक्ता वज्रसत्व(त्व)स्वरूप शाक्यसिंह(हः). श्रोत्री देवी गद्यमयं जंभ(जम्भ)नादिषट्कर्मप्रतिपादकम् ॥६३॥ अभिधानोत्तरतंत्र-(तन्त्र)रहस्यपूजादिक्रियावर्णनं वक्ता वज्रसत्व(त्व)स्वरूपशाक्यसिंह(हः). गद्यमय. वक्त(क्तृ)देवतयोर्भेद(दः). अन्यत् सर्वं शिवमार्गवत् ॥ श्रोता वज्रपाणिः ॥६४॥ हिमवत्खंड(खण्ड)पुराणं. स्कंद(स्कन्द)पुराणोद्धृतं. हिमालयनेपालवर्णनं-(नम्). चतुः–

ध्वजाग्रकेयूरीधारणी र गणपतिहृदयाधारणी तन्त्रधारणीको चर्चा गरौं । पहिलोमा ध्वजाग्रकेयूरीदेवीको वर्णन छ । यसका वक्ता शाक्यसिंह र श्रोता इन्द्र हुन् । यो गद्यमय छ । दोस्रो तन्त्रधारणी ग्रन्थ जसलाई गणपतिहृदयाधारणी पनि भन्दछन्, त्यो सांसारिक माया हटाउने ज्ञान भएको छ । यसका वक्ता शाक्यसिंह र श्रोता आनन्द हुन् । यो गद्यमय छ । ग्रहमातृका तन्त्रधारणीमा ग्रहमातृकादेवीको वर्णन छ । ग्रहहरूको अनिष्ट हटाउने वर्णन छ । यसका वक्ता शाक्यसिंह र श्रोता आनन्द हुन् । यो गद्यमय र आयु बढाउने खालको छ ॥६१॥ नागपूजापद्धतिमा नागपूजाको वर्णन छ । यो साधनमालाबाट निर्मित छ र गद्यमय पनि छ । यसमा कर्म (पूजाविधि) छन् । शैव मार्गमा व्रतार्कबाट निस्केको व्रतपद्धतिजस्तै यो साधन-

माला पनि हो। यसका वक्ता शाक्यसिंह हुन्। यसमा वर्षभर गरिने कर्मको वर्णन छ ॥६२॥ महाकालतन्त्रमा महाकालको कर्म (पूजा) आदिको वर्णन छ। यसका वक्ता वज्रसत्त्वस्वरूप शाक्यसिंह र श्रोता देवी हुन्। यो गद्यमय छ र जम्भन आदि छ प्रकारका (तान्त्रिक) कर्मको प्रतिपादन पनि गर्छ ॥६३॥ अभिधानोत्तर (अभिधानपछि) तन्त्ररहस्य पूजा आदि कर्मको वर्णन भएको ग्रन्थ हो। यसका वक्ता वज्रसत्त्वस्वरूप शाक्यसिंह हुन्। यो गद्यमय छ। यसमा वक्ता र देवतामा भेद छ। अरू सबै शैव मार्गमा जस्तै। यसका श्रोता वज्रपाणि हुन् ॥६४॥ हिमवत्खण्ड पुराणचाहिं स्कन्दपुराणबाट लिइएको हो। यसमा हिमालय र नेपालको वर्णन छ।

षष्टिलिंग (लिङ्ग) वर्णनं पशुपतिमाहात्म्यं वक्ता स्कंद (स्कन्दः). श्रोतारोऽगत्या-(स्त्या)दयः ॥ पद्य(द्य)मयं कथाप्रतिपादकम् ॥६५॥ पूजापद्धति(तिः). शिवमार्गीया(य)-देवीवर्णनं(नम्)· अनेकतंत्रा(तन्त्रा)णि निर्मथ्य विरचितेयं नेपालभक्तपत्तनीयेन भूपति (तीन्) द्राख्यभूपेन ॥६६॥ महाकालस्तुतिमहाकालवर्णनं वक्ता नागार्जुनपाद(दः). पद्यमयं मंत्र(मन्त्र)गर्भितस्तुत्यष्टकं(कम्) ॥६७॥ विनेयसूत्रं महायानसूत्रं सूत्रं च बीजस्थानं वक्ता आचार्य चंद्र(चन्द्र)कीर्तिपाद(दः). गद्यम(प)द्यमयं शिवमार्गीय-व्याससूत्रवत्. पूर्ववक्ता शाक्यसिंहः तदुपदेशतः ज्ञानप्रतिपादकम् ॥६८॥ अवदान-कल्पलता· अवदान(नं) शाक्यसिंहपूर्वजन्मकथावर्णनं वक्ता क्षेमेंद्र(मेन्द्र)भिक्षु-(क्षुः). पद्यमयं काव्यवत्. शाक्यसिंहोक्तितः क्षेमेन्द्रविरचितेयं प्रथापतिपादकम् ॥६९॥ गीतपुस्तकं तांत्रि(तान्त्रि)कं तंत्रं(तन्त्रं)· रहस्यगीतं बुद्धवर्णनं(नम्). अनेककर्तृकसं(सङ्)ग्रहगीतपुस्तकं. गद्यमयं भाषया चर्चा इति रागसंहितां(ता)गेया ॥ ध्यानप्रतिपादकम् ॥७०॥ स्तोत्रसं(सङ)ग्रहं त्रिरत्नस्तुतिकरणं वक्तारः सिद्धादयः कवय(यः) नानापद्यमयं(यम्). अनेककविकृतस्तोत्रकर्तृकसं(सङ)ग्रहः ॥७१॥ दिव्याव–

यसमा चौसट्ठी लिङ्ग-(शिवलिङ्ग)-को वर्णन छ। पशुपतिनाथको माहात्म्य पनि छ। यसका वक्ता स्कन्द र श्रोताहरू अगस्त्य आदि हुन्। यो पद्यमय छ र कथाको वर्णनले युक्त छ ॥६५॥ पूजापद्धतिमा शैव मार्गकी देवीको वर्णन छ। अनेक तन्त्रशास्त्रहरूको अध्ययन गरेर सार निकाली यसको रचना गरिएको हो। नेपालको भक्तपत्तन-(भक्तपुर)-का भूपतीन्द्र नामका राजाले यसको रचना गरेका हुन् ॥६६॥ महाकालस्तुतिग्रन्थमा महाकालको वर्णन छ। यसका वक्ता नागार्जुनपाद हुन्। यो पद्यमय छ साथै मन्त्र भएका स्तुतिहरूको अष्टक-(आठ श्लोक)-को रूपमा छ ॥६७॥ विनेयसूत्र चाहिं महायानसूत्र हो। यो बीजमन्त्रको रूपमा छ। यसका

वक्ता आचार्य चन्द्रकीर्तिपाद हुन् । यो गद्य र पद्य दुवैमा छ । शैव मार्गको व्याससूत्रजस्तै । यसभन्दा पहिलेका वक्ता शाक्यसिंह हुन् । यो ज्ञान दिने ग्रन्थ हो ।।६८।। अवदानकल्पलताको चर्चा गरौं । अवदान भनेको शाक्यसिंहको पूर्वजन्मको कथाको वर्णन हो । यसका वक्ता क्षेमेन्द्र भिक्षु हुन् । यो पद्यमय छ काव्यजस्तै । शाक्यसिंहको अह्लोटमा क्षेमेन्द्र कविले यसको रचना गरेका हुन् र यसमा कथाको वर्णन छ ।।६९।। गीतपुस्तक तान्त्रिक रूपमा छ । यसमा तन्त्र वा रहस्यगीत छ र बुद्धको वर्णन छ । धेरै कर्ताहरूले सङ्ग्रह गरेको गीतको पुस्तक हो । यो गद्यमय छ र भाषामा यसलाई चर्चा (चर्या) भन्दछन् । यसको रागसंहिता (राग) गाउने खालको छ । यसमा ध्यानको वर्णन छ ।।७०।। स्तोत्रसङ्ग्रहमा तीन रत्न-(बुद्ध, धर्म, सङ्घ)-को स्तुति छ । वक्ता सिद्ध आदि कविहरू हुन् । धेरै छन्दका पद्यहरू भएको छ । अनेक कविले बनाएका स्तोत्रहरूको सङ्ग्रह हो ।।७१।।

दानं शाक्यसिंहपूर्वजन्माद्यनेककथावर्णनं वक्तार(वक्ता) शाक्यसिंहः श्रोतार आनंदा-दय(नन्दादयः). गद्यपद्यमयं कथांत(थान्त)रप्रतिपादकम् ॥७२॥ रत्नपरीक्षाशास्त्रं काश्य(व्य)वत् ॥······ श्रीद्वारपार्श्वे चत्वारो वीणाराजादयः सिद्धपादास्तिष्ठंति-(ष्ठन्ति) ॥ तेषां ध्याननामादिकं(कम्) ॥ एको वीण(णा)राजनामा. एकमुख पिंगलवर्त्तुलयनयनः विभूतिविलेपितसर्वांगः(र्वाङ्गः) मांसल. शिरसि सिद्धतोपिकां दधान(नः). तोपिकोपरि सितचामरं कर्णयोः कुण्डले ग्रीवायां कंठा(कण्ठा)भरणं. उरसि कवचालं(लङ)कृत. हस्तयोर्वलयानि. कटौ विचित्रमेखला. प(पा)दयो(योः). सोपानक(नत्क)योर्भू(र्नू)पुराणि. विचित्रवस्त्रोत्तरीयवस्त्रपरिवृतः द्विभुजः दक्षेण वीणां वादयन्. वामेन वीणादंडं(दण्डं) धारयमाण(णः). नद्युपरि पर्वतासन(नः). रोमविलोद्गतपर्वताकाररोचिश्चयपरिवृतांग(ताङ्गः). तत्पादाधस्तले एको वंशरा-जनामा सिद्ध(द्धः). वंशं नादयन्. वामोर्ध्वपादं नृत्यन्. बुद्धभक्तोध्यतिष्ठत् ॥२॥ ॥ एक(कः). खड्गराजनामा सिद्धपाद. एकानन. भस्मविलेपितसर्वांग(र्वाङ्ग)विभूति-वर्ण(र्णः). केकराक्षः महाश्मश्रुल. वेष्टितो (उत्कावेष्टितो)र्ध्वं पिंग(पिङ्ग)लकेश-शिरस्कः सिद्ध–

दिव्यावदानमा शाक्यसिंहको पूर्वजन्म आदि अनेक कथाको वर्णन छ । वक्ता शाक्यसिंह र श्रोता आनन्द आदि हुन् । यो गद्यपद्यमय छ र अरू कथाको पनि वर्णन भएको छ ॥७२॥ रत्नपरीक्षा-शास्त्र. काव्यजस्तै हो ॥········ श्रीद्वार-(मूलढोका)-को बगलमा चार वीणाराज आदि सिद्धपाद-(सिद्ध)-हरू बस्छन् । तिनका ध्यान र नाम आदिको वर्णन गरिन्छ । एउटा वीणा-राजनाम गरेका सिद्ध एक मुख भएका, कैलो र बाटुलो आँखा भएका, सबै अङ्गमा खरानी घसेका, मोटा, अनि शिरमा सिद्धको टोपी-(मुकुट) लगाएका छन् । उक्त टोपी-(मुकुट)-माथि सेतो चमर छ । दुवै कानमा कुण्डल छन् । घाँटीमा कण्ठाभरण (गलाको हार) छ । छातीमा कवचले सिंगारिएको र दुवै हातमा बाला छन् । कटिमा विचित्र खालको मेखला (कम्मरमा

बेर्ने वस्त्र) छ । जुत्तासहितका पाउमा पाउजेबहरू छन् । विचित्र खालको उत्तरीय (ओढ्ने) वस्त्र वा पछ्यौरा ओढेका छन् । यिनै वीणाराज सिद्ध दुई हात भएका, दाहिने हातले वीणा बजाउने र बायाँ हातले वीणाको दण्ड (वीँड) समातेका, अनि नदीमाथि पर्वतको आसनमा बसेका छन् । आफ्ना रौँका प्वालबाट निस्केका पर्वत आकारका किरणले सबै अङ्ग चम्कने भएका पनि छन् । यिनैको पाउमुनि तल एक वंशराज नामका सिद्ध छन् । यिनले वंश (बाँसुरी) बजाएका, अनि बायाँ पाउ माथि गरेर नाचेका पनि छन् । यिनी बुद्धभक्तका रूपमा रहेका छन् ॥२॥ एक खड्गराज नाम गरेका सिद्धपाद (सिद्ध) छन् । यी एक मुख, सबै अङ्गमा भष्म (खरानी) घसेका, विभूति-(खरानी)-कै वर्ण भएका, टेढो आँखा भएका, ठूलो दाह्री-जुँगा भएका उल्का-(अग्निज्वाला)-ले बेरिएका, अनि ठडिएको कैलो केश भएको शिरले युक्त छन् । सिद्ध–

**कुंड(कुण्ड)लवान्. विचित्रकवचावृतोरस्क(स्कः). नानालंका(लङ्का)रालं(लङ)कृतः द्विभुजः खड्गहस्त(स्तः). खड्गनिष्कासनतत्परः ॥ सोपानत्काभ्यां पादाभ्यां वामललितासन(नः). रोमविवरेभ्योऽग्निज्वालामालाकारतेजःपुंज(पुञ्ज)परिवृतः तदधः एकः दाससिद्धः द्वाभ्यां कराभ्यां दंड(दण्ड)माधाय प्रत्यालीढाभ्यां पादाभ्यां कुटिलमुखो व्यतिष्ठत ॥२॥ एको ध्वजराजनामा सिद्धपादः एकाननवर्त्तुलनेत्र(त्रः). श्मश्रुल(लः). मुकुटधर(रः). कुण्डलवान्. गले वस्त्रावेष्टितः कवचावृतोरस्क(स्कः). नानापाटपट्टांव(ट्टाम्ब)रालं(लङ)कृत(तः). ध्वजालं(लङ)कृतशिरस्क(स्कः). ज्वालामालोज्व(ज्ज्व)लितशिरःप्रदेशः द्विभुजः दक्षेण हृत्प्रदेशे अं(अङ)गुष्ठानामिकां मुद्रां वामेन गुह्यप्रदेशेन कुलं दधान(नः). पर्वत शृंगो(शृङ्गो)परि दक्षललितासन(नः). रोमोद्गतपर्वताकारतेजःपुंज(पुञ्ज)परिवृतांग(ताङ्गः)ः ॥ तदधो दक्षभागे एको नागपुरुषाकारः फणात्रयविराजितशिरस्क(स्कः). नैवेद्यगोलकमुपढो(ढौ)कनार्थं हस्ताभ्यां दधानः ॥२॥ एकश्चैत्यराजनामा सिद्धपादः एकमुख(खः). स्मितसुंद(सुन्द)रास(स्यः) रत्नमयमुकुटवान्. सिद्धकुण्डलवान्. गले खण्डवस्त्रावृतः उ–**

कुण्डल धारण गर्ने, विचित्र कवचले छाती सुरक्षित राखेका, नाना अलङ्कारले शोभित छन् यिनी । यिनै खड्गराज सिद्ध दुई हात भएका खड्ग लिएका र (दापबाट) खड्ग निकाल्न तयार भएका देखिन्छन् । जुत्ता पहिरेका दुवै पाउमध्ये बायाँ पाउतर्फबाट ललितासनमा बसेका छन् । रौँका प्वालबाट अग्निज्वालाको मालाजस्तै तेजको पुञ्ज-(थुप्रो)-ले घेरिएका पनि छन् । यिनको मुनि एक दाससिद्ध छन् । दुवै हातले दण्ड लिएर प्रत्यालीढ (कुनै कामको लागि वा शिकार खेल्नको लागि निसाना गरेको तयारी स्थितिको) दुई पाउद्वारा बसेका र कुटिल

(दुष्ट, बाङ्गो) मुख गरेर बसेका छन् ।।२।। एक ध्वजराजनामक सिद्धपाद (सिद्ध) एक मुख र बाटुलो आँखा भएका, दाह्रीजुंघा भएका, मुकुट धारण गरेका, अनि कर्णकुण्डल लगाएका छन्। साथै गलामा वस्त्र (गलबन्दी) बेरेका, छातीमा कवच धारण गरेका तथा नाना पाट र पट्टवस्त्रले अलङ्कृत छन् । शिरमा ध्वजा शोभित छ । ज्वाला-(अग्निज्वाला)-को माला (घेरो)-ले गर्दा शिर उज्यालो देखिएको छ । यिनी दुई हात भएका छन् । दाहिने हात हृदयमा पुऱ्याएर बूढी औंलो र साहिंली औंलो जोरेको मुद्रा गरेका, अनि बायाँ हात गुह्यप्रदेशमा (तल) पुऱ्याएर कुल (?) धारण गरेका छन् । साथै पर्वतको टाकुरामाथि सिपालु किसिमको ललितासनमा बसेका छन् । रौंबाट निस्केको पर्वत आकारको तेजको पुञ्जले सबै अङ्ग ढाकेका छन् । त्यसमुनि दाहिने भागमा एक (दाससिद्ध) छन्, नागपुरुषका आकार भएका, अनि तीन फणाले शिर अलङ्कृत भएका । नैवेद्यको गोलो (लड्डू) चढाउनको लागि दुई हातले लिएका छन् ।।२।। एक चैत्यराज नाम गरेका सिद्धपाद (सिद्ध) छन् । यिनी एक मुख र हँसिलो सुन्दर मुख भएका, रत्नजडित मुकुट पहिरेका, सिद्धकुण्डल (कानमा) धारण गरेका तथा गलामा वस्त्रको टुक्रो (गलबन्दी) बेरेका छन् ।

॥७०॥

रसि कवचवस्त्रं(स्त्रम्). विचित्रवस्त्रपरिवृतांग(ताङ्ग): द्विभुजः जठरप्रदेशे आकुंचि-(कुञ्चि)तेन दक्षेण चैत्यभट्टारकं बिभ्राणः वामेन सर्पं(र्पं)पुछं(च्छं) दधान.(नः) पर्वततृणोपरि दक्षललितासन(नः). सोपानत्कः विभूतिनिलेपितांग(ताङ्गः). तदधो वामभागे पर्वतधारक एको भक्तः सिद्धः ॥२॥ अस्माकं नैपालीयानां बौद्धानां मते एवमेव. अथ च केषांचित् कुत्रचित् किंचिद् भेदो भविष्यत्येव. परंच(रञ्च) कांवो(काम्बो)जदेशीयैर्लामाभिधानैर्बौद्धैर्नित(निर्मित ?)मिति वार्ता. तेषां मते को वेद ॥ ॥ ऋतूदधिनिधौ वर्षे श्रावणे कृष्ण आरुणे ॥ श्रीसाहेवाज्ञयालेखदमृतः शाक्यशासनः ॥१॥ तस्मिन्नेव कोष्ठागारे उत्तरपट्टिकायां भित्तौ अधिष्ठितानि बुद्धविंवा(विम्बा)नि विलसंति(सन्ति) षोडशपरिमितानि ॥ तत्र प्रथमं अक्षोभ्यनाम ध्यानी बुद्धः एकास्यः गगनवर्णः द्वात्रिंशल्लक्षणालं(लङ्)कृतसर्वांग(र्वाङ्गः) विचित्र-चीवरनिवसननिवासितः द्विभुजः दक्षेण भूमिस्पर्शनमुद्रावामेनाकुंचि(कुञ्चि)तेन सपिंड(पिण्ड)पात्रधारणोत्तानपाणितलं बिभ्राणः कमलोपरि वज्रासनः ॥१॥ तद्वामे रत्नसंभ(सम्भ)व एकास्यः कनकवर्णः द्वात्रिंशल्ल–

छातीमा कवच र वस्त्र धारण गरेका, अनि विचित्र वस्त्रले अङ्ग छोपिएका छन् । दुई हात भएका तथा पेटमा पुऱ्याई खुम्चाएको दाहिने हातले चैत्यभट्टारक लिएका, अनि बायाँ हातले सर्पको पुच्छर समातेका छन् । पर्वतको तृण-(घाँस, वनस्पति)-माथि दक्ष (सिपालु किसिमले) ललितासनमा बसेका, जुत्ता पहिरेका तथा अङ्गमा खरानी घसेका छन् । यसमुनि बायाँतर्फ पर्वतधारक नाम गरेका एक सिद्ध भक्त छन् ॥२॥ हामी नेपाली बौद्धहरूको मतमा यही नै हो। अनि केही-(व्यक्ति)-को मतमा कहीं कुनै भेद (फरक) हुनेछ नै । अरू पनि काम्बोज देशका लामा नामका बौद्धले बनाएको भन्ने पनि सुनिन्छ । तिनीहरूको मतबारे कसले जान्दछ र ? ऋतु-उदधिनिधि (९४६ ने. सं.) वर्षको श्रावण महीनाको कृष्णपक्षको सप्तमी तिथिमा । श्री

साहेबको आज्ञाले शाक्यको शासनमा बसेका अमृत-(अमृतानन्द शाक्य)-ले यो लेखेका हुन् ।।१।।

त्यहीं नै कोठामा उत्तरतर्फ भित्तामा रहेका सोह्र बुद्धविम्ब-(बुद्धमूर्ति)-हरू शोभित छन् । त्यसमध्ये पहिले अक्षोभ्य नाम गरेका ध्यानी बुद्ध छन् । यिनी एक मुख, आकाशजस्तो नीलो वर्ण, बत्तीस लक्षणले सबै अङ्ग सिँगारिएका, विचित्र चीवरले सजिएका तथा दुई हात भएका छन् । दाहिने हातले भूमिस्पर्श मुद्रा र खुम्चेको बायाँ हातले पिण्डपात्र लिएको उत्तानो हत्केला गरेका तथा कमलमाथि वज्रासनमा रहेका छन् ।।१।। यसको बायाँतर्फ रत्नसम्भव नाम गरेका (ध्यानी बुद्ध) छन् । यिनी एक मुख र सुनको जस्तो वर्ण भएका, अनि बत्तीस

**क्षण(णः) सुंदरांग(सुन्दराङ्गः) विचित्रचीवरनिवसननिवासितः द्विकरः दक्षेण वरदमुद्रां वामेनाकुंचि(कुञ्चि)तेन नाभिप्रदेशे उत्तानपाणितलं दधानः पद्मोपरि कुलिशासनः ।।२।। तद्वामे अमिताभः एकास्य(स्यः). द्वात्रिंशल्लक्षणालं(लङ्)कृतां-ग(ताङ्गः). द्विभुजः दक्षवामाभ्यां सपिंड(पिण्ड)पात्रध्यानमुद्रामुद्रित(तः). विचित्र-चीवर.(चीवरनिवसननिवासितः) पद्मोपरि कुलिशासनः ।।३।। तद्वामे अमोघसिद्ध-वु(बु)द्धः एकास्य(स्यः). द्वात्रिंशल्लक्षणधर(रः). द्विभुज(जः). दक्षेण हृत्प्रदेशे उत्तानपाणितलं बिभ्राणः पद्मोपरि कुलिशासनः ।।४।। तद्वामे वैरोचननामा बुद्धः एकास्य(स्यः). द्वात्रिंशल्लक्षणधरः द्विभुजः द्वाभ्यां धामधर्मचक्रमुद्रां बिभ्राणः विचित्र-चीवरालं(लङ्)कृतसर्वांग(र्वाङ्गः) ।।५।। तदूद्ध्र्वपं(पङ्)क्तौ प्रथमदक्षे वैरोचन-नामा बुद्ध(द्धः). तद्वामे अक्षोभ्यबुद्ध(द्धः). तद्वामे रत्नसंभ(सम्भ)वः तद्वामे अमिताभः तद्वामे अमोघसिद्ध(द्धः). तद्वामे वैरोचनः ।। एतेषां ध्यानं प्राग्वत् ।।११।। अधोभागे प्रथमदक्षे. वैरोचननामा वु(बु)द्धः सर्वं पूर्ववत्. परंच(रञ्च) धर्मचक्रमुद्रां भुजूर(द्विभुजः) द्वाभ्यामभयमुद्रां बिभ्राण(णः). बहुध्यानत्वात्. मुद्राभेदः ।।१।। तद्वामे अक्षोभ्यवु(बु)–**

लक्षणले युक्त सुन्दर अङ्ग भएका छन् । विचित्र खालको वस्त्रले सजिएका छन् । दुई हात भएका र दाहिने हातले वरदमुद्रा लिएका तथा खुम्चेको बायाँ हात नाभिप्रदेशमा पुऱ्याएर उत्तानो हत्केला गरेका तथा कमलमाथि वज्रासनमा बसेका छन् ।।२।। यिनको बायाँतर्फ अमिताभ नामका ध्यानी बुद्ध छन् । यिनी एक मुख भएका, बत्तीस लक्षणले सबै अङ्ग सजिएका, दुई हात भएका, दाहिने र बायाँ हातद्वारा पिण्डपात्र र ध्यानमुद्रा धारण गरेका, विचित्र खालको काषायवस्त्र पहिरेका, अनि कमलमाथि वज्रासनमा बसेका छन् ।।३३।। यिनको

बायाँतर्फ अमोघसिद्धि नामका बुद्ध छन् । यिनी एक मुख भएका, बत्तीस लक्षण धारण गर्ने, दुई हात भएका र हृदयमा पुऱ्याई खुम्चाएको दाहिने हातले अभयमुद्रा र नाभिप्रदेशमा पुऱ्याइएको बायाँ हात उत्तानो हत्केला पारेर राखेका, अनि कमलमाथि वज्रासनमा बसेका छन् ।।४।। यिनको बायाँतर्फ वैरोचन नामका बुद्ध छन् । यिनी एक मुख र बत्तीस लक्षण भएका, दुई हात भएका, अनि दुवै हातले धर्मचक्रमुद्रा लिएका तथा विचित्र चीवर वस्त्रले शरीर शोभित भएका छन् ।.५।। त्यसको माथि पङ्क्तिमा सर्वप्रथम दाहिनेतर्फ वैरोचन नामका बुद्ध छन् । यिनको बायाँतर्फ अक्षोभ्य बुद्ध छन् । यिनको बायाँतर्फ रत्नसम्भव बुद्ध छन् । यिनको बायाँ अमिताभ, यिनको बायाँ अमोघसिद्धि र यिनको बायाँ वैरोचन बुद्धहरू छन् । यिनको ध्यान पहिलेजस्तै ।।११।। तल्लो भागमा सर्वप्रथम दाहिनेतर्फ वैरोचन नामका बुद्ध छन् । बाँकी सबै पहिलेजस्तै । अरू पनि धर्मचक्रमुद्रा लिएका, दुई हात भएका र दुवै हातले अभयमुद्रा लिएका छन् । धेरै ध्यान भएकोले मुद्राको भेद भएको हो । यिनको बायाँतर्फ अक्षोभ्य नाम गरेका

धर्म :

॥७१॥

द्ध.(द्धः) तद्वामे खड्गशृंगं(शृङ्गं) स्थापितं(तम्) ॥२॥ तद्वामे रत्नसंभ-(सम्भ)ववु(बु)द्धः तद्वामे अमोघसिद्धवु(बु)द्धः तद्वामे अमोघसिद्धवु(बु)द्धः ॥१७॥ तदधोधोपं(पङ)क्तौ द्वात्रिंशत्परिमितानि दीपमा(पा)त्राणि घृतवर्तिकास-हितानि प्रज्वलिप्रज्वलितानि (प्रज्वलितानि) विलंसति(लसन्ति)· सुगंध(गन्ध)जल-भरितानि जलपात्राणि पायसनिर्मितानि शिष(ख)राकाराणि नैवेद्यगोडानि ।। पुरापि (पुनरपि) दीपपात्राणि पुनश्च दीपपात्राणि मध्यभागे डिंडि(डिण्डि)मम वाद्यं दर्पणाकारं विचित्रावर्त्तुलावलिशोभितं ताडनसहितं वादनार्थं(र्थं)मुपस्थापितमस्ति ।। अधोभागे पार्श्वयोः सपीठिकं रक्षाभं(भ)गवतीपुस्तकद्वयं प्रत्यहं पाठार्थं(र्थं)मधिष्ठापितं(तम्) ।। ।। एकस्यां पं(पङ)क्तौ चतुर्दशसंख्या(सङ्ख्या)का बुद्धाः शुशुभिरे ।। तत्र प्रथमं(मम्). अमोघसिद्धनामा बुद्धः एकानन(नः). तद्वामे अमिताभः तद्वामे रत्नसंभ(सम्भ)वः तद्वामे स एव तद्वामे शालेंदुनाम बुद्धः ॥२२॥ एकास्यः कांच(काञ्च)नवर्ण(र्णः). द्वात्रिंशल्लक्षणः द्विभुज(जः). दक्षेण जानुप्रसारितेन वरदमुद्राशालकुसुमं च दधान(नः). वामेनाकुंचि(कुञ्चि)तेनात्त्राण(न)पाणितलं दधान(नः). विचित्रचीवरनिवासनेवासी पद्मोपरि कुलिशासनः ॥५॥ तद्वामे कमलराजनामा क–

बुद्ध छन् । यिनको बायाँतर्फ खड्गशृङ्ग स्थापना गरिएको छ ॥२॥ यिनको बायाँतर्फ रत्नसम्भव, यिनको बायाँतर्फ अमोघसिद्धि बुद्धहरू छन् ॥१७॥ त्यसमुनि तलतल पङ्क्तिहरूमा बत्तीस दीपपात्र-(पाला, दियो)-हरू घिउको बत्तीसहित बलेको अवस्थामा शोभित छन् सुगन्धित जलले भरिएका जलपात्र-(कलश)-हरू, खीरले (दूध र अन्नले) बनेका शिखर (चुच्चिएको) आकारका नैवेद्य-(ग्वःजा ?)-हरू छन् । फेरि पनि दीपपात्र, अनि फेरि दीपपात्र छन् । बीचभागमा डिण्डिमबाजा छ । यो बाजा ऐनाको आकारको, अनौठो तथा बाटुलो घेराले शोभित भएको छ । साथै ताडन (बजाउने दण्ड) सहित गरेर बजाउनको लागि राखिएको छ ।

तल्लो भागमा दुवैतर्फ पीठिका (आसन, बासा) सहितको रक्षाभगवतीका दुई पुस्तक पाठ गर्नको लागि राखिएका छन् । एक पङ्क्तिमा चौध बुद्धहरू शोभित रहेछन् । यिनमध्ये सर्वप्रथम अमोघसिद्धि नामका बुद्ध छन् । यी एक मुख भएका छन् । यिनको बायाँतर्फ अमिताभ, त्यसभन्दा बायाँतर्फ रत्नसम्भव, यसको बायाँतर्फ पनि उनै रत्नसम्भव, अनि त्यसभन्दा बायाँ शालेन्दु नामका बुद्ध छन् ॥२२॥ यी शालेन्दु बुद्ध एक मुख र सुनको वर्ण भएका, बत्तीस लक्षणले युक्त, दुई हात भएका, घुँडासम्म फैलाएको दाहिने हातले वरदमुद्रा र शालफूल लिएका, अनि खुम्चाएको बायाँ हात उत्तानो गरी राखेका तथा विचित्र चीवर पहिरेका र कमलमाथि वज्रासनमा रहेका छन् ॥५॥ यिनको बायाँतर्फ कमलराज नामका

**द्धः(बुद्धः) एकास्य(स्यः). कमलवर्णः द्वात्रिंशल्लक्षणधरः द्विभुजः दक्षेण हृत्प्रदेशाकुंचि(कुञ्चि)तेन कमलं वामं नाभिप्रदेशे उत्तानपाणितलं बिभ्राणः विचित्रचीवरनिवसनः पद्मोपरि वज्रासनः ॥६॥ तद्वामे दंत(दन्त)राजनामा बुद्धः एकास्य(स्यः). श्वेतवर्ण(र्णः). द्वात्रिंशल्लक्षणधरः द्विभुजः दक्षेण हृत्प्रदेशाकुंचि(कुञ्चि)तेन दंतिदंतं(दन्तिदन्तं) बिभ्राणः वामेनाकुंचि(कुञ्चि)तेन पात्रधारणमुद्रां दधान(नः). पद्मोपरि वज्रासनः ॥७॥ तद्वामे मणिकुसुमनाम(मा) वुद्धः एकास्य(स्यः). मणिवर्णः द्वात्रिंशल्लक्षणधर(रः). द्विभुज(जः). दक्षेणाजानुप्रसारितेन मणिरत्नं दधान(नः). वामे(वामेन) पात्रधारणोत्तानपाणितलं बिभ्राण. पद्मोपरि वज्रासनः ॥८॥२५॥ तद्वामे उत्पलेश्वरराजनामा बुद्ध(द्धः). एकास्य(स्यः). द्विभुज(जः). दक्षेण महोत्पलं वामे(वामेन) उत्तानपाणितलं बिभ्राण(णः). पद्मोपरि वज्रासनः ॥९॥२६॥ तद्वामे कुमुददलनयनेश्वरनामा बुद्धः एकास्य(स्यः). कुवलयवर्णः द्वात्रिंशल्लक्षणालं(लङ)कृतगात्र(त्रः). द्विभुज(जः). दक्षेणाजानुप्रसारितेन कैरवकुसुमं बिभ्रत्. वामेन पात्रधारणोत्तानपाणिं दधत्. विचित्रचीवरनिवसन(नः). पद्मोपरि कुलिशासनः ॥१०॥२७॥ तद्वामे रत्नराजनामा वु(बु)द्धः एकास्यः कांच(काञ्च)–**

बुद्ध छन् । यिनी एक मुख र कमलको जस्तो वर्ण भएका, बत्तीस लक्षणले युक्त तथा दुई हात भएका छन् । हृदयमा पुऱ्याई खुम्चाएको दाहिने हातले कमल लिएका, अनि बायाँ हात नाभिछेउ पुऱ्याएर उत्तानो पारेका, अनि विचित्र चीवर पहिरेका तथा कमलमाथि वज्रासनमा बसेका छन् ॥६॥ यिनको बायाँतर्फ दन्तराज नाम गरेका बुद्ध छन् । यिनी एक मुख र सेतो वर्ण भएका, बत्तीस लक्षणले युक्त, दुई हात भएका र हृदयमा पुऱ्याई खुम्चाएको दाहिने हातले

हात्तीदाँत लिएका, अनि खुम्चाएकै बायाँ हातले पात्रधारण गर्ने मुद्रा धारण गरेका तथा कमलमाथि वज्रासनमा बसेका छन् ।।७।। यिनको बायाँतर्फ मणिकुसुम नामका बुद्ध छन् । यिनी एक मुख र मणिको जस्तो वर्ण भएका, बत्तीस लक्षणले युक्त, दुई हात भएका तथा घुँडासम्म पसारिएको दाहिने हातले मणिरत्न लिएका, अनि बायाँ हात पात्र लिन मिल्ने गरी उत्तानो पारेका तथा कमलमाथि वज्रासनमा रहेका छन् ।।८।।२५।। यिनको बायाँतर्फ उत्पलेश्वरराज नामका बुद्ध छन् । यिनी एक मुख र दुई हात भएका, दाहिने हातले ठूलो कमल लिएका, बायाँ हात उत्तानो पारेका र कमलमाथि वज्रासनमा बसेका छन् ।।९।।२६।। यिनको बायाँतर्फ कुमुददलनयनेश्वर नामका बुद्ध छन् । यिनी एक मुख र कमलको जस्तो वर्ण भएका, बत्तीस लक्षणले शरीर शोभित भएका, दुई हात भएका, घुँडासम्म पसारिएको दाहिने हातले सेतो कमलको फूल लिएका, बायाँ हात पात्र लिन मिल्ने गरी उत्तानो पारेका, विचित्र चीवर पहिरेका र कमलमाथि वज्रासनमा बसेका छन् ।।१०।।२७।। यिनको बायाँतर्फ रत्नराज नामका बुद्ध छन् । यिनी एक मुख र

॥७२॥

नवर्ण(र्णः). द्विभुज(जः). दक्षेणानाभिप्रदेशाकुंचि(कुञ्चि)तेन त्रिशिखोज्वलिन-(त)रत्नं. वामेन पात्रोद्धरणपाणितलं दधान(नः)· द्वात्रिंशल्लक्षण(णः). विचित्रवि-रा(चीवरा)वृत(तः)· पद्मोपरि कुलिशासनः ॥११॥२८॥ तद्वामे अपरिमितायु-र्ध्यानराजनामा बुद्धः एकास्य(स्यः). हिमरजतवर्ण(र्णः). द्विभुज(जः)· अपरिमित-ध्या ······(ध्यान इति पूर्ववत्). ॥३०॥ तद्वामे भैषज्यराजनामा बुद्धः एकमुखः कांच(काञ्च)नवर्णः द्वात्रिंशल्लक्षणधरः विचित्रचीवरावृत(तः). द्विभुज(जः)· दक्षेणानु(णाजानु)प्रसारितेन हरीतकीफलमादधान(नः). वामेनाकुंचि(कुञ्चि)तेन पात्रधारणोत्तानपाणितलं दधानः पद्मोपरि वज्रासनः ॥१२॥३०॥ तद्वामे पद्मगंधे-(गन्धे)श्वरराजनामा वुद्ध(बुद्धः). कमलवर्णः द्विभुज(जः). दक्षेण हृत्प्रदेशाकुंचि-(कुञ्चि)तेन पद्मं वामेन पात्रधारणोत्तानपाणितलं विभ्राण(णः)· पद्मोपरि वज्रासनः ॥१०॥३१॥ एते सर्वे मतमतांत(तान्त)रतो वैरोचन एव. वज्रसत्व-(त्त्व) एव· प्रवृत्तितः कार्यतो नामभेदाः ॥ ॥ पूर्वपट्टिकायां. एतादृशं गवाक्षत्रयं विचित्रितं प्रकाशयति. घंटा(घण्टा)त्रितयनादितं तदुपरि सप्तवुद्धा(बुद्धा)विंवा-(विम्बा)नि विलसंति(सन्ति). तत्र प्रथमतरं श्रीशाक्यसिंहविंवं(विम्बं). कांवो-(काम्बो)जदेशीयभाषया शा–

सुनको जस्तो वर्ण भएका, दुई हात भएका, नाभिछेउ पुऱ्याएर खुम्चाएको दाहिने हातले त्रिशिख (तीनतिर बल्ने) चम्किलो रत्न लिएका, बायाँ हात पात्र लिने गरी उत्तानो पारेका, बत्तीस लक्षणले युक्त, विचित्र चीवर पहिरेका र कमलमाथि वज्रासनमा रहेका छन् ॥११॥ २८॥ यिनको बायाँतर्फ ध्यानराज नाम गरेका अपरिमितायु बुद्ध छन् । यिनी एक मुख र हिउं तथा चाँदीजस्तै सेतो वर्ण भएका, दुई हात भएका र अपरिमित (धेरै) ध्यान गर्ने आदि पहिलेजस्तै ॥३०॥ यिनको बायाँतर्फ भैषज्यराज नामका बुद्ध छन् । यिनी एक मुख र सुनको वर्ण भएका, बत्तीस लक्षणले युक्त, विचित्र चीवर पहिरेका, दुई हात भएका र घुँडासम्म

पसारिएको दाहिने हातले हर्रोको फल लिएका, अनि खुम्चाएको बायाँ हात पात्र लिने गरी उत्तानो पारेका तथा कमलमाथि वज्रासनमा बसेका छन् ।।१२।।३०।। यिनको बायाँतर्फ पद्मगन्धेश्वरराज नामका बुद्ध छन् । यिनी कमलको जस्तो वर्ण भएका, दुई हात भएका र हृदयमा पुऱ्याई खुम्चाएको दाहिने हातले कमल लिएका र बायाँ हात पात्र धारण गर्ने गरी उत्तानो पारेका तथा कमलमाथि वज्रासनमा बसेका छन् ।।१०।।३१।। यी सबै विभिन्न मत-(विचार)-मा वैरोचन बुद्ध नै हुन्, वज्रसत्त्व नै हुन् । प्रवृत्ति र कार्यले गर्दा नाम फरक भएका हुन् । धेरै अभ्यास-(समाधि, ध्यान)-द्वारा काम्बोजीय-(काम्बोजका भिक्षु वा निवासी)-हरूले जानेका हुन् ।

पूर्व भागमा यस खालका तीन आँखीझ्यालहरू विचित्र किसिमले प्रकाशित छन्, यिनमा तीन घण्ट झुन्ड्याइएका छन् । त्यसमाथि सात बुद्ध आदिका बिम्ब-(मूर्ति)-हरू शोभित छन् । यिनमध्ये सर्वप्रथम श्री शाक्यसिंहको बिम्ब (मूर्ति) छ । यस बिम्बलाई काम्बोजीयहरूको भाषामा

क्य थुंवा (शाक्य थुंवा) इति. क्वाचपालदेव इति (नेपालभाषया क्वाचपाल देव इति). तस्या(स्य) ध्यानभेदमस्ति ।। एकमुख(खः). कनकवर्णरक्तवर्णोपि. द्विभुज-(जः). दक्षेणाजानुप्रसारितेन भूमिस्पर्शनमुद्रां दधत्. वामेन हृत्प्रदेशाकुंचि(कुञ्चि)-तेन. बोधि(धिं) प्राप्य संवु(सम्बु)द्धोस्मि. अकनिष्ठभुवनं प्रापयिष्यामि ज्ज(ज) गत् उद्धरिष्यामीति. उर्द्ध्व(ऊर्ध्वं) मुद्रां दधानः सहस्रारचक्रांकि(काङ्कि)तपाणिपा-दतलादिद्वात्रिंशल्लक्षणाशीत्यनुव्यं(व्य)जनालं(लङ)कृतसर्वां ग(र्वाङ्ग): विचित्रची-वरनिवसननिवासितः कमलोपरि कुलिशासनः ।।१।। तदुपासकाः चतुर्दशसंख्या-(सङ्ख्या)का भिक्षवो वंद्या(वन्द्याः). सयवदे इति भाषया लसंति(सन्ति). तत्र प्रथम(मम्) एको भिक्षुः चीवरनिवसनपरिवृतसर्वां ग(र्वाङ्ग): मंचो(मञ्चो)परि उत्कुटकासनः दक्षेण करेण सितचामरदंडं(दण्डं) दधन्. वामेन धूपमा(पा)त्रमाद-धानो धूपायमान(नः). जगत् सुरमयन्. नमो बुद्धाय. नमो धर्माय. नमः संघा-(सङ्घा)येति पठन् त्रिरत्नमभजत् धूपिकोयं(यम्) ।।२।। एकः पिण्डपात्रमुपढो(ढौ)-कयन्. मुण्डी. चीवरनिवसनं(न)परिवृतांग(ताङ्गः). वज्रासन(नः). त्रिरत्नमभजत-(त्)ध्यानलीनः ।।३।। एको भिक्षुः मुंडी(मुण्डी) चीवरनिवसनधारी उत्तरासंगी-(सङ्गी) मंचो(मञ्चो)परि उत्कुटुकासनः वामेन

शाक्य थुंवा र नेपालभाषामा क्वाचपाल भन्दछन् । तिनको ध्यानमा भेद छ । यिनी एक मुख र सुनको वर्ण भएका, रातो वर्ण पनि भएका, दुई हात भएका, अनि घुंडासम्म पसारिएको

दाहिने हातले भूमिस्पर्शमुद्रा धारण गरेका छन् । हृदयछेउ पुऱ्याएर खुम्चाएको बायाँ हातले ऊर्ध्वमुद्रा गरेर के सङ्केत गरेका छन् भने– म बोधि (ज्ञान) प्राप्त गरेर सम्बुद्ध बनेको छु। अकनिष्ठभुवन प्राप्त गर्नेछु र जगत्को उद्धार गर्नेछु। हत्केला र पाउहरूमा हजार आरा भएको चक्र अङ्कित भएका यी बुद्ध बत्तीस लक्षण र असी अनुव्यञ्जनले सबै अङ्ग शोभित भएका, विचित्र भिक्षुवस्त्र पहिरेका र कमलमाथि वज्रासनमा बसेका छन् ॥१॥ यिनका उपासक बौद्ध भिक्षुहरू पनि वन्दना (प्रणाम)गर्न योग्य छन् । यिनलाई भाषामा 'सँय्वदे' भन्दछन् । त्यहाँ सर्वप्रथम एक भिक्षु छन् । यिनी काषायवस्त्रले अङ्ग छोपेका र मञ्चमाथि उत्कुटक (माथितिर हेरिरहेको मुख गरेको) आसनमा बसेका छन् । दाहिने हातले सेतो चमरको बीँड र बायाँ हातले धुपौरो लिएर धूप सल्काउँदै यिनले संसारलाई नै रमाइलो पारेका छन् । साथै त्रिरत्नका तीन मन्त्र– 'नमो बुद्धाय, नमो धर्माय र नमः सङ्घाय' पाठ गरेर भजन गर्ने यी धूपिक-(धूप बाल्ने भिक्षु) हुन् ॥२॥ अर्का एक भिक्षु मुण्डन गरेका, पिण्डपात्र समर्पण गर्दै गरेका, काषाय-वस्त्रले अङ्ग शोभिएका र वज्रासनमा बसेका छन् । यिनी ध्यानमग्न भएर त्रिरत्नको भजन गरिरहेका छन् ॥३॥ एक भिक्षु मुण्डन गरेका चीवर (काषायवस्त्र) पहिरेका उत्तरीय वस्त्र पहिरेका तथा मञ्चमाथि उत्कुटक आसनमा बसेका छन् । यिनले बायाँ–

करणे सितचामरदंड(दण्ड)मादधत्. दक्षेण पुष्पोपढौकनपूजनमुद्रां हृत्प्रदेशे धारयन्. रत्नत्रयमभजत्. त्रिमंड(मण्ड)लपरिशुद्धः ॥४॥ एको. भिक्षुः कुंचितेस(कुञ्चितकेशः) उत्तरासंगी(सङ्गी) चीवरनिवसनपरिवृत(तः). दक्षेण हृत्प्रदेशाकुंचि(कुञ्चि)तेन ध्यानमुद्रां त्यक्ता(त्यक्त्वा) पूजनमुद्रां दधान(नः). वामेन ध्यानमुद्रां दधान(नः). पीठोपरि. वज्रासन(नः). रत्नत्रयमपूजयत्. ध्यानलीनः ॥५॥ एको भिक्षुः कुंचि-(कुञ्चि)तकेश उत्तरासंगी(सङ्गी) पूजनांते(नान्ते) नकुलमागतं द्वाभ्यां कराभ्यां संमार्जयन्नंग(न्नङ्ग)चीवरनिवसनो रत्नत्रयमसेवत् ॥६॥ भिक्षुरेको(कः) कुंचि-(कुञ्चि)तकेश(शः). चीवरावृतसर्वांग(र्वाङ्गः). उपढौकनार्थं रत्नमयमुकुटं धारयन्. रत्नत्रयमपूजयत्. समाधी(धि)लीनः ॥७॥ भिक्षुरेको मुंडी(मुण्डी) चीवरावृतसर्वांग(र्वाङ्ग): पीठोपरि दक्षललितासनः वामेन री(बी)जनार्थं सितचामरमादधानो दक्षेण पूजनमुद्रां विभ्रत्. रत्नत्रयं पूजयन्. ध्यानलीनो व्यतिष्ठत् ॥८॥ भिक्षुरेको मुंडी(मुण्डी) चीवराछा(च्छा)दितसर्वांग(र्वाङ्ग): करद्वयेन तालद्वयमादधान(नः). ध्यानलीनो रत्नत्रयमभजत् ॥९॥ भिक्षुरेको मुंडी(मुण्डी) उत्तरासंगी-(सङ्गी) चीवरनिवसनपरिवृतांग(ताङ्ग): पीठोपरि समाश्रितः शाक्यसिंहाय

हातले सेतो चमरको बीँड समातेका, दाहिने हातले फूल चढाएर पूजा गर्ने मुद्रा हृदयछेउ धारण गरेका छन् र त्रिरत्न-(बुद्ध, धर्म, सङ्घ)-को भजन गरिरहेका छन्, त्रिमण्डल परिशुद्ध भएर ॥४॥ एक भिक्षु केश (रौं) घुम्रेका, उत्तर मुख गरेका र चीवरवस्त्र पहिरेका छन् । यिनी हृदयछेउ खुम्चेको दाहिने हातले ध्यानमुद्रा छाडेर पूजाको मुद्रा धारण गरेका, बायाँ हातले ध्यानमुद्रा लिएका र पीठमाथि वज्रासनमा बसेका छन् । यिनले ध्यानमग्न भएर त्रिरत्नको पूजा गरेका छन् ॥५॥ एक भिक्षु केश घुम्रेको उत्तरासङ्गी (उत्तरीयवस्त्र पहिरेका) र पूजाको अन्तमा आएको नकुल-(न्याउरी)-लाई दुई हातले हटाउँदै तथा अङ्गमा चीवर (काषायवस्त्र) धारण गरेका त्रिरत्नको सेवा गरेका छन् ॥६॥ एक भिक्षु केश घुम्रेका,

चीवरवस्त्र सबै अङ्गमा लगाएका, अनि चढाउनको लागि रत्नजडित मुकुट धारण गरेका छन् र यिनले समाधिमा लीन भएर त्रिरत्नको पूजा गरेका छन् ॥७॥ एक भिक्षु मुण्डन गरेका, सर्वाङ्ग काषाय-(गेरुवा)-वस्त्र पहिरेका, पीठमाथि राम्रो प्रकारले ललितासनमा बसेका छन् । यिनले हुम्कनको लागि बायाँ हातले सेतो चमर लिएका छन् र दायाँ हातले पूजाको मुद्रा लिएर ध्यानलीन हुँदै त्रिरत्नको पूजा गरिरहेका छन् ॥८॥ एक भिक्षु मुण्डन गरेका, काषाय वस्त्र लगाएका र दुई हातले दुई ताल (वाद्ययन्त्र) लिएका, अनि ध्यानलीन भएर त्रिरत्नको भजन गरेका छन् ॥६॥ एक भिक्षु मुण्डन गरेका, काषायवस्त्र पहिरेका, दुई हातले दुई ताल (वाद्ययन्त्र) लिएर ध्यानलीन भएर त्रिरत्नलाई भजन गरेका छन् ॥६॥ एक भिक्षु मुण्डन गरेका, उत्तरीय ओढेका, काषायवस्त्र धारण गरेका र पीठमाथि बसेका छन् । शाक्यसिंह-लाई

**निवेदनार्थं पायसपूरित पिंड(पिण्ड)पात्रं द्वाभ्यां पाणिभ्यां स(सन्)दधानो ध्यानलीनो रत्नत्रयमभजत् ॥१०॥ एको भिक्षुः मुण्डी उत्तरासंग(सङ्ग)मुद्वहन्. चीवरनिवसन-परिवृतसर्वांग(र्वाङ्गः). वामेन दंड(दण्ड)पात्रमादधानो दक्षेण प्रज्ञापुस्तकं म(सन्)-दधानः पठन्. ध्यानलीनो व्यतिष्ठत ॥११॥ एको भिक्षुः मुण्डनशिरस्कः उत्तरासंगी-(सङ्गी). विचित्रचीवरनिवसननिवासित(तः). पीठोपरि दक्षललितासन(नः). द्वाभ्यां प्रसारिताभ्यां दोर्भ्यां शाक्यसिंह(हा)योपढौकनार्थं त्रिमणिसंपु(सम्पु)टित पंच(पञ्च)स्थानसंबंधित(सम्बद्ध)मणिमालां विभ्राण(णः) ॥१२॥ एको भिक्षुः कुंचि(कुञ्चि)तकेश(शः). उत्तरासंगी(सङ्गी). विचित्रचीवरनिवसननिवासितांग-(ताङ्गः): चैत्यभट्टारकसंशोभितोद्ध्र्वभागं खिक्खिरीदंडं(दण्डं) पुरोभागे भूमौ संनि(सन्नि)धाय. द्वाभ्यां कराभ्यां पायसपरिपूर्णपिंड(पिण्ड)पात्रमाधाय नाभिप्रदेशे पीठोपरि वज्रासनः इ(ई)षदधोमुख ईषन्निमीलितनयनः रत्नत्रयमनुस्मरन्. जगदुद्-धरणकामो ध्यानलीनो व्यशोभत ॥१३॥ भिक्षुरेको मुण्डनशिरस्कः सोत्तरासंग(सङ्गः): विचित्रचीवरनिवसननिवासितः पीठोपरि दक्षललितासन(नः). दक्ष(क्षे)ण करेण प्रज्ञापुस्तकं वामेन करेणाभयमुद्र–**

चढाउनको लागि खीरले भरिएको पिण्डपात्र दुई हातले लिएर यिनी ध्यानलीन हुँदै त्रिरत्नको भजन गरिरहेका छन् ॥१०॥ एक भिक्षु मुण्डन गरेका, उत्तरीय (ओढ्ने) वस्त्र बोकेका, काषाय (गेरुवा) वस्त्र पहिरेका, अनि बायाँ हातले दण्डपात्र लिएका र दाहिने हातले प्रज्ञापुस्तक समाती पढिरहेका, अनि ध्यानलीन भएर रहेका छन् ॥११॥ एक भिक्षु शिरोमुण्डन

यसबाहिर चारै ढोकाका बीच-बीचमा अक्षोभ्य, रत्नसम्भव, अमिताभ र अमोघसिद्धि आदि बुद्धहरू छन् । त्यसबाहिर चार कोण परेका रेखा छन् । तिनका बीचमा पूर्व आदि चार दिशामा सोह्र बोधिसत्त्व अथवा त्यति नै लास्या आदिहरू सबै नृत्य गरेर रहेका छन् । यसबाहिर चारकुने दुई रेखा छन् । यिनका बीचमा चवालीस पद्म-(कमल)-हरू छन् । यस-बाहिर चारकुने दुई रेखा छन् । त्यस रेखामा पूर्व आदि दिशाहरूमा अष्ट (आठ) कलशहरू छन्, अमृत र सुगन्धले भरिएको पात्र-(भाँडो)-ले सहित भएका । चार कोण-(कुना)-मा पताकासहित तीन (तीन/तीन) छाता छन् । चारै ढोकामाथि तोरणहरू छन् । यी तोरण किङ्किणीजालले सहित भएका छन् । यिनका सूँड र दाँतले युक्त तथा मुख बाएका दुई गोही सजिएका (चित्रित) छन् । यसबाहिर बाटुलो आकारका दुई रेखा छन् ।

**रे शतसहस्रमितं रेखामात्रं. रेखावलि. तद्बहिः पद्मावली. वज्रावली. ज्वालावली. परिवृतमिति ।। ।। तत्र सा(स)द्वापरा वयं ।। ।। ॐ नमः पद्मपाणये ।। सर्वीयः सर्वरूपप्रथनपृथुरयं सर्वदा सर्वनाथः सर्वेषां सर्वथा यो विनयविधिमहान् सर्वगुर्वर्थसि-द्धौ(।). सर्वैः सातीतगर्वैः गुरुमहिमगणैः खर्वन् (खर्वयन्) सर्वगर्वान् सर्वा. सर्वप्रदो वः सफलयतु रुचोः सर्वविन्मौलिरुर्वीः ।। ।। अतः परं पद्मपाणिमंत्रो(मन्त्रो)यं षडक्षरीनामा तदुद्धारो माहात्म्यं च ।। ।। प्रणवं पूर्वमुच्चार्य मणिपदं ततः परं. पद्मे ततो महाकालबीजं षडक्षरी मनुः ।।१।। बीजरत्नत्रयीयं तदनु मणिपदं साप्तमीयं च पद्मं. अक्षोभ्यीयं च बीजं जिनप्रकृतितनोर्मंत्र(मन्त्र) एषः षडर्णः ।। यन्माहात्म्यं जिनाद्यैः सकलसुरगणैः शक्यते नाधिगंतुं(गन्तुं). यज्जप्त्वा प्राप्यते तत् परमसुकृति-भिर्दुर्लभं बोधिसत्वं(त्वम्) ।।१।। प्रणवमिति प्रणवं(वम्). ओंका(ओङ्का)रं पूर्वं प्रथमं. उच्चार्य पठित्वा ततः परं मणिपदं मणि इति ततः पद्मे इति ततो महाकाल-बीजं हुमित्यक्षरं षद(ड)क्षरी मनुः ।। षडर्णयं (षड्वर्णीयं) पद्मपाणिमंत्र(मन्त्र): ।। ।। ॐ मणिपद्मे हुं ।। मतांत(तान्त)रं च बीजं रत्नत्रयीयमिति.**

त्यहीं एक लाख रेखा मात्र छन् अथवा रेखावली (रेखाको पङ्क्ति) छन् । त्यसबाहिर कमल, वज्र र ज्वालाका आवली-(पङ्क्ति घेरा)-हरू छन् । यसरी परिवृत (घेरिएको) छ । त्यहाँ हामी द्वापर-(युग)-मा अर्थात् कलियुग नभएको जस्तो अवस्थामा रहेका हुन्छौं ।

ॐ नमः पद्मपाणये (पद्मपाणिलाई नमस्कार) यी पद्मपाणि सबैका (प्राणिमात्रका) हुन् । सबै रूपमा प्रसिद्ध हुन सक्ने (अवतीर्ण हुन सक्ने) छन् । सधैं सबैका मालिक हुन् । सबैको सारा महान्, गहन कार्य सिद्ध गर्नको लागि सबै किसिमले विनयविधि (भिक्षुविनयको

पालन)-को दृष्टिले महान् छन् । गर्व-(घमन्ड)-ले रहित भएका, ठूलो महिमा भएका सर्वद्वारा सम्मान्य र सबै किसिमको गर्व-(सेखी, घमन्ड) तोड्न सक्ने छन् । यस खालका सर्वज्ञ, शीर्षस्थ र महान् पद्मपाणिले हाम्रा ठूला रुचि-(इच्छा, कामना)-हरू सफल पारून् ।

यसपछि पद्मपाणिको यो मन्त्र छ जसलाई षडक्षर (छ अक्षर भएको मन्त्र) भन्दछन् । त्यसको उद्धार (संस्कार) र माहात्म्यबारे चर्चा गरौं । मन्त्र हो– ॐ मणिपद्मे हुम् । यसको वर्णन गरिन्छ । पहिले प्रणव (ॐ) उच्चारण गरेर 'मणि' पद भन्नू । अनि 'पद्मे' भन्नू, अनि महाकालबीज (हुं) भन्नू । यही षडक्षर मन्त्र हो ॥१॥ यहाँ पहिले तीन बीज (अ+उ+म्) छन् । त्यसपछि 'मणि' पद छ । अनि सप्तमी विभक्ति अन्तमा भएको 'पद्म' पद छ । अनि अक्षोभ्यको बीज मन्त्र (हुं) छ । जिन-(बुद्ध)-को प्रकृतिका शरीर भएका-(पद्मपाणि)-को यो षडक्षर मन्त्र हो ॥१॥ (यसको अझ स्पष्ट व्याख्या गरिन्छ) प्रणव भनेको प्रणव ओङ्कार (ॐ) हो । पहिले त्यो उच्चारण गरेर अर्थात् पढेर त्यसपछि 'मणि' भन्ने मणिपद पढ्ने । त्यसपछि 'पद्मे' भन्ने पढ्ने । त्यसपछि महाकालको बीजमन्त्र 'हुम्' भन्ने अक्षर पढ्ने । यही नै षडक्षर मन्त्र हो । यसबाट 'ॐ मणिपद्मे हुम्' मन्त्र तयार भयो । अर्को मतले शुरुका बीज (अ+उ+म्) त्रिरत्नसँग सम्बद्ध छन् ।

।।७७।।

रा(र)त्नत्रयीयं बीज(जं) रत्नत्रयस्येदं बुद्धधर्मसंघा(सङ्घा)त्मकं. अ. उ. म् इति. ॐ इति प्रसिद्धं तदनु तदनंत(नन्त)रं मणिपदं च पुनः साप्तमीयं पद्मं सप्तम्यां-(म्याः) विभक्तेरिदं साप्तमीयं पद्मं तदेव पद्मेन पद्मे इति प्रसिद्धं पद्मं. च पुनः अक्षोभ्या(भ्यी) यं बीजं. अक्षोभ्यस्येदं बीजं हुमिति प्रसिद्धं (हुम्). जिनप्रकृतितनो-मंत्र एव षडर्ण इति ।। जिनप्रकृति. उपायप्रज्ञो(ज्ञः) तत्सकाशात्तनुः शरीरं यस्य तस्य अथवा जिनप्रकृत्योः उपायप्रज्ञयोः तनुः शरीरं यस्मातु(त्)तस्य तादृशस्य पद्मपाणेः इत्यनेन बुद्धर्म(बुद्धधर्म)संघा(सङ्घा)नामभेद एव सूचितः अथ च चर्पतिपादविरचितायां स्तुतामपि गरलव्याधिग्रहडाकिन्यः सांतिं(शान्ति) यांति-(यान्ति) सदा योगिन्यः ।। सरति न तस्य पुरो यमदूतः प्रीतो यस्य त्वं जिनभूतः इति वचनात् ।। पद्मपाणिबोधिसत्वो(त्त्वो)पि जिनभूतः अतो जिनकृत्य. उपायकृत्यं. प्रज्ञाकृत्यं संघ(सङ्घ)कृत्यं च सर्वम् करोतीत्यर्थः अथ च कारण्डव्यूहे श्रीशाक्यसिंहो विष्कंभि(ष्कम्भि)तबोधिसत्वं(त्त्वं) प्रत्याज्ञपत् पद्मपाणिर्विश्वरूपो मणिर्यथा यस्य गगनाकारशरीररोमविवरेषु त्रैधातुकानि विल-

यसलाई रत्नत्रयीय बीज पनि भन्दछन् । रत्नत्रयको अर्थात् बुद्ध, धर्म र सङ्घको यो (बीज मन्त्र) भन्ने अर्थमा 'रत्नत्रयीय' शब्द बनेको हो । यी तीन बीज हुन्– अ, उ, म् । यिनलाई एउटै ठाउँ जोड्दा (सन्धि गर्दा) ओम् (ॐ) भन्ने पद प्रसिद्ध बन्छ । 'तदनु' को अर्थ हो त्यसपछि 'मणि' पदको उच्चारण गर्ने । अनि 'साप्तमीयं पदं' को अर्थ हो– सप्तमी विभक्ति भएको पद्म पदको 'पद्मे' भनेर उच्चारण गर्ने । त्यसपछि अक्षोभ्य-(बुद्ध)-को बीज मन्त्र 'हुम्' उच्चारण गर्ने । यसलाई अक्षोभ्यीय भनिएको छ । जिनप्रकृतिको शरीर भएका-(पद्मपाणि)-को यो षडक्षर मन्त्र हो ।

जिनप्रकृतितनुको अर्थ गरौं । जिनप्रकृति भनेको उपाय र प्रज्ञाको समष्टिरूप हो । त्यसको सामीप्यबाट जसको 'तनु' अर्थात् शरीर उत्पन्न भएको छ अथवा जिन र प्रकृतिको अर्थ

हो उपाय र प्रज्ञा, ती दुईको शरीर पनि जसबाट पैदा भएको छ, त्यस्ता पद्मपाणिको भन्ने अर्थमा 'जिनप्रकृतितनो:' भनिएको हो। यसबाट बुद्ध, धर्म र सङ्घको अभेद (एकात्मकता) नै सूचित हुन्छ। साथै चर्पटीपाद-(सिद्ध)-ले बनाएको स्तोत्र-(स्तुतिमन्त्र)-मा पनि यस षडक्षर मन्त्रबाट विष, रोग, ग्रह र डाकिनी आदिका खराब परिणाम-(प्रसर)-हरू शान्त हुन्छन्, योगिनी पनि शान्त हुन्छन् भनिएको छ। त्यहाँ वर्णन के छ भने जसले षडक्षर मन्त्र जपेको छ त्यसको अगाडि यमराजका दूतहरू पनि आउने हिम्मत गर्दैनन्, किनभने त्यो मन्त्र जप्ने व्यक्ति स्वयं 'जिन' भएको छ। पद्मपाणि बोधिसत्त्व पनि जिन हुन्। त्यसैले जिन भएको अर्थ हो उपाय, प्रज्ञा र सङ्घ सबै भएको तथा सबै गराउन सक्ने।

(यसै प्रसङ्गमा अर्को कथासन्दर्भको उल्लेख गरौं। कारण्डव्यूहमा भगवान् शाक्यसिंहले विष्कम्भित (आत्तिएका) बोधिसत्त्वलाई आज्ञा गरे (भने)– पद्मपाणि भनेको विश्वको रूप धारण गर्ने मणि जस्तो हो, जसको (पद्मपाणिको) आकाशको आकार भएको शरीरका रौंका छिद्र-(प्वाल)-हरूमा तीन धातु (धर्मधातु आदि)–

संति(सन्ति). यत्र देवदैत्यमनुष्या. भूतप्रेततिर्यंचो निवसंति(सन्ति). स्थावरा जंग(जङ्ग)माश्च एकैकस्मिन् रोमविवरे असंख्येया(सङ्ख्येयाः). पर्वता(ताः). वृक्षाः समुद्रा नद्यो ग्रामा(माः). देशा(शाः). ऋषयस्तपस्विनोनेके तपस्यंति(स्यन्ति) एतादृशस्य पद्मपाणे(णे)र्मं त्रो(मन्त्रो)यं षडक्षरीनाम्ना(मा). यन्माहात्म्यं जिनाद्यैः सकलसुरगणैः शक्यते नाधिगंतु(गन्तु)मिति. यन्माहात्म्यमिति यस्य षडक्षरीमंत्रस्य माहात्म्यं महिमसमूहः जिनाद्यौ(द्यै): सकलसुरगणैः बुद्धादिभिः सकलदेवगणैः शक्यते नाधिगंतुं(गन्तुम्). इति माहात्म्यं पारं गंतुं(गन्तुं) न शक्यते. सर्वेषां भूमिसमारुहाणां पत्रसंख्यां(सङ्ख्यां). गंगा(गङ्गा)दीनां जलबिंदुसंख्या(बिन्दुसङ्ख्यां). सर्वजन्तूनां रोमसंख्यां(सङ्ख्यां). वृष्टिधारासंख्यां(सङ्ख्यां) सर्वभूमिरेणूनां संख्यां(सङ्ख्यां) शक्यते ।। न तु षडक्षरीविद्यायाः यज्जप्त्वा प्राप्यते तत् यत् षडक्षरीमंत्रं(मन्त्रं) जप्त्वा तत् प्राप्यते परमसुकृतिभिर्दुर्लभं बोधिसत्व(त्त्व)मिति ।। यत् परमसुकृतिभिः महापुण्यात्मा(त्म)भिरपि प्राप्तुं दुर्लभं तत् तादृशं बोधिसत्वं(त्त्वं) नाम बोधिज्ञानमपि प्राप्यते बोधिज्ञानाप्तये. अष्टोत्तरशतधर्मा लोकमुखा या बोधिचर्या(चर्या) पूरणीया. तज्जपादेवैतादृशंबोधिज्ञान(नं) प्रा–

शोभित छन्। जहाँ देवता, दैत्य र मनुष्य तथा भूत, प्रेत र तिर्यक्-(तेर्सो परी हिंड्ने पशु, पक्षी आदि)-हरू बस्छन्। स्थावर (अचल संसार) र जङ्गम (चल संसार) पनि एकाएक

रोमविवर-(रौंको प्वाल)-मा छन् । असङ्ख्य (अनगिन्ती) पर्वत, वृक्ष, समुद्र, नदी, गाउँ र देशहरू जहाँ छन् । धेरै तपस्वी ऋषिहरू जहाँ तपस्या गर्छन् । यस खालका पद्मपाणिको मन्त्र हो षडक्षर मन्त्र । जसको महत्त्व जिन आदि सबै देवताहरू नै पनि वर्णन गर्न सक्दैनन् । (अझ स्पष्ट गरौं) 'यन्माहात्म्यम्' को अर्थ हो– जुन षडक्षर मन्त्रको माहात्म्य भन्ने । जिन आदि गरेका सबै देवताहरू अर्थात् बुद्ध आदि सबै देवताहरू जसको माहात्म्य 'नाधिगन्तुं शक्यते' अर्थात् पार जान (ठम्याउन) सक्दैनन् । बरु सबै वनस्पतिका पातहरू गन्न सकिएला, गङ्गा आदि ठूला नदीका जलबिन्दु (पानीका थोपा) गन्न सकिएलान्, सबै प्राणीका रौं गन्न सकिएलान् अथवा वृष्टिको धाराको सङ्ख्या र सबै पृथ्वीको धूलाको सङ्ख्या गन्न सकिएला । तर षडक्षरी विद्याको (मन्त्रको) माहात्म्य-वर्णन गर्न सकिंदैन । 'यज्जप्त्वा प्राप्यते'-को अर्थ हो जुन षडक्षर मन्त्र पढेर महान् धर्मात्माहरू पनि दुर्लभ (पाउन नसकिने) बोधिसत्त्व प्राप्त गर्न सक्छन् ।

अझ स्पष्ट गरौं– जुन जपेर परमसुकृति अर्थात् ठूला भण्यात्माहरू पनि पाउन दुर्लभ (मुश्किल) बोधिसत्त्व अर्थात् बोधिज्ञान (बुद्धदर्शनसम्बन्धी ज्ञान) प्राप्त गर्न सक्छन् । बोधिज्ञानको प्राप्तिको लागि एक सय आठ (१०८) लोकमुख जसलाई बोधिचर्या (बोधिज्ञानको पूजा) भन्दछन् त्यो पनि पूरा गर्नुपर्छ । त्यो जप गरेर यस खालको बोधिज्ञान

प्यते इति शाक्यसिंहेनाज्ञप्तं मंत्र(मन्त्र)माहात्म्यमित्यलं विस्तरेण ॥ ॥ अदीक्षितेन मंड(मण्ड)लं न दर्शनीयं(यम्). अदृष्टमंड(मण्ड)लेन मंत्रं(मन्त्रं) न श्रवणीयमिति ॥ ॥ एतस्यां पट्टिकायां. उर्द्ध्वपं(पङ)क्तिमध्ये यो बुद्ध(द्धः)· स वैरोचननामा तस्य ध्यानं साधनमालायां पूजाकांडे(काण्डे) स्वभावशुद्धा(द्धाः). सर्वधर्माः स्वभावशुद्धा(द्धाः) वयं. शून्यतानंत(नन्त)रं स्वस्वबीजाक्षरसमुद्भूतानिलानलजलावनीमंडलौ(मण्डलो)परि स्वबीजाक्षरसमुत्पन्नं सुमेरुमंड(मण्ड)लं. स्वबीजाक्षरसिद्धं कूटागारं रत्नमयं तन्मध्ये विश्वकमलकर्णिकास्थितसिंहासनोपरि. धर्मचक्रं. तदुपरि कमलं कर्णिकायां वज्रासमा(ना)धिष्ठितं वैरोचनं सक्य(म्य)क्संबुद्धं-(सम्बुद्धम्). एकमुखं. हिमरजतवर्णं द्विनयनं प्रदक्षिणावर्त्त कुंचि(कुञ्चि)तकेशं द्वात्रिंशल्लक्षणाशीत्यनुव्यंज(व्यञ्ज)नालं(लङ)कृतं सोष्णीषं. द्विभुजं. धर्मचक्रमुद्राधरं. हृत्प्रदेशे विचित्रचीवरनिवसनं रोमविवरोद्गतकिरणोज्व(ज्ज्व)लं भगवंतं-(वन्तं) विभावयेत् ॥१॥ तस्य दक्षभागे अक्षोभ्यनामा बुद्धः ॥ तस्य ध्यानं च स्वस्वबीजाक्षरसमुद्भूतानिलानलजलावनीमंड(मण्ड)लोपरि स्वबीजाक्षरसमुत्पन्नसुमेरुमं–

पाइन्छ भनेर शाक्यसिंहले भनेका छन् । मन्त्रको माहात्म्य यही हो, बढी विस्तारमा वर्णन नगरौं ।

अदीक्षित-(दीक्षामन्त्र नसुनेको)-ले मण्डलको दर्शन गर्नु हुँदैन । मण्डलको दर्शन नगरेकाले मन्त्रश्रवण (मन्त्र सुन्ने काम) गर्नु हुँदैन । यस पट्टिका-(भाग, पाटो)-मा माथिल्लो पङ्क्तिको बीचमा जुन बुद्ध छन् ती वैरोचन नाम गरेका हुन् । यिनको ध्यान साधनमाला-(ग्रन्थ)-को पूजाकाण्ड-(पूजाविधि भएको अध्याय)-मा वर्णन गरिएको छ । सबै धर्महरू स्वभावैले शुद्ध (पवित्र) छन्, हामी (ज्ञानप्राप्त व्यक्ति) पनि स्वभावैले शुद्ध छौं । शून्यताको पछि आ-आपना बीजाक्षरबाट पैदा भएका वायु, अग्नि, जल र पृथ्वीको मण्डलको माथि

आ-आपनो बीजाक्षरबाट उत्पन्न सुमेरुमण्डल छ। साथै आपनो बीजाक्षरबाट सिद्ध भएको तथा रत्नजडित कूटागार (माथिको कोठा) छ। त्यसको माझमा विश्वकमलको कर्णिकामाथि रहेको सिंहासनमाथि धर्मचक्र छ, त्यसमाथि कमल छ। कर्णिकामा वज्रासनमा बसेका वैरोचन नामका सम्यक् (श्रेष्ठ) सम्बुद्ध छन्। यी वैरोचन बुद्ध एक मुख, हिउँ र चाँदीजस्तो सेतो वर्ण, दुई आँखा, दाहिनेतर्फबाट केश घुम्रेका, बत्तीस लक्षण र अस्सी अनुव्यञ्जनले शोभित भएका, उष्णीष (फेटा, पगरी) पहिरेका, दुई हात भएका, हृदयछेउ दुवै हातले धर्मचक्रमुद्रा धारण गरेका, विचित्र खालको चीवर (काषाय वस्त्र) पहिरेका, रौंका छिद्रबाट निस्केका किरणले चम्केका छन्। यस खालका वैरोचन भगवान्को ध्यान गरोस् ॥१॥ यिनको दाहिने भागमा अक्षोभ्य नाम गरेका बुद्ध छन्। यिनको ध्यानको पनि वर्णन गरिन्छ। आ-आपनो बीजाक्षरबाट पैदा भएका वायु, अग्नि, जल र पृथ्वीको मण्डलमाथि आपनो बीजाक्षरबाट उत्पन्न सुमेरु–

ड(मण्ड)लं स्ववीजाक्षरसिद्धं कूटागारं रत्नत्रयमयं तन्मध्ये. विश्वकमलकर्णिका-स्थितगजराजोपरि वज्रं तदुपरि कमलकर्णिकायां वज्रासनाधिष्ठितं(तम्). अक्षोभ्यं. सम्यक्संबुद्धं(द्धम्). एकवदनं. सजलजलदवर्णध्यानद्विनयनं सोष्णीषं प्रदक्षि-णावर्तकुंचि(कुञ्चि)तकेश(शं) द्वात्रिंशल्लक्षणाशीत्यनुव्यंज(व्यञ्ज)नालं(लङ्)कृतं. द्विभुजं भूमिस्पर्शमुद्राधरं. विचित्रचीवरालं(लङ्)कृतं निवसनं रोमविवरोद्‌गतकिर-णोज्व(ज्ज्व)लं भगवंतं(वन्तं) विभावयेत् ॥२॥ तस्य दक्षपार्श्वे रत्नसंभ(सम्भ)व-नामा वु(बु)द्धः पूर्ववत् ॥ हयराजोपरि रत्नं तदुपरि कमलकर्णिकायां वज्रासना-धिष्ठितं. रत्नसंभ(सम्भ)वनामा वु(बु)द्धः ॥ तस्य ध्यानं(नम्) ॥ स्वस्ववीजाक्षर. एकवदनं कांच(काञ्च)नवर्णं. ध्यानद्विनयनं प्रदक्षिणावर्त्तकुंचि(कुञ्चि)तकेशं सोष्णीषं द्वात्रिंशल्ल. (ल्लक्षणधरं) द्विभुजं. वरद. विचित्रचीवरनिवसनं रोमविवरो-द्‌गतकिर. (किरणोज्ज्वलं) भगवंतं(वन्तं) विभावयेत् ॥३॥ ··· ··· वामभागे अमिताभनामा बुद्धः ॥ तस्य ध्यानं स्वस्ववीजाक्षरोद्‌भूता(त) वाद्य(यव)ग्निजल-भूमयः तदूद्ध्वं कांच(काञ्च)नागिरि. तन्मध्ये रत्नमंदिरं(मन्दिरम्) ॥ तत्र नीलकण्ठासनं तत्र पद्मं च प–

मण्डल छ, आपनै बीजाक्षरबाट सिद्ध भएको छ। त्यहाँ तीन रत्नले जडित अथवा त्रिरत्नले तुल्य कूटागार (माथिल्लो कोठा) छ। त्यसको माझमा विश्वकमलको कर्णिकामाथि स्थित गजराजको (हात्तीको) माथि वज्र छ, त्यसमाथि कमलको कर्णिकामा वज्रासनमा बसेका अक्षोभ्य नामका सम्यक् (श्रेष्ठ) सम्बुद्ध छन्। यी एक मुख र पानीसहितको बादल जस्तो श्यामवर्ण भएका,

ध्यानमा लीन भएका, दुई आँखा भएका उष्णीष (पगरी) पहिरेका, दाहिनेतर्फबाट घुम्रेको केश भएका, बत्तीस लक्षण र असी अनुव्यञ्जनले अलङ्कृत भएका, दुई हात भएका, भूमिस्पर्शमुद्रा धारण गर्ने, विचित्र चीवर (कापायवस्त्र) पहिरेका, रौंका छिद्रबाट निस्केका किरणले उज्ज्वल भएका छन्। यस खालका भगवान् अक्षोभ्य बुद्धको ध्यान गरोस् ॥२॥ यसको दाहिने बगलमा रत्नसम्भव नाम गरेका बुद्ध छन्, अरू पहिलेजस्तै। हयराज-(उत्तम घोडा)-माथि रत्न छ, त्यसमाथि कमलको कर्णिकामा वज्रासनमा बसेका रत्नसम्भव नाम गरेका बुद्ध छन्। तिनको ध्यानबारे चर्चा गरौं। आ-आफ्नो बीजाक्षरबाट उत्पन्न वायु, अग्नि, जल र पृथ्वीको मण्डलको माथि आफ्नो बीजाक्षरबाट उत्पन्न सुमेरुमण्डल छ आदि माथिजस्तै। यिनी एक मुख, सुनको जस्तो वर्ण र ध्यानमुद्राका (केहीं चिम्लेका) दुई आँखा भएका छन्। दाहिनेतर्फबाट केश घुम्रेका छन्। उष्णीष (पगरी) पहिरेका, बत्तीस लक्षणले युक्त, दुई हात भएका र वरद र अभय मुद्रा लिएका, विचित्र चीवर (भिक्षुवस्त्र) पहिरेका, रोमका छिद्रबाट उत्पन्न किरणले शोभित भएका छन्। यस्ता रत्नसम्भव बुद्धको ध्यान गरोस् ॥३॥ .... बायाँ भागमा अमिताभ नाम गरेका बुद्ध छन्। यिनको ध्यान हो। आ-आफ्नो बीजाक्षरबाट पैदा भएको वायु, अग्नि, जल र भूमिका मण्डल छन्। त्यसमाथि काञ्चनगिरि (सुवर्णपर्वत) छ। त्यसको माझमा रत्नमन्दिर छ। त्यहाँ नीलकण्ठासन (नीलकण्ठको आसन) छ। त्यहाँ पद्म (कमल) पनि छ।

धर्म :

॥७९॥

द्म कर्णिका तस्यां वज्रासनासीनममितो(ता)भं तथागतं(तम्). एकवक्त्रं. द्विनयनं-(न)मरुणारुणभास्वरं. प्रदक्षिणाकुंचि(कुञ्चि)तकेशं सोष्णीषं चीवरावृतं. द्वात्रिंशल्लक्षणाशीतिव्यंज(व्यञ्ज)नालं(लङ)कृतोज्व(ज्ज्व)लं. रोमविलोद्गतानंता-(नन्ता)भाविका(क)शितदिङमुखम् ॥४॥ तद्वामे अमोघसिद्धनामा बुद्धः ॥ ध्यानं(नम्) ॥ बीजोद्भूतसमीरपाचकपयः क्ष्मामंड(मण्ड)लं मण्डलं मेरोर्मध्यरत्न-कूटनिलयं तन्मध्य.(ध्ये)तांगारुड(नागारूढ)पर्यंकं(र्यङ्कं) विलसच्च विश्व-कुलिशं कौशेसयं वासनं वज्राख्यासनसंस्थितं सफलसिद्धाख्यं जिनं भावये॥१॥ एकं वक्त्रं च वर्णं मरकतसदृशं ध्यानदृष्टिद्वयं च सोष्णीषं स्निग्धनालं शिरसिरुहचयां चाभयामुद्रया युक् ॥ द्वात्रिंशल्लक्षणाढ्यं वपुरमितकरं यस्यमोघा(घ)सिद्धे निवसनसहितं चीवरं भावयत्तं(यन्तम्) ॥२॥४॥ द्वितीयपं(लङ)क्तौ प्रथमदक्षे अभयकेतुनामा बु(बु)द्धः ॥ तस्य ध्यानं(नम्) ॥ एकवक्त्रं स्वर्णवर्णं ध्याननेत्रं द्वयं विभुं(भुम्) ॥ प्रदक्षिणाकुंच(कुञ्च)केशं द्वात्रिंशल्लक्षणोज्वलं(ज्ज्वलम्). द्विकरं दक्षहस्तेन हृत्प्रदेशाभयांकितं(भयाङ्कितम्) ॥ वामेन वरदं दिव्यं निवास-चीवरावृतं(तम्) ॥२॥ पद्मे वज्रासनासीनं भावयेदभयध्वजं(जम्) ॥ जगदभयदा-नार्थं भावयेद्वि(द्वि)पदोत्तमं(मम्) ॥३॥६॥

त्यहाँ पद्मकर्णिका छ । त्यहाँ वज्रासनमा बसेका अमिताभ तथागत छन् । यिनी एक मुख र दुई आँखा भएका अरुणजस्तै लाल रूपले चम्किला, दाहिनेपट्टि घुम्रेको केश भएका, उष्णीष (पगरी) धारण गरेका, चीवर (गेरुवा वस्त्र) पहिरेका, बत्तीस लक्षण र असी व्यञ्जनले अलङ्कृत र उज्ज्वल भएका, रौंका छिद्रबाट निस्केका अनन्त (धेरै) प्रकाशले दिङमुख (दिशातर्फ फर्केको मुख) विकसित भएका छन् । यी अमिताभ बुद्धको ध्यान गरोस् ॥४॥ यिनको बायाँतर्फ अमोघसिद्धि नाम गरेका बुद्ध छन् । यिनको ध्यान हो । बीजबाट पैदा भएका वायु, अग्नि, जल र पृथ्वीका मण्डल छन् । त्यसमा सुमेरुमण्डल छ । बीचमा रत्नकूट नामको

निलय (घर, कोठा) छ। त्यसको बीचमा नागमाथि रहेको पलङ छ। त्यहाँ विश्ववज्र शोभित छ। काषायवस्त्र पहिरेका, उक्त ठाउँमा रहेका, वज्रासनमा स्थित सफल सिद्ध नाम गरेका जिन-(उक्त अमोघसिद्धि बुद्ध)-लाई ध्यान गरोस् ॥१॥ यी अमोघसिद्धि एक मुख र मणिको जस्तै वर्ण भएका, ध्यानमग्न दुई आँखा भएका, उष्णीष (पगरी) पहिरेका, सुन्दर, केशको थुप्रो (जटा) भएका, अभयमुद्रा धारण गर्ने, बत्तीस लक्षणले युक्त, चीवर पहिरेका छन्। यिनको उक्त सुन्दर शरीरको ध्यान गरोस् ॥२॥४॥ दोस्रो पङ्क्तिमा सर्वप्रथम दाहिनेतर्फ अभयकेतु नाम गरेका बुद्ध छन्। यिनको ध्यान हो– एक मुख र सुनको जस्तो वर्ण भएका, ध्यानमग्न दुई आँखा भएका, दाहिनेतर्फ घुम्रेको केश भएका, बत्तीस लक्षणले शोभित, दुई हात भएका दाहिने हातले हृदयछेउ अभयमुद्रा लिएका, बायाँ हातले वरदमुद्रा धारण गरेका चीवरवस्त्र पहिरेका छन् उक्त अभयकेतु वा अभयध्वज नामका बुद्ध। यी अभयध्वज (अभयकेतु) पद्म-वज्रासनमा बसेका छन् र संसारलाई अभयदान गर्ने खालका छन्। दुई पाउ भएका, यिनको भजन गरोस् ॥५॥६॥

**तद्वामे शाक्यसिंहनामा बुद्धः ॥ यो जात इत्यादि ॥ एकं मुखं कांच(काञ्च)न-वर्णमुज्व(ज्ज्व)लं ध्यानिद्विनेत्रं द्विभुजं धरित्रीं स्पृशंत(शन्त)मीशं जगदुद्धरंतं-(रन्तं) द्वात्रिंशल(ल्ल)क्षणयुतं स्मर शाक्यसिंहं(हम्) ॥१॥ केषांचि(षाञ्चि)न्मते स्वभावनाना(नामा)ऽक्षोभ्यबुद्धः ॥७॥ तद्वामपार्श्वे चतुर्णां मध्ये त्रयो बुद्धाः अमिताभनामानः ॥ तेषां ध्यानं तु ॥ एकाननं द्विनयनं ध्यानदृष्टि मुनीश्वरं(रम्) ॥ सोष्णीषाकुंचि(कुञ्चि)ताकेशं(श)मरुणवर्णं महोज्वलं(ज्ज्वलम्) ॥ द्विहस्तं ध्यानमुद्रांकं(द्राङ्कं) कनकरत्नमेखलं· वज्रासनस्थं कमले अमिताभं विभावयेत् ॥२॥ तत्त्वप्रभावतोनै(ने)कप्रकाराणि ध्यानानि संति(सन्ति). द्विभुजमारभ्य सहस्रभुजांतं(जान्तं) कार्यकारणतः स्थानविशेषतः कर्मविशेषतः ॥८॥९॥१०॥ तद्वामे अक्षोभ्यनामा बुद्धः केषांचि(षाञ्चि)न्मते शाक्यसिंहनामा बुद्धः ॥ ध्यानं-(नम्) ॥ एकमेव ॥ अक्षोभ्यस्य ध्यानं लिखितं(तम्) ॥ शाक्यसिंहस्यापि लिखितं पूर्वं(र्वम्) ॥११॥ तृतीयप (पङ्)क्तौ प्रथमदक्षे नृत्यकेतुनामा बुद्धः ॥ ध्यानं(नम्) एकवक्त्रं ध्याननेत्रद्वयं कांच(काञ्च)नवर्णकं द्वात्रिंशल्लक्षणोपेतमशीत्यनुव्यंज-(व्यञ्ज)नान्वितं(तम्) ॥१॥ नृत्यमुद्रांकि(द्राङ्कि)तकरं रत्नकांच(काञ्च)नवे-(मे) खलं. विचित्रचीवर(रा)–**

त्यसको बायाँतर्फ शाक्यसिंह नाम गरेका बुद्ध छन्। 'यो जात' इत्यादिले चर्चा गरिएका छन्। एक मुख र सुनको जस्तो उज्ज्वल वर्ण भएका, ध्यानमग्न (अर्धमुदित) दुई आँखा भएका, दुई

हात भएका, भूमिस्पर्श गरेका, ईश्वरस्वरूप तथा बत्तीस लक्षणले युक्त शाक्यसिंहको स्मरण (ध्यान) गर्नुपर्छ ॥१॥ कसैको मतमा स्वभाव नाम गरेका अक्षोभ्य बुद्ध हुन् यिनी। यिनको बायाँ बगलमा रहेका चार बुद्धमध्ये तीन बुद्ध अमिताभ नाम गरेका हुन्। तिनीहरूको ध्यान हो- एक मुख र दुई आँखा भएका, ध्यानमुद्राको दृष्टि (आँखा) गरेका, मुनि-(ऋषि)-हरूमा श्रेष्ठ, उष्णीष पहिरेका, घुम्रेको बाल भएका, अरुणजस्तै लाल वर्णका, ज्यादै उज्ज्वल, दुई हात भएका र दुवै हातले ध्यानमुद्रा सूचित गरेका, सुनको तथा रत्नको मेखला (अधोवस्त्र) पहिरेका, अनि कमलमाथि वज्रासनमा बसेका अमिताभ बुद्धको ध्यान गरोस् ॥२॥ तत्त्वको दृष्टिले अनेक किसिमका ध्यानहरू छन् ॥ जस्तो कि दुई हातदेखि लिएर हजार हातसम्म तथा कार्यकारणले (उद्देश्यविशेषले) स्थानविशेषले र कर्मविशेषले पनि ॥८॥९॥१०॥ यिनको बायाँ भागमा अक्षोभ्य नाम गरेका बुद्ध छन्। कसैको मतमा शाक्यसिंह नाम गरेका बुद्ध छन्। ध्यान एउटै हो। अक्षोभ्यको ध्यान लेखिसकिएको छ। शाक्यसिंहको ध्यान पनि पहिले लेखियो ॥११॥ तेस्रो पङ्क्तिमा पहिलो दाहिनेतर्फ नृत्यकेतु नाम गरेका बुद्ध छन्। ध्यान हो- एक मुख र ध्यानमग्न दुई आँखा भएका, सुनको वर्ण भएका, बत्तीस लक्षण र अस्सी अनुव्यञ्जनले युक्त ॥१॥ हातले नृत्यको मुद्रा गरेका, रत्न र सुनको मेखला पहिरेका, पनि विचित्र खालको चीवर (काषायवस्त्र)

वृतं नृत्यकेतुं· विभावयेत् ॥२॥ मतांत(तान्त)रे शाक्यसिहं(हम्)· भाषया क्वाचपालदेवं(वम्) इति लोकाचारे ॥ शाक्यसिंह एव ॥ मारभंगांते(भङ्गान्ते) बोधिसत्व(त्त्व)गणप्रमोदने किंचि(किञ्चित्) क्षणं नृत्यन् विजयते ॥१२॥ ॥ तद्वामे मुद्राकेतुनामा ॥ तस्य ध्यानं(नम्)·॥ एकमुखं ध्याननेत्रद्वये(यं) कुंचि(कुञ्चि)तकेशि(श)कं सोष्णीषं लक्षणैर्युक्तं(क्त)मशीतिव्यंज(व्यञ्ज)नान्वितं द्विकरं हृत्प्रदेशे च पाणिभ्यां पुष्पमुद्रिकां(काम्). विचित्रचीवरधरं वज्रासने कुशेशये ॥२॥ मुद्राकेत्वमिमं वु(बु)द्धं तथागतं मुनीश्वरं षडभिज्ञं दशबलं विनायकं विभावयेत् ॥३॥१३॥ तद्वामे शाक्यसिंहबुद्धः। नैरंज(रञ्ज)नातटे पाणिहताभिधसरस्तटे स्नात्वोत्थितनिर्वसनं सन्मार्जनपरं वरं ॥१॥ भूमिदेव्याढौकितेस्मिन् पद्म(द्म)वज्रासनस्थितं द्वात्रिंशल्लक्षणाशीतिव्यंज(व्यञ्ज)नालं(लङ्)कृतं स्मर ॥२॥१४॥ मतांत(तान्त)रे प्रवृत्त्यर्थं शून्यनिरंज(रञ्ज)ननामा वैरोचनः ॥१४॥ तद्वामे शाक्यसिंहनामा बुद्ध(द्धः)· ध्यानं(नम्). तारायणवने वृष्टिवाताहतविकंपि(कम्पि)तं· नागैर्वेष्टितसर्वांगं(र्वाङ्गं) पिंड(पिण्ड)पात्रधरं प्रभुं(भुम्) ॥१॥ एकवक्त्रं ध्याननेत्रं द्विभुजं ध्यानमुद्रितं(तम्). विचित्रचीवरवृतं द्वात्रिंशल्लक्षणो–

पहिरेका नृत्यकेतुको ध्यान गरोस् ॥२। अर्को मतमा यिनलाई शाक्यसिंह भन्दछन्, लोकाचारमा (व्यवहारमा) भाषाले 'क्वाचपालदेव' भन्दछन्। यिनी शाक्यसिंह नै हुन्। मार-(कामदेव)-को भङ्ग (नाश) गरेपछि बोधिसत्त्वहरूको गणलाई खुशी गराउन केही समय नाचेर यी शाक्यसिंह शोभित हुन्छन् ॥१२॥ यसको बायाँतर्फ मुद्राकेतु नाम गरेका (बुद्ध) छन्। यिनको ध्यान हो– एक मुख भएका, ध्यानमग्न दुई आँखा भएका, केश घुम्रेका, उष्णीष (पगरी) पहिरेका, धेरै लक्षण र अस्सी व्यञ्जनले युक्त भएका, दुई हात भएका, हृदयछेउ दुई हातले पुष्पमुद्रिका (फूलको गुच्छा) धारण गरेका, विचित्र चीवर पहिरेका, कमलमाथि वज्रासनमा बसेका छन् ॥२॥ यी मुद्राकेतु नामका बुद्ध जसलाई तथागत, मुनीश्वर (श्रेष्ठ मुनि), षडभिज्ञ

(छ प्रकारको अभिज्ञा वा विशेष ज्ञानमा पारङ्गत), दशबल र विनायक (विशिष्ट नायक) आदि पनि भन्दछन् । यिनै मुद्राकेतुको ध्यान गरोस् ।।३।।१३।। यिनको बायाँतर्फ शाक्यसिंह बुद्ध छन् । जुन बुद्ध नैरञ्जना-(नदी)-को तीरमा पाणिहत नाम गरेको तलाउको किनारमा भर्खरै स्नान गरेर खडा भएका, खाली शरीर (वस्त्ररहित शरीर) स्नानपछि सम्मार्जन गरेर (पुछेर) बसेका, भूमिदेवीद्वारा पूजा गरिएको, कमलमाथि वज्रासनमा बसेका, अनि बत्तीस लक्षण र असी व्यञ्जनले युक्त थी शाक्यसिंहको स्मरण (सम्झना, ध्यान) गर्नुपर्छ ।।२।।१४।। अर्को मतमा प्रवृत्तिमार्गको लागि यिनी नै शून्यनिरञ्जन नामका वैरोचन (बुद्ध) हुन् ।।१४।। यिनको बायाँतर्फ शाक्यसिंह नाम गरेका बुद्ध छन् । यिनको ध्यान हो– नारायण नामको वनमा वर्षा र आँधीको वेगले कामेका, नागले सबै अङ्ग बेरिएका र पिण्डपात्र धारण गर्ने प्रभु हुन् यिनी शाक्यसिंह ।।१।। यिनी एक मुख भएका, ध्यानमग्न आँखा भएका, दुई हात भएका, हातले ध्यानमुद्रा धारण गरेका, विचित्र चीवर पहिरेका, बत्तीस लक्षणले

ज्वलं(ज्ज्वलम्) ।।२।। सहस्रपत्रसरसीरुहवज्रासनाश्रितं(तम्). नगदुद्धरणाकां-(काङ)क्षं शाक्यसिंहं विभावयेत् ।।३।। तस्य ध्यानं तु मतांतरतोतरतो(मतान्तरतो) बहु नागार्जुनसिद्धोपि. अमिताभनामा बुद्धोपि. अमोघसिद्धिरपि स्वभावतः ।।१५।। तद्वामे वदद(वरद)केतुनामा बुद्धः ।। ध्यानं(नम्) ।। एकाननं युग्मनेत्रं सोष्णीषं केशकुंचि(कुञ्चि)तं. द्वात्रिंशल्लक्षणधरं(र)मशीतिव्यंज(व्यञ्ज)नान्वितं(तम्) ।।१।। वरमुद्राधरं द्वाभ्यां कराभ्यां जगदुद्धरे ।। वज्रासनं तामरसे वरदकेतुं विभावयेत् ।।२।। रत्नसंभ(सम्भ)वनामा अक्षोभ्यनामा स्वभावतो ध्यानं कार्यवशाच्च ।।१६।। तद्वामे कुसुमकेतुनामा बुद्धः ध्यानं(नम्). एकवदनं द्विनयनं ध्याननिमी-लितं द्वात्रिंशन्महापुरुषलक्षणाशीत्यनुव्यंज(व्यञ्ज)नालं(लङ)कृतं. द्विभुजं. दक्षेण जान(नु)स्थाने वरदमुद्रा. वामेन जानुस्थाने विचित्रकुसुममंजरी(मञ्जरी) बिभ्राणं कमलोपरि कुलिशासनासीनं भगवंतं(वन्तं) कुसुमेतुं(कुसुमकेतुं) सम्यक्संबुद्धं विभावयेत् ।।१७।। यन्नामोच्चारणात् पूजोपचारशुद्धिमाप्नुयात् ।।१७।। तद्वामे गुप्तकेतुनामा । ध्यानं(नम्). एकवक्त्रं महारजतवर्णं ध्यानलोचननिमीलितद्वयं (ध्याननिमीलितलोचनद्वयं) द्वात्रिंशंलक्षणा(द्वात्रिंशल्लक्षणा)शीत्यनुव्यंज(व्यञ्ज)–

उज्ज्वल भएका छन् । हजार पत्र भएको कमलमाथि वज्रासनमा बसेका, अनि संसारको उद्धार गर्ने इच्छा राखेका यिनै शाक्यसिंहको ध्यान गरोस् ।।३।। यिनको ध्यान अरू मतहरूबाट धेरै प्रकारको छ । यिनै शाक्यसिंहलाई नागार्जुन नाम गरेका सिद्ध, अमिताभ नाम गरेका बुद्ध र

स्वभावैले अमोघसिद्धि पनि भन्दछन् ॥१५॥ यिनको बायाँतर्फ वरदकेतु नाम गरेका बुद्ध छन् । यिनको ध्यान हो– एक मुख र दुई आँखा भएका, उष्णीष (पगरी) पहिरेका, धुम्रको केश भएका, बत्तीस लक्षण धारण गर्ने असी व्यञ्जनले युक्त भएका छन् वरदकेतु बुद्ध ॥१॥ यिनले संसारको उद्धारको लागि दुवै हातले वरदमुद्रा धारण गरेका छन् । कमलमाथि वज्रासनमा बसेका यी वरदकेतु बुद्धको ध्यान गरोस् ॥२॥ रत्नसम्भव र अक्षोभ्य नामका बुद्धको पनि स्वभावैले, अनि कार्यको वशले (कार्यविशेषले) ध्यान गरोस् ॥१६॥ यिनको बायाँतर्फ कुसुमकेतु नाम गरेका बुद्ध छन् । ध्यान हो– एक मुख र दुई आँखा भएका, ध्यानको लागि आँखा चिम्लेका, महापुरुषका बत्तीस लक्षण र असी अनुव्यञ्जनले शोभित भएका, घुँडाछेउ पुऱ्याएको दाहिने हातले वरदमुद्रा र घुँडामै पुऱ्याएको बायाँ हातले विचित्र फूलको मञ्जरी लिएका र कमलमाथि वज्रासनमा बसेका छन् यी कुसुमकेतु बुद्ध । यस्ता सम्यक् सम्बुद्ध स्वरूप कुसुमकेतुको ध्यान गरोस् ॥१७॥ जसको नामको उच्चारण गर्नाले पूजा, उपचार (सेवा, ध्यान)-को लागि शुद्ध भइन्छ ॥१७॥ यिनको बायाँतर्फ गुप्तकेतु नाम गरेका बुद्ध छन् । यिनको ध्यान हो– एक मुख र सुनको जस्तो वर्ण भएका, ध्यानमग्न दुई आँखा चिम्लेका, बत्तीस लक्षण र असी अनुव्यञ्जनले

धर्म :

॥८१॥

नालं(लङ्)कृतं निरलंका(लङ्का)रविचित्रचीवरनिवसनधरं द्विभुजं रहस्यमुद्राधरं कमलोपरि वज्रासनं(नम्) ॥ गुप्तकेतुनामानं सम्यक् संबु(सम्बु)द्धं तथागतं बुद्धं भगवंतं(वन्तं) विभावयेत् ॥१८॥ तद्वामे नागाभिभूनामा तथागतः। ध्यानं-(नम् ॥). एकाननं सप्तफणाशिरस्कं सुवर्णवर्णं नयनद्वयं तं. द्वात्रिंशल(ल्ल)क्षणयुतं द्विभुजं धर्मचक्रमुद्राधरं चीवरवस्त्रशोभं(भम्) ॥१॥ विभावयेद् बाहुयुगं सधर्मचक्राख्यमुद्रालसितं मुनीशं नागाभिभूनामतथागतं तं विचित्र चीरासनं (चीवरवसनं) मुनीशं रक्तारविन्दोपरि वज्रसंस्थं ...... ॥१९॥ तद्वामे मंग(मङ्ग)लनामा बुद्धः एकमुखं. द्विनयनं. जांबु(जाम्बू)नदसमप्रभं कृतांज(ताञ्ज)ल्यभिधां मुद्राधरं मंग-(मङ्ग)लसंज्ञकं(कम्) ॥१॥ विचित्रचीवरावीतं(न्वितं) द्वात्रिंशल्लक्षणोज्व(ज्ज्व)-लं वज्रासनस्थं कमलं भावयेन्मंग(मङ्ग)लेश्वरं(रम्) ॥२॥२०॥ तद्वामे सर्वाभिभूनामा बुद्धः सर्वाभिभूनामबुद्धमेकास्यं लोचनद्वयं. द्वात्रिंशल्लक्षणाशीतिव्यंज-(व्यञ्ज)नालं(लङ्)कृतोज्वलं(ज्ज्वलम्) ॥१॥ द्वाभ्यां कराभ्यां पृथिवीस्पर्शमुद्राधरं गुरुं. विचित्रचीवरावीतं(न्वितं) भावयेद्वि(द्द्वि) पदोत्तमं(मम्) ॥२॥२१॥ तद्वामे सौभाग्येश्वरनामा

अलङ्कृत भएका, अन्य आभूषण नपहिरेका, विचित्र खालको चीवर (गेरुवा वस्त्र) धारण गरेका, दुई हात भएका र रहस्यमुद्रा धारण गरेका छन् गुप्तकेतु नामका बुद्ध । कमलमाथि वज्रासनमा बसेका सम्यक् सम्बुद्ध रूपले प्रसिद्ध यी तथागत भगवान् गुप्तकेतुको ध्यान गरोस् ॥१८॥ यिनको बायाँतर्फ नागाभिभू नाम गरेका तथागत छन् । यिनको ध्यान हो– एक मुख भएका, सात फणा भएको शिर भएका सुनको जस्तो वर्ण भएका, दुई आँखा भएका, बत्तीस लक्षणले युक्त, दुई हात भएका, धर्मचक्रमुद्रा धारण गर्ने काषायवस्त्रले शोभित भएका छन् नागाभिभू नाउँका तथागत (बुद्ध) ॥१॥ धर्मचक्रमुद्रासहित दुई बाहु (हात) भएका, विचित्र चीवर (वस्त्र) पहिरेका, रातो कमलमाथि वज्रासनमा बसेका यी नागाभिभू नामका तथागतको

ध्यान गरोस् ॥१६॥ यिनको बायाँतर्फ मङ्गल नाउँ गरेका बुद्ध छन् । यिनी एक मुख र दुई आँखा भएका, सुनको जस्तो वर्ण भएका, कृताञ्जलिमुद्रा (हात जोडेको मुद्रा) धारण गरेका मङ्गल नामका बुद्ध हुन् ॥१॥ विचित्र चीवर (वस्त्र) पहिरेका, बत्तीस लक्षणले युक्त तथा कमलमाथि वज्रासनमा बसेका यी मङ्गलेश्वर-(मङ्गलबुद्ध)-को ध्यान गरोस् ॥२॥२०॥ यिनको बायाँतर्फ सर्वाभिभूनाम गरेका बुद्ध छन् । यी एक मुख र दुई आँखा भएका, बत्तीस लक्षण र अस्सी व्यञ्जनले शोभित भएका छन् । ॥१॥ दुई हातले भूमिस्पर्शमुद्रा धारण गरेका, गुरुको रूपमा रहेका, विचित्र चीवर पहिरेका, अनि द्विपद-(दुई पाउ भएका मनुष्य, देवता आदि)-मध्ये श्रेष्ठ यी सर्वाभिभू बुद्धको ध्यान गरोस् ॥२॥२१॥ यिनको बायाँतर्फ सौभाग्येश्वर नाम गरेका

**तथागतः ॥ ध्यानं(नम्) ॥ शु(सु)भगेश्वरनामानं सम्यक्संबुद्धमीश्वरं(रम्). एकतुण्डं द्व्यक्षं ध्याननिमीतं(निमीलितं) द्विकरं हृत्प्रदेशेषु च सौभाग्यप्र(मु)द्रितं परं(रम्). विचित्रचीवरवृतं स्वर्णवर्णं द्वात्रिंशल्लक्षणोज्वलं(ज्ज्वलम्) ॥२॥ वज्रासनं कोकनदे अशीतिव्यंजनांकितं(व्यञ्जनाङ्कितम्) ॥ तथागतं धर्मराजं जगन्नाथं मुनीश्वरं(रम्) ॥२॥२२॥ तद्वामे वैरोचननामा बुद्धः ॥ ध्यानं(नम्) ॥ लाशि(शशि)वदनं युगनयनं ध्यानमीलितं(तम्). । उष्णीषयुतं महापुरुषलक्षणं व्यंज-(व्यञ्ज)नपूर्णद्विभुजं(जम्) ॥१॥ धृतधर्मचक्रं विचित्रचीवरं कमलोपरि कुलिशासनं-(नम्) वैरोचननामानं सम्यक् संबु(सम्बु)द्धं विभावयेज्जगदुद्धरणे ॥२॥ मतातरे-(मतान्तरे) वैरोचनध्वजनामा तथागत(तः) ॥२३॥ तद्वामे दंत(दन्त)केतुनामा तथागः (तथागतः) ॥ ध्यानं(नम्) ॥ दंतं(दन्तं) दधान(नं) हृदयप्रदेशे दक्षेण वामेन च पूर्णपात्रं. समुज्व(ज्ज्व)लचीवररुक्मवर्णमेकाननं मावय(भावय) दंत-(दन्त)केतुं(तुम्) ॥ तथागतं तथ्यकथामिलापं द्वात्रिंशल(ल्ल)क्षणवर(रं) जगदुद्धरतां सुवर्णपद्मोपरि वज्रासनं(न)स्थितश्रीघनमेव बुद्धं(द्धम्) ॥२४॥ तद्वामे रत्नकेतुनामा बुद्धः ॥ ध्यानं(नम्) ॥ एकवक्त्रं स्वर्णवर्णं द्विनेत्रं ध्यानमीलितं(तम्)–**

तथागत (बुद्ध) छन् । यिनको ध्यान हो– सुभगेश्वर (सौभाग्येश्वर) नाम गरेका, सम्यक् सम्बुद्ध रूपमा रहेका, ईश्वरस्वरूप छन् यिनी तथागत । यी एक मुख र ध्यानको लागि दुवै आँखा चिम्लेका हृदयछेउ दुवै हात राखेका, सौभाग्यमुद्रा लिएका, विचित्र चीवर पहिरेका, सुनको जस्तो वर्ण भएका र बत्तीस लक्षणले उज्ज्वल पनि छन् ॥२॥ साथै कमलमाथि वज्रासनमा बसेका अस्सी व्यञ्जनले शोभित यी सौभाग्येश्वरको ध्यान गरोस् । यी तथागत-(बुद्ध)-लाई धर्मराज, जगन्नाथ (जगत्‌का मालिक) र मुनीश्वर पनि भन्दछन् ॥२॥२२॥

यिनको बायाँतर्फ वैरोचन नाम गरेका बुद्ध छन् । यिनको ध्यान हो– यी बुद्ध चन्द्रमाको जस्तै मुख भएका, ध्यानमग्नरूपले चिम्लिएका दुई आँखा भएका, उष्णीष (पगरी) पहिरेका, महापुरुषको जस्तो लक्षण भएका तथा सबै व्यञ्जनले युक्त र दुई हात भएका छन् ॥१॥ धर्मचक्रमुद्रा धारण गरेका, विचित्र चीवर पहिरेका, कमलमाथि वज्रासनमा बसेका तथा जगत्को उद्धारमा लागेका यिनै वैरोचन नाम गरेका सम्यक् सम्बुद्धको ध्यान गरोस् ॥२॥ अर्को मतमा यिनैलाई वैरोचनध्वज नाम गरेका तथागत छन् । यिनको बायाँतर्फ दन्तकेतु नाम गरेका तथागत छन् । यिनको ध्यान हो– यी दन्तकेतु हृदयछेउ दाहिने हातले दाँत (हात्ती-दाँत ?) लिएका र बायाँ हातले पूर्णपात्र लिएका छन् । उज्ज्वल चीवर पहिरेका, सुनको जस्तो वर्ण भएका, एक मुख भएका, तथ्य (सत्य) कथा-(बुद्धचरित्र)-को वर्णन गर्ने, बत्तीस लक्षणले युक्त, संसारको उद्धार गर्ने, अनि सुनको कमलमाथि वज्रासनमा बसेका र श्रीधन (ऐश्वर्ययुक्त) स्वरूप, यिनै दन्तकेतु नामका तथागत बुद्धको ध्यान गरोस् ॥२४॥ यिनको बायाँतर्फ रत्नकेतु नाम गरेका बुद्ध छन् । यिनको ध्यान हो– यी रत्नकेतु एक मुख र सुनको जस्तो वर्ण भएका, ध्यानमा चिम्लेका दुई आँखा भएका,

सोष्णीषाकुंचि(कुञ्चि)तकेशं च द्वात्रिंशल्लक्षणोज्वलं(ज्ज्वलम्) ॥१॥ द्विभुजं सरत्नकमलं बिभ्राणं दक्षहस्ततः। वामेन पात्रमुद्राकं चीवरावृतसुंदरं(सुन्दरम्) ॥ सम्यक् संबु(सम्बु)द्धमासीनं कमलकर्णिकोपरि । भावयेद्रत्नकेत्वाह्वयं तथागतं विभावयेत् ॥३॥२५॥ तद्वामे कमलकेतुनामा बुद्धः ॥ एकं मुखं नेत्रयुगं च यस्य ध्यानसित(स्थितं) हस्तयुगं च दक्षे पद्म च वामे ध्यानांकि(नाङ्कि)तवामहस्तं विचित्रवस्त्रं कमलासनस्थं(स्थम्) ॥१॥ अशीत्यनुव्यंज(व्यञ्ज)नलक्षणानि गात्रैर्निरंका-(रङ्का)र सुशोभिते च. श्रीपद्मकेतुं वरधर्मकेतुं विभावयेद् भावनभाविभाख्यां(भाव्यम्) ॥२॥२६॥ तद्वामे रत्नकेतुगुणसागरवैडूर्यसुवर्णाविभासश्रीनामा तथागतः ॥ ध्यानं-(नम्) ॥ एकाननं द्विनयनं कांच(काञ्च)नाद्रिनिभोज्वलं(भोज्ज्वलम्). सोष्णीषं कुंचि(कुञ्चि)ताकेशं द्विहस्तं चीवरावृतं(तम्) ॥१॥ नाभिप्रदेशे दक्षेण रत्नपुंजं-(पुञ्जं) च वामके ॥ पात्रमुद्राधरं वज्रासनं तामरसोपरि ॥२॥ विभावयेद्रत्नकेतु-गुणसागरकांचनं(काञ्चनम्) ॥ तथागतं धर्मराजं समंत(मन्त)भद्ररत्नदं(दम्) ॥२७॥ तद्वामे स्वर्णगिरिकांच(काञ्च)नावभासश्रीनामतथागत. स्वर्णाद्रिकांच-(काञ्च)नामा(भा)सश्रियं श्रीनामानं तथागतं(तम्).

उष्णीष (पगरी) पहिरेका र घुम्रेको केश भएका, बत्तीस लक्षणले उज्ज्वल भएका छन् ॥१॥ दुई हात भएका, दाहिने हातले रत्नसहितको कमल लिएका, बायाँ हातले पात्रमुद्रा (भिक्षापात्र-जस्तो आकार) धारण गरेका, चीवर-(गेरुवा वस्त्र)-ले सुन्दर देखिएका, कमलको कर्णिकामाथि बसेका, सम्यक् सम्बुद्धस्वरूप भएका रत्नकेतु नाउँका तथागत-(बुद्ध)-को ध्यान गरोस् ॥३॥ २५। यिनको बायाँतर्फ कमलकेतु नाम गरेका बुद्ध छन्। यिनी एक मुख र ध्यानमग्न दुई आँखा भएका, दुई हातमध्ये दाहिने हातले कमल र बायाँ हातले ध्यानमुद्रा धारण गरेका, वस्त्र पहिरेका र कमलासनमा बसेका छन् ॥१॥ असी अनुव्यञ्जनले शोभित तथा अरू अलङ्कार नपहिरेको शरीर भएका, भावना-(ध्यान)-ले पूजा गरिने यी पद्मकेतु (कमलकेतु)

बुद्धको ध्यान गरोस् ॥२॥२६॥ यिनको बायाँतर्फ रत्नकेतुगुणसागर वैदूर्यसुवर्णविभासश्री नाम गरेका, तथागत छन् । यिनको ध्यान– यिनी एक मुख र दुई आँखा भएका, सुवर्णपर्वत (सुमेरु पर्वत) जस्तै उज्ज्वल, उष्णीष (पगरी) पहिरेका, घुम्रेको केश भएका, दुई हात भएका र चीवर पहिरेका छन् ॥१॥ यिनले नाभिप्रदेशमा दाहिने हातले रत्नपुञ्ज (रत्नको रास) र बायाँ हातले पात्र लिएको मुद्रा धारण गरेका, अनि कमलमाथि वज्रासनमा बसेका छन् ॥२॥ यिनै रत्नकेतुगुणसागरकाञ्चनको ध्यान गरोस् । यिनलाई समन्तभद्ररत्नद (चारैतिर कल्याण गर्ने) र धर्मराज तथागत पनि भन्दछन् ॥२७॥ यिनको बायाँतर्फ स्वर्णगिरिकाञ्चनावभासश्री नाम गरेका तथागत छन् । सुमेरु पर्वतजस्तै चम्किला उक्त श्री नाम गरेका तथागत

एकवक्त्रं द्विनयनं द्वात्रिंशल्लक्षणोज्वलं(ज्ज्वलम्) ॥ अशीतिव्यंज(व्यञ्ज)नाकीर्णं ध्यानमुद्राधरं वामे. दक्षे च विचित्रचीवरावी(वृ)तं भावयेद्वसुधां गुरु(रुम्) ॥२॥२८॥ ॥ [श्रीमन्नेपालमंड(मण्ड)ले. श्रीगोपुच्छपर्वतपृष्ठदेशे. मंजु(मञ्जु)-श्रीनाम्नि पर्वते प्राकारवृते. मंजु(मञ्जु)श्रीनामविहारे. विहारिणां. मंजु(मञ्जु)श्री-पादुकादिबुद्धधर्मसंघा(सङ्घा)नां ध्यानमूर्तिकारणानि लिख्यंते(ख्यन्ते) ] ॥ ॥ तत्र प्रथमं मंजु(मञ्जु)श्रीपादुकाद्वयध्यानं(नम्) ॥ ॥ चतुरस्त्रवेदिका पद्मांकि-(द्माङ्कि)ता. तदंत(दन्त). अष्टदलकमलं तन्मध्ये पादुकाद्वयं. नेत्रांकितं(त्राङ्कितम्) ॥ तस्य पादुकाद्वयस्य नाम. मंजु(मञ्जु)श्रीपादुका इति कथ्यते ॥ ॥ तत्पादुकाद्व-यनेत्रांकि(त्राङ्कि)तस्य कारणं किमुच्यते चेत् ॥ ॥ यदा विक्रमशिलाख्यविहारे धर्मश्रीनामभिक्षुणा पुराणं व्याख्यातं तदा गुरुर्बहुरूपो मंजु(मञ्जु)श्रीः सभायामागतः विछंद(च्छन्द)रूपो मक्षिकावृतांग(ताङ्गः): नीलोत्पलधारी तं दृष्ट्वा निनिन्द. पुनर्मंजुश्रीपी(मञ्जुश्री अपि) उत्थित्वा विमुखीभूय गते. धर्मश्रीमित्रेण त्वामदृष्टो-स्मीति मिथ्यावादपुरःसरं तच्चरणयोर्निपेते ॥ मृषावादनेत्रद्वयं चरणयोर्निपपात ॥ तदारभ्य ज्ञानश्रीमित्र इति नाम बभूव ॥ ताभ्यां नेत्राभ्यां(भ्याम्). अंकि(अङ्कि)-तं. पादुकाद्वयं(यम्) ॥ ॥ अथ च नेपाले मंजु(मञ्जु)पत्तनादिकं विनिर्माय मंजु(मञ्जु)श्रीगुरौ महाचीनं प्र–

जो एक मुख, दुई आँखा र बत्तीस लक्षणले युक्त छन्, अनि असी व्यञ्जनले शोभित छन्, साथै बायाँ र दायाँ दुवै हातले ध्यानमुद्रा धारण गरेका र विचित्र चीवर पहिरका छन्, यस खालका पृथ्वीस्वरूप तथा गुरु (महान्) उक्त तथागतको ध्यान गरोस् ॥२॥२८॥ [श्रीनेपालमण्डलमा, गोपुच्छनामक पर्वतको पृष्ठभागमा (माथिल्लो सतहमा), पर्खालले घेरिएको मञ्जुश्री नामको

पर्वतमा, मञ्जुश्रीविहारमा मञ्जुश्रीपादुका आदि तथा बुद्ध, धर्म सङ्घका ध्यान, मूर्ति र कारणहरू लेखिन्छन्] सर्वप्रथम मञ्जुश्रीका दुई पादुकाको ध्यानबारे चर्चा गरौं। चारकुने वेदी (मण्डप) छ जसमा कमल अङ्कित भएको छ। त्यसभित्र अष्टदल (आठपाते) कमल छ। त्यसको बीचमा दुई पादुका (पाउको चिह्न वा चित्र) छन्, नेत्र (आँखा) अङ्कित भएका। ती दुई पादुकामा आँखाको चित्र अङ्कित हुनाको कारण के हो भने जब विक्रमशिला नामको विहारमा धर्मश्री नामका भिक्षुले पुराणको व्याख्या गरेका थिए त्यतिखेर धेरै रूप धारण गर्ने गुरु मञ्जुश्री सभामा आइपुगे। त्यसवेला बेछन्द रूपमा, झिङ्गाले शरीर छोपिएका तथा नीलो कमल धारण गरेका मञ्जुश्रीलाई देखेर विहारका व्यक्तिले निन्दा गरेछन्। अनि मञ्जुश्री उठेर विमुख भई गएपछि धर्मश्रीमित्रले यहाँलाई देख्न र चिन्न सकेनौं भनी झूटो बोलेर उनको पाउमा शरण परे। झूटो बोल्ने भावका दुई आँखा पनि पाउमा पुऱ्याए। त्यसपछि यिनको नाउँ ज्ञानश्रीमित्र रह्यो। यिनै दुई आँखा अङ्कित भएका दुई पादुका छन्।

यसपछि नेपालमा मञ्जुपत्तन आदि शहर बसालेर मञ्जुश्रीगुरु महाचीनतर्फ

॥८३॥

तिगते सति तच्छिष्येण गुणाकरनामभिक्षुणा भक्तया तत्पादुकाद्वयं निर्माय प्रतिष्ठापितमभूत् ॥ चरणपूजनं महत्फलमिति कृत्वा. तस्मिन् मंजु(मञ्जु)श्रीविहारे पुनश्च तत्पादुकाद्वयनिषेवना(णा)त्. विद्याप्राप्तिः अंते(अन्ते) बोधिं सामासाद्य मुक्तिप्राप्तिरिति स्वायंभु(यम्भु)वपुराणे. गोपुछ(च्छ)पुछा(च्छा)ग्रे आनन्दादिं प्रति व्याकरोत् ॥ तत्समीपे कोष्ठागारं मूर्त्यादिशून्यं स्तंभ(स्तम्भ)द्वयविचित्रं तोरणं सुंद(सुन्द)रं तत्र त्रिकोणे. विगलितसर्पद्वयमुखः द्विकरः द्विपक्षो गरुडो विराजते. तत्पार्श्वद्वये मकरद्वयं शुंडा(शुण्ड)धृक् ललजिह्वं(ललज्जिह्वं) द्विपदशोभार्थं यस्मिन(न्) तत्तोरणं ... तत्तोरणस्तंभ(स्तम्भ)योरधस्तात् सिंहद्वयं तयोर्मध्ये ज्वालामालांकि(लाङ्कि)तं धर्मचक्रं सिंहचक्रवाहनत्वात्. तस्मिन् शून्यकोष्ठे निरंज-(रञ्ज)नवैरोचन इति ध्येयः इत्येकं मतं(तम्) ॥ यस्मिन् दृष्टमदृष्टं वस्तु स्थाप्यते तस्य नाम कोष्ठं तत्कोष्ठं जठरवत्. यथा जठराभ्यंत(भ्यन्त)रं वस्तु बहिर्न दृश्यते चर्माछा(च्छा) दितेन तथा ज्ञानेन दृश्यते शून्यकोष्ठस्थं(स्थम्) ॥ ॥ पुनरपि तदंत (दन्त): कोष्ठं तोरणनामांकि(माङ्कि)तं शून्यं नाम बहिर्दृष्टवस्तुरहि–

प्रस्थान गरेपछि उनकै चेला गुणाकर नामका भिक्षुले भक्तिपूर्वक ती दुई पादुका (पाउका चिह्न) बनाएर स्थापना गरेका थिए। उक्त चरण-(पाउ)-को पूजा गर्नाले ठूलो फल मिल्छ भनेर मञ्जुश्रीविहारमा स्थापित गरिएको हो। यी दुई पादुकाको सेवन गर्नाले विद्या प्राप्त हुन्छ, अन्तमा बोधिज्ञान प्राप्त गरेर मुक्ति (निर्वाण) प्राप्त हुन्छ भनी स्वायम्भुव पुराणमा गोपुच्छ पर्वतको नजीक आनन्द आदि शिष्यछेउ व्याख्या गरिएको छ। त्यसको नजीकै मूर्तिहरू नभएको कोठा छ। त्यहाँ दुई खम्बा चित्रित भएको राम्रो तोरण पनि छ। त्यहाँ तीनै कुनामा मुखले दुई सर्प चपाउँदै गरेका दुई हात र दुई पखेटा भएका, गरुड पक्षी शोभित छन्। यसका दुवै बगलमा लामो थुतुनो (सुँड) भएका, लपलपाउँदो जिभ्रो भएका, दुई गोही चित्रित छन्। त्यहाँ शोभाको लागि तोरण राखिएको हो।.... तोरणमुनिका खम्बाहरूको ठीक मुनि दुई सिंह

छन् । तिनको बीचमा ज्वालामाला अङ्कित भएको धर्मचक्र छ, किनकि सिंहचक्रवाहन हुन्
त्यो शून्य कोठामा निरञ्जन वैरोचन नामका बुद्धको ध्यान गर्नू भन्ने एउटा मत छ जहाँ देखि
र नदेखिने वस्तु (सामान) राखिन्छ त्यो कोठा हो । यो कोठा पेटजस्तै हो । जसो गरी पेटभित्र
रहेको वस्तु बाहिर देखिदैन छालाले ढाकेको हुनाले। त्यसकारण शून्य कोठामा रहेका बुद्धला
ज्ञानले मात्र देख्न सकिन्छ । फेरि पनि त्यो भित्री कोठा जसमा तोरण पनि छ, शून्य छ
किनभने बाहिर देखिने वस्तु

तं विंद्वा(विन्द्वा)कारं बीजरूपं तत् शून्यं नाम ततः यद्भाव्यते यत् स्थाप्यते तत्तदेव ।। तस्मात् शून्यनिरंज(रञ्ज)नत्वात्. येन ये देवा भाव्यते(व्यन्ते) ते एव स्मरणीया इति ।। शून्यतायाः प्रवृत्ता. शून्यतायां लीना शून्यता शून्यता महाशून्यता तथताशून्यता इत्यादि ।। शून्यनिरंज(रञ्ज)नादिः लक्षा(रक्षा) भगवत्यां शाक्यसिंहेन सुभूतिं प्रति व्याख्यातं(तम्) ।। तस्मात्तत् शून्यकोष्ठे मंजु(मञ्जु)श्रीरेव स्मरणीयः समीपवर्तित्वात् ।। ।। अथ च तद् विंद्वाकारशून्यस्योपरि यत् त्रिकोणाकारं शून्यं तदाधाररूपं क्षेत्ररूपं प्रज्ञास्वरूपं प्रज्ञाया अपि सिंहवाहनत्वात्. तस्मात् वैरोचनप्रज्ञा. वज्रधात्वीश्वरी. तस्मा(तस्माद्)द्वयं शून्यनिरंज(रञ्ज)नं. पृथग्भूतमिति ।। बहुशः किमुच्यते ।। ।। तत्स्पृष्ट(तत्पृष्ठ)भागे एकबोधिसत्व(त्त्व): एकवक्त्र(क्त्र): अरुणवर्ण(र्णः). द्विभुज(जः). दक्षेण आजानुप्रसारितेन भुजेन वरदमुद्रां दधानः दक्षपादजसरसिजोपरि वामेन आजानुविलंवि(लम्बि)तेन भुजेन मुष्टिबंध(बन्ध)नेन सनालपत्रकमलं बिभ्राणः ।। यज्ञोपवीती अमिताभमौली पद्मकर्णिकोपरि प्रसारितपादद्वयः ।। मुकुटकुंड(कुण्ड)लकंठि(कण्ठी)वलयमे–

त्यहाँ छैन, बिन्दु (थोप्ला) आकारको बीजस्वरूप छ । त्यही नै शून्य हो । त्यसैले उक्त कोठामा जसको सम्झना गरिन्छ अथवा स्थापना गरिन्छ त्यसैले त्यसैको पूजा र स्मरण गर्नुपर्दछ । यही हो । शून्यबाट उत्पन्न भएको र पछि शून्यमा नै लीन हुने हुनाले चारैतिर शून्यता शून्यता, महाशून्यता, तथताशून्यता आदि छाएको छ । शाक्यसिंहद्वारा शून्यनिरञ्जन (बुद्ध) आदिबारे रक्षाभगवतीमा व्याख्या गरिएको छ । त्यसैले त्यो शून्य कोठामा मञ्जुश्रीलाई नै स्मरण (ध्यान) गर्नुपर्छ नजीक रहेको हुनाले ।

यसपछि त्यो बिन्दु (थोप्लो, शून्य) आकार भएको शून्यमाथि जुन त्रिकोण (तीनकुने) आकारको शून्य छ त्यो त्यसैको आधारस्वरूप हो । यसलाई क्षेत्ररूप (आदिकारणरूप) प्रज्ञा

पनि भन्दछन्, प्रज्ञा पनि सिंहवाहन हुनाले । यही क्षेत्ररूप प्रज्ञाबाट वैरोचन-(बुद्ध)-की प्रज्ञास्वरूपा वज्रधात्वीश्वरीको उत्पत्ति भएको हो । त्यसैले दुवै शून्य निरञ्जन अलग-अलग रूपमा छन् । धेरै के वर्णन गरौं ।

यसको पृष्ठभागमा एक बोधिसत्त्व छन् । यिनी एक मुख र अरुणको जस्तो रातो वर्ण भएका, दुई हात भएका, घुंडासम्म पसारिएको, दाहिने हातले वरदमुद्रा लिएका, दाहिने पाउबाट उत्पन्न (पाउस्वरूप) कमलमाथि (उक्त हात) राखेका, अनि घुंडासम्म पुगेको बायाँ हातले मुट्ठी पारेर डाँठसहितको कमल समातेका, यज्ञोपवीत धारण गरेका, शिरमा अमिताभ भएका, कमलकर्णिकामाथि दुई पाउ पसारेका, मुकुट, कुण्डल, कण्ठी, बाला,

खलानूपुरभूषितांग(ताङ्गः): बोधिसत्व(त्त्व): ।। पुन: पद्मपाणिनाम(मा) बोधिसत्व-(त्त्व): ध्यानिबोधिसत्व(त्त्व) इत्यस्य कारण(णं) किमुच्यते चेत्. अमिताभेन बुद्धेन संसर्जनध्यानेन ममसा(मनसा)सृष्टः ।। अतो ध्यानिबोधिसत्व(त्त्व): ।। ध्यानात्स-मुत्पन्नत्वात् ।। अथ च पद्मं दत्तं(त्तम्) ।। तत्पद्मं पाणिना धृतं तेन पद्मपाणिनाम येन पद्मेन सृष्टिकार्य्यं सिध्यते तत् पद्मं. पद्मते सिध्यते इति पद्मं यस्मिन् पद्मे सहस्रपत्रं येषु पत्रेषु भुवनानि विलसंति(सन्ति) ।। ।। अथ च यो बोधिसत्व(त्त्वः). चा(च)तुर्थेन बुद्धेन सृष्टे(ष्ट)त्वात्. चतुर्थ(र्थः). ध्यानिबोधिसत्व(त्त्व): पद्मपाणि(णिः). येनामिताभबुद्धाज्ञे(ज्ञ)या लोकसंसर्जनसमाधितो लाक. (लोकः) सृष्टः स्वशरीरावयवेभ्यः ।। नेत्राभ्यां चंद्र(चन्द्र)सूर्य्यो(सूर्य्यौ) इत्यादीन् सृष्ट्वा चतुर्मुखाय ब्रह्मणे जगत्सृष्टिभारा दत्ताः ।। दक्षेण करेण वरं दत्तं(त्तम्) ।। तेन वरदमुद्रा धारिता ।। वामकरस्थकमलदलेभ्यो भुवनानि दत्तानि तेन पद्मपाणिः ।। ।। अथ च तस्य नामसहस्रध्यानं च ।। अवलोकितेश्वरादिकं(कम्) ।। केन कारणेन अवलोकितेन ईश्वरः नारकीयादीन् दुःखि–

मेखला (अधोवस्त्र) र नुपूर-(पाउजेब)-ले शरीर सजिएका छन् । फेरि पद्मपाणि नाम गरेका बोधिसत्त्व छन् जसलाई ध्यानिबोधिसत्त्व पनि भन्दछन् । यसो भन्नाको कारण के हो भने अमिताभ बुद्धले सृष्टि गर्ने ध्यान (चिन्तन) गर्दागर्दै मनबाट सृष्टि गरे । त्यसैले ध्यानिबोधि-सत्त्व भनिए, ध्यानबाट उत्पन्न हुनाले । यसपछि पद्म (कमल) दिइयो । त्यो पद्म हातले धारण गर्‍यो । त्यसैले पद्मपाणि नाम रह्यो । जुन पद्मले सृष्टिकार्य सिद्ध हुन्छ त्यही पद्म हो । 'पद्मते' को अर्थ सिद्धयते अर्थात् सिद्ध हुनु हो, अनि यसै 'पद्' धातुबाट 'पद्म' शब्द बनेको हो । जुन पद्ममा हजार पत्र छन् । जुन पत्रहरूमा भुवनहरू (सृष्टिहरू) रहेका छन् ।

यसपछि जुन बोधिसत्त्व चौथो बुद्धद्वारा ,सृष्टि गरिएका हुनाले चतुर्थध्यानिबोधिसत्त्व नाम गरेका पद्मपाणि (बुद्ध) भए । जसले अमिताभबुद्धको आज्ञाले लोक-(संसार, प्राणी)-को

सृष्टि गर्ने समाधि (ध्यान) गरेर आफ्नो शरीरका अङ्गबाट संसारको सृष्टि गरे। दुई आँखाबाट चन्द्र र सूर्य आदि सृष्टि गरेर चतुर्मुख (चार मुख भएका) ब्रह्मालाई संसारको सृष्टि गर्ने अभिभारा (जिम्मा) सुम्पे। दाहिने हातले वर दिए। त्यसैले वरदमुद्रा धारण गरियो। बायाँ हातमा रहेका, कमलपत्रहरूबाट भुवनहरू दिइयो, त्यसैले पद्मपाणि नाम रह्यो।

यसपछि तिनका सहस्र (हजार) नामको ध्यान पनि। ती नाम हुन्– अवलोकितेश्वर आदि। कुन कारणले अवलोकन गर्नाले (हेर्नाले) ईश्वरले नारकीय (नरकमा परेका) आदि

तानुद्धरति तेन अवलोकितेश्वर इति ।। एवं तस्य पद्मपाणेर्बोधिसत्व(त्त्व)स्य बहूनि ध्यानानि नामानि माहात्म्यानि संति(सन्ति) ।। वृक्षपत्रसंख्या(सङ्ख्या). नदीबालुकासंख्या(सङ्ख्या) विद्यते ।। न तु पद्मपाणेर्महीमा(र्महिम)संख्या(सङ्ख्या) इति कारण्डव्यूहादिकेषु शाक्यसिंहादिभिर्व्याख्यातमित्यलं विस्तरेण ।। ।। अथ वज्रसत्व(त्त्व)स्य ध्यानं नामकारणानि ।। एकवक्त्रः शुक्लवर्णः जटामुकुटी षण्मुद्रालं(लङ्)कृतः द्विभुज(जः). सव्येन हृदयप्रदेशे आकुंचि(कुञ्चि)तेन भुजेन कुलिशं बिभ्राण(णः). यस्मिन् कुलिशे शतानि कोटयः अग्रभागाः संति(सन्ति) ।। वामेन भुजेन नाभिप्रदेशे आकुंचि(कुञ्चि)तेन घंटां(घण्टां) वादयमानः यस्या नादेन त्रैलोक्य(क्यं) कंपि(कम्पि)तं रक्षितं च ।। मारा परा(ला)यिताः ।। कमलोपरि वज्रासनः ।। वज्रमभेद्यमासनं यस्य ।। अथवा जानुनोरुपरि पादद्वयसंधारण(णं). यदा स तं. तद्वज्रासनमिति ।। ।। तादृशो यो बुद्धः ।। स वज्रसत्व(त्त्व)नामा बुद्धः ।। योक्षोभ्यबुद्धात्समुपजातः ।। ब्रह्मादिनामापि(दीनामपि) गुरुः पूज्यः ।। ।। कारणं (णम्) ।। आदिबुद्धेन वैरोचनादयः पंच(पञ्च) बद्धाः सृष्टाः ।। पंचेंद्रि(पञ्चेन्द्रि)यात्मिकाः ।।

दुःखितहरूको उद्धार गर्छन् त्यसै कारणले अवलोकितेश्वर नाउँ रहेको हो। यसरी उनै पद्मपाणि बोधिसत्त्वका धेरै ध्यान, नाम र माहात्म्यहरू छन्, बरु रूखको पातका सङ्ख्या र नदीतीरका बालुवाका सङ्ख्या गन्न सकिएलान्, तर पद्मपाणि बोधिसत्त्वको महिमाको सङ्ख्या भने गन्न सकिँदैन भनेर कारण्डव्यूह आदि ग्रन्थमा शाक्यसिंह आदि बुद्धले व्याख्या गरेका छन्। ज्यादै विस्तार नगरौँ।

अब वज्रसत्त्वको ध्यान र नामका कारणहरूबारे चर्चा हुन्छ। यिनी एक मुख, सेतो वर्ण भएका र जटा तथा मुकुट धारण गरेका छन्। छ मुद्राले अलङ्कृत, दुई हात भएका,

हृदयमा पुऱ्याएर खुम्चाएको, दाहिने हातले वज्र लिएका छन् । जुन वज्रमा सयौं करोड अग्रभाग-(चुच्चा)-हरू छन् । बायाँ हात नाभिछेउ खुम्चाएर घण्ट बजाएका छन् । जसको आवाजले तीनै लोक (संसार) काम्यो र रक्षा गरियो पनि । मारहरू भागे । यी वज्रसत्त्व कमलमाथि वज्रासनमा वसेका छन् । वज्रको अर्थ हो– कसैले भेदन गर्न वा तोड्न नसक्ने । यस्तो आसनलाई वज्रासन भनिएको हो । अथवा दुई घुंडामाथि पैतला पुऱ्याएर (पलेटी कसेर) बस्नुलाई पनि वज्रासन भन्दछन् । यस खालका जुन बुद्ध हुन् उनैलाई वज्रसत्त्व नाम गरेका बुद्ध भनिएको हो । जो अक्षोभ्य बुद्धबाट पैदा भएका थिए । यी ब्रह्मा आदिका पनि गुरु हुन् र पूज्य पनि छन् । यसको कारण हो– आदिबुद्धले वैरोचन आदि गरेका पाँच बुद्धको सृष्टि गरे जो पञ्चेन्द्रियस्वरूप (सूक्ष्म शरीर लिएका) छन् ।

धर्म :

॥८५॥

**अथ च अक्षोभ्येन षडिंद्रि(डिन्द्रि)यात्मको वज्रसत्वो(त्त्वो) बुद्धः सृष्टो मानसस्वरूपः ॥ चक्षुःस्वरूपो वैरोचनः दृष्टिः(ष्टि)स्वरूपः ॥ श्रोत्रस्वरूपोऽक्षोभ्यः शब्दस्वरूसः-(पः) ॥ घ्राणस्वरूपो रत्नसंभ(सम्भ)वो गंध(गन्ध)स्वरूपः ॥ जिह्वास्वरूपोमिताभो रसस्वरूपः ॥ कायस्वरूपो मोघसिद्ध(द्धः) स्प(स्प्र)ष्टव्यरूपः ॥ मनःस्वरूपो वज्रसत्व(त्त्व) चैत्य(चैतन्य)रूपः ॥ अतः कारणात् चैतन्यार्थं(र्थम्). अक्षोभ्येन सृष्टः बोधिसत्वा(त्त्वा)नामपि गुरुत्वात्. पद्मपाणि बोधिसत्व(त्त्व)स्यापि उपरि स्थापितोसौ वज्रसत्व(त्त्वः) इति पुराणादिमतं(तम्) ॥ ॥ ततस्तत्तोरणाकारद्वारस्थितः(स्थित)बुद्धादीनां ध्याननामकारणानि ॥ वैरोचनध्याननामकारणानि ॥ सर्वोपरिस्थितो यो बुद्धः ॥ तस्य ध्यानं(नम्) ॥ एकवक्त्रः उष्णीषोनिरलं(लङ)-कारः स्वाभाविकालं(लङ)कारालंक(लङ्क)रिष्णुः द्विभुजः बोध्यग्रीमुद्राधरः हृदयप्रदेशे आकुंचि(कुञ्चि)ताभ्यां दक्षवामभुजाभ्यां कमलोपरि वज्रासनः ॥ तादृशस्य बुद्धस्य नाम वैरोचन बुद्ध इति नाम ॥ किमर्थं विशेषेण सर्वत्र रुच्यते इति दीप्यते इति वैरोचननाम ॥ आदिबुद्धेन निरंज(रञ्ज)नेन प्रवृत्तिनिवृत्ति–**

अनि अक्षोभ्य बुद्धले छ इन्द्रियस्वरूप भएको वज्रसत्त्व नामका बुद्धको सृष्टि गरे जुन मानस-(मन, सूक्ष्म)-स्वरूप छन् । चक्षु-(आँखा)-स्वरूपका वैरोचन हुन् जसलाई दृष्टिस्वरूप भन्दछन् । श्रोत्र-(कान)-स्वरूप भएका अक्षोभ्य हुन् जसलाई शब्दस्वरूप भन्दछन् । घ्राण-(नाक)-स्वरूप भएका रत्नसम्भव हुन् जसलाई गन्धस्वरूप भन्दछन् । जिह्वा-(जिभ्रो)-स्वरूप भएका अमिताभ हुन् जसलाई रसस्वरूप भन्दछन् । काय-(शरीर)-स्वरूप भएका अमोघसिद्धि हुन् जसलाई स्पर्शस्वरूप भन्दछन् । मनःस्वरूप भएका उनै वज्रसत्त्व हुन् जो चैतन्य-(ज्ञान, चेतना)-स्वरूप छन् । यस कारणले चैतन्य-(चेतन, ज्ञान, आत्मतत्त्व)-को लागि अक्षोभ्यले सृष्टि गरेका हुन्, बोधिसत्त्वहरूका पनि गुरु हुनाले । यी वज्रसत्त्व पद्मपाणि बोधिसत्त्वभन्दा पनि माथि स्थापित छन् भन्ने पुराणहरूको मत छ ।

त्यसपछि ती तोरण आकार भएका द्वार-(ढोका)-मा रहेका बुद्धहरूको ध्यान, नाम र कारणहरूबारे चर्चा गरिन्छ। पहिले वैरोचनका ध्यान, नाम र कारणहरू। सबभन्दा माथि रहेका जुन बुद्ध छन् तिनको ध्यान हो– एक मुख भएका, उष्णीष (पगरी) पहिरेका, अलङ्कार (गहना) नलगाएका, स्वाभाविक (प्राकृतिक) अलङ्कार-(शारीरिक सौन्दर्य)-ले सजिएका, दुई हात भएका हृदयछेउ खुम्चाइएका दायाँ र बायाँ हातले बोध्यग्रीमुद्रा धारण गरेका, कमलमा वज्रासनमा बसेका त्यस्ता बुद्धको नाउँ वैरोचन बुद्ध हो। किनभने विशेष गरेर जहातहीं रोचित अर्थात् प्रकाशित हुन्छन् भन्ने अर्थमा वैरोचन नाउँ रहेको हो। निरञ्जनस्वरूप (शून्यरूप) आदिबुद्धले प्रवृत्ति र निवृत्तिमार्गको

**प्रकाशनार्थं विशिष्टरोचिषा सृष्टः ।। अतो वैरोचनो महादीप्तिर्ज्ञानज्योतिर्विरोचनः ।। जगत्प्रदीपो ज्ञानोल्को महातेजाः प्रभास्वर इत्यादि नामकरणं नामसंगी(सङ्गी)-त्यादिषु लिखितं(तम्) ।। यस्माद् वैरोचनात् प्रकाशरहितं गगनं सप्रकाशमभूत् ।। जगत्प्रकाशकारणं वैरोचनबुद्धः ।। अनेन गगनं प्रकाशितमिति बुद्धो बोधनात्मकः ।। येन बोध्यग्रीमुद्रा धृता ।। बोधिज्ञानाछ(च्छा)दनमुद्रा ।। बुद्धरत्नमिदमिति ।। ।। तद्दक्षपार्श्वस्थदेव्या ध्यानं(नम्) ।। प्रज्ञापारमिताध्याननामकारणानि ।। या देवी एकवक्त्रा. जांवू(जाम्बू)नदवर्णा. चक्रिकुंड(कुण्ड)लकण्ठि(ण्ठी)रोचकमेखलानूपुर-विभूषिताः(ता) चतुर्भुजा. द्वाभ्यां वामदक्षाभ्यां धर्मचक्रमुद्रां बिभ्राणा द्वाभ्यां जपमालापुस्तके दधाना ।। उत्तंग(उत्तुङ्ग)स्तना कमलोपरि वज्रासना ।। ।। तादृग्ध्यानयुक्ताया देव्या नाम किमुच्यते चेत्. प्रज्ञा नाम प्रकृष्टं ज्ञानं तस्य पारमिता पारं गता ।। ज्ञानसमुद्रपारगामिनी ।। सर्वज्ञानपूर्णा इति प्रज्ञापारमिता नाम ।। ।। अथ च प्रज्ञा उपायपत्नी ततः पारमिता उ–**

प्रकाशन-(प्रवर्तन)-को लागि विशेष खालको तेजले यी वैरोचनको सृष्टि गरेका हुन्। यसकारण नाम सङ्गीति आदि ग्रन्थमा यी वैरोचनका नाम हुन्– वैरोचन, महादीप्ति (ठूलो तेज भएका), ज्ञानज्योति (ज्ञान नै तेज भएका), विरोचन (प्रकाशित हुने), जगत्प्रदीप (जगत्को लागि बत्तीजस्तै), ज्ञानोल्क (ज्ञानी), महातेजा र प्रभास्वर (चम्किला) आदि। जुन वैरोचन-बाट प्रकाशहीन आकाश चाहिं प्रकाश-(उज्यालो)-ले युक्त भयो। वैरोचन बुद्ध संसारकै प्रकाश-(उज्यालो, ज्ञान)-का कारण हुन्। यिनले आकाश प्रकाशित गरेका हुनाले बोधनात्मक (ज्ञानरूप) बुद्ध भएका हुन्। जसले बोध्यग्रीमुद्रा धारण गरेका छन्। यो मुद्रा बोधि-(बुद्धत्व)-ज्ञानको आच्छादन गर्ने (ढाक्ने) मुद्रा हो। यो बुद्धरत्न हो।

थिनको दाहिने बगलमा रहेकी देवीको ध्यानबारे चर्चा गरौं। प्रज्ञापारमिता-(देवी)-को ध्यान, नाम र कारणहरूबारे वर्णन गरौं। जुन देवी एक मुख र सुनको जस्तो वर्ण भएकी छिन्, धर्मचक्र, कर्णकुण्डल, कण्ठी, रुचक (गहनाविशेष) र पाउजेबले सजिएकी छिन् तथा चार हात भएकी छिन्। बायाँ र दाहिने दुई हातले धर्मचक्रमुद्रा लिएकी र बाँकी दुई हातले जपमाला र पुस्तक लिएकी छिन्। साथै उत्तुङ्ग (अग्लो) स्तन भएकी छिन् र कमलमाथि वज्रासनमा बसेकी छिन्। यस्तो ध्यानले युक्त देवीको नाम के हो भन्ने हो भने (यसबारे वर्णन गरौं)। प्रज्ञा भनेको प्रकृष्ट (विशेष उत्कृष्ट) ज्ञान हो। त्यसको पार गएकी (यही हो भनेर ठम्याएकी) भन्ने अर्थमा 'पारमिता' शब्द बन्यो। जसको अर्थ हो ज्ञानको समुद्रबाट पार पुगेकी। सबै ज्ञानले पूर्ण हुनु नै प्रज्ञापारमिता हो। फेरि भनौं प्रज्ञा भनेको उपायपत्नी हो, त्यहाँबाट पार गएको

त्तीर्णा प्रज्ञापारमिता नाम ॥ ॥ कारणं(णम्) ॥ शून्ये निरंज(रञ्ज)ने गगनस्वरूपे प्रवृत्तिनिवृत्तिज्ञानार्थं(र्थम्) उपायेन सह स्वयमेव ज्ञानस्वरूपा समुत्पन्ना प्रकृष्टज्ञान-युक्ता या:(या) सा प्रज्ञा ॥ तस्याः सकाशात् पारमिता समुत्तीर्णा इति प्रज्ञापारमिता ॥ प्रज्ञया निराकारया साकारा प्रज्ञापारमिता सृष्टा इति ॥ धर्मचक्रमुद्रां जपमालां पुस्तकं च दत्त्वा साकारा भवेति सृष्टा ॥ धर्मचक्रमुद्रा किं(किम्) ॥ संसारचक्रं मुद्रयति- सारयति ॥ अथवा पुण्यसमूहं मुद्रयति तां धारय प्रवृत्तौ मुंच(मुञ्च) ॥ निवृत्तौ धारय ॥ जपं कुरु- प्रज्ञापुस्तकं दर्शय प्रवृत्तौ निवृत्तौ च तेन कारणेन प्रज्ञापारमिता ॥ ॥ यस्या(स्याः) स्तुतिरियं ॥ यद्बुद्धा लोकगुरवः पुत्रास्तव कृपालवः ॥ तेन त्वमसि कल्याणि सर्वलोकपितामहीत्यादिका पंच(पञ्च)विंशतिसा-हस्रिकादिषु लिखिता प्रज्ञापारमिता या सा धर्मरत्नमिति ॥ ॥ अथ कारण्डव्यूह-लोकेश्वरस्य ध्याननामकारणानि ॥ तद्वामे(वाम)पार्श्वस्थितबोधिसत्वसा(सत्त्वस्य) ध्यानं(नम्) ॥ यो बोधिसत्वो(त्त्वो). रक्तवर्णः एकवक्त्रः चतुर्भुजः षण्मुद्रालं-(लङ्)कृतः ॥ प्रथमसव्येन

अर्थात् उत्तीर्ण भएको भन्ने अर्थमा 'प्रज्ञापारमिता' नाम रह्यो। कारण हो। शून्य, निरञ्जन (दागरहित पनि) आकाशस्वरूपमा प्रवृत्ति र निवृत्तिमार्गको ज्ञानको लागि उपायसँग आफै ज्ञानस्वरूप भएर उत्पन्न भएको तथा प्रकृष्ट-(उत्कृष्ट)-युक्त भएको शक्तितत्त्वलाई प्रज्ञा भन्दछन्। यिनकै सामीप्यबाट पारङ्गत भएको अर्थात् उत्तीर्ण भएको भन्ने अर्थमा 'प्रज्ञापारमिता' भनिएको हो। आकारसहित प्रज्ञाबाट आकारसहित प्रज्ञापारमिता-(देवी)-को सृष्टि भयो। धर्मचक्रमुद्रा, जपमाला र पुस्तक पनि दिएर साकार होऊ भनी सृष्टि गरिएको हो। धर्मचक्र-मुद्रा के हो। संसारको चक्र (जन्मनु-मर्नु, फेरि जन्मनु-मर्नु आदि घुमाइ) जसले मुद्रण गर्छ अर्थात् निर्माण गर्छ त्यो धर्मचक्रमुद्रा हो। अथवा धर्मचक्रको अर्थ पुण्यसमूह हो, त्यसको नियम धर्मचक्रमुद्रा हो। त्यसलाई धारण गर्ने अर्थात् प्रवृत्तिमार्ग छाडेर निवृत्तिमार्ग अँगाल्ने

काम गर, जप गर, प्रज्ञापुस्तक दर्शाऊ, प्रवृत्ति र निवृत्ति दुवै पक्षमा आदि कारणले प्रज्ञापारमिता भनिएको हो। यिनको यो स्तुति (स्तोत्र) हो। पञ्चविंशतिसाहस्रिका आदि ग्रन्थमा के लेखिएको छ भने– हे प्रज्ञापारमिता ! तिम्रा दयालु पुत्रहरू लोकका गुरु बुद्धहरू हुन्। त्यसैले तिमी सबै लोककी पितामही (बूढी आमा) हौ, कल्याण गर्ने हौ आदि। यी प्रज्ञापारमिता धर्मरत्न पनि हुन्।

अब कारण्डव्यूहलोकेश्वरका ध्यान, नाम र कारणहरू। यिनको बायाँ बगलमा रहेका बोधिसत्त्वको ध्यान। जुन बोधिसत्त्व रातो वर्ण, एक मुख, चार हात भएका र छ मुद्राले सजिएका छन्। पहिलो दाहिने हातले

**जपमालिकां(काम्) ।। प्रथमवामेन कमलं दधानः ।। द्वाभ्यां सव्यवामाभ्यां हृदयप्रदेशे कृतांज(ताञ्ज)लिमुद्री(मुद्रां) दधानः ।। कमलवज्रासनः ।। ।। तादृग्ध्यानस्य नाम किं(किम्) ।। कारंड(रण्ड)व्यूहनामा लोकेश्वरः ।। बोधिसत्व(त्त्व): कारंड-(रण्ड)व्यूह इति ।। कारंडं(रण्डं) नाम धर्मकरणं(णम्) ।। तस्य व्यूहः समूहो यस्मिन्· इति कारंड(रण्ड)व्यूहनामलोकेश्वर इति किं(किम्) ।। लोकानां(नाम्). ईश्वरः धारणपालनसमर्थ इति लोकेश्वरनाम ।। ।। कारणं(णम्) ।। अमिताभेन बुद्धेन प्रथमं पद्मपाणिं सृष्ट्वा तत्सहायकरणार्थं धर्मक(का)रण्ड धर्मपात्रस्वरूप-कर्णिकाविलसितकमलं(लम्) ।। जपार्थं जपमालां च दत्वा पद्मपाणिसहायी(यी)स्याः जपं कुरु ।। धर्मकरण्डकात् धर्माणि विभज ।। कृतांज(ताञ्ज)लिः सन् आदिबुद्धं भजेति ।। बोधिसत्व(त्त्व): सन् ।। बोधिज्ञानेन लोकान् समुद्धरः(र) मनसि कुरु इति सृष्टः ।। अनेन कारणेन कारंड(रण्ड)व्यूहलोकेश्वरनामबोधिसत्व(त्त्व): ।। ।। अथ च मतांतरं(तान्तरम्) ।। अमिताभेन पद्मपाणिबोधिसत्वा(त्त्वा)य सहस्रदल-कमलं दत्त्वा कमलदलसंख्य(सङ्ख्य)या तव नामध्यानकारणं भविष्यतीति ।। अतः प–**

जपमाला लिएका र पहिलो बायाँ हातले कमल लिएका छन्। अरू दुई दायाँ-बायाँ हात हृदयछेउ पुऱ्याएर कृताञ्जलिमुद्रा (दुई हात जोडेको अवस्था) धारण गरेका र पद्मवज्रासनमा बसेका छन्। यस खालको ध्यानको के नाम हो। कारण्डव्यूह नाम गरेका लोकेश्वर हुन्। करण्डव्यूह भनेको बोधिसत्त्वको नाम हो। कारण्ड भनेको धर्म गर्नु हो। त्यसको व्यूह अर्थात् समूह जसमा छ त्यो कारण्डव्यूह हो। कारण्डव्यूह नामका लोकेश्वर भनेको के हो। लोक (संसार, प्राणी)-को ईश्वर अर्थात् धारणा (राख्न) र पालना (पाल्न) समर्थ हुनु नै लोकेश्वर

हो । कारण हो । अमिताभ बुद्धले पहिले पद्मपाणिलाई सृष्टि गरेर यिनको सहायताको लागि धर्मकारण्ड अर्थात् धर्मपात्रस्वरूप भएको कर्णिका-(कमलगट्टा)-सहितको कमल (प्रदान गरे) । जपको लागि जपमाला पनि दिएर पद्मपाणिको साथमा यिनको पनि जप गर भने । साथै धर्मकरण्ड-(धर्मको टोकरी)-बाट धर्मको विभाग गर, हात जोडेर आदिबुद्धको भजन गर, बोधिसत्त्व भएर बोधिज्ञानद्वारा लोकको उद्धार गर, यी सबै मनमा राख भनेर यिनको सृष्टि गरे । यसै कारणले कारण्डव्यूहलोकेश्वर नामका बोधिसत्त्व भएका हुन् । यसपछि अरू मत पनि छ । अमिताभले पद्मपाणि बोधिसत्त्वलाई सहस्रदल (हजार पात भएको) कमल दिएर कमलका पात भएजति नै तिम्रा नाम, ध्यान र कारणहरू हुनेछन् भनी आशिष दिए । यसकारण

।।८७।।

द्मपाणिस्वरूप एव सः कारंड(रण्ड)व्यूहलोकेश्वर इति पौराणिकी वार्ता ।। अयमपि बोधिसत्व(त्त्व)त्वात् संघ(सङ्घ): ।। संघा(सङ्घा) अपि बहव इति हेतोः ।। ।। अथ धर्मचक्रमंजु(मञ्जु)श्रीध्याननामकारणदक्षपार्श्वस्थबोधिसत्व(त्त्व)स्य ध्यानं-(नम्) ।। एकवक्त्रः कुं(कुङ्)कुमवर्णः द्विभुजः धर्मचक्रमुद्रां दधानः दक्षवामाभ्यां भुजाभ्यां धर्मचक्रमुद्रां हृदयप्रदेशे ।। ।। अथ द्वयोः करयोर्दक्षेण सनालपल्लवकुवलयं वामेन पुस्तकं (सपुस्तकं) सनालपल्लवकमलं दधानः कमलोपरि वज्रासनः एतादृग्ध्यानयुक्तबोधिसत्व(त्त्व)स्य नाम किम् धर्मचक्रमंजु(मञ्जु)श्रीनामबोधिसत्व(त्त्व): धर्मचक्रमुद्राधारणत्वात्. धर्मचक्र मंजु(मञ्जु)श्री इति मंज(मञ्ज)वः श्रीयो(श्रियो) यस्य सः मंज(मञ्ज)वः सुंद(सुन्द)रा वा सरला वा श्रिय ऐश्वर्यादयो यस्य सः ।। तेन धर्मचक्रमंजु(मञ्जु)श्रीनाम ।। ।। अथ कारणं(णम्) ।। यदा अमिताभेन पद्मपाणिः सृष्टः ।। तदा तत्सहायकरणार्थं(र्थम्). अक्षोभ्येन मंजु-(मञ्जु)श्रीः सृष्टः धर्मचक्रं दत्वा ।। धर्मचक्रं नाम किं(किम्) ।। धर्माणां धारणात्मकानां वस्तूनां यत्र यत्र यद यद् वस्तु धारणं पतति तत्र तत्र तत्तद् धार्य–

पद्मपाणिस्वरूप नै हुन् कारण्डव्यूहलोकेश्वर भन्ने पुराणको कथा छ। यिनी पनि बोधिसत्त्व हुनाले सङ्घ नै हुन्। सङ्घहरू पनि धेरै हुन्छन् भन्ने कारणले।

अब धर्मचक्रमञ्जुश्रीको ध्यान, नाम र कारणबारे चर्चा गरौं। दाहिने बगलमा रहेका बोधिसत्त्वको ध्यान हो– यिनी एक मुख र कुङ्कुमजस्तो वर्ण भएका छन्। दुई हात भएका, धर्मचक्रमुद्रा लिएका, त्यो पनि दाहिने र बायाँ दुवै हातले हृदयछेउ धर्मचक्रमुद्रा लिएका छन्। यसपछि दुई हातमध्ये दाहिने हातले डाँठ र पालुवासहितको चन्द्रकमल र बायाँ हातले पुस्तक-डाँठ र पालुवा भएको कमल लिएका, अनि कमलमाथि वज्रासनमा बसेका छन्। यस्तो ध्यानले युक्त बोधिसत्त्वको नाम के हो भने धर्मचक्रमञ्जुश्रीनामक बोधिसत्त्व हो। धर्मचक्रमुद्रा

धारण गर्न हुनाले धर्मचक्र भनिएको हो। मञ्जुश्रीको अर्थको चर्चा गरौं। मञ्जु श्री जसको छ त्यो मञ्जुश्री हो। मञ्जुको अर्थ राम्रो, सरल र श्रीको अर्थ ऐश्वर्य आदि हो। यो मिलेर नै धर्मचक्रमञ्जुश्री नाम रहेको हो। अब कारण भनौं। जब अमिताभ बुद्धले पद्मपाणिको सृष्टि गरे। त्यसवेला यिनको सहायता गर्न अक्षोभ्य बुद्धले धर्मचक्र दिएर मञ्जुश्रीको सृष्टि गरे। धर्मचक्र भनेको के हो। धर्महरूको अर्थात् धारणात्मक (धारण गर्न सकिने) वस्तुहरूको जहाँ-जहाँ जुन-जुन वस्तु धारण गर्न सकिन्छ अथवा त्यो-त्यो वस्तु

**ते इति धारणात्मकं धर्मस्तस्य चक्रं समूहः ।। तस्य धर्मचक्रस्य मुद्रां(द्राम्) आछा-(च्छा)दनं(नम्) ।। यदा प्रयोजनं तदा प्रकाशनं दानं च ।। यदा निःप्र(निष्प्र)योजनं तदाचा(च्छा)दनं(नम्) ।। एतेन धर्मचक्रमंजु(मञ्जु)श्रीरिति कथ्यते ।। ।। मंजुश्री(मञ्जुश्री) योप्येकस्य बहूनि ध्यानानि नामानि कारणवशात् भेदो जातः ।। ।। ततो बहूनां मंजु(मञ्जु)श्रीणां मध्ये एकोयं धर्मचक्रमंजुश्री(मञ्जुश्रीः) ।। ।। अथ बोधिसत्व(त्त्व)त्वात्. बुद्धधर्मसंघा(सङ्घा)नां मध्यस्थापितः ।। स्वमत्यनुसारेण ग्रन्थप्रमाणतश्च ।। अथ च एकोपि मंजु(मञ्जु)श्रीर्बहुरूपः सन् स्वयमेव कार्यकारण-वशात्. नामरूपभेदं कृतवान्. कस्मिंश्चिद्ग्रन्थे मंजु(मञ्जु)श्रीः स्वयंभू(यम्भू): ।। ।। अथ खड्गमंजु(मञ्जु)श्रीध्यानादि ।। एकवक्त्रः कुमुदवर्ण. षण्मुद्रालं(लङ्)-कृतः द्विभुज(जः). दक्षेण प्रसारितेन चन्द्रहासाख्यं खड्गं दधानः येन दक्षिणाचलं छित्वा नागवासजलं निःसारयति ।। वामेन हृदि आकुंचि(कुञ्चि)तेन प्रज्ञापुस्तक-सहितसपल्लवकमलनालं बिभ्राणः ।। यस्मिन् पुस्तके प्रज्ञा प्रकृष्टज्ञानं(नम्) ।। कमलोपरि वज्रासनः ।। ।। एतादृशस्य नाम किं(किम्) ।। खड्गमंजु(मञ्जु)श्री-नाम—**

धारण गर्नु नै धारणास्वरूप धर्म हो। त्यसको चक्र अर्थात् समूह भन्ने अर्थमा 'धर्मचक्र' शब्द बन्यो। त्यो धर्मचक्रको मुद्रा भने आच्छादन (ढाक्ने) तत्त्व हो। जहिले प्रयोजन (आवश्यक) पर्दछ त्यतिखेर प्रकाशन (देखाउनु) नै धर्मचक्रमुद्रा हो। त्यसैले धर्मचक्रमञ्जुश्री भनिन्छ।

एक मञ्जुश्रीका पनि धेरै ध्यान र नामहरू छन्। कारणले गर्दा भेद (फरक) पनि हुन्छ। यसपछि धेरै मञ्जुश्रीहरूमध्ये एक धर्मचक्रमञ्जुश्री हुन्। अनि बोधिसत्त्व हुनाले यिनलाई बुद्ध, धर्म र सङ्घको माझमा स्थापना गरियो। आफ्नो मति-(बुद्धि)-ले र ग्रन्थको प्रमाणले पनि यसो गरिएको हो। अनि एउटै मञ्जुश्रीका पनि धेरै रूप बन्छन् आफै नै

कार्यकारणले गर्दा। अनि नामभेद र रूपभेद पनि भयो। कुनै ग्रन्थमा मञ्जुश्री भनेका स्वयम्भू हुन्।

अब खड्गमञ्जुश्रीको ध्यान आदिको वर्णन गरिन्छ। यिनी एक मुख र चन्द्रकमल-जस्तो सेतो वर्ण भएका, छ मुद्राले अलङ्कृत, दुई हात भएका र पसारिएको दाहिने हातले चन्द्रहास नाम गरेको खड्ग (तरबार) लिएका, साथै जुन खड्गले दक्षिणाचल (दक्षिणतर्फको पर्वत) फोरेर नागवास-(नागह्रद)-को जल निकालेका छन्। हृदयछेउ खुम्चाएको बायाँ हातले प्रज्ञापुस्तकसहित पालुवा भएको कमलको डाँठ समातेका छन्। जुन पुस्तकमा प्रज्ञ अर्थात् उत्कृष्ट ज्ञान छ। कमलमाथि वज्रासनमा बसेका छन्। यस्ता देवको नाम के हो। खड्ग-मञ्जुश्री नाम हो।

केन खड्गधारणत्वात् ॥ मंजवः सुन्दरा(राः). श्रिय सर्वे(र्व)संप(सम्प)दो यस्मिन् स खड्गधारकश्चासौ मंजु(मञ्जु)श्रीः ॥ सर्वसंप(सम्प)त्कर(रः). श्रीमान्. मंजु(मञ्जु)श्रीः श्रीमतां वर इति ॥०॥ अथ मारणं(णम्). अक्षोभ्येन पद्मपाणि-सहायकरणार्थं सृष्टः मंजु(मञ्जु)श्रीबोधिसत्व(त्त्व)ः ॥ परमार्थविशुद्धः श्रीस्त्रै-लोक्यैकरवो महान्. सर्वसंप(सम्प)त्कर(रः). श्रीमान्. मंजुश्री(मञ्जुश्रीः) श्रीमतां वर इति कृत्वा खड्गपुस्तके दत्वा सृष्टः ॥ तेन कारणेन खड्गमंजु(मञ्जु)श्रीरिति येन खड्गेन चंद्र(चन्द्र)हासाख्येन विंशतिशिखररा(स)मुद्गतं· अज्ञानपर्वतं भिनत्ति मंजु(मञ्जु)श्रीः ॥ ॥ चन्द्रहास इति किं(किम्) ॥ चंद्र(चन्द्र)वत्प्रकाशकः ॥ अज्ञानांध(न्ध)कारं भित्वा ज्ञानप्रकाशक इति ॥ चन्द्रहासः ॥ तद्धारणत्वात् खड्गमंजु(मञ्जु)श्रीः ॥ ॥ प्रज्ञापुस्तकं नाम किं· प्रकृष्टं ज्ञानं तथतादिकं बोधिज्ञानं सांसारिकं प्रवृत्तिनिवृत्त्यात्मकं सर्वं ज्ञानं यस्मिन् तत् प्रज्ञापुस्तकं(कम्) ॥ ॥ अथ च महाचीनप्रदेशादागत्य नागावासाभिधे महाह्रदे योजनैकविस्तारविपस्वितथा-गताधिष्ठितपद्मकंद(कन्द)समुत्पन्नसहस्रदलपद्मकर्णिकोपरि ज्योतिःस्वरूपे स्वयंभु-(यम्भु)वि

खड्गमञ्जुश्री नाम खड्गधारण गरेको हुनाले । मञ्जु अर्थात् सुन्दर, श्री अर्थात् सबै सम्पत्ति जसमा छ र जो खड्ग धारण गर्ने पनि छ त्यो मञ्जुश्री हो । सबै सम्पत्ति दिने श्रीमान् (ऐश्वर्ययुक्त) मञ्जुश्री श्रीमान् वा ऐश्वर्यशालीहरूमा पनि श्रेष्ठ मानिन्छ ॥०॥ अब कारणबारे चर्चा गरौं । अक्षोभ्यले पद्मपाणि-(बुद्ध)-को सहायताको लागि मञ्जुश्रीबोधिसत्त्वको सृष्टि गरेका हुन् । ज्यादै शुद्ध श्रीस्वरूप तथा तीनलोकका एकमात्र साध्य, अनि सबै सम्पत्ति दिने, श्रीमान् मञ्जुश्रीलाई श्रीमान्हरूमध्ये श्रेष्ठ मानेर खड्ग र पुस्तक दिएर सृष्टि गरिएको हो । कुन कारणले खड्गमञ्जुश्री भएको हो भने जो चन्द्रहास नाम गरेको खड्गले बीसओटा शिखर-(चुचुरो)-बाट पैदा भएको अज्ञानरूप पर्वतको भेदन (नाश) गर्दछ त्यही मञ्जुश्री हो ।

चन्द्रहास भनेको के हो ? चन्द्रजस्तै प्रकाश (उज्यालो) दिने अर्थात् अज्ञानरूप अन्धकार खतम गरेर ज्ञानको प्रकाश छर्नेलाई चन्द्रहास भन्दछन्। त्यही धारण गर्ने हुनाले खड्गमञ्जुश्री भनिएको हो।

प्रज्ञापुस्तक भनेको के हो ? प्रकृष्ट (उत्कृष्ट) ज्ञान अर्थात् तथता (तथ्य) आदि बोधिज्ञान वा प्रवृत्ति र निवृत्तिमार्गसँग सम्बद्ध सांसारिक सबै ज्ञान जसमा (जुन पुस्तकमा) छ त्यो नै प्रज्ञापुस्तक हो।

यसपछि उनै खड्गमञ्जुश्री महाचीन भन्ने ठाउँबाट आएर नागवास नामको एक योजन (चार कोश) फैलेको ठूलो पोखरीमा (नागदहमा) विपस्वी नामका तथागत रहेको कमलको डाँठमा पैदा भएको सहस्रदल (हजार पात भएको) कमलको कर्णिका-(कमल गट्टा)-माथि ज्योति-(प्रकाश)-स्वरूप स्वयम्भू–

समुत्पन्नतज्जलशोषणार्थं प्रज्ञापुस्तकमालोक्य विचार्य्य सिंहमारुह्य तीरमार्गतस्तडागं त्रिः प्रदक्षिणीकृत्य स्वयंभु(यम्भु)वं विज्ञाप्य चन्द्रहासेन खड्गेन दक्षिणाचलमछि-(च्छि)नत् ।। तदारभ्य तेन कारणेन खड्गमंजु(मञ्जु)श्रीरिति तेन कारणेन केनचिद् विज्ञेन मंजु(मञ्जु)श्रीविहारे स्वस्य भावतस्तोरणाकारस्तंभे(स्तम्भे) स्थापितः, खड्गमंजु(मञ्जु)श्रीः ।।१०।। ।। तदधो देवीद्वयस्य ध्याननामकारणानि ।। एकवक्त्राः(क्त्रा) कांच(काञ्च)नवर्णाः(र्णा) द्विभुजा. सव्येन आजानुप्रसारितेन भुजेन वरदमुद्रां(द्राम्). उत्पलं च बिभ्रती. वामेन आकुंचि(कुञ्चि)तेन हृत्प्रदेशे अभयमुद्रां कमलं च दधाना. षण्मुद्रालं(लङ्)कृता. कमलोपरि वज्रासना. उत्तुंग-(त्तुङ्ग)स्तना. स्मेरानना ।। तस्या नाम किं(किम्) ।। वरदा नाम देवी वरं ददातीति वरदा. भक्तजनेन चान्येन यत्प्रार्थितं वस्तु तद् ददाति तस्माद् वरदा नाम देवी केशिनी देवीति नाम ।। पूर्वं मंजु(मञ्जु)श्रीपत्नीरियं(पत्नीयं) वरदा देवी ।। ।। कारणं(णम्) ।। पूर्वं महाचीनप्रदेशे पंच(पञ्च)शीर्षनाम्नि पर्वते मंजुश्रीया(मञ्जु-श्रिया) सार्द्धमुवास. यदा तदा केशिनी नाम देवी. सुस्त(सुन्दर)केशा विद्यंते(द्यन्ते) यस्याः सा केशिनी. यस्याः केशेषु सुल–

उत्पन्न भएका देखे। उनले त्यस ठाउँमा त्यो जल सुकाउने विचार गरे। यिनले नै प्रज्ञापुस्तक हेरी विचार गरेर सिंहमाथि चढी तीरैतीर तलाउलाई तीनपल्ट प्रदक्षिणा गरी (घुमी) स्वयम्भूलाई जनाई चन्द्रहास नामको खड्गले दक्षिणतर्फको पर्वत फोरे। त्यहाँदेखि त्यसै कारणले खड्गमञ्जुश्री नाम रह्यो। कुनै विज्ञ-(विद्वान्)-ले आफ्नै इच्छाबाट मञ्जुश्रीको विहारमा तोरण आकार भएको खम्बामा खड्गमञ्जुश्रीको स्थापना गरेका हुन्।।।१०।।

त्ससमुनि दुई देवीको ध्यान, नाम र कारणहरूबारे चर्चा गरिन्छ। (ती दुई देवी हुन् वरदा र मोक्षदा। यी दुवै देवी प्रायः समान लक्षणका छन्)। यी देवीहरू प्रत्येक एक मुख सुनको जस्तो वर्ण र दुई हात भएकी घुँडासम्म पसारिएको दाहिने हातले वरदमुद्रा र कमल लिएकी, हृदयछेउ खुम्चाएको बायाँ हातले अभयमुद्रा र कमल लिएकी, छ मुद्राले अलङ्कृत उच्च स्तन भएकी, हँसिलो मुख भएकी तथा कमलमाथि वज्रासनमा बसेकी छिन्। यिनको नाम के हो ? वरदा नाम गरेकी देवी हुन्– वर दिने हुनाले वरदा हुन्। भक्तजन र अरू पनि जे वस्तु प्रार्थना गर्छन् (माग्छन्) त्यही दिने हुनाले 'वरदा' भनिएको हो। यिनको अर्को नाउँ केशिनीदेवी पनि हो। पहिले यी वरदा देवी मञ्जुश्री-(बुद्ध)-की पत्नी हुन्। कारण के हो भने पहिले यिनी महाचीनमा पञ्चशीर्ष नाउँ गरेको पर्वतमा मञ्जुश्रीको साथमा बसेकी थिइन्। केशिनी नाम किन रह्यो भने यिनका सुन्दर केश हुनाले केशिनी भनिएको हो। जसमा -(केशहरूमा)

क्षणानि सर्वाणि विलसंति(सन्ति) यस्याः केशसंख्य(सङ्ख्य)या गुणाः ।। यस्याः केशपाशगुणवर्णने मंजु(मञ्जु)श्रीरपि मंद(मन्द)श्रीः ।। ततो मंजु(मञ्जु)श्रीर्जल-शोषणार्थं नागवासह्रदं प्रत्यागमत् केशिन्युपकेशिनीभ्यां सार्द्धं बहुभिश्च जनैः ।। तत्र प्राप्तः तज्जलशोषमाधाय· स्वयंभु(स्वयम्भुव)मभ्यर्च्य सत्यगिरिसमधिष्ठो यः वाग्म(ङम/ग्व)त्यादिप्रभवतीर्थेषु समुपजातेषु बहुषु देवादिकेषु लोकेषु वरं प्रार्थितेषु सत्सु त्वयापि वरो देयस्त्वयापि मोक्षो देय इति कृत्वा त्वं वरदा भव वरदानात्. त्वं मोक्षदा नाम देवी भवमोक्षदानात् ।। प्रार्थितेभ्योभ्यर्थितवरदानात् वरदा नाम जातं· मोक्षदा नाम जातं केशिनीति नाम यत्तदंत(दन्त)र्हितं. उपकेशिनीति नामापि अंत-(अन्त)र्हितं(तम्) ।। तयोर्देव्योः ध्याने नाममात्रभेदः ।। कथा एका. कारणं चैकं. किंच पद्ममुत्पलं चे(च) वरदायाः पद्मं मोक्षदाया उत्पलं(लम्) ।। ।। अथ च प(पा)-श्चात्यैर्नैपालीयैर्वैष्णवैरियं वरदा लक्ष्मीरिति मोक्षदा सरस्वतीति मंजु(मञ्जु)श्रीवि-(वि)ष्णुरिति· विष्णु(ष्णुः). व्याप्तौ व्यापकत्वादिति ।।११।।१२।। तदधो दक्षपार्श्वे गणेशध्याननामकारणं(णम्) ।। एकवक्त्रः ग–

सबै राम्रा लक्षणहरू छन् र कपालमा केश-(रौं)-को सङ्ख्या जति छ त्यति नै गुण पनि छन्, जसको केशपाश-(चुल्ठो)-को गुणको बयान गर्न मञ्जुश्री पनि समर्थ छैनन् । त्यसैले पनि केशिनी भनिएको हो । त्यसपछि मञ्जुश्री पानी सुकाउनको लागि नागवासह्रद-(नागदह)-मा आए । यिनको साथमा केशिनी र उपकेशिनी एवं धेरै जन (मानिसहरू) पनि थिए । त्यहाँ आएर रहेको पानी सुकाएर स्वयम्भूको पूजा गरी सत्यगिरि भन्ने ठाउँमा बस्न थाले । उनले वाङमती नदी आदि पैदा भएका तीर्थहरूमा रहेका धेरै देवता र मानिसहरूले वर माग्दा यिनै देवीहरूलाई तिमी पनि वर देऊ, तिमी पनि मोक्ष देऊ भनी अह्राएकाले यी वरदा र मोक्षदा देवी भएका हुन् । प्रार्थना गर्नेलाई इच्छाबमोजिम वर दिएका हुनाले यिनीहरूको नाम वरदा र मोक्षदा रहेको हो । केशिनी र उपकेशिनी नाम त्यसभित्रै अन्तर्हित (लुकेका) नाम हुन् । ती

दुवै देवीको ध्यानमा नाममात्रको भेद छ। कथा एउटै र कारण एउटै छ। साथै पद्म र उत्पलबारे वरदाको पद्मनाउँको कमल र मोक्षदाको उत्पल नाउँको कमल छ ?

यसपछि पश्चिमका नेपाली वैष्णवहरूले वरदालाई लक्ष्मी र मोक्षदालाई सरस्वतीको रूपमा मान्दछन्, साथै मञ्जुश्रीलाई विष्णुको अवतार मान्दछन्। विष्णुको अर्थ व्याप्ति (चारैतिर फैलेको रूप) हो, व्यापक हुनाले ॥११॥१२॥ यसमुनि दायाँ बगलमा गणेशका ध्यान, नाम र कारण बताइन्छन्। एक मुख भएका,

**जवदनः शुण्डादण्डधरः द्विरदनः नानालंका(लङ्का)रभूषितः ॥ सिंदू(सिन्दू)रारुण-वर्णः ललाटे विभूतित्रिपुण्ड(ण्ड्र): चतुर्भुजः प्रथमसव्येन हृत्प्रदेशे आकुंचि(कुञ्चि)तेन मूलं दधान(नः)· द्वितीयेन अक्षमालां जपन्. प्रथमवामेन उदरप्रदेशे लडु(ड्डु)कपात्रं. द्वितीयेन तीक्ष्णकुठारं बिभ्राण(णः). छुछुंदरीकोपरि प्रत्यालीढः पद्माक्रांतवामपादः ॥ ॥ नाम किं तस्य ॥ चतुर्भुजगणेश इति. नाम ॥ चत्वारो भुजा यस्य स चतुर्भुजः गणानां परिवाराणां कटपूट(त)नादीनां. ईशः गणेशः चतुर्भुजत्वात् चतुर्भुजगणेश इति नाम ॥ ॥ कारणं(णम्) ॥ पूर्वं यदा ओडियाचार्य्येण(ओदियानाचार्येण) व्रागम(ङ्म/ग्व)तीतिरे योगसाधनमकरोत्· अष्टसिद्धिफलप्राप्तये ॥ योगमण्डपे छत्रध्वजाद्यलं(लङ)कृते पुष्पमालावलंबि(लम्बि)ते· सुगंध(गन्ध)धूपधूपिते. पंच-(पञ्च)प्रदीपप्रदीपिते यथाविधि रत्नमण्डलमावर्त्य तस्मिन् मण्डले बुद्धधर्मसंघा-(सङ्घा)दयः लोकपालांता(लान्ताः)· स्थापिता विधिवदर्चिताः सछत्रं पद्मपाणिमा-राध्य योगसाधनमकरोत् ॥ तदा पार्वतीपुत्रो गणेश्वरः वाग्म(ङ्म/ग्व)त्यां क्रीडनार्थमागमत् ॥ गणैः सह सर्ले(सर्वे) क्रीडिते ओदियाचार्य्य(ओडियानाचार्य)-मण्डलमप–**

हात्तीको जस्तो मुख भएका, सुँड धारण गर्ने, दुई दाह्रा भएका, अनि धेरै अलङ्कारले शोभित छन् यी गणेश। साथै सिन्दूर मन पराउने र रातो वर्ण भएका, निधारमा विभूति-(खरानी)-को त्रिपुण्ड्र (तेर्सो तीन धर्का) लगाएका, चार हात भएका, हृदयछेउ खुम्चाएको दाहिने पहिलो हातले मूल (मूला) लिएका र दोस्रो हातले अक्षमाला-(रुद्राक्षको माला)·द्वारा जप गरेका छन्। यसै गरी पहिलो बायाँ हातले पेटनजीकै लड्डु राख्ने भाँडो लिएका र दोस्रो हातले तीखो (धारिलो) बन्चरो लिएका, अनि पद्म-(कमल)-मा बायाँ पाउ अडाएर छुचुन्द्रो-(मुसो)-माथि बसेका छन्।

यिनको नाम के हो ? चतुर्भुज गणेश हो। चार भुजा (बाहु, हात) भएका हुनाले चतुर्भुज भनिएको हो। गण भनेको समूह वा कट, पूतन आदि गणहरूको ईश (ईश्वर, मालिक) गणेश भनिएको हो। त्यसैले यिनको नाउँ चतुर्भुज गणेश रह्यो। यसको कारण हो– पहिले ओडियनाचार्य-(भिक्षु)-ले वाग्म(ङ्म/ग्व)ती नदीको तीरमा योगसाधना (तपस्या) गरे, सिद्धिफल पाउनको लागि। छत्र, ध्वजा आदिले सिंगारिएको, फूलमाला टाँगिएको, सुगन्धी धूप जलिरहेको र पाँच वत्ती बालिएको योगमण्डप-(पूजावेद)-मा विधिपूर्वक रत्नमण्डल बनाएर उक्त मण्डलमा बुद्ध, धर्म, सङ्घ आदि लोकपालसम्मका देवताहरूको स्थापना गरी यिनले विधिसहित पूजा गरे। साथै छत्रसहित पद्मपाणि-(बुद्ध)-को आराधना (आवाहन र सेवा) गरेर योगसाधन (तपस्या) पनि गरे। त्यसै समयमा पार्वतीका छोरा गणेश वाङमती नदीमा जलक्रीडाको लागि आए। गणहरूको साथमा जलक्रीडा सकेपछि उनले उक्त ओडियना–चार्यको रत्नमण्डल

श्यत् ॥ स्वमूर्तिरहितं मण्डलं दृष्ट्वा गजचर्मासनस्थमाचार्य्यं च दृष्ट्वा मर्षितो गणानाज्ञापयत् ॥ गजचर्मस्थमोडिया(याना)चार्य्यमस्मत्पूजाप्रतिबंध(बन्ध)कं विध्वंसय चूर्णयेति ॥ तथेति तथैव जाते(जातो) महान् युद्धः ॥ ततः षडक्षरो-प्रभावात् दशक्रोधेषु विनिःसृतेषु गणेशवाहनविघ्नांत(घ्नान्त)कमालोक्य गणेशोसौ पलायितः ॥ पलायितस्यापि तस्य एको दंतो(दन्तो) विघ्नांत(घ्नान्त)केनोन्मूलितः ॥ ततो निर्मदो गणेशोसौ ओडिया(याना)चार्य्यमापन्नः ॥ अद्यारभ्य बुद्धोस्मीति हे गुरावाचार्य ॥ ततस्तेनाचार्येण तस्मै गणेशाय पूजाभागो दत्तः ॥ तदारभ्य मण्डलपूजायां गणेशोपि पूजनीय इति स्वायंभु(यम्भु)वपुराणोक्तं(क्तम्) ॥ ॥ अथ च एकदन्तो गणेशः कालांत(लान्त)रे मंजु(मञ्जु)श्रीपर्वते विहारिणीं वरदां देवीमाराध्य पूर्ववत् द्विरदनो बभूव ॥ अथ च रत्नत्रयोपढौकनार्थं मूलं सिद्धिफला-प्तये. तन्मंत्र(मन्त्र)जपार्थं(र्थम्). अक्षमालां रागद्वेषमोहच्छेदनार्थं परशुं दधानः ॥१३॥ तदधो वामपार्श्वे महाकालध्याननामकारणानि ॥ एकवक्त्रः तैलांज(लाञ्ज)-नवर्णः. भृकुटिकरालः वर्तुल–

देखे । आफ्नो मूर्ति नभएको उक्त मण्डल र हात्तीको छालामा आसन गरी बसेका आचार्यलाई समेत देखेर रिसाउँदै गणेशले आफ्ना गणहरूलाई अह्राए– गजचर्म-(हात्तीको छाला)-मा बसेका तथा मेरो पूजा नगर्ने ओडियानाचार्यको विध्वंस (नाश) गर, धूलो पार । गणहरूले हुन्छ भनेर त्यहीं विघ्न गर्न थाले र ठूलो युद्ध (लडाइँ) भयो । त्यसपछि षडक्षर मन्त्र-(ॐ मणिपद्मे हुं)-को प्रभावले दश क्रोधहरू (मूर्तिधारी भएर) निस्केपछि गणेशको वाहनस्वरूप विघ्नान्तक मूर्तिलाई (आफ्नो शत्रुरूपमा) देखेर गणेश भागे । भाग्दाभाग्दै गणेशको एउटा दाह्रा विघ्नान्तकले उखेलिदिए । यसपछि घमन्ड खतम भएका यी गणेशले ओडियानाचार्यको शरण पर्दै भने– हे गुरावाचार्य! आजदेखि म पनि बुद्ध भएँ । अनि ती आचार्यले उनै गणेशलाई पूजाको भाग दिन थाले । त्यहाँदेखि मण्डलको पूजा गर्दा गणेशको पनि पूजा गर्नुपर्छ भनेर स्वयम्भूपुराणमा वर्णन गरिएको छ ।

यसपछि एक दन्त (दाह्रा) भएका गणेश केही समयमा मञ्जुश्रीपर्वतमा विहार गर्ने बरदा देवीको पूजा-आराधना गरेर पहिलेजस्तै दुई दन्त (दाह्रा) भएका भए। त्यस दिनदेखि त्रिरत्न-(बुद्ध, धर्म, सङ्घ)-लाई चढाउन मूल सिद्धिफल पाउन उनै बुद्धको मन्त्रको जप गर्ने रुद्राक्षमाला, अनि राग (विषयभोग), द्वेष (शत्रुता) र मोह (अज्ञान) नाश गर्ने बन्चरो लिएका भए ।।१३।। यसमुनि बायाँ बगलमा महाकालका ध्यान, नाम र कारणहरूको चर्चा गरिन्छ। एक मुख र तेलयुक्त गाजलजस्तै कालो वर्ण भएका, डरलाग्दो आँखीभौं भएका, बाटुलो खालका

त्रिनयनः पिंग(पिङ्ग)लनयनोर्द्ध्वकेशः लल(लोल)जिह्व(ह्वः). दंष्ट्राकरालः व्यात्ताननः रक्तश्मश्रुलः नवनागालं(लङ्)कृतसर्वांग(र्वाङ्गः): मुंड(मुण्ड)माला-विभूषितः चतुर्भुजः प्रथमसव्यहस्तेन स्तनप्रदेशे कर्तिं. द्वितीयेनाकुंचि(कुञ्चि)तेन डमरुं वादयन्. मारान् त्रासयन ।। प्रथमवामेन करोटकं पंचा(पञ्चा)मिषपूर्णं-(र्णम्) ।। द्वितीयेन द्विमुंड(मुण्ड)युक् खट्वांगं(ट्वाङ्गं) दधानः वेतालोपरि प्रत्यालीढः व्याघ्रचर्माम्बरः ।। तस्य नाम महाकालो महावीरः ।। महांतं(हान्तं) कलयतीति महाकालः ।। महांश्चासौ कालो वा ।।१३।। कारणं(णम्) ।। मारदर्पसंहरणार्थं नीलवर्णेनाक्षोभ्येन सृष्टो यो महाकालः ।। महान् कालः कृष्णवर्णो यस्य स महाकालः महांतं(हान्तं) कालं कलयति चतुर्युगादिकालं समयं व्र ··· ··· (व्रजति). समयं कलयति विचारयति इति महाकालः ।। मारादिदुष्टजनत्रासनार्थं बुद्धशासने रक्षणे भयंक(यङ्क)रमूर्तिः त्रिभुवनस्थान् बुद्धद्रोहिणस्त्रासयितुं वर्तुलभीमत्रिनयनः एवं सर्वांगा(र्वाङ्गा)वयवानि भीमानि यस्य त्रासनार्थं पालनार्थं च मौलौ अक्षोभ्यो यस्य स महाकारुणिकः ।। ।। अथ च ये ये बुद्धनिंद(निन्द)कास्तानस्ता–

तीन आँखा भएका, कैला आँखा र ठडिएका केश भएका, चञ्चल जिब्रो भएका, डरलाग्दो दाह्रा भएका, मुख बाएका, राता-राता दाह्रीजुंघा भएका, नौ नागले अङ्ग बेरिएका, मुण्ड-(टाउको)-को मालाले सिंगारिएका, चार हात भएका, पहिलो दाहिने स्तननजीकै पुऱ्याएर करौंती लिएका, अनि खुम्चाएको दोस्रो हातले डमरु बजाएका तथा मारहरूलाई तर्साउँदै गरेका छन् यी महाकाल। साथै बायाँ हाततर्फ पहिलो बायाँ हातले पाँच प्रकारका आमिष-(मासु)-ले भरिएको करोटक (कटौरा) लिएका र दोस्रो हातले दुई नरमुण्ड (टाउको) भएको खट्वाङ्ग धारण गरेका, बाघको छाला पहिरेका र वेताल-(राक्षसविशेष)-माथि पाउले टेकेर प्रत्यालीढ (निशाना गरेको जस्तो) आसनमा बसेका छन्। यिनको नाम महावीर (ज्यादै बलिया) महाकाल हो। महान्-(ठूला)-लाई पनि वश गर्ने र नाश गर्न सक्ने अर्थमा महाकाल भनिएको

हो। अथवा महान् काल हुनाले पनि। कारण हो– मारको सेखी झार्न नीलो वर्ण भएका अक्षोभ्य-(बुद्ध)-ले महाकालको सृष्टि गरेका हुन्। ठूलो काल अर्थात् कृष्ण (कालो) वर्ण जसको छ अथवा जो धेरै काल अर्थात् समय मतलब सत्य, त्रेता, द्वापर, कलि आदि लामो समयसम्म बाँच्न सक्छ अथवा समयलाई जो जित्न सक्छ त्यो महाकाल हो। मार आदि दुष्ट जनलाई तर्साउन र बुद्धको शासनको रक्षा गर्न भयङ्कर मूर्ति लिएको हो। तीनै भुवन-(लोक)-का बुद्धद्रोही-(बुद्धको द्रोह गर्ने)-लाई तर्साउन बाटुलो डरलाग्दा तीन आँखा लिएको हो। यस्तै सबै अङ्ग र अवयव पनि डरलाग्दा छन्। साथै त्रास मात्र होइन पालन (रक्षा) गर्नको लागि पनि जसको शिरमा अक्षोभ्य बुद्ध छन्। यसैले यी महाकाल ज्यादै दयालु पनि छन्। अनि जुन-जुन बुद्धनिन्दक (बुद्धको निन्दा गर्ने) छन् तिनलाई

षर्म :

॥६१॥

न् अनेन छेत्स्यामीति करतिमादधानः ॥ तेषां रुधिराणि पिवामीति करोटकं दधानः ॥ शब्देन बधिरानुन्मत्तान् करोमीति डमरुकं दधानः ॥ ब्रह्म(ह्मा)णं च कालकलनार्थं खट्वांगं(ट्वाङ्गं) बिभ्राणः ॥ तदारभ्य तदानीं ब्रह्मणो द्वयं गता इति सांप्र(साम्प्र)दायिकाः ॥ अतो बुद्धशासनरक्षणार्थं महाकालः विह(हा)रादिषु बुद्धक्षेत्रेषु स्थापिता(तः). स्थापनीया(य)श्च ॥१३॥ तत्तोरणाकारद्वारस्योपरि बुद्धस्य नामादि ॥ एकवक्त्रः श्वेतवर्ण(र्णः). ध्याननयनः स्मेराननः जटामुकुटधरः नानालंका(लङ्का)रालं(लङ)कृत(तः). षण्मुद्रालं(लङ)कृत(तः). द्वादशभुजः प्रथमाभ्यां सव्यदक्षाभ्यां हृदयप्रदेशे अभयमुद्राद्वयं. द्वयाभ्यां मुकुटोपरि कृतांज-(ताञ्ज)लिमुद्रां सव्यतृतीयेन सदंड(दण्ड)विश्ववज्रोपरि खड्गं. सव्यचतुर्थेन तर्पणमुद्रां सव्यवामपंच(पञ्च)माभ्यां पात्रस्यामृतोत्क्षेपणमुद्रां. षष्ठसव्यवामाभ्यां सपात्रध्यानमुद्रां. वामतृतीयेन सवज्रखट्वांगं(ट्वाङ्गं) दधानः कमलोपरि वज्रासनः ॥ अयं नामसंगी(सङ्गी)तिनाम बुद्धो भगवान् गगनेशून्याकारे विराजते ॥ ॥ कारणं(णम्) ॥ निवृत्त्यनंत(नन्त)रं प्रवृत्त्यर्थं शून्यस–

यसले काट्नेछु भनेर करौंती लिएका छन् । तिनको रगत पिउनेछु भनेर करोटक (भाँडो) लिएका छन् । शब्द गरेर (डमरु बजाएर) बहिराहरूलाई उन्मत्त गराउँछु भनेर डमरु लिएका, ब्रह्माजीको पनि समय जित्नको लागि खट्वाङ्ग लिएका छन् । त्यसपछि दुई ब्रह्माको पालो सकियो भनेर साम्प्रदायिक-(बौद्ध सम्प्रदायका भिक्षु)-हरू बताउँछन् । त्यसै कारणले बुद्धको शासन-(नियम)-को रक्षाको लागि विहार आदि बुद्धक्षेत्रमा महाकालको स्थापना गरिएको हो र गर्नु पनि पर्छ ॥१३॥

त्यसको तोरण आकारको ढोकामाथि बुद्धका नामहरू छन् । एक मुख र सेतो वर्ण भएका, ध्यानमग्न चिम्लेका आँखा भएका, हँसिलो मुखका, जटा र मुकुट धारण गरेका, धेरै अलङ्कारले सजिएका, छ मुद्राले अलङ्कृत, बाह्र हात भएका, दायाँ-बायाँका पहिला दुई हात

हृदयछेउ पुऱ्याएर दुई अभयमुद्रा धारण गरेका दुई हात मुकुटमाथि पुऱ्याएर कृताञ्जलि-(हात जोडेको)-मुद्रा गरेका, दाहिने तेस्रो हातले विश्वबज्रमाथि दण्डसहितको खड्ग लिएका, दाहिने चौथो हातले तर्पणमुद्रा धारण गरेका, दायाँ-बायाँ दुवैतर्फका दुई पाँचौं हातहरूले पात्रमा रहेको अमृत-सिञ्चन गरेको मुद्रा गरेका, यसै गरी दायाँ-बायाँ दुवै छैटौं हातहरूले पात्रसहित ध्यान-मुद्रा लिएका, बायाँ तेस्रो हातले वज्रसहित खट्वाङ्ग लिएका र कमलमाथि बज्रासनमा बसेका छन्। यिनी नामसङ्गीति नामका बुद्ध हुन्। यी बुद्ध भगवान् शून्य आकार भएको आकाशमा शोभित छन्। कारण हो– निवृत्तिमार्गपछि प्रवृत्तिमार्गमा लाग्न शून्यको

**काशाज्जगन्नामप्रकाशार्थं संगी(सङ्गी)तिसमुच्चारणार्थं विरोचनः साकारो विश्वाकारः सन्. नामसंगी(सङ्गी)तिनामा बभूव. तस्य बहुमाहात्म्यं नातसंगी-(सङ्गी)तिटीकादिषु द्रष्टव्यं(व्यम्) ॥१४॥ देवानामहोरात्रतो मनुष्याणामेकवर्ष-(र्षम्) ॥ एतत्संख्य(सङ्ख्य)या दिव्यया द्वात्रिंशल्लक्षदिव्यवर्ष(र्षम्). सत्ययुगप्र-माणं(णम्) ॥ ॥ षोडशलक्षप्रमाणं त्रेतायुगं(गम्) ॥ अष्टा(ष्ट)लक्षप्रमाणं द्वापरयुगं(गम्) ॥ ॥ चतुर्लक्षप्रमाणं कलियुगं(गम्) ॥ ॥ एकसप्ततियुगभ्रम-णानंत(नन्त)रं प्रलयः ॥ प्रलयद्वादशांते(शान्ते) शून्यं(न्यम्) ॥ ॥ तत्र दक्षस्थितद्वारपालध्यानं(नम्). ॥ एकवक्त्रः भीमवर्त्तुलत्रिनेत्रः भ्रूभंग(भङ्ग)कुटिलः चिपिटनाशः व्यात्ताननः लल(लोल)जिह्वः रक्तश्मश्रुलः कबन्धमुकुट ऊर्ध्वपिंग-(पिङ्ग)लकेशः पंच(पञ्च)नागविभूषितः शतार्द्ध मुंड(मुण्ड)मालाधरः व्याघ्रचर्मा-वर(र्माम्बरः). द्विभुजः दक्षेण प्रसारितेन सतर्जनीमुष्ट्या(मुष्टचा) वज्रं दधानः वामेनाधःप्रसारितेन सतर्जनीमुष्टचा अं(अङ्)कुशं बिभ्राणः मारदुष्टनिवारणार्थं भीमनररूपः लंबो(लम्बो)दर(रः). पुष्टांग(ष्टाङ्ग): सजलनिबिड–**

समीपबाट जगत्-(संसार)-को नाम प्रकाशित गर्न र सङ्गीतको उच्चारण गर्न पनि (साकार) आकार लिएका विरोचन बुद्ध विश्वरूप भएर नामसङ्गीति नामले अवतीर्ण भए। यिनको धेरै माहात्म्य बुझ्न नामसङ्गीति-(ग्रन्थ)-को टीका आदिमा हेर्नुपर्छ।

देवताहरूको रात र दिन मिलाएर (पूरा एक दिन बराबर) मानिसको एक वर्ष हुन्छ। यस सङ्ख्याले बत्तीस लाख दिव्य वर्ष बराबर सत्ययुगको समय प्रमाण हुन्छ। सोह्र लाख दिव्य वर्षबराबर त्रेतायुगको समय हुन्छ। आठ लाख दिव्य वर्षबराबर द्वापर युग हुन्छ। चार लाख प्रमाणको दिव्य वर्षबराबर कलियुग हुन्छ। यस्ता चार युग (सत्य, त्रेता, द्वापर,

कलि) बराबर एक सङ्ख्या मानेर एकहत्तर पटकसम्म समयचक्र घुमेपछि प्रलय हुन्छ। यस्ता बाह्र प्रलय बितेपछि महाप्रलय हुन्छ। यस्तो महाप्रलय बाह्रपटक भएपछि शून्य हुन्छ।

त्यहाँ दाहिने भागमा रहेका द्वारपालको ध्यान हो– एक मुख भएका, भयङ्कर बाटुला तीन आँखा भएका, तेर्सा डरलाग्दा आँखीभौं भएका, च्यूरा भोजन गर्ने, मुख बाएका, चञ्चल जिब्रो भएका, रातो दाह्रीजुँघा भएका, कबन्ध-(मुर्कट्टा)-को मुकुट पहिरेका, ठडिएका कैला केश भएका, पाँच नागले बेरिएका, पचास नरमुण्ड-(टाउको)-को माला भिरेका, बाघको छाला पहिरेका, दुई हात भएका, पसारिएको दाहिने हातले चोर औंलो ठड्याएको मुठीले वज्र समातेका, तल फैलाइएको बायाँ हातले चोर औंलोसहितको मुठीले अङ्कुश (अङ्कुसी) लिएका, दुष्ट मारहरू नास्न डरलाग्दो मानिसको रूप लिएका, ठूलो पेट भएका, पुष्ट अङ्ग भएका, पानी भरिएर घना भएको

॥६२॥

घनवर्णः महाक्रूरः प्रत्यालीढदक्ष एतादृशो(श)ध्यान(नः) वज्रां(ज्राङ)कुशो नाम द्वारपालः ॥ कारणं(णम्) ॥ वज्रां(ज्राङ)कुशद्वारपाल इति. अक्षोभ्येन स्ववज्रतः सृष्टः वज्रां(ज्राङ)कुशौ दत्वा द्वारपालस्त्वं भवेति. दुष्टमारान् वज्रेण त्राश-(स)य. अं(अङ)कुशेन वशय. द्वारस्थः सन् विहारं पालयेति. वज्रां(ज्राङ)कुशनामा द्वारपालो बभूव ॥ कस्मिंश्चित् केनचित् वज्रां(ज्राङ)कुशीति वीरः दुष्टमारत्रास-कत्वात् वज्रवीरनामा महाकालश्च मतांत(तान्त)रतो भावनीयः ॥१५॥१६॥ वामस्थद्वारपालस्य ध्यानं(नम्) ॥ तस्य ध्यानं सर्वं वज्रां(ज्राङ)कुशस्य ध्यानवत्. किंतु(किन्तु) आजानुप्रसारितेन दक्षिण भुजेन पाशमादधानः उ(ऊ)र्ध्वप्रसारितेन वामेन सतर्जनीमुष्ट्या अं(अङ)कुशं दधानः वामप्रत्यालीढः ॥ किंच(किञ्च) नामभेदोस्ति पाशां(शाङ)कुश इति नाम द्वारपालः ॥

[समाप्तोयं धर्मकोशसं(सङ)ग्रहमिति]

(समाप्तोयं धर्मकोशसं(सङ)ग्रह इति)

शुभम्

बादलको जस्तो कालो वर्ण भएका, ज्यादै क्रूर (रिसाहा), प्रत्यालीढ-(शिकारको लागि निशाना गर्ने आसन)-मा सिपालु भएका, यस्ता ध्यानवज्राङ्कुश नाम गरेका द्वारपाल छन् । यसको कारण हो– वज्राङ्कुश द्वारपाल किन भनियो भने अक्षोभ्य-(बुद्ध)-ले आफ्नो वज्रबाट सृष्टि गरेर वज्र र अङ्कुश दिदै तिमी द्वारपाल होऊ, भनेका थिए । साथै दुष्ट मारहरूलाई वज्रले तर्साऊ, ढोकामा रहेर विहारको रक्षा गर भनेर पनि अह्राए । त्यसैले यिनी वज्राङ्कुश नाम गरेका द्वारपाल भएका हुन् । यिनैलाई कहीं कसैले मारलाई तर्साउने हुँदा वज्रवीर भनेका छन् भने अर्को मतमा यी नै महाकाल पनि भनिएका छन् ॥१५॥१६॥ बायाँतर्फ रहेका द्वारपालको ध्यानको चर्चा गरौं । यिनको ध्यान सबै वज्राङ्कुशको ध्यानजस्तै हो । तर

घुँडासम्म पसारिएको दाहिने हातले पासो लिएका र माथितिर पुऱ्याइएको बायाँ हातले चोर औंलासहितको मुठीले अङ्कुश लिएका छन् । बायाँतर्फ प्रत्यालीढ (निशाना ताक्नेजस्तै) आसनमा बसेका छन् । अरू पनि नामका भेदले यिनैलाई पाशाङ्कुश नामका द्वारपाल पनि भन्दछन् ।

यो धर्मकोशसङ्ग्रह समाप्त भयो शुभम् ।

[(पाशांकुश इति नाम द्वारपाल इति) अथ लोकेश्वरनामानि ॥ नमो(नमः) आर्यावलोकितेश्वराय ॥१॥ वज्रनाथलोकेश्वराय ॥२॥ वज्रपाणिलोकेश्वराय ॥३॥ पद्मपाणिलोकेश्वराय ॥४॥ नित्यनाथलोकेश्वराय ॥५॥ विद्यापतिलोकेश्वराय ॥६॥ शंख(शङ्ख)नाथलोकेश्वराय ॥७॥ वज्रहूतलोकेश्वराय ॥८॥ चीनकांनालोकेश्वराय ॥९॥ शूद्रांजली(कृताञ्जलि)लोकेश्वराय ॥१०॥ उष्ट्रीकरलोकेश्वराय ॥११॥ वज्रवज्रदंत(दन्त)लोकेश्वर(रः) ॥१२॥ शास्तालोकेश्वर(रः) ॥१३॥ चिंता(चिन्ता)मणिलोकेश्वर(रः) ॥१४॥ ज्ञानधातुलोकेश्वर(रः) ॥१५॥ शाक्यबुद्धलोकेश्वर(रः) ॥१६॥ वज्रधातुलोकेश्वर(रः) ॥१७॥ मंजु(मञ्जु)देवलोकेश्वर(रः) ॥१८॥ विसभुजालोकेश्वर(रः) ॥१९॥ धर्मधातुलोकेश्वर(रः) ॥२०॥ अमिताभलोकेश्वर(रः) ॥२१॥ महावज्रसत्व(त्त्व)लोकेश्वर(रः) ॥२२॥ सिंहनादलोकेश्वर(रः) ॥२३॥ हलाहललोकेश्वर(रः) ॥२४॥ षडक्षरीलोकेश्वर(रः) ॥२५॥ सहस्रभुजलोकेश्वर(रः) ॥२६॥ धर्मचक्रलोकेश्वर(रः) ॥२७॥ धिरीखारालोकेश्वर(रः) ॥२८॥ उचाभुजलोकेश्व(रः) ॥२९॥ बहुधेन्द्रलोकेश्वर(रः) ॥३०॥ अमोघपालोकेश्वर(रः) ॥३१॥ वज्रपारिगलोकेश्वर(रः) ॥३२॥ करमर्दलोकेश्वर(रः) ॥३३॥ कृतांज(ताञ्ज)लिलोकेश्वर(रः) ॥३४॥ विदपादलोकेश्वराय नमः ॥३५॥ समाप्तोयं धर्मकोशः ॥ विप्रवंशवज्राचार्यजि(जी)वरत्नेन लिखितं संपूर्ण (सम्पूर्ण) शुभम् ॥ ॥ ]

['पाशाङ्कुश इति नाम द्वारपाल' भन्ने माथिको पछिल्लो अंशपछि कुनै अर्को हस्तलिखित ग्रन्थमा तलका लोकेश्वरका नामहरू अन्तमा दिएर मात्र टुङ्ग्याइएको पाइन्छ ।]

अब लोकेश्वर-(बुद्ध)-का नामहरूबारे चर्चा गरौं । आर्यावलोकितेश्वरलाई नमस्कार ॥१॥ वज्रनाथलोकेश्वरलाई (नमस्कार) ॥२॥ वज्रपाणिलोकेश्वरलाई ॥३॥ पद्मपाणिलोकेश्वरलाई ॥४॥ नित्यनाथलोकेश्वरलाई ॥५॥ विद्यापतिलोकेश्वरलाई ॥६॥ शङ्खनाथलोकेश्वरलाई ॥७॥ वज्रहूतलोकेश्वरलाई ॥८॥ चीनकाम्नालोकेश्वरलाई ॥९॥ शूद्राञ्जलि-(कृताञ्जलि)-

लोकेश्वरलाई ॥१०॥ उष्ट्रीकरलोकेश्वरलाई ॥११॥ वज्रवज्रदन्तलोकेश्वर ॥१२॥ शास्तालोकेश्वर ॥१३॥ चिन्तामणिलोकेश्वर ॥१४॥ ज्ञानधातुलोकेश्वर ॥१५॥ शाक्यबुद्धलोकेश्वर ॥१६॥ वज्रधातुलोकेश्वर ॥१७॥ मञ्जुदेवलोकेश्वर ॥१८॥ बिसभुजालोकेश्वर ॥१९॥ धर्मधातुलोकेश्वर ॥२०॥ अमिताभलोकेश्वर ॥२१॥ महावज्रसत्त्वलोकेश्वर ॥२२॥ सिंहनादलोकेश्वर ॥२३॥ हलाहललोकेश्वर ॥२४॥ षडक्षरीलोकेश्वर ॥२५॥ सहस्रभुजलोकेश्वर ॥२६॥ धर्मचक्रलोकेश्वर ॥२७॥ धिरीखारालोकेश्वर ॥२८॥ उचाभुजलोकेश्वर ॥२९॥ बहुधेन्द्रलोकेश्वर ॥३०॥ अमोघपा-(पाश)-लोकेश्वर ॥३१॥ वज्रपारिगलोकेश्वर ॥३२॥ करमर्दलोकेश्वर ॥३३॥ कृताञ्जलिलोकेश्वर ॥३४॥ विदपादलोकेश्वरलाई नमस्कार ॥३५॥ यो धर्मकोश समाप्त भयो ॥ ब्राह्मणवंशका जीवरत्न वज्राचार्यले लेखेको यो सबै शुभ होस् ।

॥ शुभम् ॥

# अनुक्रमणिका

यिता लिवि चैत्य →





← यिता लिवि चैत्य

यिता लिवि चैत्य
(विस्तृत) →





श्रीलास्यादेवी



श्रीवज्रधूपादेवी



श्रीगन्धादेवी



श्रीपुष्पादेवी



श्रीमालादेवी



श्रीनृत्यादेवी



श्रीशब्दादेवी



श्रीगीतादेवी



श्रीदीपादेवी



श्रीवज्रवीणादेवी



श्रीमृदङ्गादेवी



श्रीवंशादेवी



श्रीमू(मु)ल(र)जादेवी



श्रीवज्ररसादेवी



श्रीवज्ररूपादेवी



श्रीवज्रस्यणादेवी



श्रीलोकेश्वर



श्रीसमन्तभद्र



श्रीअमितप्रभ



श्रीचन्द्रप्रभ



श्रीजालिनीप्रभ



श्रीअक्षयमति



श्रीसर्वनिवरणविष्कम्भी



श्रीरत्नपाणि



श्रीसागरमति



श्रीगगनगञ्ज



श्रीआकाशगर्भ



श्रीसर्वशोकतमोनिर्घातमति



श्रीवज्रगर्भ



श्रीक्षितिगर्भ



श्रीमहास्थामप्राप्त



श्रीप्रतिभानकूट

